वरिष्ठ मानार्थ संरक्षक

जितेन्द्रराज कायस्थ/दियेशरत्न शाक्य
भारद्वाज मित्र/राजभाइ प्रधान
विमला दुवाल श्रेष्ठ/शान्तिकिरण दुवाल जोशी
सिद्धिबहादुर कर्माचार्य/हरिप्रसाद दुवाल

सल्लाहकारहरु

दिलसुन्दर श्रेष्ठ, ज्ञानकाजी मानन्धर

प्रधान सम्पादक

**मोहन दुवाल**

(**E-mail** : janamatmonthly@gmail.com)

❑

सम्पादक :

भारती श्रेष्ठ / सिर्जना दुवाल श्रेष्ठ

❑

सह-सम्पादक

रामसुन्दर देउजा / श्रीकृष्ण बादे

❑

सहयोगीहरू

अनिल श्रेष्ठ (तनहुँ), असफल गौतम (कास्की), आकाश अधिकारी (दमौली), आर.सी. रिजाल (हेटौडा), इन्द्रकुमार विकल्प (पर्वत), कपिल अज्ञात (चितवन), कल्याण ओझा (महेन्द्रनगर), कृष्णप्रसाद आचार्य (खोटाङ), कृष्णादेवी शर्मा श्रेष्ठ (नवलपरासी), काजी रोशन (बागलुङ), खडानन्द तिमल्सिना (सिन्धुली), दिपेन्द्र श्रेष्ठ (ललितपुर), देवीचरण भण्डारी (झापा), ध्रुवलाल शर्मा (म्याग्दी), नन्दकुमार थापामगर (सिराहा), नवराज पहाडी (लमजुङ), पुन्य कार्की (उदयपुर), पुरुषोत्तम खनाल (दाङ), पुष्करराज भट्ट (कैलाली), पुष्करराज रेग्मी (पाल्पा), प्रकाश सापकोटा (धादिङ), प्रेम छोटा (बागलुङ), बाबुराम श्रेष्ठ 'वर्षा' (विराटनगर), भवानी तावा (पाँचथर), मिलन समीर (स्याङ्जा), रीता पहारी(कास्की), रीता ताम्राकार (सुनसरी), राम आचार्य (रौतहट) वसन्त अधिकारी 'अधीर' (लमजुङ), विश्वनाथ सञ्जेल (मकवानपुर) वीरबहादुर चन्द (कञ्चनपुर), श्रीराम श्रेष्ठ (नुवाकोट), सुरेश कसजू (सिन्धुपाल्चोक) ।

विशेष सहयोगी

अर्जुनदास श्रेष्ठ, उत्सव थपलिया, प्रा.डा. कपिलदेव लामिछाने, गोपीकृष्ण थपलिया, चूडामणि रेग्मी, छविरमण सिलवाल, धनध्वज लामा, नवराज दाहाल 'उत्साही', भगवती तिमल्सिना, मोहनकुमार श्रेष्ठ, डा. रामप्रसाद ज्ञवाली, राजेन्द्र श्रेष्ठ, लभराज जोशी, विधान जोशी, शारदाप्रसाद पहाडी, सूर्यप्रसाद लाकोजू, सोमकाजी शाक्य, संरचना दुवाल, हरिप्रसाद चौलागाईं

❑

आवरण डिजाइन :

बीएण्डबी कम्प्युटर सर्भिस, बनेपा

मुद्रण : रोजन प्रिन्टिङ्ग प्रेस, बनेपा ✆६६१५८५

प्रकाशक

**जनमत प्रकाशन**

बनेपा-७, काभ्रे

साहित्यिक मासिक

# जनमत

वर्ष : ३९ अङ्क : ९, No. 9, Vol. 39

**साहित्यिक अङ्क : ३००**

ने.सं. ११४१ कौलाथ्व: 2022 October

**२०७९ असोज**

## लेखक-सूची

३. आनन्ददेव भट्ट
७. आशाकाजी सेवक
११. डा. ओमवीरसिंह बस्न्यात
१३. ओमी शर्मा
१५. कुलमानसिंह भण्डारी
१९. कृष्णचन्द्रसिंह प्रधान
२१. कृष्णप्रकाश श्रेष्ठ
२३. कृष्णप्रसाद दुवाल
२७. कृष्णप्रसाद पराजुली
३१. कृष्णप्रसाद श्रेष्ठ
३५. केदारनाथ प्रधान
४५. केवलपुरे किसान
४९. खड्गमान सिंह
५५. डा. गणेशकुमार पौडेल
५७. गोविन्दबहादुर थापा
५९. गोविन्द भट्ट
६१. जगत्बहादुर जोशी
६५. जगदीश घिमिरे
६९. जनकप्रसाद हुमागाईं
७३. डा. जनकलाल वैद्य
७५. टी.आर. विश्वकर्मा
७७. डिल्लीरमण शर्मा अर्ज्याल
८१. थाम्सुहाङ पुष्प सुब्बा
८५. डा. देवीप्रसाद ओझा
९३. देवीलाल श्रेष्ठ
९५. धुस्वां सायमि
९९. पारिजात
१०३. पूर्ण वैद्य
१०७. पंकज चित्रकार
१०९. बद्री पलिखे
१११ भक्त कार्की
११२. भानुभक्त आचार्य
११५. डा. भीमचरण थापा
१२१. भीमनिधि तिवारी
१२५. भीम विराग
१२७. महेन्द्रलाल प्रधान
१२९. माधवलाल कर्माचार्य
१३५. रत्नाकर देवकोटा
१३७. राधिका राया
१४३. रामप्रकाश गुरुङ समथिङ
१४७. राहुल सांकृत्यायन
१५१. लक्ष्मण राजवंशी
१५५. लक्ष्मीप्रसाद देवकोटा
१५७. लैनसिंह बाङदेल
१५९. वासुदेव भाइसाव,
१६१. विनयकुमार कसजू
१६५. विश्वेश्वरप्रसाद कोइराला
१६९. वी.के.पालपाली
१७३. श्यामकृष्ण श्रेष्ठ
१७९. श्यामप्रसाद शर्मा
१८१. शिव रेग्मी
१८५. शुक्रराज शास्त्री
१८९. सिद्धिचरण श्रेष्ठ
१९२. हरि श्रेष्ठ
१९५. हरिसुन्दर सैंजू
१९९. हरिहर शास्त्री
२०२. हेमराज पहारी
२०८. हृदयचन्द्रसिंह प्रधान

मूल्य: रु. ५०/-

बनेपा कार्यालयः फोन ०११-६६१५७३ मो.नं.९८४१६३०४६५/९८०३८०२५७५
**काठमाडौं/सहयोगी**: ❑ प्रेम श्रेष्ठ सीतापाइला (४२४४६२८) ❑ भारद्वाज मित्र चाइल्ड नेपाल, पासाङल्हामु मार्ग (०१-६२१७५२८) ❑ भुँडी पुराण प्रकाशन, बागबजार (०१-४२२३३१६) ❑ हजुरको पुस्तक संसार, प्रदर्शनीमार्ग (४२२४७६४)



# त्रिशताङ्क (३०० अङ्क) कै सन्दर्भमा

करिव ४ दशक पुग्न लागिसकेको छ 'जनमत' मासिकको प्रकाशन भएको पनि । जनमतका तर्फबाट साहित्य प्रकाशन, गतिविधिमा आफूसक्दो योगदान भइरहेको र साहित्य सिर्जनामा बल थपिरहने हाम्रो उद्देश्य यथावत् छ । हामी कहिल्यै पनि थाकेनौं र सहयोगीहरुको सहयोग हाम्रा लागि शक्ति भइदिएका छन् जुन शक्तिले जनमतको यो अङ्क दिवंगत स्रष्टाहरुप्रतिको सम्मान अङ्क तयार भई तपाईंहरुको हातमा राख्न पाउँदा हामीलाई खुसी लागेको छ ।

जनमतको ४० सौं वर्षको इतिहासमा जनमतले देश-विदेशसम्म नै आफ्नो पहिचान छोडेको सर्वविदितै छ । साहित्यिक पत्रकारिताको इतिहासमा जनमतले प्रकाशन गर्न पाएको त्रिशताङ्क (३०० पूर्णाङ्क) राष्ट्रका वाङ्मयसेवीहरुमा समर्पित गर्न पाउँदा हामीलाई अत्यन्त खुसी लागेको छ । जनमतको निष्पक्ष ढङ्गको साहित्यिक यात्रा निरन्तर जारी छ; अर्थात् जारी रहने छ ।

जनमत मासिक त्रिशताङ्क (३०० पूर्णाङ्क)मा जनमतसँग गाँसिएका वाङ्मयसेवीहरु जो बितेर गएका छन्, तिनीहरुप्रति समर्पित अङ्कका रुपमा प्रकाशन गर्ने हाम्रो उद्देश्य अनुसार प्रकाशित भएको छ । यस अङ्कमा जनमतबाट सम्मानित, जनमत मासिकमा विशेष र विशेष अङ्कमा प्रकाशित भएका साहित्यकारहरु, जनमत प्रकाशनबाट पुस्तक प्रकाशित भएका लेखकहरु, जनमत मासिकमा सिङ्गै पुस्तक प्रकाशन भएका दिवंगत स्रष्टाहरु र जनमत वाङ्मय प्रतिष्ठानबाट स्थापित कोषका सम्मानित नाम/जनमतका आदर्श-लेखक हृदयचन्द्रसिंह प्रधानसमेतको सम्झनामा यो अङ्क प्रस्तुत गरिएको छ । इतिहासलाई बिर्सनु हुँदैन, इतिहासबाट नै सिक्ने हो; हामी यो मान्यतामा प्रतिवद्ध छौं । अग्रज पुस्तालाई बिर्सनु भनेको इतिहासलाई बिर्सनु हो । अग्रज पुस्तालाई सम्मान गर्ने, दिवंगत भइसकेका वाङ्मयसेवीहरुको कदर गर्ने सोचले नै यो अङ्क तयार भएको हो । यो अङ्क राष्ट्रकै वाङ्मयसेवीहरुकै नाममा समर्पित छ ।

मोहनदुवाल

२०७५ असोज

## आगामी आकर्षण

**कविता / गीत / गजल / मुक्तक**

इन्द्र रेग्मी / कपिल अज्ञात / कृष्णप्रसाद पोखरेल / निर्मलरमण पराजुली / प्रदीप प्रधान / प्रद्युम्न जोशी / बमबहादुर थापा 'जिताली' / रमेश पन्त 'मीतबन्धु' / राममणि सिटौला / लक्ष्मण आचार्य / वसन्त रिजाल / विष्णु दाहाल / विष्णुप्रसाद शर्मा पराजुली / शङ्करकुमार राई ।

**लेख / निबन्ध / संस्मरण**

केशव थापा / पुरूषोत्तमलोचन श्रेष्ठ / शर्मिला खड्का दाहाल ।

**समीक्षा / समालोचना / परिचय**

तेजप्रकाश श्रेष्ठ / मलिसा याक्थुङ्बा लिम्बु / रामकुमार पाँडे / प्रा. डा. लक्ष्मणप्रसाद गौतम ।

**कथा / लघुकथा**

इन्द्रकुमार विकल्प / नन्दलाल आचार्य / राजेन्द्र पहाडी / लीलाराज दाहाल / सरिता तुलाधर /सूर्यप्रसाद लाकोजू

**विविध** : जनमत के भन्छ ? - मोहन दुवाल / अन्धकारभित्रको अन्धकार (३१) - शान्ता श्रेष्ठ / पुस्तक वार्ता (अनिल श्रेष्ठसँग) - सिर्जना दुवाल श्रेष्ठ / अनुवाद - मुजिबुर रहमान । नव प्रतिभा - जितेन्द्रराज कायस्थ / नारायणप्रसाद तौजले । व्यक्तित्व सङ्क्षेपमा - भुवन मास्के / निर्मल अर्याल / मनप्रसाद सुब्बा ।

# सत्यम्, शिवम्, सुन्दरम्



आनन्ददेव भट्ट
जन्म : वि.सं. १९९३ असोज २५
खलङ्गा, जुम्ला
अवसान : २०७८ भाद्र १४

'सत्यम्, शिवम्, सुन्दरम्' एक प्रकारले सार्वभौम भनाइ नै भइसकेको छ । पूर्वीय साहित्य-शास्त्रीहरू साहित्यमा 'सत्य' र 'सुन्दर' को सम्मेलन हुनुपर्छ भन्दछन् । यही शब्दावलीमा नभए पनि पश्चिमका साहित्य-शास्त्रीहरू पनि यस भनाइको गहिराइलाई बरोबर अनुभव गर्दछन् र प्रकारान्तरले उनीहरू पनि साहित्यलाई सार्थक रूपमा ग्रहण गर्न यी तीनै कुराको सम्मिश्रणको महत्वलाई स्वीकार्छन् । उसो भए साहित्यमा कुनै मतमतान्तरै छैन त ? भनी प्रश्न गर्न मिल्छ । उत्तर दुई किसिबाट आउन सक्छन् - (१) आँशिक रूपमा, सतही रूपमा, बाहिरी रूपमा, खण्डित रूपमा (२) पूर्ण रूपमा, आन्तरिक रूपमा, भित्री रूपमा, समग्र रूपमा । दुवै एक-अर्काका ठीक उल्टा हुन्छन् र ती उत्तरमध्ये कसैलाई पनि मोहिनी लागेर ग्रहण गर्न खोजेका खण्डमा वितल पर्न सक्छ; ठूलो अन्धकारमा खस्नुपर्दछ र एकोहोरो भई दृष्टिकोण वा धारणालाई व्यवहारमा प्रयोग गर्ने हो भने शाब्दिक बाझाबाझ मात्र होइन, भौतिक हात हालाहालसमेत हुन सक्छ । तसर्थ साहित्यको प्रत्येक विद्यार्थीले सर्वप्रथम वस्तुतथ्यलाई प्रष्टसित बुझ्नुपर्ने हुन्छ, त्यसको प्रकृति र प्रवृत्ति अनुसार त्यससित व्यवहार गर्नुपर्ने हुन्छ र विश्वमा सबै कुरा परिवर्तनशील भएकाले कुनै कुरोप्रति पनि यथास्थितिवादी मोह नराखी आफ्नो दृष्टिका झ्याल-ढोका पनि खुला राख्नुपर्छ ।

कति साहित्यिकहरूको धारणा हुन्छ : 'सत्यम्, शिवम्, सुन्दरम्,' पुरानो साहित्यिक मान्यता हो; त्यो सामन्तकालीन युगको प्रतिपादित गरिएको कुरो हो, त्यसैले त्यसमा सामन्तवाद गन्हाउँछ र आधुनिक मान्छेले त्यसलाई ग्रहण गर्नु वा प्रयोग गर्नु हुँदैन । तर वास्तविकतामा जाने हो भने विचारको उदय अमुक समयको चौघेरा नाघेर विचरण गर्न खोज्दैन भन्ने हुन्न र सामन्त युगमा पनि कैयन् विज्ञानसम्मत एवं जनहितकारी कुराहरू त्यति बेलाको समाजमा टुसाएका वा केही अंशमा विकसित भएका पनि पाइन्छन् । त्यस्ता वस्तुवादी, यथार्थवादी, विज्ञानसम्मत कुराहरूलाई हामीले कुनै पनि समयको आफ्नो सन्दर्भमा प्रयोग/उपयोग गर्न सक्छौं । सत्यम्, शिवम्, सुन्दरम्ले 'यथार्थ कुरो' 'राम्रो/कल्याणकारी कुरो' र 'राम्रो कुरो' लाई जनाउँछ र साहित्यमा यी तीनै कुरा समावेश हुनु उत्तम हुन्छ भन्ने भनाइ राम्ररी विचार गरेको खण्डमा न गलत नै देखिन्छ न हानिकारक नै । तसर्थ 'सत्यम्, शिवम्, सुन्दरम्' को सिद्धान्तलाई मिल्काउनु पर्ने कुनै कारण देखिन्न ।

तर विभिन्न मानिसमा विभिन्न दृष्टिकोण हुन सक्ने र कैयन् दृष्टिकोण एक-अर्कासित बाझने पनि हुन्छन् त्यसबेलामा ती विरोधी दृष्टिकोणको आ-आफ्नो तर्क र त्यसको व्यावहारिक प्रयोगलाई हेर्नु आवश्यक हुन आउँछ । जस्तो कुनै

पनि वस्तुको अस्तित्व त्यसका विरोधी तत्वहरूको एकता वा संलग्नतामा अडेको हुने हुँदा ती विरोधी तत्व वा विचारको विकास के कस्तो किसिमले हुन्छ त्यसलाई अध्ययन गर्ने, चिन्तन मनन गर्ने, त्यसको विश्लेषण गर्ने र आएको निष्कर्षका ऐनामा अर्को विचार र त्यसको परिणामसित तुलना गर्नुपर्ने हुन्छ । यस अध्ययनले हामीलाई दुवै धारणाको यथार्थबोध हुन्छ र कुन कुरो गुनी हो र कुन बैगुनी भनी छुट्ट्याई सोही आधारमा आफूले ग्रहण गर्ने वा मिल्काउने निर्णय गर्न सजिलो पर्छ । 'स+शि+सु' का विषयमा पनि यही नियम लागू गर्न सकिन्छ । जस्तो भनिने गरिन्छ : कुनै पनि शब्द जस्तै उपयोगी हुन सक्छन् तर पनि कुन शब्दको ठीक प्रयोग भयो र कुन भएन भनी जान्नका निम्ति त्यसको प्रयोगको सन्दर्भ हेर्नु पर्छ । त्यस्तै साहित्यमा के कुरो 'स+शि+सु' का रूपमा प्रयोग भयो र कुन कुरो त्यसरी प्रयोग भएन भनी जान्न हामीले साहित्यको सन्दर्भलाई हेर्नुपर्ने हुन्छ । 'स+शि+सु' को प्रयोग जसले आंशिक रूपमा गरेको हुन्छ त्यो अर्द्ध सत्य वा असत्य हुन्छ र जसले समग्र रूपमा गर्छ त्यो सत्य हुन्छ । अब एकछिन हामी 'स+शि+सु' का यी दुई पक्ष के-कस्ता हुन्छन् भन्नेबारे नै चर्चा गरौं ।

साहित्यलाई आँशिक/सतही/बाहिरी/खण्डित रूपमा प्रस्तुत गर्नु भनेको के हो ? जसरी कुनै मानिसले ठाडा आँखा लाएर हिँड्दा उसले देख्ने कुरा पनि त देख्न सक्छ वा हत्पत्सित काम गर्न थाल्यो भने जसरी लतपत हुने सम्भावना हुन्छ, जङ्गल खोज्न जाँदा रूख र अन्य बुटाहरूलाई मात्रै छाम्दै हिँड्दा जसरी जङ्गल फेला पर्दैन, कुनै पनि फलको बाहिरी शोभाको बयान गर्दैमा त्यसको रसको स्वादको चर्चा आउन्न । अनि जसरी कुनै भवनको कोठा-कोठामा मात्रै सीमित भएर त्यसको गुण वा बैगुन बखान्न थालेमा सम्पूर्ण भवनको स्वरूप थाहा हुन्न त्यसैगरी जब कुनै साहित्यकारले आफ्नो विषयवस्तुलाई साहित्यिक रूप दिंदा त्यस विषयसित सम्बन्धित सम्पूर्ण कुरामा त्यसको पींध र अन्तर-कुन्तरसम्म पसी त्यसलाई अभिव्यक्ति दिन सक्दैन भने त्यस रचनाले समग्रताको बोध गराउन सक्दैन । त्यसमा कि यथार्थताको अंश छुट्ला कि कल्याणको भाव नरहला वा पुष्ट रूपमा व्यक्त नहोला, कि पढ्दा/सुन्दा पुरै आनन्द दिने वा मन हर्ने नभई त्यसमा कहीँ न कहीँ कमजोरी, त्रुटि वा दोषकै अनुभव हुन जाला । त्यसैले जुन साहित्यमा त्यस्तो दोषको मात्रा जति कम हुन्छ त्यो त्यति नै प्रिय लाग्ने हुनाले त्यसले पछि-पछिसम्म पनि पाठकहरूको हृदयमा बास पाउने गर्छ । सो गुणको जति कमी भयो अमुक साहित्य त्यति नै सिथिल र कम प्रभावकारी भई त्यसलाई पाठकले एकदम बेवास्ता गर्ने गर्दछन् ।

साहित्यलाई पूर्ण/आन्तरिक/भित्री /समग्र रूपमा प्रस्तुत गर्नु भन्नाले रूखहरूको समग्रतामा जङ्गलकै स्वरूप र प्रकृतिलाई चिन्नु हो, आफ्नो यात्राका अवसरमा मानौं आफ्ना अगाडि मात्र होइन, दायाँ-बायाँको परिवेशप्रति पनि ध्यान दृष्टि पुग्नु हो; विषयवस्तुको बाहिरी एवं सतही रूपलाई छेड्दै भित्रभित्र अझ भित्रतिर पस्दै त्यसको गहिराइ र महिमालाई छोप्नु हो र यसरी लेखकले कुनै पनि विषयवस्तुलाई टिप्दादेखि त्यसलाई बिसाउँदासम्म सकेसम्म व्यापकतम रूपले त्यसमाथि चिन्तन-मनन गरी आफ्नो प्रतिक्रियासमेत व्यक्त गर्नु हो ।

तर वस्तुगत कुराहरूको सत्य थाहा पाउन जति सजिलो छ, मनोगत कुराको सत्य त्यति सजिलै पत्ता लाग्दैन । अझ जुन कुरो सामाजिक पक्षसित सम्बन्धित हुन्छ त्यसमा त समाजप्रति लेखकको कुन दृष्टिकोण छ सो कुरोको प्रत्यक्ष वा परोक्ष, स्थूल वा सूक्ष्म छाया वा प्रभाव नपरी छोड्दैन । साहित्यको यस फाँटमा आइपुगेपछि भने हरेक कुरा जटिल बन्दै जान्छ र त्यस जटिलताले मनोगत एवं सामाजिक धारणा अन्तर्गत सीमित सत्यलाई छुट्याउन अझ बढी मेहनत गर्नुपर्ने हुन्छ । यहाँ खालि विषयवस्तुको कुरो मात्र आउन्न, कला वा सौन्दर्यको कुरो पनि आउँछ, अनि 'शिव' वा 'कल्याण' को भावलाई त्यस भित्रबाट निकाल्न अझ बढी साहित्यिक संचेतनाको सीप चाहिन्छ । यसरी जब साहित्यमा पाठकहरू कुनै पनि साहित्य सिर्जनाको 'आँशिक' र 'समग्र' अभिव्यक्तिलाई चिन्न सक्ने हुन्छन् तब उनीहरूका सामु त्यसभन्दा ठूलो दुर्बिनको आवश्यक हुन्छ : साहित्यभित्र कल्याणको प्रवाह के-कस्तो छ ?

कैयन् साहित्यकारहरू आफ्ना रचनामा 'सत्य' सित सम्बन्धित कुरामै बढी हराएका हुन्छन्; त्यस्तै अर्काथरी 'शिव' को भावमा गोता खाइरहेका पाइन्छन् भने कोही खालि 'सुन्दरम् वा सौन्दर्य' का पुजारी भएर भास्सिइरहेका भेटिन्छन् । यी तीनैथरी साहित्यकारहरू 'आँशिक' मार्गमा हिड्नेहरू हुन् भन्न सकिन्छ । अनि त्यही 'आंशिक' संसारमा पनि कोही पातपातै नाच्लान् त कोही रूखरूखै उफ्रलान्, अनि कोही एउटै रूखको सौन्दर्यको निरीक्षण गर्नमा मक्ख परेका पाइन सक्छन् । यो फेरि अर्को किसिमको 'आँशिकता' भयो । कोही अझ विषयवस्तुलाई समाती त्यसको खास

चर्चै नगरी केवल त्यसप्रतिको आफ्नो धारणा मात्र व्यक्त गर्लान्, तर यिनीहरू जतिसुकै सदासय किन व्यक्त नगरून् वास्तवमा यिनीहरू साहित्य निर्माण गर्नतिर नलागी साहित्यबारे आफ्ना मूल्य र मान्यताका आदर्श मात्र भट्याइरहेका हुन्छन् ।

तर श्रेष्ठतातिर उन्मुख साहित्यकारहरू चाहे 'विष' बाँडून् चाहे 'अमृत' । तिनीहरू आफूले लुकाएर के बाँडिरहेका वा प्रत्यक्षै पनि के लुकाइरहेका भन्ने कुरोको पाठकले मानौं हेक्कै नपाउँदै आफूले बाँड्नु पर्ने कुरा बाँडिसक्छन् । आजसम्मको कुनै पनि भाषामा सक्षम साहित्यकारको रचनाले यही करामत देखाएको कुरा संसारको कुनै पनि दूध पानी छुट्याई साहित्यको रसपान गर्न सक्ने पाठकले भन्दै आएको छ । त्यसैले साहित्यकार/ विद्यार्थी/सर्जक/ पाठकलाई बरोबर भ्रम पर्ने गर्छ : भनिएको कुरा के हो त्यो गौण हो, तर कसरी भनियो त्यो मूल कुरो हो । यही भ्रमले गर्दा 'कला कलाको निम्ति' भन्ने सिद्धान्त बनाइयो । मानौं यस सिद्धान्तअन्तर्गत रचिने साहित्यको त जीवनसित कुनै सरोकारै छैन अथवा साहित्यमा कलाको सर्वोपरी महिमा बुझाउनासाथ साहित्यमा विषयवस्तुको त कुनै चयनै गर्नु पर्दैन । त्यस्तै त्यस सिद्धान्तको विरूद्ध 'कला जीवनको निम्ति पो हो त' भन्ने सिद्धान्त बन्न जाँदा कतिपय जीवनवादी साहित्यकारहरूलाई के भ्रम पर्ने गरेको पाइन्छ भने मानौं साहित्यमा जीवनोपयोगी विषयवस्तु दिएपछि त्यसमा कलाको के स्थान छ भनी विचार नराखे पनि हुन्छ वा कम विचार गरे पनि हुन्छ । यसरी यी दुई धारणालाई पनि बराबर गरेझैं एक अर्काबाट पृथक् राख्नु चिन्तनको अद्वन्द्वात्मकता हो, अव्यावहारिक कुरा हो, असत्य कुरो हो । त्यसैले शिवत्वहीन वा अकल्याणकारी पनि । भनिन्छ : जसरी चिनीपानी घोलिसकेपछि चिनीभित्र पानी पस्छ र पानीभित्र चिनी, ठीक त्यसरी नै कुनै पनि साहित्यको सृष्टि गर्न खोज्दा ती दुईको अविभाज्य सम्बन्धलाई भुल्नु अत्यन्त ठूलो भ्रमको शिकार हुनु हो । 'पुरूष' र 'नारी' मा सृष्टिका निम्ति को ठूलो ? को सानो ! दुवैको उत्तिकै र उस्तै सहभागिता नभई जसरी मानव सृष्टि हुन्न (र सामन्ती वा अवैज्ञानिक वा शोषणजीवी धारणाले मात्र भन्ला : पहिले 'पुरूष' अनि 'आइमाई', तर परिष्कृत दृष्टिले हेर्नासाथ ती दुई कसैलाई ठूलो सानो भन्न मिल्दैन) । त्यसैगरी 'विषयवस्तु' र 'कला' को संयोग नभई साहित्य सिर्जिइन्न । हो विषयवस्तु पक्षको चर्चा गर्दा हामी भन्न सक्छौं : यसमा सौन्दर्य यति मात्रामा मात्रै भएकाले यो पर्याप्त छ वा छैन । त्यस्तै, एउटा साहित्य सर्जक महाको तरङ्गी, एकलकाँटे र उडन्ते स्वभावको भएछ भने उसले आफ्नो मनोगततालाई नै 'यथार्थ' भनी चिन्तित गर्न सक्छ र त्यो भ्रामक भई हानिकारक पनि हुन सक्छ ।

'सत्यम्, शिवम्, सुन्दरम्' को प्रश्न कुनै एउटा युगको प्रश्न मात्र नभई भूत, वर्तमान र भविष्य तीनै कालको हो, त्यस्तै बूढा, प्रौढ र युवा साहित्यकार सबैको साझा प्रश्न हो । त्यसैले यस्ता कुरालाई सार्वभौम वा शाश्वत भनिएको होला । यिनबारे हरेक युगका साहित्य स्रष्टा, समीक्षक, पाठक एवं श्रोताहरूले छलफल गरेथे, गर्दछन् र गर्ने पनि छन् । विगतको अनुभव सैद्धान्तिक रूपमा कुरा जान्न मात्र काम लाग्छ तर जब त्यस सिद्धान्तको प्रयोग आफ्नो वर्तमानमा गर्नुपर्ने हुन्छ त्यसबेला मानौं उस्तै जटिलता, अन्योल, भ्रम, अप्ठेराहरू र यस विकल्पलाई समातूँ कि उस विकल्पलाई भन्ने समस्याले पिरोल्छन् र ती समस्याको समाधान कुन कुन साहित्यले के-के गरी गर्छन् त्यसैअनुसार त्यस गुगका साहित्यिक संसारको सिर्जना हुन्छ । त्यही हिसाबले आजको प्रयोग जस्तै श्रेष्ठ भए पनि भोलिको युगलाई पर्याप्त हुँदैन र त्यही नयाँ मौलिकताको/नौलो प्रतिभाको आवश्यक पर्न आउँछ । यो विषय यति गहिरो भएकाले प्रत्येक साहित्य स्रष्टाले 'स+शि+सु'बारे निरन्तर अध्ययन, चिन्तन, मनन गरिरहनुपर्ने हुन्छ र हरेक समयको वाद-विवादमा, प्रयोग-प्रतिप्रयोगमा, आफ्नै सिर्जनात्मक निर्णय लिई एक एक उन्नत साहित्यका सृष्टि गर्दै रहनुपर्छ । यसरी साहित्यका क्षेत्रमा पनि जो यस प्रकारको निरन्तर खनजोत, डल्ला फोराइ, मल हलाइ, नहर पानी लगाई र नयाँ उन्नत दर्जाको बिजको प्रयोग गर्दै रहन्छन् उनले आफ्नो साहित्यको उन्नत फसल नभित्र्याउलान भन्नु पर्दैन । विशेषगरी 'साहित्य जीवनको निम्ति हुर्नुपर्छ,' 'साहित्यमा 'शिवत्व' वा कल्याणको भूमिका कति पनि निफरो हुनु हुन्न' वा 'श्रमजीवी मात्रको सेवामा मात्र अर्पित हुनुपर्छ' भन्ने उत्तम विचार राख्ने साहित्यकारहरूले आफ्नो साहित्यिक फसल कतिको पोटिलो, खँदिलो, शोभाउँदो र हररर मन हर्ने खालको बन्न सकेको छ भनी जाँच-पड्ताल गरिरहनु आवश्यक हुन आउँछ । यो जाँचको कसी आफूजस्तै सिद्धान्तका अन्य साहित्यकारहरूका श्रेष्ठ रचनाहरू त छँदैछन् तर त्यसभन्दा पनि बढी तिनले 'साहित्य/कला/साहित्यको निम्ति' भन्ने सिद्धान्त लिई सृष्टि गरेका रचनाहरूसित 'स+शि+सु'का दृष्टिले होड गर्न सक्नुपर्छ । यस होडमा 'सौन्दर्य' वा 'कला' का क्षेत्रमा ती

कलावादी साहित्यिकहरू एक पाइलो अघिल्तिर देखिए पनि 'स+शि+सु'को समग्रतामा जीवनवादी साहित्यले हाँक दिन सक्नैपर्छ, र यसले वास्तविक जाँच-पड्ताल त लोकले वा व्यापक पाठक वर्गले गरिनै हाल्छन् ।

माथि चर्चा गरिएका 'स+शि+सु'को प्रकाशमा नेपालका साहित्यकारहरूमा प्रतिनिधि रूपमा के कस्ता रचनाहरू सृष्टि गर्दैछन् भन्ने चर्चा यस लेखको 'प्रयोगात्मक पाटो' हो जसबारे चर्चा गर्न फेरि यस्तै अर्को लेखको आवश्यक हुनेछ, तर अहिले यो 'सैद्धान्तिक पाटो'को लेख मात्र प्रस्तुत गर्नाको पछाडि एउटा मनसाय के छ भने साहित्यकारको दृष्टि 'समग्र' नभई उसका कृतिहरूले समग्रता ग्रहण गर्न नसक्ने हुन्छ; तसर्थ सर्वप्रथम, ती साहित्यकारहरू जो 'जीवनवादी पक्ष'बाट साहित्य सृष्टि गर्दै आइरहेछन् उनीहरूले आफ्ना रचना वा कृतिहरूमा 'कला कलाको निम्ति' ठान्ने साहित्यकारहरूका रचनाहरूका तुलनामा 'स+शि+सु'का आधारमा के कति गुणात्मकता थप्नुछ के यसबारे कुनै गम्भीर चिन्तन-मनन गरेका छन् ? तर साधारणतया व्यवहारमा बढी के ठानिएको पाइन्छ भने जो साहित्यकार 'शिवत्व'प्रति सजक छ उसका रचना बाँकी कुरामा सिपालु साहित्यकारका रचनाभन्दा श्रेष्ठ हुन्छ । के यो भनाइ साँचो हो ? के साहित्यिक श्रेष्ठताको नापो 'शिवत्व'प्रतिको श्रेष्ठ आस्था मात्र हो ? के यसैलाई समग्र दृष्टि भन्न सकिन्छ ?

❑

# विनायकपुर

बनेपाको इतिहास खोजतलास गर्दा बनेपालाई विभिन्न समयमा विभिन्न नामाकरण गरिएको पाइन्छ । अहिले पनि यसलाई बनेपा, भौँत, बन्दिकापुर आदि भन्ने गरिन्छ । यसमध्येको औपचारिक नामचाहिँ बनेपा हो, नेवारहरू भौँट भन्दछन्, धार्मिक कृयाहरूमा बन्दिकापुर भन्ने गरिन्छ । प्राचीन शिलापत्र, ताम्रपत्र र अन्य कागजपत्रहरूमा यस ठाउँको नाम फरक-फरक भनिने पाइएको छ ।

भनिन्छ, बनेपाको स्थापना राजा आनन्ददेवले गरेका थिए । यिनले बनेपालगायत अन्य आसपासका ६ वटा गाउँहरूको पनि स्थापना गरेका थिए । बनेपालगायत वरिपरि सातवटा गाउँहरू छन्, जसलाई सातगाउँ भनिन्छ । यी सातगाउँको केन्द्रविन्दु बनेपा थियो र भौगोलिक दृष्टिकोणले अहिले पनि केन्द्रविन्दु नै छ । कुनै पनि समयमा देश, गाउँ, टोलको नाउँ आर्थिक, सामाजिक, भौगोलिक, ऐतिहासिक, राजनीतिक, धार्मिक आदि कारणहरूले प्रभावित भई परिवर्तन भइरहेको हुन्छ । व्यापारको केन्द्र भएकोले यस ठाउँलाई कुनै जमानामा वणिकापुर (वणिकापुरी) भनियो । बनेपा बस्तीको स्थापना गर्दा त्यसबेला बनेपा पस्ने र निस्कने ८ वटा ढोका र प्रत्येक ढोकामा गणेशको मूर्ति स्थापना गरी सँगसँगै पोखरी सत्तलहरू बनाइएको थियो । बनेपाको लायकू क्षेत्रको पश्चिमपट्टी म सानो छँदा ढोकाको अवशेष र जीर्णोद्दारसमेत गरेको देखेको थिएँ । हाल कहिँ पनि ढोकाको अवशेष देखिँदैन । यसरी ८/८ वटा ढोका र ढोका नजिकै गणेश, पोखरी र सत्तलहरूको निर्माणको कुरा सुन्दा यसलाई विनायकपुर भनिएको पनि सुहाउँदो नै भन्नु मनासिव देखिन्छ ।



**आशाकाजी सेवक**
**जन्म : वि.सं. १९९१ फागुन २०**
**बनेपा, काभ्रे**
**अवसान : वि.सं. २०७१ मंसीर ७**

सुनिन्छ, बनेपा चारैतिर पहाडले घेरिएको दक्षिणको मोहडाको बस्ती भएकोले धार्मिक दृष्टिकोणले राम्रो छैन रे । यसलाई गुणयुक्त बनाउन यसका कुलक्षणहरू पन्साएर शुद्ध पार्नको लागि यस बस्तीको चारैतिर पर्खाल लगाई मूल नाकाहरूमा गणेशको स्थापना गरिएको थियो । गणेशको नजिक पोखरी र सत्तलहरूको निर्माण गरिँदा पोखरीमा नुहाइधुवाई गरी गणेशको दर्शन र पूजापाठ गरिन्थ्यो, सतलहरूमा प्रत्येक वर्ष चतुरमास भजन गरिन्थ्यो । अचेल पनि कहिँकहिँ भजन गरेको पाइन्छ । अरू बेलामा ओत लाग्ने, शितल ताप्ने, यात्रीलाई बास बस्ने, टोलबासीहरू जमघट थलोको नाम सतल थियो । बनेपाभित्र पस्दा र बाहिर जाँदा नाकाहरूमा रहेका गणेशको दर्शनबाट सिद्धि पाइन्छ भन्ने जनविश्वास अहिले पनि पाइन्छ । बस्तीको सुरक्षाको लागि चारैतिर पर्खाल बनाइएको थियो । स्थानीय बोलीचालीको भाषामा यस्तो पर्खाललाई 'गड' भनिन्छ । पर्खालभित्रको बस्तीलाई वास्तविक बनेपा भनिने चलन थियो ।

हालको बनेपा भन्नाले नगरपालिका अन्तर्गत क्षेत्रका विकासे बस्तीलाई समेत जनाउँछ । सुरक्षाको लागि बनाइएको त्यस पुरानो पर्खालको अवशेष कहीँकहीँ अझै पनि पाइन्छ ।

बनेपामा पाइएका स्थापना कालका ८ गणेश, ८ ढोका, ८ पोखरी, ८ सतलहरूमध्ये ७/७ वटा गणेश, पोखरी र सत्तलहरूचाहिँ पर्खालभित्र पर्दछन् । पश्चिमपट्टीको घाट गणेश समेतको पोखरी र सतलहरू पर्खाल बाहिर पर्दछन् । यो घाट गणेश अरू भन्दा मुख्य र महत्वपूर्ण थियो भन्ने सुनिन्छ । यसको आफ्नै विशेषता छ । यस्तै अरू गणेशहरूका विशेषताहरू र औचित्यबारे खोजतलास गर्नुपर्ने देखिन्छ । हालको भौतिक विवरण तथा विशेषता निम्न अनुसार छन् :

## १. कोला गणेश

यो गणेशको ३ फुटको प्रस्तर मूर्ति हो । दायाँबायाँ सिंहको प्रस्तर मूर्तिहरू छन् । पूजा गर्दा बजाउन केही घण्टाहरू झुण्ड्याइएका छन् । यस गणेशको मन्दिर छैन । यसको बसोबास पाटीमा छ । पाटीको पछिल्लो जीर्णोद्धार नगरपालिकाको सहयोग र टोलबासीको सहयोगमा भएको देखिन्छ । यहाँ टोलवासीको गुठी पूजाहरू हुने गर्दछन् । टोलबासीहरू आफूखुसी भक्तिभावस्वरूप दैनिक पूजा गर्दछन् । यो गणेश वडा नं. ५ मा पर्छ ।

यस गणेशको छेउमा भजन गर्ने सत्तल थियो भन्ने सुनिन्छ । अहिले गणेशको पाटी नजिक त्यस्तो सत्तलको अवशेष पनि बाँकी छैन । एकसय मिटर जति पर एउटा सत्तल पाइन्छ । त्यहाँ भजन गर्ने चलन छ न त्यही गणेशको सत्तल हो कि ?

यस गणेशको नजिकै एउटा पोखरी पाइन्छ । यसलाई 'चटनं पुखु' भनिन्छ । बनेपा नगरपालिकाले यस पोखरीको जीर्णोद्धार गरेको छ । यो पोखरी माछा पाल्न योग्य छ । कुलो नै यस पोखरीको श्रोत र निकास भएको देखिन्छ । बनेपाको पश्चिमपट्टी पुलबजार जाने बाटो यहीं हो ।

## २. तुकम्पो गणेश

यस गणेशको भव्य दुईतले मन्दिर वडा नं. ६ मा अवस्थित छ । यस मन्दिरभित्रको गणेशको नाउँमा शीला देखिन्छ । देवलको दायाँबायाँ दुइटा छुचुन्द्राहरूका मूर्तिहरू पाइन्छन् । यस मन्दिरमा रहेको ढलोटको गजुर ३०/३५ वर्ष अगावै चोरी भएको थियो । अहिले सानो गजुर कामचलाउको लागि राखिएको देखिन्छ । मन्दिरको ढोकाको दायाँबायाँ ढुंगाको सिंहका मूर्तिहरू छन् । यसै मन्दिरको छेउमा बुद्धको चैत्य बनाइएको पाइन्छ । यस गणेशको विशेषता के छ भने यहाँका अरू सातैवटा गणेशहरूको जात्रा हुँदैन । यस गणेशको हरेक वर्ष विजयादशमीको टीकाको दिन रथ जात्रा हुन्छ । जात्राको लागि धातुको आकर्षक मूर्ति पाइन्छ । यहाँका मानिसहरू हराएका मालसामान पाउन यहाँको गणेशलाई पैसा चढाउने भाकल गर्दछन्, हराएको माल पाएमा पैसा चढाउँछन्, मनको इच्छा पूरा भएमा पनि गणेशलाई लड्डू चढाउन आउँछन् र चाडपर्वहरूमा पूजा गर्न आउनेहरूको घुइँचो नै हुन्छ । यो मन्दिर बनेपादेखि दक्षिणतिर लाग्ने ढोकामा छ ।

यस गणेशको छेउमा भजन गर्ने लामो सत्तल पाइन्छ । यस सत्तल जीर्णोद्धारको पखाईमा छ ।

यसको पोखरी थियो । सुरूमा जुनसुकै उद्देश्यले पोखरीको निर्माण गरिए तापनि हाल सो पोखरीको जग्गामा चैतन्य माध्यमिक विद्यालय बनेको छ । पोखरीको संकेत पनि देखिँदैन ।

## ३. कोबाहाल गणेश

यहाँका गणेश मन्दिरहरूमध्ये सबभन्दा ठूलो दुईतले भव्य मन्दिर यिनै गणेशको हो । मन्दिरको ढोकाको दायाँबायाँ प्रस्तर सिंहका दुईवटा मूर्तिहरू छन् । मन्दिरभित्र गणेशको नाउँमा शिला गाडिएको रूपमा पाइन्छ । यसै मन्दिरको पछाडिपट्टी बुद्ध भगवान्को चैत्य पाइन्छ । नेपालमा देखिएका धार्मिक सहिष्णुताको परिणाम हिन्दू-बौद्ध धर्मावलम्बीहरू गणेश र बुद्धको प्रतिमाहरूलाई विना भेद्भाव एकैसाथ पूजा गर्दछन् । मन्दिर दक्षिणतर्फ फर्किएको छ । २०४३ सालमा बनेपा नगरपालिका र स्थानीय जनताको सहयोगमा जीर्णोद्धार गरिएको रहेछ । किंवदन्ती अनुसार यस गणेशलाई हैजाको मामा पनि भनिन्छ । पौराणिककालमा बनेपाको पर्खालभित्र हैजा पस्न खोज्दा यो गणेशबाहेक अरू गणेशहरूले भित्र पस्ने ढोका बन्द गरे । मामाको साइनो लगाएर हैजा यसै गणेशको ढोकाबाट पसेका थिए रे । हैजाको महामारी भएको बेला हैजालाई खुशी पार्न यिनको मामा पर्ने यस गणेशलाई पूजा चढाउन आउनेहरूको घुइँचो हुन्छ रे ।

यस मन्दिरको अगाडि भजन गर्ने सत्तल पाइन्छ ।

अचेल जीर्ण अवस्थाको छ, यसले पनि जीर्णोद्धारको समय पर्खिरहेको छ । यस मन्दिरको दक्षिणपट्टी एउटा पोखरी छ यो पोखरी सरस्वती प्राथमिक विद्यालय अगाडि छ । बनेपा नगरपालिकाको आर्थिक अनुदानमा यस पोखरीको जीर्णोद्धार भएको देखिन्छ ।

## ४. ध्वाखा गणेश

वकुटोलमा एउटा सानु गणेशको मन्दिर छ । यसलाई स्थानीय जनताहरू ध्वाखा गणेश भन्दछन् । यस मन्दिरभित्र गणेशको प्रस्तर सुन्दर मूर्ति छ । साँच्चै भन्ने हो भने यो गणेशको मन्दिर दोबाटोमा छ । यो मन्दिर अरू मन्दिरहरूजस्तै दक्षिणतिर फर्किएको छ । यही दक्षिणको बाटोबाट चारदोबाटो जाने बाटो पर्दछ । यही मन्दिरकै छेउबाट चण्डेश्वरी जाने बाटो पूर्वतिर छ भने पूर्वतिरै भीमसेनस्थान जाने बाटो पनि यही हो । यहाँ कुनै जमानामा बनेपाभित्र पस्ने ढोका थियो । त्यसैले यस गणेशलाई ध्वाखा गणेश भनिएको हो । हुन त सुनिए अनुसार बनेपाको ८ वटा गणेशको स्थापना गर्दा सबै मन्दिरको वरिपरि एक-एकवटा सतल, पोखरी र ढोकाहरू पनि बनाइएका थिए भन्ने कुराको प्रमाणस्वरूप ढोका भत्की अवशेष समेत नपाइए तापनि गणेशको नामसँग ध्वाखा जोडिएकोबाट प्रमाणित गर्न सकिन्छ । ध्वाखाको अर्थ हो ढोका । अक्षय तृतीयामा यहाँ इही जग्गे गर्दा ढुसीको (पहिलो दिन) दिन इही पूजाको सिलसिलामा यस गणेशलाई एउटा बोका बलि दिने गरिन्छ ।

यस गणेशस्थानको पूर्वपट्टी एउटा ठूलो पोखरी छ । अरू गणेशस्थानको पोखरी ३/४ वटा लोप भए तापनि यस ध्वाखा गणेशको पोखरी अद्यापि पाइन्छ । पोखरीको समय-समयमा मर्मत गरे तापनि फेरि मर्मत गर्नुपर्ने देखिन्छ ।

यहाँको भजन गर्ने सत्तल पहिलो थियो रे । अहिले सत्तलको अवशेष पनि पाइन्न । सडक फराकिलो पार्दा अथवा पोखरीको मर्मत गर्दा अथवा अरू कुनै कारणवश सत्तलको अस्तित्व गुमेको हुन सक्तछ ।

## ५. काँथु गणेश

बनेपाको काँथु टोलमा स्थापना गरिएका यी गणेशलाई काँथु गणेश भनिन्छ । यस मन्दिरमा गणेशको नाउँमा आकारविहीन ढुङ्गो गाडिएको पाइन्छ, मूर्ति नै यही हो, यहाँको मन्दिर सानो छ, दक्षिणतर्फ मोहडा छ । यो मन्दिर पनि दोबाटोमा छ । धगाल, घोकेचौर, तीनधारा र शाहीटोल चारैतर्फ जाने चौबाटो यहीं पर्दछ ।

यस मन्दिरको पूर्वपट्टी एउटा पानी विनाको पोखरी पाइन्छ । पानीको अभाव र संरक्षणको अभावमा पोखरी नाममात्रको हुन गएको छ । पोखरीको छेउमा द रेयुकाइको भवन निर्माण हुँदैछ ।

यस गणेशको छेउमा एउटा सत्तल छ । सुनिन्छ, यस सतलमा चतुरमास भजन गरिन्थ्यो । अहिले यस सतललाई एउटा सार्वजनिक पुस्तकालयको रूपमा परिणत गरिएको छ ।

## ६. ख्यो गणेश

थाछुटोल भन्नाले वडा नं. ४ हो । यहाँको गणेशको सानो आश्रमस्थल देवल छ । यसलाई थाछु गणेश भनिन्छ । स्थानीय मानिसहरू ख्यो गणेश भन्दा रहेछन् । चौर वा खुल्ला ठाउँलाई नेपालभाषामा ख्यो भनिन्छ । त्यस्तै चौरमा बसिरहेको गणेशलाई ख्यो गणेश भनिएको हो । यस गणेशको मूर्ति कुँदिएको छ, गणेशको अगाडि दायाँबायाँ सिंहका दुईवटा प्रस्तर मूर्तिहरू छन् । स्थानीय जनता र नगरपालिकाको अनुदानमा गणेशस्थानको जीर्णोद्धार गरिएको सुनिन्छ । यस गणेशको दक्षिणपट्टी पोखरी छ, पानी छैन । यस पोखरी पनि जीर्णोद्धारको दिन पर्खिरहेको छ । यसको वरिपरि सत्तल देखिँदैन । यहाँबाट उत्तरतर्फ मगरगाउँ जाने बाटो पर्दछ ।

## ७. प्वाकः गणेश

नेवारहरू खाल्डोलाई प्वाकः भन्दछन् । प्वाकः गणेशको मतलव खाल्डोमा बसिरहेको गणेश भन्ने बुझिन्छ । पहिला-पहिला खाल्डोमा बस्दै आए तापनि अचेल यस गणेशको आश्रम समथरमा छ, यसको प्रस्तर मूर्ति देखिँदैन । खुल्ला ठाउँमा सामान्य ढुंगा प्रतिमाको रूपमा स्थापना गरिराखेको पाइन्छ । एउटा घण्टा पाइन्छ । मन्दिर छैन । यहाँका मानिसहरू ठूला भोजको लागि रक्सी बनाउन यस गणेशलाई पूजा गर्दछन् । गणेशकै प्रसाद स्वरूप राम्रो गुणस्तरको रक्सी पार्न सकिन्छ । यस गणेशको विशेषता यही हो ।

यस गणेशको वरिपरि पोखरी हुनुपर्ने हो, अचेल पाइँदैन । सायद पोखरी देशकाल परिस्थितिअनुसार लोप

भएको हुन सक्दछ । यस्तै यहाँको सत्तलको पनि अवशेषको संकेत समेत देखिन्न । यस टोलमा अचेल चतुरमास भजन हुँदैन । जमानामा थियो होला । यो उतिको चल्ने बाटो नभए तापनि भण्डारी गाउँतिर जाने बाटो यही हो ।

## ८. घाट गणेश

यो गणेश वडा नं. ५ मा छ । यहाँबाट पश्चिमतिर पुलबजार जाने मूलबाटो पर्दछ । यसैको पछाडि नाला जाने बाटो छ । बनेपाका संरक्षक मानिएका ८ वटा गणेशहरूमा सातवटा पर्खालभित्र छन् भने यो घाट गणेश पर्खालबाहिर छ । सुनिए अनुसार अरू गणेशहरूभन्दा यिनी मुख्य र ठूला छन् । यसलाई स्थानीय भाषामा तलापुखु गणेश पनि भनिन्छ । बनेपामा वर्षेनी ल्याइने नवदुर्गाको नाच (जात्रा) यहींबाट सुरू हुन्छ । यहाँ गणेशको दुई फुटको प्रस्तर मूर्ति छ, दुईवटा घण्टाहरू छन्, चारतिर दियो बाल्न पालाहरू छन् । यस गणेशलाई दसैंको चाडमा फूलपातिको दिन सरकारी पूजा गरी एउटा राँगो बलि दिएपछि अरू गैह्र जनताले पर्खालभित्र फूलपातिको दिन राँगो काट्न पाइने व्यवस्था थियो । गणेश मन्दिर र जगतिको मर्मत नगरपालिका र स्थानीय जन सहयोगबाट भएको छ ।

यस घाट गणेशको अगाडि ठूलो पोखरी छ, यसलाई तलापुखु पनि भनिन्छ । पोखरीमा ३ वटा घाटहरू थिए । पोखरीको मर्मत जनसहयोगले भएको छ । यसको संरक्षण दछुटोल कन्यापूजा गुठीले गरेको छ । यहाँ माछा पाल्ने पनि गरिन्छ ।

यस गणेशको वरिपरि अहिले सतलको अवशेष पनि भेटिँदैन । सायद जमानामै सतल भत्किएको हुनुपर्छ । लायकूको ढोकाबाहिरको यो गणेश छेउकै बाटोबाट पश्चिमपट्टी काठमाडौं जाने मूलबाटो यही हो ।

बनेपाको संरक्षकको रूपमा स्थापना गरिएका मूल ढोकाका यी आठवटा गणेशहरूबाहेक सार्वजनिक पूजा गरिने गरेका गणेशहरूको सङ्ख्या एकसय पुग्छ । टोलवासीहरू आफ्ना-आफ्नो नियमित पूजा गर्दछन् । ठूला-ठूला चाडपर्वहरूमा गणेशको विशेष पूजा पनि गरिन्छ । प्रत्येक साल भाद्र कृष्ण चौथीका दिन यहाँ गणेशको पूजाको ठूलो आयोजना हुन्छ । यस पूजाको आयोजक बनेपा कोलाटोलका लक्ष्यश्वर महादेवको भजनियाँहरू हुन्छन् । चारघण्टासम्म हिँडेर बनेपाका सबै गणेशहरूलाई यथास्थानमा गई पूजा गरी सहभागीहरूले स्वारी, मालपुवा, सेल, विस्कुट, तलासी, लड्डु, पेडा, पैसा, फलफूल, चकलेट आदि चढाउँछन् । यसरी पूजा चढाउन जाँदा बाजागाजासहित लावालस्कर नै जान्छन् । भक्तिभाव भएका मानिसहरूले गणेशको स्थापना अझै गर्दै गएका छन् । यी पूजाहरूमा बनेपाको संरक्षक आठवटा गणेशहरूको पनि ससम्मान पूजा हुन्छन् । यस्तै भाद्र शुक्ल चौथीमा गणेश चौथी पर्व सबै घरमा मान्छन् । मंगल चौथीका दिन गणेशस्थानमा पूजा गर्न आउने घुइँचो नै हुन्छ । यसरी गणेशको अति सम्मान साथ पूजा गरिने हुँदा प्राचीन समयमा यस बस्तीलाई विनायकपुर भनिएको उपयुक्त नै थियो ।

दक्षिण मोहडाको बस्ती – बनेपाको भौतिक पक्षलाई लिएर यस्तो चर्चा पनि सुनिन्छ । बनेपा अष्ट गणेशको मूल नाकाहरूमा स्थापना नगरेको भए कुलक्षणको बस्ती हुने थियो । यस बस्तीको स्थापना गर्दा संस्थापकले बुद्धि पुऱ्याएर गणेशहरूको पनि स्थापना गरेको भन्ने सुनिन्छ । एक पटक एकजना महात्मा घुम्दै फिर्दै बनेपा आएछ, कुलक्षणको बस्ती भनी बनेपाको पर्खालभित्र बास समेत नबसी घोकेचौरमा बास बसेछ । राती बिउँझदा महात्माले पाँचवटा टाउका भएका एउटा नागले बनेपालाई झलमल पारी संरक्षण दिइरहेको देखेछ । मूल नाकाहरूमा गणेशको स्थापना गरिएकोले मात्र यस बस्तीको लक्षण भएको गुह्य कुरा महात्माले पत्ता लगाए भन्ने जनश्रुति पाइन्छ ।

पूजा भनेको भक्तिभावले गर्ने हो । पूजा गरिने देवताको प्रकृतिअनुसार मात्र पूजा हुनुपर्ने हो । गणेशको टाउको हात्तीको टाउकोको प्रतीक हो । हात्ती शाकाहारी प्राणी हो । तसर्थ गणेश पनि शाहाकारी नै हुनुपर्ने हो । मैले सुने अनुसार तराई क्षेत्रमा र विहार प्रान्तमा गणेशको पूजा गर्दा पूर्ण शाकाहारी हुन्छ । तर बनेपालगायत पहाडी भेगमा र उपत्यकामा गणेशको पूजा गर्दा राँगो, बोका, हाँस, भाले, अण्डा, नैवेद्य आदि बलि दिने गर्दछन् । यसको वास्तविक ज्ञान थाहा नपाएर हो कि ? अथवा के ले हो ? यसबारे यथार्थ पूजाको सामग्री र विधि शाकाहारी वा मांसहारी के हो ? विद्वान्जनले प्रकाशमा ल्याउनु आवश्यक छ । परम्परा भनेर धर्मका नाउँमा पाप त कमाइरहेका छैनौं हामीले ?



# ममता



डा.ओमवीरसिंह बस्न्यात
जन्म : वि.सं. १९९९ मंसीर १
धर्मस्थली, काठमाडौं
अवसान : वि.सं. २०७८ चैत्र २५

आज प्रकृतिको त्यो सुन्दरमय दृश्य पनि शोभाको नजरमा उदास र चिसो अनुभवले ओझ्ल पारिरहेको थियो । बाहिरी तीव्र भावावेग शोक प्रदर्शन नभए पनि उसको मनमा त्यो सानो बालक माधवको स्नेह औ प्यारले अव्यक्त भावग्राही मनस्थितिमा रूमल्लिएकी थिई । माधवको सरल र मासुम स्वच्छ चेहरा हेरी ऊ दिन परदिन खेल्दै रमाउने गर्थी । अब उसका हृदयमा केवल त्यो आकर्षण र प्रतिबिम्ब हुँदै मुटुमा धक्का लगाउँदै थियो । बाहिर धर्ती घामको प्रचण्ड प्रकाशले झलमल भए पनि उसका आङमा कत्ति घामको न्यानो स्पर्शको अनुभूतिले छाएको थिएन । ऊ केवल तड्पिँदै थिई – अब माधव आज मदेखि पर हुँदैछ ।

शोभा बाहिर आँगनमा भाँडा माझ्दै थिई । अनेकौं मनभित्रका तरङ्गमा एकाएक डुब्दै उसले माधवलाई च्याँठिएर बोलाई – 'माधव !' माधव दगुर्दै आएर अँगालो मार्दै टाँस्सियो । ऊ फेरि एकफेर ममताले निसासिन पुगी । आँखाभरि आँसु पार्दै मेरो राजा भन्दै म्वाइँ खाई । शोभाको आँखामा आँसु देखेर ऊ जिल्ल पऱ्यो ।

किन धाईआमा रोएकी ? – माधवले आफ्ना दुवै हातले आँसु पुछ्न थाल्यो । शोभाको भने झन्-झन् मनको वह आफैले नियन्त्रण गर्न नसक्दै बाहिर फुट्यो र सुँक्कसुँक्क रून लागी । सानो भएकोले माधवमा अनभिज्ञता जरूर थियो । तर हृदयभित्रको आत्मीयताको त्यो क्षण अखण्ड गम्भीरमयता दुवैको आँखाले बताइरहेको थियो ।

शोभा गाउँकी एक उमेर पुगेकी साधारण अधबैंसे आइमाई हो । पाँच वर्षअगाडि माधवको बाबु राम पण्डित एक सानो बालक र आफ्नो जहान लिई यस जिल्लाको घरेलु अड्डामा ना.सु. पदमा जागिर खाएर आएका थिए । यहाँ आएको केही दिनमैं उसकी पत्नीलाई जन्डिस भयो र उनी साह्रै बिरामी भएर थला परिन् । राम पण्डितको जीवनमा ठूलो संकटको भुमरी आइपऱ्यो । पण्डितलाई आफ्नो जागिरमा जानु, घरधन्दामा व्यस्त रहनु र जहानको हेरचाह गर्नु आदिले माधवको कुनै स्याहारसुसार हुन नसकेर जीउ सुकेर एक मुट्ठीको हुन पुग्यो । धेरै ठाउँमा सुसारेको खोज गर्दै हिँडेका पण्डितले आफ्नै अड्डाको पियनबाट शोभालाई फेला पारेका थिए ।

गाउँले पाराकी आइमाई, पहिले त उसको बिल्कुलै काम गर्ने मन थिएन । उसले भनेकी थिई – अब यो उमेर भइसक्यो सक्दिनँ म कसैका छोराछोरी खेलाउन, बरू भोकै बसूँला । पियनले धेरै फकाएर मात्र उसलाई काममा लगाएको थियो । माधव त्यो सानो बच्चो, सिन्कोजस्तो खुट्टा, सुकेनासले

खाएको झिनो शरीर, केवल मुखाकृति मात्र भएको । यो देखेर कान्छीले पहिले त घृणाको दृष्टिले हेरी, कतिपल्ट भनेकी थिई - खै, यो त मान्छे पनि हो कि होइन, कस्तो ज्यानै नभएको । आमाको दूधबाट अलग्गिएको बालकको के गति होस् ।

अलिअलि गर्दै जब उसले स्याहार्न थाली, माधवको शरीर पुष्ट बन्दै गयो र रहरलाग्दो हुँदै फस्टाउन थाल्यो । उसको स्याहारसुसारबाट छोरो फस्टाएको देखी बाबु पनि दङ्ग पर्न थाले । अब माधव रोगले आक्रमण गर्न नसक्ने हुँदै आयो । एवं रीतले ऊ ३/४ वर्षको पनि भयो । बराबर दगुर्दै धाई आमा भन्दै उसलाई पछ्याउँदै खित्का छाड्दै आफ्नो काखमा आएर बसिर्दिदा ऊ अनन्त स्नेहले भावविभोर भएर हेरिरहन्थी । हरदिन उसलाई सुताउनु र डुलाउनु उसको नित्य कार्य भएको थियो । माधव पनि आफ्नो आमासँग भन्दा शोभाकै काखमा बस्न रूचाउँथ्यो । शोभा पनि माधवलाई अति प्यार गर्थी ।

बिदाइको बेला साइतको त्यो क्षण वातावरण केही हर्ष र बिस्मात दुवैले भरिएको थियो । राम पण्डितको मन चञ्चल देखिन्थ्यो । उनी आफ्नो भ्रमणको तत्परतातिर केन्द्रित थिए । उमा घरका सबै सामानहरू मिलाउँदै भारी बनाउने काममा व्यस्त थिइन् । बिहानीको प्रहर छिप्पिदै थियो । शोभाले भाँडा माझी र भित्र ल्याई । उसले बुझेकी थिई । अब राम पण्डित उसलाई केही दिएर बिदा गर्दैछन् । ऊ आफैभित्रको अन्तरपीडाले ठूलो उद्वेलनमा रूमल्लिएकी थिई ।

राम पण्डितले बडो स्नेहार्द्र भावले भने - लौ, बिदाइको दिन पनि आइपुग्यो । तिम्रो सेवास्याहारले मेरो परिवारको ठूलो रक्षा भयो, त्यो सानो बाबु माधवको ज्यान तिमीले नै बचाएकी हौ । त्यो मात्र होइन, रमाको ज्यान पनि तिमी भएरै बाँचेको हो । तिम्रो सेवाको मोल तिर्न गाह्रो छ । त्यो अनमोल नै छ । जे होस्, हामीसँग आफ्नो गृहस्थी व्यवहार छँदैछ । ल, हाम्रो गच्छेले भेटेको यो रू. दुई हजार ल्यौ !, भन्दै दिन हात बढाए ।

शोभा स्नेहपूर्ण दृष्टिले दीन र विनीत भावले चिन्तित हुँदै हेर्दै रहेकी थिई । माधवको प्यार उसको अन्तरमा प्रतिबिम्बित भएर झल्किरहेको थियो । हृदयमा आई बसेको यो मूक स्नेह पन्छाउन उसलाई निकै गाह्रो भएको थियो । मनभित्रका भावहरू एकाएक चीत्कार गर्दै थिए - कति शून्यतामा बिलीन भएर स्तब्ध भइरहेछस्, केही बोलूँ । तर उसले बोल्ने के ? उसको वेदना कसलाई पोख्ने ? खै, कसले के भनिदिने ? बरू एकान्त पहराको गुफामा गएर चीत्कार गऱ्यो भने त्यो आवाजको प्रतिउत्तर पहराले फर्काएर केही बोलिदेला कि ? आदि कुराले भाव गम्भीर हुँदै थिई ।

उसको भाव देखेर विस्मित हुँदै गम्भीर शब्दमा राम पण्डितले आग्रह गरे -'केही त बोल शोभा ! हामीबाट कुनै त्रुटि भयो कि ? अब यहाँबाट हामी पनि प्रस्थान गर्दैछौं । कहाँ पुगिएला ? यतिका वर्ष सँगै बस्यौं, हाम्रो जागिरेको जुनी हो, अस्थायी ठेगाना लिएर हिँड्छौं । एक ठाउँबाट अर्को ठाउँ हुँदै जीवनभरि चहारिइरहनुपर्ने रहेछ । सक्छ्यौ भने हाँसी-खुसी बिदा देऊ !' ओँठमा केही हाँसो ल्याएर राम पण्डितले भने ।

शोभाको आँखामा विषाद र अनुहारमा गम्भीरता थियो । त्यो निःशब्दताको मूर्तिले फेरि एकफेर दीर्घ स्वास लिई माधवतिर करूण दृष्टि फेर्दै निरास स्वरमा केही उच्चारण गरी -'यता आऊ माधव !' माधव नजिकै आइपुग्यो । शोभाले भनी -'लौ, सायद हाम्रो यस जुनीमा भेटघाट यतिसम्म रहेछ । कस्तै सुख होस् कि दुःख होस्, तिम्री धाईआमालाई नबिर्सनू है । धाईआमा जीवनभर तिम्रै यादगारमा रहन्छे ।' माधव ऊसँग लपक्क टाँसियो । उसलाई काखमा लिंदै राम पण्डिततिर फर्केर उसले भनी -'म आफैलाई प्रश्न गर्दैछु, कतिसम्म यो माया, ममता, प्यार भन्ने वस्तुलाई सत्य देख्न पुगिरहेछु ? जुन कुरामा सत्यता नै छैन निरर्थक छ, अस्तित्वबोध नै छैन । केवल क्षणिक र दिवास्वप्न मात्रै हो भन्ने बिल्कुल नजानेर झूटो मायामोहमा दौडिरहेकी रहेछु । फेरि यो किन यसरी खोटो जस्तै टाँस्सिइरहँै ? त्यो पैसा मलाई दिन लाग्नुभएको छ, त्यो पैसाले माधव बाबुको फोटो बनाएर पठाइदिनुहोला । त्यही हेरेर यो मन सन्तुष्ट पार्ने थिएँ ।' यति भन्दाभन्दै उसको गला अवरूद्ध भयो । आँखाका सम्मुख अँध्यारो छायो । शोभा त्यहाँबाट आँसुका धारा बगाउँदै परपर हुँदै ती सबैको आँखाबाट ओझेल परी । ❑

# राष्ट्रियता



■ ओमी शर्मा
जन्म : वि.सं. २०२५ असोज १४
खोकना, ललितपुर
अवसान : वि.सं. २०६८ असोज ८

राष्ट्रियता राष्ट्रसँग गाँसिएको हुन्छ । त्यही राष्ट्रियताले गर्दा राष्ट्रको समुन्नत विकासको अपेक्षा गर्दछ । राष्ट्रियता मौलाउँछ मनको मझेरीमा, राष्ट्रियता बौलाउँछ मनको अँधेरीमा । त्यसैले राष्ट्रियता प्रत्येक व्यक्तिको हृदयको उच्च स्थानमा हुनुपर्छ जहाँ समुन्नत राष्ट्रको परिकल्पना होस् । प्रत्येक व्यक्तिको आँखा, नाक, जिब्रो आदिमा मात्र होइन अङ्ग-अङ्गमा समेत यस विषयको सीमाले नेटो नकाटोस् ।

म खुल्ला आकाशमा हेर्छु, प्रत्येक नक्षत्रले नेपालको नक्सा कोरिरहेको पाउँछु । जब म घरमा हुन्छु अनि घरबाहिर, प्रत्येक पलमा अनि चलमा राष्ट्रको उचाइ मापन गरिरहेको हुन्छु । मैले सुन्ने चराको चिरविराहट, हिमालको झलमलाहट, कुकुरको भुकाइ, मान्छेको बोलाइ सारा कुरामा नेपालको छविछाया अनि माया प्रतिध्वनित भइरहेको पाउँछु । आकाशभरिका बादल निरन्तर बनिरहने आकारप्रकारमा कहिले नेपालको ध्वजा, कहिले डाँफे, कहिले गुराँस, कहिले ध्यानमा निमग्न सेता दाडीयुक्त सौम्य मुनी देखिरहेको हुन्छु । लाग्छ मलाई प्रकृतिले आकाशको क्यानभासमा नेपालका परिदृष्य उतारी बादलबाट चित्ररेखा कोरिरहेकी छिन् । जब म हृदयमा राष्ट्रियता स्पर्श गर्न पुग्छु तब छताछुल्ल भएर पोखिएको पाउँछु ।

मलाई कताकता डर लाग्छ यो कतै उम्केर जाने त हैन ? यसलाई मुट्ठीमा कसेर राखूँ कि भन्ने दुःसाहस यदाकदा नआउने हैन तर यो भावना त स्वतन्त्र रूपले आउने भएको हुनाले तानाशाह प्रवृत्ति निकाल्नुभन्दा यसलाई पूर्ण हाँसोले स्वागत गर्न, मभित्र अटाउन यी बाचाहरू फैलाउनु अनुचित होइन । यो आफूमा समेट्न, खोक्रो दिमागभित्र घुसाउन उदारभावना, खुला विचार अनि स्वच्छ मनको सहायताविना सम्भव हुँदैन । यसमा अहम्ता, स्वार्थीभावना र अवसरवादिताको गन्धको आभासले व्यक्तिवादको दुर्गन्ध फैलिन्छ । मैले सुँघ्ने नेपाल हो । मेरो नाकमा नेपालको सुवासना सुगन्धित भएर मगमगाइरहेको छ ।

राष्ट्रियता म आफैभित्र समेटूँ, म आफैभित्र उजागर गरूँ ? हुनसक्छ, त्यो मेरो अदम्य साहस, अगम्य विचार । दृष्टिको फैलावटले यस्तो विचारलाई अँधेरी कुनामा फाल्छु, यो सत्य हो । तर सत्य यो पनि हो, त्यही अँधेरी कुनाबाट उषाको सुन्दर विहानी आउँछ । तर यो एक आपसको गहिराइमापन र एक अर्काको कृतज्ञताज्ञापनले मात्र सम्भव हुन्छ । अन्यथा यो आँधीहुरीले ल्याउने लथालिङ्ग एवम् तहसनहस हुने सिवाय अरू केही हुँदैन । आफ्नो र

अरूको मन मिलाउनु नै राष्ट्रिय भावना सूत्रपात्र गर्नु हो ।

देश रून्छ, देश हाँस्छ, देश दुख्छ, देश काम्छ अनि देशलाई रोग पनि लाग्छ । देश रोएको, हाँसेको, दुखेको, कामेको अनि रोग लागेको हेर्ने चर्मचक्षुले भेट्टाउँदैन । आज देशलाई क्यान्सर लागेको छ । देश उठ्न नसक्ने स्थिति छ । देशलाई व्यथाले च्याप्दै छ । देश रोएर, कराएर, लडीबुडी गरेको छ । देश भयातुर छ, भयाक्रान्त छ । आफ्ना लालाबालालाई टुहुरो हुन नदिन उपाय सोचिरहेको छ । हर उपायबाट विरक्तिएर एकान्तबास हुने अवस्था छ । राष्ट्रको अङ्ग प्रत्यङ्गमा घाउको रगतको टाटै-टाटा भएर कटकटिएको छ । घाउ नभएको अङ्ग म खोज्दै हिँड्छु, घाउ नभएको त्यस्तो कुनै अङ्ग छैन जहाँ हेरेर र छामेर सन्तोषको श्वास फेर्न सकूँ ।

समयको चक्र सुदर्शन चक्रजस्तो होइन । आँखामा पट्टि वाँधेर कति नै देख्न सकिन्छ र ! अँध्यारो र उज्यालोको पहिचान समयले नै गराउँछ । तर पोतिएको आँखाको ध्वाँसो पखाल्न, चिम्लिएको आँखा उघार्न कसैको करवलले हुँदैन आफ्नै रहरले तत्परता देखाउन सक्नुपर्छ । समयलाई दिन र रातको सम्मिश्रणमा अर्थ्याउने र सुत्नु र उठ्नुमामात्र सीमित पार्ने मान्छेलाई चन्द्रमा छुने, मंगलग्रह छुने लक्ष्यको विर्कोमा ताल्चा मारी एउटा भ्यागुता कूवामै रमाउने प्रवृत्ति सिकानुपर्छ भन्ने मेरो ठहर हो । किनभने ठूला लक्ष्य बोक्नेले सानो लक्ष्यलाई हृदयको कुनै पनि स्थानमा समेट्न गाह्रो पर्ने हुन्छ ।

नाडी छामेर देश जाती हुन्न । देशको मन छाम्नुपर्छ, देशको धन होइन । देशलाई उठाउन डोजर चाहिँदैन, सबैको कान्छी औँलामात्र भए पुग्छ । रोएको देशको आँसु पुछ्न कर्मठ हातको आवश्यकता पर्दछ । क्यान्सरबाट आक्रान्त देशलाई उपचार गर्न नेपाली डाक्टरहरूबाट नै सम्भव हुन्छ । चिरफारको आवश्यकतामा नेपाली कलममात्र भए पनि पुग्छ । कलममा त्यस्ता शक्ति छ जसले शीतलता प्रदान गर्छ । व्यथाले च्यापेर असह्य वेदना अनि आतुरतामा पनि संयम प्रदान गर्न सक्छ । त्यसैले म कलम समाउँछु, आफैँलाई शीतल पार्न, आफैँलाई निरोगी तुल्याउन ।

मभित्र सिङ्गो नेपाल अटाएको छ । म जहाँ जाऊँ नेपाललाई बोकी हिँडेको छु । म गिरे नेपाल पनि गिर्नेछ, म उठे नेपाल पनि उठ्नेछ । त्यसैले नेपाल उठाउन आफू उठ्नुपर्छ । हिमालको झलमलाहट मैभित्र छ । हिमाली हावाको श्वास मैले लिइरहेको छु । हिमाल अग्लिए नेपाल अग्लिन्छ, हिमाल होचिए नेपाल होचिन्छ । हिमाल र नेपालबीच अटुट सम्बन्ध छ जसरी सूर्य र किरणबीच छ । हिमालको उचाइमा विचार अग्लिन्छ । म कुहिरोझैं तरङ्गित बनिदिन्छु पुलकित बनी, जति-जति म माथि पुग्छु उति-उति विश्वव्यापकता भएको नेपाल पाउँछु ।

म विदेशमा रहँदा, बस्दा र खाँदासमेत नेपाललाई आँखामा अटाउने गर्छु । नेपालको स्वाद लिइरहेको हुन्छु । नेपाली खानामा, गानामा, तानाबानामा सबै एउटै नेपालको छानामा दाना खाएर म नेपालको एक-एक पाना पल्टाएर नियालिरहेको हुन्छु । नेपालमा हरेक किसिमका चीजहरू जे-जति भेट्टाएँ त्यहाँ बाना मिलेको पाएको छु । त्यसैले निद्रामा र तन्द्रामा समेत म आफ्नै देशको सपना देखिरहेको हुन्छु । तव ममा राष्ट्रियताको भावना किन नआओस् ? जहाँ मैले सुन्दर संसार पाएँ, जहाँ माटोको सुगन्ध पाएँ, जहाँ टेक्ने आधार पाएँ ।

मलाई त्यही राष्ट्र ठूलो हो जहाँ आफ्नो पहिचान बन्यो । आफ्नो पहिचान माथमा राख्ने मौका जसले दिलायो त्यही नै मेरो लागि गर्वको कुरा हो । आफ्नो पहिचान माथमा राखी देशदेशावर घुम्नेहरूप्रति भने मेरो धेरै गुनासो छ । त्यसो गर्नु भनेको आफ्ना पहिचानको खोजीमा पहिचान गुमाउनु हो । पहिचान नगुमाई पहिचान पहिल्याउनु पो त प्रमुख साधना हो । तर पहिचानको ज्योतीमा तेल थपी अझ तेजिलो पार्न छोडी सलेदो नै फाल्ने काम भइरहेको छ । ज्योतिस्वरूप राष्ट्रको पहिचान बनाउन राष्ट्रियताविना सम्भव हुँदैन ।

म भन्छु व्यक्ति केही होइन । तर एउटा राष्ट्र उठाउन त्यही व्यक्ति सबथोक हो । राष्ट्र जोगाउन त्यही व्यक्तिको आवश्यकता पर्छ । राष्ट्रियता व्यक्तिमा निहित हुनुपर्दछ । त्यसैले राष्ट्र र राष्ट्रियताको त्यस्तो तादात्मयताको सम्बन्धमा नेपाल र नेपालीबीच छ । राष्ट्रविना राष्ट्रियता रहँदैन, नेपालविना नेपाली रहँदैन । यहाँ नेपाल राष्ट्र छ त्यसैले ममा पनि राष्ट्रियता छ । ❑

# म मास्केजीको चेलो



कुलमानसिंह भण्डारी
जन्म : वि.सं. १९८२ माघ २१
नैकाप, काठमाडौं
अवसान : वि.सं. २०७७ साउन २

मेरो चित्रकारिताप्रतिको आकर्षण तथा झुकाव देखेर बाले मलाई चित्रकला विषयका प्रख्यात गुरूकहाँ लगी केही वर्ष इलम सिकाउन पाए आफ्नो बाटो आफै तय गर्न सक्ने थियो भन्ने बाको मनको धोको अनुसार घर नजिकैको कलाकार गुरू चन्द्रमानसिंह मास्केज्यूकहाँ लैजानु भयो । म केटाकेटी छँदाको कुरा हो यो । त्यसबेला गुरू भरखर जेलबाट मुक्त भई घर आउनुभएको कुरा पनि सुनाउनु भएको थियो । त्यो कुरा सुनेपछि मलाई चाँडै गुरूकहाँ सिक्न जाने हतारो लागिरहेको थियो । गुरू चन्द्रमानसिंह मास्केसँग बाको राम्रो चिनजान रहेछ । "यही हो मेरो छोरा । यसले गरेका कामहरू यतिसम्म भएका छन्" भन्दै मैले लेखेका चित्रहरू देखाउन भन्नुभयो । "अब यसलाई यही काममा पारङ्गत पारिदिनु होला । यसले तपाईंको सम्पर्कमा रही अवश्य केही इलम सिक्नेछ" भनी बाले मलाई चन्द्रमानसिंह मास्केज्यूको जिम्मा लगाई दिनुभयो र म त्यस बेलादेखि गुरू चन्द्रमान मास्केज्यूको कलाकारितामय जीवनसँग घनिष्ठ हुँदै र वहाँको उत्कृष्ट कलाकारिताको ज्ञानमा भिज्न अझै प्रयत्न गर्दै काम सिकिरहेको छु ।

यहाँ त्यति बेला १९९७ सालको राजनैतिक घटनाको क्रममा पक्राउमा परी घरखेतलगायत सारा जायजेथा सर्वस्व भएर जेल परेको कारण राजा त्रिभुवन र प्रजातन्त्रको पक्षमा आफ्नो सीपलाई प्रयोग गरेको भन्ने आरोप लागेको कुरा सुने तापनि त्यो विषयमा चासो नभएकोले त्यसबारे कहिल्यै गुरूबारे अरू कसैसँग चर्चा उठाइन । चर्चा उठाउन पनि आफूसँग सुहाउँदो पृष्ठभूमि वा कुनै खुबी भएन भनूँ वा प्रसङ्ग मिलाई कुरा उठाउन जानिन भनुँ । मेरो खास उद्देश्य त प्रष्टसँग छर्लङ्ग हुने गरी छाँट पारेर रेखा कोर्न र स्वाभाविक ढङ्गले रङ्ग भर्न ब्रस चलाउन सिक्नु थियो । त्यसैले गुरूसँग झ्याम्मिदै आफूले कोरेको रेखा कोराइका त्रुटिहरू औंल्याउँदै प्रष्ट बुझिने गरी बताउनु भई सो काम सच्च्याइदिनुहुन्थ्यो । त्यसै गरी रङ्ग भर्ने र ब्रस चलाउने तरिका पनि बडो चित्तबुझ्दो ढङ्गले सिकाउनु हुन्थ्यो । यो सीप दिने सुयोग्य अर्थात् कुशल गुरू पाउन सकेकोले अब म आफ्नो जीवन बाटोमा यस सीपलाई आफ्नो हबिगतले भ्याएसम्म उकास्दै लैजान्छु भन्ने आँट बढेको थियो ।

जेलबाट छुटेपछि गुरू चन्द्रमानसिंह मास्केज्यू कालीमाटी बजारको गोपाल बाजे (गीता गुरू) को घरमा डेरा गरी बस्नुहुन्थ्यो । म र मजस्ता अरू चारपाँच जना सिकारूहरू पनि त्यही रेखा कोर्न र रङ्ग भर्न सिक्थ्यौं । पारसमणि रन्जितकारजीलाई पनि त्यहीँदेखि चिनेको थिएँ ।

गुरू मास्केज्यू त्यति बेला स्कूलमा शिक्षक पेशा अपनाई जीविका गर्नुहुन्थ्यो भन्ने थाहा पाएको थिएँ । पढाउने लगायत अरू कुनै सहायक पेशा

अपनाएको हुनुपर्छ भन्ने लागेको थियो । उहाँको जीवनप्रति मैले कहिल्यै गहिरिएर विचार गरिनँ र खोजीनीति गर्न पट्टि लागिनँ तर अहिले आएर मैले ठूलो मौका चुकाएँ भन्ने लागिरहेको छ । पहिलो पत्नीको देहान्त भए पछि गुरूको दोस्रो विवाह गर्नुभएपछिका बालबच्चाहरू सबैसँग बोलचाल, हिमचिम राम्रो तर घनिष्ठचाहिँ हुन सकेको थिइनँ ।

काम सिकाइसकेपछिको फुर्सदमा हामीहरूलाई वरिपरि राखी उहाँले विभिन्न समय र अवस्थाहरूमा तयार पारेका कलाकृतिहरू एक-एक गरी कुरा बुझाई देखाउनु हुन्थ्यो । तीमध्ये कुनै चित्र पूरा भइसकेका र कुनै अधुरा थिए । कुनै जेलमा बनाएका, कुनै हालसालै बनाएका र पुराना पनि थिए । जेलमा बनाइएका चित्रहरूमध्ये बुद्ध भगवान्को जीवनी चित्र उल्लेखनीय छ । "नेपालका सांस्कृतिक परम्पराको झलक र कृष्ण भगवान्को मुरलीधरका रूपमा अभयदान" स्वरूप चित्र ज्यादै मनमोहक थियो । मलाई साह्रै चित्त बुझेको अर्को चित्रमा भगवान बुद्धले जंगलमा तपस्या गर्दा-गर्दा दुब्लो र जीर्ण शरीर देखेर गोठालालाई करूणा लागेर बाख्राको दूध दुहेर थुनदेखि तपस्वीको मुखसम्म सिर्का पारेर दूध खुवाइरहेको चित्र । त्यो चित्र मेरो जीवनका अविस्मरणीय चित्रहरूमध्ये एक हो । चित्रमा रङ्ग भराइको स्वाभाविक विशेषता पनि ज्यादै उच्चस्तरको मानेको छु । हुनत गुरूका जुनसुकै कलाकृति पनि त्यतिकै गुणस्तरयुक्त हुन्थ्यो । साथै विभिन्न महानुभावहरूमा व्यक्ति-चित्रहरू र भाव-प्रधान चित्रहरू पनि बराबर हेरिरहन पाइने भएकाले हामीले सिकाइमा प्रेरणा थपिरहने गर्थ्यौं ।

हामी वहाँका चेलाहरू विद्यार्थी जीवन व्यतीत गरेर जीवन निर्वाहका लागि विविध पेशामा लाग्यौं । घर-व्यवहारका समस्याका भुमरीमा पनि रन्थनिरहेको भए तापनि यसो कुनै उपायले फुर्सत निकाली हामी गुरू चन्द्रमानसिंह मास्केकहाँ पुगिहाल्थ्यौं । कहिले केहीवेर भलाकुसारी गरेर मात्र पनि फर्कन्थ्यौं भने कहिले अवस्था हेरी तीन-चार घण्टा पनि बसेर चित्रकलासम्बन्धी छलफल गर्थ्यौं । कहिलेकाहीँ सीमित समय लिई गुरूलाई भेट्न जाँदा भने बितेका कुराको सिलसिलावद्ध गफले लामो समय ओगट्दा भने हामीलाई छलफल कहिले टुङ्गिएला भने जस्तो अधैर्यताको अनुभव हुन्थ्यो र अनेक बहाना बनाई चाँडै फर्कन्थ्यौं । फेरि गुरूको गफ जति सुने पनि सुनिरहूँ जस्तो मिठासपूर्ण हुन्थ्यो । कुनै दिन दिनभरि नै फुर्सद मिलाएर कुरा गर्नुपर्ला भन्ने मनमा लागिरहन्थ्यो ।

यसरी धेरै वर्ष बिते, भेटघाट कुराकानी जारी भइरहे, कुराको नयाँ-नयाँ सिलसिला आइनै रह्यो । गुरू र ममा प्रेम र सद्भावनाको विकास-श्रृङ्खला थपिँदै गयो । यसरी नेपालमा कलाको विकास गर्ने भन्ने चिन्तन-मननको निष्कर्षको उद्भव भयो । त्यही निष्कर्ष अनुरूप कला एकेडेमी स्थापना समितिको गठन भयो । त्यसमा मलाई पनि साधारण सदस्य भई आवश्यक कामहरू गर्नुपर्ने भयो । नेपालमा कलाको विकास अविरल गतिले निरन्तर भैरहनका लागि कला एकेडेमी चाहिन्छ भन्ने कुराको कलाकारहरूमा प्रचार हुन थाल्यो । यस समितिको बैठकको सिलसिलामा गुरू मास्केज्यूका साथै हामी धेरै साथीहरू बेलाबेलामा भेला हुने मौका मिल्यो । गुरूज्यूको अध्यक्षतामा भेला हुँदा हामीलाई कला विकासको बाटो पहिल्याउन निर्दिष्ट हुने सौभाग्य मिल्यो । यसरी नै विभिन्न कार्यक्रमहरूको सिलसिलामा भेला भैरहने मौका मिलिरह्यो ।

अस्सी नाघिसकेको उमेरको कारणले गुरूलाई कमजोरी र अस्वस्थताले बरोबर धक्का दिंदै ल्यायो । त्यसैले म भेला-समयबाहेक पनि गुरू हेरचाहको लागि जान थालेँ । गुरू मलाई त्यहीँ बसिरहे हुन्थ्यो वा चाँडो घर नफर्कोस् भन्ने भाव झल्किने गरी कुरा गरिरहनुहुन्थ्यो । छिटो-छिटो आफ्ना पुराना कुराहरू सुनाउनुहुन्थ्यो । "चित्रकला बाहेक अरू कलात्मक र व्यावसायिक विभिन्न जे-जति प्राविधिक काम म आफूले जानेको छु ती सबै काम (मलाई औंल्याउँदै) बाबुलाई सिकाउन चाहेको छु" भनी गुरू भन्नुहुन्थ्यो - "यस सम्बन्धमा उपयुक्त चेलाको खोजी गरिरहेको थिएँ । तपाईंलाई पाएँ, अब चाँडो ती कलात्मक कामहरू सिकाइदिन्छु । फुर्सदको बेलामा सोबारे सम्झाउनु है" भनी गुरूले भन्नुहुन्थ्यो । तर जहिले पनि म उहाँकहाँ गएको बेलामा त्यहाँ गुरूसित भेटघाट गर्न आउने महानुभावहरूको त्यति बेला घुइँचो बढेरै गएकोले "फुर्सदको बेलामा सोबारे सम्झाउनु है भन्नुभए अनुसार उक्त कुरा सम्झाउने मौका पाउन सकिनँ, र त्यो मौका टऱ्यो । गुरूले जोशिएर अरू कुरा थप्दै भन्नुभएको थियो । "मैले अन्तर्राष्ट्रिय विभिन्न मित्रराष्ट्रहरूमा भ्रमण गर्ने अवसर पाएको छु । कति मुलुकमा त तत्कालीन श्री ५ महाराजधिराज महेन्द्र सरकारको राजकीय भ्रमणदलका साथमा सम्मिलित भै जान पाएको छु । स्वर्ग हो कि जस्तो रमाइलो र सुखदायी वातावरण भएका मुलुकहरूमा स्वागत पाउनुका साथै मित्रतामा ठूला उपलब्धिहरू हुन पाउने कुराहरू त्यहाँका मित्रहरूसँग गर्न पाएको त्यो कुरा सम्झँदा अहिले

पनि म त दङ्ग पर्छु । छिमेकी मित्रराष्ट्र जनवादी गणतन्त्र चीनमा गएर फर्केका साथीहरूले त्यहाँका विभिन्न क्षेत्रमा उन्नतिको बयान सुनाएको हुँदा आफू पनि त्यो देश हेर्न जान पाए कस्तो हुन्थ्यो भन्ने लागेको थियो । नभन्दै सौभाग्यवश मित्रराष्ट्र चीनतर्फबाट भ्रमणको लागि व्यवस्था मिलाइदिएको थियो । तर उक्त भ्रमणको लागि राहदानी लिन सम्बन्धित अड्डामा कति धाउँदा पनि राहदानी नै लिन नसकिएर त्यो समय टरेर गयो (गुज्रियो) । फेरि यस्तो मौका पाउन गाह्रै पर्ला । निम्त्याइएको त्यो भ्रमण-अवसर खेर गएकोमा साह्रै चित्त दुखेको छ ।" त्यसैक्रममा अरू कुरा थप्दै उहाँले भन्नुभयो "चित्रकलाको क्षेत्रमा परम्परागत र आधुनिक गरी दुबै शैलीमा चीनले उच्चस्तरका उपलब्धिहरू हासिल गरेकाले त्यहाँका पुराना र नयाँ पुस्ताका कलाकारहरूसँग भेटी कला विकास सम्बन्धमा कुरा गर्ने ठूलो धोको थियो, सो पुरा हुन सकेन ।" गुरू चन्द्रमानसिंह मास्केज्यूले यसरी संक्षेपमा भन्नुभयो ।

घर-व्यवहार धान्नका लागि कमाउन चार पाखा ढाक्दै दौडिनुपर्ने उमेरको अवस्था नरहेको र पहिले आफ्नो जति कमाएको वा छोराछोरीले कमाएको खाई सुविस्तासँग बस्नुपर्ने बृद्धावस्थाको बेला हो । आफूले व्यवहारमा भोगेका जीवनसंघर्षमा कमाएका अनुभवहरूको ज्ञान र सीपका कुराहरू छिटो-छिटो अनुयायी (चेला) हरूलाई ती अमूल्य अनुभवहरू आफू नबित्दै दिई उकास्नुपर्ने काम-कर्तव्य देख्नुभएको हुँदा कला विकासको कुराहरू जुनसुकै भेटमा पनि भनिरहनुहुन्थ्यो । "एउटा अर्को कुरा भनुँ बाबु, यो बरोबर नै बाबुलाई र अरूलाई सुनाइरहेको हुँ, फेरि पनि सुनिराख, मलाई आफ्नै जीवनमा चित्रकला संग्रहालय ( आर्ट-ग्यालरी) सरकारी स्तरबाट नै खोल्न लाउने ठूलो धोको थियो । त्यो एउटा हामी कलाकारहरूको लागि अत्यन्तै जरूरी काम थियो मैले मेरो जीवनकालमा पूरा गर्न सकिनँ भने बाबुहरूले कसै गरी पनि त्यो काम पूरा गर्ने प्रयत्न छाड्नु हुन्न" भन्नुभयो । "आधुनिक ढाँचाले भव्य ग्यालरी सहरकै नजिक बनाउन सरकारले नसकेसम्मका लागि अस्थायी रूपमा हनुमानढोकाको पुरानो बैठक (हाल मुद्रा संग्रहालय) लाई चित्रकला संग्रहालयको लागि सरकारसँग बिन्ति गर्नुपर्छ" भन्नुभएको थियो । "मैले जीवनमा बनाएका सम्पूर्ण चित्रहरू सकारलाई दिन्छु । यो चित्रकला कालान्तरसम्म सुरक्षित रहोस् । नेपालको लागि जहाँ ग्यालरी बन्छ त्यहाँ मेरा चित्रकलाको लागि पनि एउटा मास्के कक्ष रहोस् । मैले बनाएका चित्रकलाहरू सर्वसाधारणसमेत सबैले हेर्न पाउने व्यवस्था होस् । मलाई यता केही महिनादेखि शारीरिक अस्वस्थताले च्यापेर ल्याएको छ । कुनै दिन घुस्रुक्क हुन सक्छु । बाबु, यो कुरा हाम्रा अरू कलाकार साथीहरूलाई पनि बरोबर सुनाइरहनुपर्छ । सबै कलाकारहरूको आवाज सरकारसमक्ष पुऱ्याउन सकेमा अवश्य पनि सरकारले ढिलो वा चाँडो व्यवस्था गरिछाड्छ" भन्नुभएको थियो । यसरी कुरैकुरामा एकदिन मूर्तिकलाबारे कुरा उठ्यो । दुईवटा माटाको मूर्ति र एउटा काँचको मूर्ति दराजबाट झिकी देखाउनुभयो । यो मूर्ति पहिलेदेखि नै देखिआएको भए पनि त्यस बारेमा बयानहरू सुनेको थिइनँ । "म जेलमा छँदा चूलो बनाउन उनैले (नजिक बसिरहनुभएकी श्रीमतीलाई देखाउँदै) पठाएको माटो उवारी बढी भएको माटोबाट यो मूर्ति बनाएँ । जेलमा चित्र बनाउनलाई कागत लग्न पाइँदैनथ्यो । पुरानो लुगालाई चाहिएको साइजमा च्यातेर चित्र लेख्न हुने गरेर विधि पुऱ्याई चित्र लेख्थें" भन्नुभयो । "यो काँचको मूर्ति पनि नेपालकै खनिज पदार्थबाट बनाई पाक पुऱ्याएर पोलेको हो" पनि भन्नुभयो । त्यो काँचको मूर्ति नेपाली हो भन्नै गाह्रो पर्छ । रूप र छाँटमा नेपालीत्व राम्ररी झल्कने र अरू प्राविधिक हिसाबले पनि उच्च स्तरकै देखिन्छ ।

यता केही वर्षदेखि हामीलाई गुरू मास्केज्यूप्रति चासो बढ्दै गयो । यसरी उहाँको सम्पूर्ण जीवन बुझ्दै जाँदा वहाँ चित्रकलाको क्षेत्रमा यस युगकै महान् प्रतिभाशाली व्यक्तित्व हो भन्ने कुरा मलाई लाग्न थाल्यो । म झन् झन् झ्याम्मिंदै नजिकिन थालें । मैले वहाँबाट अरू थुप्रै प्राविधिक ज्ञानहरू र व्यावहारिक आदर्शका साथै देशभक्तिका कुरा सुन्दा यो वहाँमा भएका ती असल गुणहरू पहिले थाहै रहेनछन् भन्ने लाग्यो । वहाँ व्यावहारिक कठिनाइका भुक्तभोगी, जागरूक र चेतनशील अग्रगामी व्यक्ति हुनुहुँदोरहेछ भन्ने कुरा बल्ल मलाई लागेको बेलामा **कला र कलाकार** भन्ने पत्रिकामा मास्के अङ्क जस्तै गरी अन्तर्वार्तासहितको रमेश खनालज्यूको लेख छापियो । त्यसको केही महिनापछि रमेश खनालले नै चन्द्रमान सिंहको संक्षिप्त जीवनी पुस्तिका प्रकाशित भयो । फेरि केही समयपछि **इनाप** भन्ने नेपालभाषाको साप्ताहिक पत्रिकाले प्रकाशित गरेको गुरू मास्केज्यूको अन्तरर्वार्ता पढ्न पाएँ । त्यो अन्तर्वार्ता १ देखि ५ पटकसम्म प्रकाशित भयो र वहाँ बित्नुभएपछि पनि एकपल्ट बाँकी अन्तरवार्ता र बितेको कुरा समेत गरेर ६ पटक **इनाप**मा वृतान्त कुरा निकालिदिंदा गुरू मास्केका अनुयायी चेलाहरूलाई वहाँबारे अरू कुराहरू अझ बढी

जान्न ठूलो सघाउ मिल्न गएको छ । यसरी विभिन्न पत्रिकाहरूले लेख निकाली गुरू मास्केबारे थुप्रै ऐतिहासिक र शिक्षाप्रद कुराहरू देखाई हामी पाठकहरूलाई धेरै सघाउ पुऱ्याएको पाएँ ।

चित्रकलाको क्षेत्रमा व्यक्तिगत रूपको साथै सामुहिक र संस्थागत रूपको विकासमा पनि वहाँ जिन्दगीको लामो समयसम्म मरिमेटेर लागिरहनु भएको थियो । उदाहरणस्वरूप २००७ सादेखि नै अनेक असजिला स्थितिहरू पार गर्दै कलासम्बन्धी अनेकौं नाउँका संगठन खोली त्यसको माध्यमबाट कलाको उत्थान हुने धेरै कामहरू वहाँले गर्नुभयो । हालै आएर आफू अध्यक्ष भएको "कला एकेडेमी स्थापनार्थ समिति" को तर्फबाट आँटेको काम पूरा गरेरमात्र मर्ने वहाँको जुन महान् पवित्र इच्छा थियो त्यो पूरा हुन नपाउँदै बित्नुभएकोमा हाम्रो मनमा ज्यादै खल्लो लागिरहेको छ ।

सोखिन वा पेशेवर कलाकार हुन चाहने धेरै जना विद्यार्थीहरूलाई आफूले दिलोज्यानले कला शिक्षा निःस्वार्थ एवं निःशुल्क रूपमा दिनुभएको देखेको र भोगेको छु । कला सिकाउँदाको वहाँको शैली सजिलोसँग बुझिने छिटो-छरितो ढङ्गको थियो । चित्तबुझ्दो जाँगर लाग्ने मन प्रशान्त भई उत्साह बढ्ने गरी गहिरिएर ध्यान दिई मलाई सिकाउनु भएको थियो । मैले पनि त्यसै गरी गहिरिएर ध्यान दिई सिकेको हुँदा रेखासम्बन्धी काम गर्दा जहाँ जहिले पनि अघि सर्न समर्थ भएको छु । चित्रको काम सिकाउँदा वा अरू नै व्यावहारिक कुराहरूमा मिटिङ्गमा बस्दा समस्या र असजिलो पर्दा पनि गुरुले झर्कोफर्को खिसी गर्ने खालको बोलीबचन कहिल्यै पनि अरू शिक्षार्थीहरूलाई र मलाई प्रयोग गर्नु भएको सुनेको थिइनँ । त्यसको सट्टा बरू धैर्यपूर्वक सिकाउनुको साथै माया-दया र प्यार-स्नेहको भाव झल्काउनुहुन्थ्यो । कहिले गम्भीर भएर बोल्नुहुन्थ्यो भने कहिले ठट्यौली खालको कुरा गरी हँसाउनु पनि हुन्थ्यो । यसरी आफ्ना शिक्षार्थीहरूलाई रमाइलो वातावरण सृजना गरी हौस्याउनु हुन्थ्यो । गुरूकहाँ शिक्षार्थीहरूलाई आउने जाने समय र दिन तोकिएको हुँदैनथ्यो । काममा जाँगर लागेमा वा इच्छा भएमा जति बेरसम्म काम गरिरहे पनि सुविधा थियो, यसरी त्यहाँ चित्रकला सिक्ने चेलाहरूको घुइँचो लागेको हुन्थ्यो । धेरै जना चेलाहरू कला अध्ययन क्षेत्रको बाटो तय गर्दा गुरू चन्द्रमानसिंह मास्केज्यूको रेखाकारिता र रङ्ग पोताइको जगबाट उठेर पौराणिक र आधुनिक कला मन्दिरको गजुर छुन सक्ने अवस्थामा पुगेका छन् ।

मलाई रेखा कोराइको प्रभावमा त्यसप्रति झुकाउ बढ्यो । स्वाध्यायनमा प्रयत्न गरी अभ्यास बढाउँदै लगें- रेखा कोराइको साथै रङ्गहरूबारे पनि ज्ञान र व्यवहार बढाउने सिलसिलामा वरपरका दृश्य चित्र उतार्न अभ्यास गर्दै जाने गरेको थिएँ ।

रङ्ग भराइका झिलिमिलिले झन झन चित्र लेख्ने रहर ममा बढ्दै गइरहेको थियो । एकदिन गाउँ नजिकको फाँटमा गई दृश्य चित्र उतारिरहेको थिएँ । त्यस बेला एकजना नजिकैको प्रौढ अवस्थाका (पाको उमेरका) तुलसीलाल तण्डुकारजीले मैले लेखिरहेको दृश्य चित्र हेर्दै "त्यो केटा पनि मास्के हुन लागेछ भन्ने तारिफ गर्नुभएको थियो त्यतिबेला त्यो शब्द सुन्दा अनौठो लाग्थ्यो । त्यसको जवाफमा मैले केही बोल्न जानिनँ र चूप लागिरहेँ । तैपनि त्यो शब्दको अर्थ के होला भनी मनमा खुल्दुली लागिरहेको थियो । त्यो घटनाले केही वर्षपछि गुरू मास्केकहाँ चित्रकला सिक्न जान थालेको निकै वर्षपछि मात्र त्यति बेला तुलसीलाल तण्डुकारजी (हाल वहाँ वृद्धावस्थाको जीवन भोगिरहनु भएको छ) ले भन्नुभएको कुरा सम्झँदा बल्ल वहाँले भन्नुभएको अर्थ आफैं खुल्यो । यसरी त्यति बेला नै गुरू मास्केजीको कलाकारिता गुणको सुवास देशको चारैतिर फैलिसकेको रहेछ भन्ने कुरा बुझें ।

गुरू चन्द्रमानसिंह मास्के पुरानो परम्परावादी सामन्ती संस्कारभित्र जन्मी हुर्की जीवनभर त्यही जंजालभित्र जेलिएको भए पनि हामीभन्दा धेरै आधुनिक प्रगतिशील, जोशिलो, अग्रगामी, परिवर्तनशील भई कलाको क्षेत्रमा उभिरहनुभएको देखेको छु । वहाँ कलाको विकासको लागि बाठो, चनाखो, बोल्नसक्ने, जान्ने खप्पिस पनि हुनुहुन्थ्यो । यसरी यो अवस्थामा यो कुरा बोलेमा यो काम बारे संस्थागत विकास र हितमा यसरी ठीक ठाउँमा पर्छ भन्ने कुरा अगाडि नै वहाँको मनमा प्रष्ट भैसक्ने हुँदा र सो अनुसार व्यवहार गरेको हुँदा वहाँका दूरदर्शिताबाट म प्रभावित जस्ता लागे पनि व्यवहारमा उत्री सबैलाई चित्त बुझ्ने गरी काम गर्ने कलाकारहरू कम पाएको छु । यसरी कलाको विकास गर्न हुरूक्क भई मरिमेट्ने हाम्रा गुरू मास्के जस्ता कलाकार हाम्रो देशमा जन्मनु र हामीले हाम्रा जमानामा हामी सँगसँगै काम गर्न पाउनु मेरो लागि ठूलो सौभाग्यको कुरा हो । वहाँको गुण र सीपलाई युगौंसम्म जीवित राख्न हामीले निरन्तर लागि नै रहनुपर्छ, यो हाम्रा ठूलो कर्तव्य हो । ❑

# अविस्मृत लाग्छ मोहन दुवाल



कृष्णचन्द्रसिंह प्रधान
जन्म : वि.सं. १९८२ साउन ११
सुन्तागाउँ, काठमाडौं
अवसान : वि.सं. २०६७ असार १७

सम्झिराख्नुपर्ने प्रियजनहरूमा अविस्मृत लाग्छ – मोहन दुवाल । साथी भएर होइन; यति ठूलो उमेरको अन्तरले कहाँ कसलाई मितेरीको साइनोले बाँध्दोरहेछ ! सहयात्री पनि होइनौं । सात सालको प्रजातन्त्र स्थापित हुने पूर्वसन्ध्यामा म जेल छँदा उनी जन्मेका रहेछन् । मैले मदन पुरस्कार पाउँदा दुवालको कवि जन्मेकै रहेनछ । एउटै मतका अनुयायी र त्यस्तो दलसँग सम्बद्ध नहुनाले त्यसले जोड्ने नाता पनि मेरोमा छैन; हामी भएनौं ।

हामीबीच पुस्ताको फरक छ । त्यस्तो जेनेरेसन ग्यापलाई साहित्यिक सम्बन्धले भर्न सक्तोरहेनछ । हामीमाझ कालको अन्तर छ – यस व्यवधानलाई समयसन्धिले पनि जोड्दोरहेनछ ।

एउटा काल म आफै पनि हुँ । ममा त्यो, त्यसमा म छाएर एकार्काको सहयोगमा सृजित वर्तमानपछिको पुस्ता भएर हुर्किरहेछ । अर्को काल हो दुवाल; त्यसमा उनी रमाएर, उनमा आफू रङ्गिएर छरपुस्टिएको वर्तमानको बढ्दो भ्रष्टता खपेर त्यसैसँग बग्न कि त जुध्न उनको पुस्ता व्यस्त छ । दुवैलाई गाँसेर सँगसँगै हिँड्ने, विचरण गर्ने विन्दु छैन जसले गर्दा एकार्काको नजिक, एकार्काको साथी र एकार्काको सहचर भई अविस्मृत हुन सकियोस् । उनलाई त्यस्तो लाग्छ कि लाग्दैन मैले भन्ने होइन । मलाई त्यस्तो हुन्छ कि हुँदैन उनले भन्ने होइन । म किन अविस्मृत सम्झेर मनमा मोहन दुवाललाई देख्छु, आँखामा सुन्छु ?

मान्छे साथी नभईकन पनि आकर्षित हुँदारहेछन् । मान्छे देख्दै नदेख्नेलाई पनि श्रद्धा गर्दारहेछन् । उमेरको अन्तरले पनि मानिसलाई जोड्दोरहेछ । सहयात्री नभईकन पनि आफ्ना हुँदारहेछौं । एउटै विचारको हुँदाहुँदै अप्रिय लाग्ने, भिन्दै मतको भईकन पनि प्रिय भइदिने किन हुन्छ ? वंश पुस्तामा अवरूद्ध हुनसक्छ, समयकालमा । मानिसहरूमा भने काल, समय भएर आफैभित्र यात्रारत रहने अखण्डितता छ । त्यहाँ अवस्थित मानिसमा आवर्तित भइरहने काल हिजो भएर विम्बित हुन्छ; आज भएर चित्रित हुन्छ; भोलि भएर अवतरित हुन्छ । यो नथामिने प्रक्रियाभित्रको गोचर सत्य हो । अर्कोतिर छ समय; परम्परा वंशहरूको पारिवेशिकता जो वातावरणीय पनि हुन्छ; यो अगोचर सत्य हो ।

मेरो सरोकारको विषय भने दुवाल हो जो मित्र होइनौं । फेरि पनि कसरी नजिकिएछौं ? यहीँ दृष्टिगोचर हुन्छ अविस्मृत मोहन दुवाल अर्थात् उनको गतिशील पौरूष । मोहन दुवालहरू त धेरै छन् – कवि मोहन दुवाल, मुक्तककवि मोहन दुवाल, लेखक मोहन दुवाल, पत्रकार, सम्पादक, समाजसेवी, प्रगतिवादी, सङ्गठनकारी, बहुविषयका सक्रिय मोहन दुवालहरू । तर मोहन दुवालमा अर्को यस्तो मोहन पनि छ जो अन्त भेटिँदैन । सबैमा भइदिने, सबैलाई

समेट्ने, सबैमा छरिने, सबैको भइदिने भएर पनि जो तिनीहरूमा हराउँदैनन् । बाँडेर आफूलाई अरूहरूमा जो सकिँदैन, रित्तिँदैन । अथवा आफ्नो रङ्गले कसैलाई रङ्ग्याउने, अरूबाट रङ्गिँदै आफू बदल्ने गर्दैन । रातो रङ्गको वस्त्रधारी दुवाल देब्रे-देब्रे लागेर हिँडिरहन्छन् - कसलाई थाहा छैन ? व्यवहारमा भने रङ्गहीन रङ्गको पानी लाग्छ दुवाल - त्यति फँाटिलो, त्यति फरासिलो, त्यति उर्वर, त्यति फिँजिँदो, त्यति समानान्तर, त्यति गतिशील र तरल-तरल ।

जहिले हेर पिठ्यूँमा कि 'सुनकोसी साहित्य प्रतिष्ठान' हुन्छ कि आँखामा 'काभ्रेली साहित्यिक सङ्गम'को सपना हुन्छ । यिनै आकाङ्क्षहरूको साहित्यिक खेप गरिरहेका हुन्छन् बनेपा-सिन्धुपाल्चोक-काठमाडौं गर्दै दुवाल । काभ्रेली साहित्यिक सङ्गमका पुरोधा भई साहित्य सम्मेलनमा रमाइरहने दुवाल, प्रतिभाहरूको सम्मान गरेर तीर्थाटनपछिको पुण्यलाभझैं सन्तोषी सुखले कृतार्थ दुवाल; कहिले पिउन भएर कुदिरहेका हुन्छन; कहिले सदस्य भएर लागिरहेका हुन्छन्; कहिले संयोजक भई सभा गरिरहेका हुन्छन्; कहिले सम्पादक भई रचना बटुलिरहेका हुन्छन्; कहिले क्यै भइदिनका लागि अनुनय गरिरहने; कहिले कतै आइदिनका लागि आग्रह गरिरहने दुवाल, यतिकै-यतिकै व्यस्त देखिन्छन् । यतिकै दौडधुप, सभा-सङ्गठन, गोष्ठी-समारोह समुद्घाटन, काठमाडौं-धुलिखेल-बनेपा, बनेपा-सिन्धुपाल्चोक-काठमाडौं गर्दै प्रवाहित भइरहन्छ उनको यात्रा, आवागमनहरू । भन्न मन गर्छ - भाषा साहित्यको फँाटमा देखिने हिजोआजको बनेपा भनेको मोहन दुवाल हो; मोहन दुवाल भनेको काभ्रेपलाञ्चोक हो, सिन्धुपाल्चोक र सुनकोसी हो । त्यहाँको पानीले छोएजति र सिञ्चित भूमिहरू अन्नखेतीले लहलहाएजस्तो दुवालका पसिना, परिश्रम र सिर्जनाशीलताले काभ्रेको हावामा शब्द गुनगुनाइरहेको सुन्छु । बस्तीको मन फुरेछ र वातावरणमा हलचल सुरू हुन्छ ।

कसैलाई लाग्ला त्यहाँका नयाँ पुस्ता र सचेत नागरिकहरूको अवमुल्यन गर्दैछु । कहाँ हो र ? उनी त प्रेरणाका स्रोत थिए, हुन र मात्रै मलजल भन्छु । तर माटामै उर्वरता छैन भने मलजलले के गर्छ ? पाखुरामा बल भए पो प्रेरणा काम लाग्छ । अथवा कोही भन्लान् मोहन दुवाल भनेको एउटा गोष्ठी हो, समारोह, सम्मेलन, सभा, पत्रिकाहरू र एकौटा शृङ्खलाबद्ध कार्यक्रम । सधैंभरिको उछिनपाछिन, दौडधुप र हतार-हतारमा बनेपा-काठमाडौं-सिन्धुपाल्चोक गरिरहने अविराम यात्रा, व्यस्त जीवन र कहिल्यै नथाक्ने प्रयासको नाम हो - मोहन दुवाल ।

हो, ठीक भनेछन् । तर तिनको आधार के हो ? केका लागि ती आपाधापी ? मोहन दुवालको कोसिस, सक्रियता र उछिनपाछिनको स्रोत त उनको साहित्य सिर्जना हो । यसैले दुवाललाई ऊर्जा प्रदान गऱ्यो । यसैले निष्ठा, साहस, सङ्कल्प र सम्मान अर्पित गरेर भाषा साहित्यको सेवामा लाग्न प्रोत्साहित गऱ्यो । त्यसैले मोहन दुवाल पहिले स्रष्टा हो - सिर्जनशील लेखक । कवि भएकाले उनी स्रष्टाको सम्मानमा लाग्न उत्सुक भए । पत्रकार भएकाले साहित्यको प्रबर्द्धनका लागि गोष्ठी-समारोह गर्न आवश्यक ठाने । प्रगतिशील विचारका भएकाले सभा-सङ्गठन गर्न उत्साहित भए । समग्रमा त सिर्जनशील साहित्यकार हुन् । यसको विकास, प्रतिष्ठापन, स्थायित्वसित सम्बन्धित क्रियाकलाप भएकाले तिनकाप्रति उनको सक्रियताले लेख्न प्रतिबद्ध हुन्छन् । लेखनप्रति निष्ठावान् सिर्जनशीलताले साहित्यिक गतिविधिलाई निरन्तरता दिइरहन उनी उत्प्रेरित हुन्छन् । यी दुवैलाई समेट्ने साझा व्यक्तित्वको नाम हो - मोहन दुवाल !

❑

# नेपालका प्रथम ज्ञात कवि अनुपरम



■ कृष्णप्रकाश श्रेष्ठ
जन्म : ई.सं. १९३८ नोभेम्बर ७
चुनिखेल, काठमाडौं
अवसान : वि.सं. २०७७ चैत्र १६

नेपालमा लिखित साहित्यको रचना लिच्छविकालदेखि नै अस्तित्वमा रहेको प्रमाण काठमाडौं उपत्यका र त्यसको सेरोफेरोमा उपलब्ध भएका दसौं शिलापत्रहरूले दिइरहेका छन् । प्राचीन यस्ता शिलापत्रहरू तिथिमितिसहित लिच्छवि राजा मानदेवको शासनकालतिरका मानिन्छन् । नेपाली विद्वान् धनबज्र बज्राचार्यले चाबहिलमा प्राप्त बौद्धचैत्यको वर्णन गरिएको खण्डित एक शिलालेखलाई लिपिका आधारमा मानदेवभन्दा पहिलेका राजा वृषदेवको समयको हुन सक्ने सङ्केत दिएका छन् (बज्राचार्य, २०३०. पृ. ३) ।

प्राचीन शिलापत्रहरूको अध्ययनबाट नेपालमा लिच्छविकालमा नै संस्कृत भाषामा विभिन्न शास्त्रीय छन्दहरूमा देवदेवीहरूको स्तुतिका अतिरिक्त चैत्य र मन्दिर-निर्माण, विभिन्न उत्सवपर्वहरूको व्यवस्था, गुठीको प्रबन्ध, दानदातव्य तथा राजाहरूको वर्णन र वंशावली आदि धार्मिक र सामाजिक विषयवस्तुबारे पनि पद्यरचना भएको पाइन्छ । यस्ता अभिलेखहरूमा प्रयुक्त अनुप्रास आदि मात्र नभई शव्दविन्यास, उपमा र अलङ्कारको प्रयोग आदिमा पनि रचनाकारहरूको साहित्यिक दक्षताको बोध हुन्छ । तर अधिकांश शिलाभिलेखहरूमा दाता र तत्कालीन शासकको नाम उल्लेख भए तापनि रचनाकारको नामचाहिँ अज्ञात नै रहेको पाइन्छ । 'संस्कृतमा लेख्ने पहिला ज्ञात नेपाली कवि अनुपरम (मृत्यु : ई.सं. ५४०) थिए । उनले एउटा स्तुतिकाव्यको रचना गरेका थिए, तर त्यो स्तुति देवदेवी वा राजाप्रति समर्पित थिएन, बरू वेदहरूको वर्गीकरण गरेको हुनाले वेदव्यास भनी प्रसिद्ध भएका पौराणिक महर्षि द्वैपायनप्रति समर्पित थियो' (श्रेष्ठ, २००१, पृ. ९४) ।

रचनाकारको नाम स्पष्ट अङ्कित पहिलो शिलाभिलेख हो हाँडिगाउँस्थित नारायणस्थान सामुन्ने स्थापित गरूडस्तम्भको पूर्व पाटामा कुँदिएको खण्डित अभिलेख । यस शिलाभिलेखको माथिल्लो भाग निकै खण्डित भए तापनि यो शिलाभिलेख साहित्यिक दृष्टिले ज्यादै महत्वपूर्ण छ । समयको मारमा परेर सुरूका केही श्लोकहरू अस्पष्ट छ, यद्यपि ३४ श्लोकको यो खण्डित अभिलेखको विशेषता के हो भने यसमा देवदेवी र राजाहरूको स्तुतिगान गरिएको नभई प्राचीनकालका एक प्रकाण्ड विद्वान् अर्थात् वेदहरूको वर्गीकरण गरेको हुनाले 'वेदव्यास' भन्ने नामले विख्यात महाभारतग्रन्थका रचनाकार मानिने महर्षि द्वैपायनको स्तुतिगान गर्नुका साथै वैदिक धर्म र दर्शनको गुणगान गरिएको छ । 'लिपिको दृष्टिले यो अभिलेख राजा मानदेवको लगत्तै पछाडिको अर्थात् वसन्तदेवको ताकाको हो भन्ने देखिन्छ,' (बज्राचार्य, २०३०. पृ. १६२) भन्ने धनबज्र बज्राचार्यको राय छ ।

अर्का नेपाली विद्वान् जगदीशचन्द्र रेग्मीको भनाइअनुसार यो अभिलेख 'वेदव्यासको स्तुतिमा लेखिएको हुँदा यसको मूल उद्देश्य दार्शनिक छ । वेदका द्रष्टा र महाभारतका लेखकका रूपमा वेदव्यासको महत्व मानी अनुपरमले तिनलाई यस संसारमा धर्मको महत्व थप्ने महापुरूषका रूपमा देखेका छन् । वेद र महाभारतसँग जोडिएका वेदव्यासको स्तुति गर्ने दार्शनिक अनुपरम आफै पनि ती दुवै महान् रचनाका महत्व जान्ने व्यक्तिका रूपमा देखिन आउँछन् । नास्तिक दर्शनको विरोधमा

लेखिएको यो स्तोत्र अभिलेख वेद र महाभारतजस्ता इतिहासका सबै युगमा व्याप्तिएका ग्रन्थहरूका सङ्ग्रहकर्ता र लेखकका रूपमा वेदव्यासको स्तुति गरी स्थायी धर्मको प्रतिपादन गर्न अघि सरेको महान् ऐतिहासिक रचना हो । भारतीय इतिहासका कुनै युगमा यति राम्ररी, छोटकरीबाट सद्धर्मको प्रतिपादनका लागि थालिएको यस्तै अभिलेखसाहित्य नपाउँदा लिच्छविकालीन संस्कृतिको एउटा गहकिलो मर्म थाहा पाइन्छ' (रेग्मी, २०४०, पृ. ८९) ।

यस गरूडस्तम्भमा कुँदिएको पद्यरचनाका लेखक अनुपरम भन्ने कुनै कवि हुन् भन्ने सङ्केत अन्तिम ७३ औं पङ्क्तिमा उत्कीर्ण निम्न वाक्यबाट पाइन्छ : 'भगवतो द्वैपायनस्य स्तोत्रङ्कृतमनुपरमेण' (अनुपरमले भगवान् द्वैपायनको स्तोत्रको रचना गरे) । किन्तु यतिकै सूचनाको आधारमा यस अभिलेखमा आफ्नो नामसमेत उत्कीर्ण गराउने कवि अनुपरम को थिए भन्ने स्पष्ट हुँदैन । यस प्रश्नको उत्तर पशुपतिनाथको मन्दिरदेखि दक्षिणपट्टि (चौसठ्ठीलिङ्गदेखि अलि तल्तिर वत्सलाको मन्दिरदेखि पश्चिमपट्टि) प्राप्त भौमगुप्तकी आमा आभीरी गोमिनीले आफ्ना स्वर्गीय पतिको नाममा अनुपरमेश्वर भन्ने नामले शिवलिङ्ग स्थापना गरेको बेहोरा उल्लिखित अभिलेखबाट घुमाउरो किसिमले पाउन सकिन्छ । सम्वत् ४६२ (ई.सं. ५४०) मा स्थापित शिवलिङ्गको पादपीठको अभिलेखबाट अनुपरम नामका कवि 'लिच्छविकालका एक प्रसिद्ध सहायक शासक भौमगुप्तका पिता' (बज्राचार्य, २०३०. पृ. १६२) हुन् भन्ने स्पष्ट हुन आएको छ । यसरी सम्वत् ४६२ मा कवि अनुपरमको देहान्त भइसकेको थियो र तसर्थ उनले उक्त द्वैपायनस्तोत्रको रचना कहिले गरेका थिए भन्ने अनुमान 'परोक्ष प्रमाणको आधारमा मात्र लगाउन सकिन्छ र त्यो सन् ५१५ देखि ५२० को समयावधिभित्र रचिएको थियो' (श्रेष्ठ, २००१, पृ. ९५) ।

आभीर गुप्तहरू वैदिक धर्मका अनुयायी थिए र उनीहरू आफूलाई 'गोमी' पनि भन्दथे । गोमीको अर्थ हुन्छ गाई पाल्ने व्यक्ति (मातातीर्थ थानकोट भेकतिर यस प्राचीन आभीर वंशका सन्ततिहरू अद्यापि छन् जो आफूलाई गोपाल भन्ने गर्दछन्) । आभीरी गोमिनीको अभिलेखबाट कवि अनुपरम आभीर वंशका थिए भन्ने अनुमान हुन्छ । त्यस अभिलेखमा आभीरी गोमिनीले तत्कालीन प्रचलनअनुसार पतिको नामोल्लेख नगरे तापनि आफ्ना ससुरा र छोराको नामचाहिँ उल्लेख गरेकी छिन् । यसबाट अनुपरम भौमगुप्तका पिता र परमाभिमानी (यो नाम नभएर विशेषण पनि हुने सम्भावना छ : श्रेष्ठ) नामका कुनै प्रतिष्ठित व्यक्तिका पुत्र हुन् भन्ने थाहा पाइन्छ । आभीरहरूले गुप्तका साथै गोमी पनि कहलाइएका हुनाले अनुपरमकी आमाले आभीरी गोमिनी भनी आफ्नो परिचय दिएकी होलिन् । उनले पतिका तर्फबाट आफ्नो कुलनाम (जाति) को उल्लेख गरे तापनि व्यक्तिवाचक नामको चाहिं उल्लेख गरेकी छैनन् । केवलपुरमा प्राप्त अर्को एक अभिलेखमा भौमगुप्तका जेठा बाबु अर्थात् अनुपरमका दाजुको नाम मानगुप्त बताइनुका साथै उनलाई 'गोमी' (बज्राचार्य, २०३०, पृ. १७३) भनेर स्पष्ट लेखिएको छ र यसै आधारमा अनुपरम नामको अन्त्यमा कुलनामको रूपमा गुप्त वा गोमी लेख्न सकिने अनुमान हुन्छ । भनाइको तात्पर्य के हो भने कवि अनुपरम पनि गुप्त वा गोमी कुलनामधारी आभीर वंशका हुन् । उनले द्वैपायन स्तोत्रको रचना गरी वेदान्त दर्शनप्रति आफ्नो आस्थाको प्रदर्शन गरेका थिए ।

वैदिक परम्पराका अनुयायी कवि अनुपरमले यस स्तम्भलेखमा 'नास्तिक, कुतार्किक, मूर्ख, कुमति आदि शब्दको प्रयोग गरी बौद्धहरूको निन्दा' गरेको कुरा मननीय छ । लिच्छविकालमा नेपालमा बौद्धधर्मको प्रचार र प्रभाव निकै बढी थियो र वैदिक धर्मका अनुयायीहरू र बोद्धधर्मावलम्बीहरूबीच वादविवाद चल्दथ्यो भन्ने तथ्यको उद्घाटन यस शिलाभिलेखबाट हुन्छ । उदार धार्मिक भावनाले प्रश्रय पाएको नेपालमा, धनबज्र बज्राचार्यको मतानुसार '–शास्त्रार्थको रूपमा खण्डनमण्डन गर्ने परम्पराका रूपमा मात्र यो भावना सीमित थियो । जनतासम्म धार्मिक कलहले स्थान पाएको उदाहरण हाम्रो यहाँ पाईदैन' (बज्राचार्य, २०३०, पृ. १६३ : १६४० । जे होस्, नेपाली विद्वान् जगदीशचन्द्र रेग्मीले अनुपरमलाई 'कविदार्शनिक' भन्ने उपाधि प्रदान गर्दै उनका कृतिमा 'दार्शनिक गहनताबाहेक साहित्यिक स्वरूप र आन्तरिक भावसमेत प्रस्टिन खोजेको' कुरा जनाउँदै लेखेका छन् 'उपयुक्त शब्दहरूको प्रयोगमा उनको सीप हाम्रो कानले प्रस्टै थाहा पाउँछ र यसका रचयिताको महत्वबारे निर्णय दिन थाल्दछ' (रेग्मी, २०४०, पृ. ९०) ।

यस महत्वपूर्ण अभिलेखको माथिल्लो भाग निकै खिइएको हुँदा प्राचीन कालको एक अनुपम साहित्यिक कृतिको आंशिक मात्र रसास्वादन गर्ने हामीले सम्भावना पाएका छौं । तर 'प्रौढ लेखनशैली, दार्शनिक विचारधारा आदिको दृष्टिले' नेपालका प्रथम ज्ञात साहित्यकारको ईशाको छैटौं शताब्दीको मध्यतिर रचिएको र हामीसम्म खण्डित रूपमा आइपुगेको प्रस्तुत काव्यकृति पनि नेपाली विद्वान् धनबज्र बर्जाचार्यले जनाएझैं 'उच्चकोटिको मानिएको छ' (बज्राचार्य, २०३०, पृ. १६२) ।

***सन्दर्भ ग्रन्थसूची :***


- बज्राचार्य, २०३० : धनबज्र बज्राचार्य, **लिच्छविकालका अभिलेख** । नेपाल र एसियाली अध्ययन संस्थान, काठमाडौं, वि. सं. २०३० ।
- रेग्मी, २०४० : जगदीशचन्द्र रेग्मी, **प्राचीन नेपाली संस्कृति** । साझा प्रकाशन, काठमाडौं, वि. सं. २०४० ।
- श्रेष्ठ, २००१ : कृष्णप्रकाश श्रेष्ठ, **नेपालको साहित्यमा परम्परा र आधुनिकता** । मास्को : सेन्टपिटर्सबुर्ग, ई. सं. २००१ । (रूसी भाषामा)

# दुई बालकथा

## १. बाँदरको नृत्य

धर्मपुर गाउँको तल ओरालोमा यौटा ढुङ्गेधारा थियो, त्यहाँ बिहानैदेखि पानी लिन आउने गाउँले आइमाईहरूको घुइँचो नै हुन्थ्यो । धाराको नजिक एउटा सल्लाको रूख पनि थियो । एक दिन बिहान सबेरै कताकताबाट त्यो रूखमा एउटा ढाडे बाँदर देखापर्छ । त्यो बाँदरलाई धारामा पानी लिन आउने सबैजसो गाउँले आइमाईहरूले देखे । तिनीहरू डराए । तिनीहरूको बीचमा परस्पर यस्तै कुरा भयो ।

एउटी आइमाईले बाँदरलाई मुख फोडीहालिन् –'हामी एक्लै धारामा आएका भए यो बाँदरले दुःख दिन्छ, मलाई त डर लाग्यो ।'

अर्की आइमाईले भनी –'हो त, बाँदरको के विश्वास ! त्यो पनि ढेडु बाँदर ।'

केही सामान वा लुगाफाटो यहाँ छोडेर हामी कतै गए यो बाँदरले बोकेर पनि लान सक्छ ।

कुरो ठीक हो । यिनलाई अहिले नै लखेट्नुपर्छ ।

यस्तै कुरा गर्दै ती गाउँले आइमाईहरूले ढुङ्गा, माटो र काठका टुक्राहरू टिप्दै बाँदरलाई उफ्री-उफ्री हिर्काउन थाले । बाँदरले कुलेलम ठोक्यो । आइमाईहरू गाग्रीमा पानी भर्दै बाँदर भागेको देखी हाँसे ।



**कृष्णप्रसाद दुवाल**
**जन्म : वि.सं. १९९६ भदौ १५**
**बनेपा, काभ्रे**
**अवसान : वि.सं.२०७४ फागुन ९**

दिउँसो धारामा कोही पनि थिएन । त्यो बाँदर त्यही रूखमा फेरि देखापऱ्यो । तल धारानिर आँखा सन्काउँदै उसले सोच्यो –'म पनि धारामा पानी भर्छु, ती आइमाईहरूले जस्तै ।' बाँदरले यताउता हेऱ्यो, कतै पनि कुनै गाग्री देखेन उसले । फेरि अन्तै आँखा सन्कायो, खेतमा उसले एउटा डोको देख्यो । ऊ रूखबाट झरिहाल्यो । धारामा गएर पानीको धारमा डोको राखेर ऊ थचक्क बस्यो । पानी धाराबाट अविरल झरिरहेछ । बाँदरले खूब नियालेर हेरिरह्यो । पानी त निकै झरेछ । अब त डोकोमा पानी भरियो होला भनी उसले डोका उचाल्यो तर डोकोभित्र उनले पानी देखेन । पानी भरेको छैन रहेछ भनी डोको फेरि धारामा थपक्क राख्यो । फेरि एकछिन पर्खेर पानीको धारामा आँखा दौडायो । हेरिरह्यो, पानी त डोकोभित्र खूब पस्यो, अब त भरियो होला पानी भन्ने सोची फेरि डोको उचाल्यो । पानी डोकोको आँखीझ्यालबाट झरेको उसले देख्यो ।

त्यहाँ अर्को एउटा बाँदर आइपुग्यो । डोकोमा पानी थाप्ने बाँदरलाई गिज्याउँदै भन्यो –'तिमी त मूर्ख रहेछौ, डोकोमा पनि पानी अट्छ र ? डोकोमा सयौं प्वालहरू छन् । प्वालहरूबाट त पानी झरिहाल्छ ।'

'हो, मैले प्वालहरू देखें । अब के गर्नुपर्ला ?' उसले सोध्यो ।

'प्वाल टाल्नुपर्छ । गिलोमाटो खोजेर ल्याऊ । म डोकोका जम्मै प्वालहरू टालिदिन्छु ।' दोस्रो बाँदरले भन्यो ।

हुन्छ म ल्याउँछु भन्दै पहिलो बाँदर खेततिर दौडिहाल्यो । एकै छिनमा एक डल्लो गिलो माटो हातमा लिएर ऊ उफ्रँदै आयो ।

दोस्रो बाँदरले माटो गोलो गोलो पार्दै डोकोको प्वालैपिच्छे धमाधम अड्कायो । यसरी प्वाल टालिसकेपछि त्यो डोको पहिलो बाँदरलाई दिँदै भन्यो -'लौ जाऊ, अब पानी अडिन्छ ।'

पहिलो बाँदर खुसी भयो । डोको लिएर ऊ उफ्रँदै धारामा पुग्यो । पानीको धारामा डोको राख्यो । पानी डोकोभित्र गयो, बाँदर हेरिरह्यो । साँच्चै पानी डोकोभित्र भरिभराउ भयो । उसले खूब बल गरी डोको उचाल्यो । पानी त फेरि डोकोका प्वालहरूबाट ह्वारर चुहेको उसले देख्यो । ऊ जिल्ल पऱ्यो । अर्को एउटा बाँदर दौडेर आयो र उसलाई गाली गऱ्यो -'तँ त साह्रै मुर्ख रहिछस्, माटोले पनि डोकाको प्वाल टालिन्छ र ? पानीले माटो गलिहाल्छ, डोकोमा कहाँको पानी अड्छ र ? डोको पानी भर्नको लागि होइन । माल हेरेर प्रयोग गर्नुपर्छ । डोको त घाँस-दाउरा राख्न पो बनाएको हो ।'

'हो र ? त्यसो भए घाँस-दाउरा नै राख्नुपऱ्यो'- पहिलो बाँदरले भन्यो ।

'ठीक छ । म पनि घाँस काट्छु । ऊ, हँसिया छ । तिमीले काठको टुक्रा बटुल ।' दोस्रो बाँदरले भन्यो ।

दुवैजना उफ्री-उफ्री उताउति दौडे । काठको टुक्रा बटुल्नेले काठको टुक्रा र घाँस काट्नेले घाँस गर्दै डोको भऱ्यो । पहिलो बाँदरले डोको बोक्यो । ऊ खूब नाच्यो, दोस्रो बाँदरले ताली बजायो र भन्यो - अहा, क्या सुहाएको । तँ पनि मान्छेजस्तै भइछस् । पहिलो बाँदर झन्झन् नाच्यो । दोस्रो बाँदरले फेरि खूब जोडले ताली बजायो । दोस्रो बाँदर रूखैमा बसी हाँसिरह्यो ।

❑

## २. थुमबहादुरको इमान्दारी

गत सालको बाढीमा खोलानजिकको थुमबहादुरको घर सललल बगाएछ । घरमा सुतिरहेका उनका आमाबा र बहिनीलाई पनि घरसँगै बगाएछ । त्यस बेला थुमबहादुर पल्लो डाँडापारि मावलीकहाँ थिए, त्यसैले उनी भाग्यवश बाँचेका थिए । आफ्नो घरसँगै आमाबा र बहिनीलाई बाढीले बगाएको समाचार सुनेर उनी मामासँगै आफ्नो गाउँ फर्केका थिए । गाउँका छरछिमेकी र साथीभाइहरूले सहानुभूति प्रकट गर्दै आफ्नो औपचारिकता पूरा गरे । बिचरा थुमबहादुर रोएर आफ्नो घरपरिवारलाई सम्झे । आफूले पालेका भेडाबाख्रा र एउटा सानो पाठोको पनि सम्झना उनलाई नआएको होइन, तर आफ्ना बाआमा र बहिनीको सम्झनाले उनी डाँको छोडेर धेरै बेर रोइरहे ।

यस्तो दुर्दशा भोग्दै आएको बालक थुमबहादुर आज काठमाडौंको भीडभाडमा देखापरे । एउटा सानो चियापसलमा केही दिन काम गरे । त्यहाँबाट चित्त नबुझी उनी एउटा होटलमा काम गर्न गए । त्यो होटलमा धेरैजसो विदेशी टुरिस्टहरू मात्र बस्न र खान आउँथे । फेरि अहिलेको अवस्थामा विदेशीहरूको आगमनमा नराम्रो असर पार्ने राष्ट्रिय अन्तर्राष्ट्रिय घटनाले गर्दा प्रायः शून्य नै हुन्थ्यो । त्यसैले काम केही गर्नुपर्ने हुँदैनथ्यो । तर पनि त्यस होटलका साहु-साहुनीको दृष्टिमा कुनै कामदार एकछिन चुप लागेर बसेको देखेमा कहिले गमलामा पानी हाल्न लगाउने, कहिले सफा ठाउँमा पनि पुछ्न र बढार्न लगाउँथे । बिचरा थुमबहादुर एकछिन मात्र सुस्ताउन खोजे साहुनीले आफ्नो लुगाफाटो धुन लगाउँथिन् । बदलामा बासी र सडेगलेका खानेकुराहरूले चित्त बुझाउनुपर्थ्यो । काम गरेबापतको पैसा माग्यो कि त साहु-साहुनीले कुनै बहानामा कुटेर भगाउँथे । थुमबहादुरलाई थाहा छ, यसरी धेरै बालकहरूलाई यी साहु-साहुनीले भगाएका थिए भन्ने । एउटा सानो गल्ती गर्दा साहुनीले उनलाई पनि गालामा चड्कन लगाएका थिए । यस्ता दुःखका लहरमा बहँदै गर्दा उनी कहिलेकाहीँ एकान्तमा घर सम्झी धुरुधुरु रुन्थे । उनी सोच्दथे मर्ने त गइगए, म बाँचेकाले कति मात्र दुःख सहनुपर्ने हो । व्यापारमा क्रमशः शिथिलता आउँदै गर्दा साहु र साहुनीले कामदारहरूप्रति दिने प्रताडनामा बृद्धि हुँदै आयो । फलस्वरूप थुमबहादुरले त्यहाँ काम गर्न छोडिदिए ।

होटल छोडेको चार/पाँच वर्षपछि उनी पशुपतिनाथ मन्दिरको मूलढोकाअगाडि भक्तजनहरूको जुत्तासमेत हेर्ने गरी नाङ्लो पसल राखेर बसेका थिए ।

बाह्र-एक बजिसक्यो । बिहानको भीड केही कम भइसक्यो । आफूकहाँ रहेका भक्तजनहरूका जुत्ता पनि कम भइसक्यो । अघि एउटी आइमाईले छोडेको कालो

छालाको झोला अहिलेसम्म त्यसै परिरहेको देखेर थुमबहादुर अचम्मित हुन्छन् । ती आइमाई त अघि नै गइसकिन् । कारमा आई कारमै बसेर फर्किन् । तिनले झोला लग्न बिर्सिछिन् । ती आइमाई पहिला आफूले काम गरेको होटलकी साहुनी थिइन् । साहुनीलाई उनले राम्ररी चिनेका छन्, तर उनलाई साहुनीले चिन्न सकेकी रहिनछिन् । उनले उठेर झोला लिए । झोला खोलेर भित्र हेरे । झोलाभित्र सुनका सिक्रीका साथै दुइटा सुनका चुरा देखेर उनको जीऊ फुलेर आएको महसुस गरे । अब के गर्ने ? उनको मनमा हुरी-बतास चल्यो । हतारहतार भक्तजनको जुत्ताहरूको जिम्मेवारीबाट पन्छिदै पसलको सामानलाई डेरामा पुऱ्याए र झोला बोकेर टेम्पोमा बसी उनी पुरानो काम गरेको होटलभित्र पसे । होटलका मेनेजरले एकपल्ट साहुनीलाई भेट्न अनुरोध गरे । एकैछिनमा साहुनी आइन् र आफ्नो झोला एक अपरिचित व्यक्तिको हातमा देखेर अचम्म मान्दै सोधिन् -'मेरो झोला तिमीसँग कसरी आयो ?'

'हजुर, पशुपतिको ढोकामा जुत्ता कुर्ने मै हुँ । यो झोला हजुरको हो भन्ने थाहा थियो, एक बजेसम्म कुरें । हजुरले अन्जानमा यो झोला बिर्सेर जानुभयो भन्ने सोचेर म झोला बुझाउन यहाँ आएको'- थुमबहादुरले भन्यो ।

'यो मेरो हो भनेर तिमीलाई कसरी थाहा भो ?' - साहुनीले सोधिन् ।

'म हजुरलाई चिन्छु । हजुरले यो झोला राखेको मैले देखेको थिएँ । यो होटल हजुरको भनेर पनि मलाई थाहा छ ।'

'होइन, तिमीले गजबको कुरा गऱ्यौ । मलाई कसरी र कहिले चिनेको ?' साहुनीले छक्क पर्दै सोधिन् ।

'मैले यो होटलमा काम गरिसकेको छु । मेरो नाम थुमबहादुर हो ।'

नजिक आएर साहुनीले थुमबहादुरलाई नियालिन् । हुप्प परेको अनुहार र गालामा एउटा ठूलो कालो कोठी पनि देखिन् । हिउँले खाएको एउटा बुढी औंला पनि तिनले देखिन् र आफूले कुनै अपराधविना नै उसको गालामा चड्कन लगाएको पनि सम्झिन् । हो, उही थुमबहादुर हो । झोला खोलेर हेरिन् । सुनको सिक्री र चुराका साथै हजार-हजारका दस थान नोट पनि देखिन् । थुमबहादुरको इमान्दारी देखेर तिनी आश्चर्यचकित भइन् ।

'थुमबहादुर, तिमीले झोलाभित्र हेरेनौ ?'

'हेरें । सुनको चुरा र सिक्रीका साथै दस हजार रूपियाँ पनि थियो ।'

'तिमीलाई लोभ लागेन ?'

'अर्काको सम्पत्तिमा लोभ गर्ने मेरो के अधिकार ?'

साहुनी अत्यन्त खुसी भई हजारका दुइटा नोट झिकी थुमबहादुरको हातमा थमाइदिइन् र भनिन् -'यो तिम्रो इनाम । यसमा तिम्रो इमान्दारीको अधिकार छ । आजदेखि फेरि पनि होटलमा काम गर्न म तिमीलाई आग्रह गर्दछु । म तिमीलाई राम्रो पारिश्रमिक दिन्छु । पहिला मैले तिमीलाई जुन नराम्रो व्यवहार गरें, त्यसका लागि म तिमीसँग क्षमा माग्दछु ।'

थुमबहादुर साहुनीको मुख हेर्दै ठिङ्ग उभिइरह्यो ।❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

लम्बोदर कायस्थ
अध्यक्ष, सञ्चालक समिति

केजी बैदार
क्याम्पस प्रमुख

**काभ्रे बहुमुखी क्याम्पस परिवार**
बनेपा, काभ्रे

# काशीका काशी र 'उदय'का पिता



कृष्णप्रसाद पराजुली
जन्म : वि.सं. १९९२ असार २४
भमरकोट, काठमाडौं
अवसान : वि.सं. २०७० चैत्र २०

दिन थियो – २०४६ जेठ २२ गते, त्यसै दिन बिहान एक्कासि टेलिफोन आउँछ सञ्जुको – "पराजुली अंकल, हजुरबा अस्ति शुक्रबार राति खस्नुभएछ, म बनारस जाँदै छु ।" यसै त गर्मीयाम, उसमाथि बिहानै दुःखद समाचार सुन्नुपऱ्यो । म निकै बेर अस्पटिँदै शोकाकुल भएर घोरिएँ । उनी जीवित छँदै केही लेख्न खोजेको थिएँ । आफ्नै स्वास्थ्यको कारण र अरू झमेलाले बियाँलो भयो । अब त उनी सम्झना मात्र भएर गइसकेछन् । साँच्चै अब उनी छैनन् त ? मनले नमान्दा-नमान्दै पनि विश्वास नगरी धर पाइनँ ।

नेपाली भाषा-साहित्यका एक अथकसेवी बिलाएर गए । शुक्रबार राति भएको शुक्रास्त काठमाडौंमा कसैलाई थाहा थिएन । समाचार त दिनुपर्ने हो, अनि मैले यताउति टेलिफोन गरेँ । साथी वासु रिमाल 'यात्री' ले टेलिफोनबाटै विवरण टिपेर राससद्वारा समाचार दिनुभयो ।

अठहत्तर हिउँदले पकाएको सेतै भइसकेका थिए । ढाड उहिल्यै कुप्रिएको थियो । पछि त हिंड्न, तल-माथि गर्न पनि गाह्रो हुँदै गयो । वाराणसीतिर जाँदा भेटघाट गर्न कोठामै पुग्नुपर्थ्यो ।

नाम पनि त्यही थियो र बसाइ पनि त्यहीं थियो, अर्थात् नाम काशीबहादुर, बसोबास थियो काशीमा – एउटा विचित्र संयोग । तर यस संयोगको पनि सन्दर्भ छ । उनको कुलघर भक्तपुरको तिबकुँछे भन्ने ठाउँमा हो । उनका बाबु गणेशबहादुर श्रेष्ठ व्यापारका सिलसिलामा काशीमा बसेका थिए । काशीमै आमा विष्णुमायाको कोखबाट बालक काशीबहादुरको जन्म भयो । वि.सं. १९९८ असोज कृष्णाष्टमी शुक्रबार (१६ सितम्बर १९११) का दिन अनि उनको नाम पनि आमाबाबुले माया गरी 'काशी' भन्दाभन्दै 'काशीबहादुर' नै रह्यो ।

मैले वाराणसीमा भेटेको पनि झन्डै तीन दशक भइसकेछ । चौखम्बा गल्ली, बाहिरपट्टि सानो सूचनापाटी-उदय कार्यालय । त्यसै घरको पहिलो तलामा भेट भएको हो उनीसँग, २०१७ सालको अन्तिमतिर । त्यसपछि कति हिउँद-वर्खा बिते, कति कुरा बिराना भए-तर काशीबहादुरसँगको स्नेह-सम्बन्ध पुरानो भएन, झन्-झन् गाढा हुँदै गयो ।

बिस्तारै मैले थाहा पाएँ, आई.ए. सम्मको अध्ययनपछि काशीबहादुर श्रेष्ठले पुर्ख्यौली बिंडो समाउनु पऱ्यो-व्यापार नै उनको आजीविकाको साधन भयो । उनको फर्म थियो – पहिले 'गणेशबहादुर काशीबहादुर' र त्यसपछि 'श्रेष्ठ एन्ड कम्पनी' । यी फर्म र कम्पनीले अर्डरअनुसार पुस्तक मगाउने, बिक्री-वितरण गर्ने, जुहारत कस्तुरी, किनखाप आदि झिकाएर बेच्ने जस्ता काम गर्थ्यो । व्यापारमा लागे पनि नेपाली साहित्यको प्रसिद्ध स्थल वाराणसीको वातावरणले

उनलाई प्रभावित पारिरहेको थियो । व्यापारकै सिलसिलामा उनी पूरा भारत घुमे यसै घुमाइमा उनको प्रसिद्ध कवि तथा गीतकार गोपालसिंह नेपालीसँग मध्यप्रदेशको रतलाममा भेट भएको रहेछ ।

गोपालसिंह नेपाली हिन्दीमा पनि प्रतिष्ठित कवि गीतकारका रूपमा स्थापित भइसकेका थिए । यसताका उनी 'रतलाम टाइम्स' (हिन्दी साप्ताहिक) को सम्पादन गर्थें । एक दिन कुरैकुरामा श्रेष्ठलाई पनि लेखनका निम्ति उत्प्रेरणा जगाइदिए उनले । अनि के थियो, दुई हृदयको ढुकढुकी एक भयो । काशीबहादुर श्रेष्ठ कथा, निबन्ध लेख्न थाले । यो थियो १९३५ इ. को कुरा ।

सुरू-सुरूमा काशीबहादुर श्रेष्ठ हिन्दीमा लेख्थे । उनका कथा, निबन्धहरू **कमलिनी** (मासिक, इलाहावाद) **रङ्गभूमि** (साप्ताहिक, दिल्ली), **रतलाइम्स टाइम्स** (साप्ताहिक, मध्यप्रदेश), **योगी** (साप्ताहिक, पटना) र **आज** (दैनिक, वाराणसी) मा प्रकाशित भएका छन् ।

पछि कवि गोपालसिंह नेपालीले **कल्पना** आदि पुस्तक र धेरै गीत, कविता नेपालीमा लेखे । काशीबहादुर श्रेष्ठ पनि आफ्नो भाषा-साहित्यको सेवा गर्ने भावनाले प्रेरित भइ नेपालीमा लेख्न अग्रसर भए । सबभन्दा पहिले त उनलाई एउटा नेपाली पत्रिकाकै आवश्यकता अनुभूत भयो, जन्म्यो-**उदय** (मासिक) यसको पनि एउटा घटना रहेछ । एकदिन मैले सोधेको थिएँ - "तपाईं कसरी नेपाली पत्रिका निकाल्न पुग्नुभयो त ?"

"हिन्दीमा लेख्ने गर्दा सबै खुसी भए । हाल एजुकेशन इन्टरप्राइजेजका मालिक आनन्दबहादुर श्रेष्ठ तिनताक जलेश्वर मालमा मुखिया हुनुहुन्थ्यो । उहाँसँग त्यहीं भेट भयो । भेटघाटका प्रसङ्गमा उहाँले भन्नुभयो - "राम्रो लेख्नु हुँदो रहेछ । नेपालीमा एउटा पत्रिका निकाल्नुहोस् न ।" त्यो कुरा राम्रो लाग्यो । उहाँकै सुझाउ र प्रेरणा पाएर पत्रिका निकाल्न अग्रसर भएको हुँ । त्यसताका नेपालबाट निस्कने मासिक पत्रिका थियो **शारदा** । त्यो पनि विशुद्ध साहित्यिक थियो । मचाहिँ **उदय**लाई सचित्र र विविध विषयको बनाउन कम्मर कसेर लागिपरेँ । काठमाडौंका केही मित्रहरूले सहयोग गरी ग्राहक बनाइदिए ।

'**उदय** नाम राख्नुमा पनि खास अभिप्राय थियो कि ?' मैले फेरि सोधेँ । केही हाँसेर गम्भीर हुँदै उनले भने - "नेपाली साहित्यको उदय, नेपाली प्रतिभाहरूको उदय-अभिप्राय यही नै थियो भन्नुभयो । यही नाम सुहाउँदो पनि भयो ।"

उनको उत्तर सुनेर एक छिन घोरिएँ - हो त नि, नेपाली भाषामा साहित्यिक पत्रिका नै के थिए र ! काठमाडौंबाट निस्केका पत्रिकामा **उदय** भन्दा दुई वर्ष जेठो **शारदा** चलिरहेको थियो; **उद्योग** थियो, तर त्यो पछि चलेन । **भारती** जन्मिसकेको थिएन । त्यसै अभाव र अपूर्णताका स्थितिमा नेपाल बाहिरबाट **उदय** जन्मेको थियो । **शारदा**मा प्रायः नाम चलेका लेखकका रचनाहरू छापिन्थे । **उदय** भने कैयौं नयाँ प्रतिभाको निम्ति उषाकालीन आमा भएर आएको थियो । त्यतिखेर जसरी नाम रहेको होस् - **उदय** नाम सार्थक भएको थियो, जिउँदो थियो ।

**उदय** पहिलो अङ्क १९९३ साल माघमा निस्केको हो । यसको मुद्रण वाराणसीको टाउन हलस्थित कल्याण प्रेसमा भएको थियो । मुख्य सम्पादक काशीबहादुर श्रेष्ठ थिए । १९९५ सालदेखि यस पत्रिकामा गोपालसिंह नेपालीको नाम पनि सह सम्पादकमा समाविष्ट भयो ।

**उदय** मासिकको सम्पादन र संचालन सँगसँगै काशीबहादुर श्रेष्ठले नेपाली भाषामा लेख्दै गए । १९९७-९८ सालदेखि उनले 'नेपाली साहित्य-मण्डल' नाउँको एउटा साहित्यिक प्रकाशन खोले । त्यस प्रकाशनबाट पुस्तकहरू प्रकाशित गर्नुका साथै अन्य प्रकाशनका पुस्तक-पत्रिका बिक्री वितरण गर्ने कार्य पनि भए । यसबीच उनले ससाना दुइटा सामाजिक उपन्यास लेखे । ती दुवै उपन्यास **उषा** (१९९८) र **वचन** (२००२) नेपाली भाषा प्रकाशिनी समितिबाट प्रकाशित भएका छन् । उनको **तोतामैनाको कथा** (१९४९इ.) पनि निकै लोकप्रिय रहेको देखिन्छ ।

साहित्यसेवा र साहित्यिक पत्रकारितामा लागेपछि व्यापार कसरी चल्छ ! काशीबहादुर प्रायः धेरै समय अक्षरसँग खेल्न थाले । काशी मुद्रणका निम्ति प्रसिद्ध स्थान छँदै थियो । लेखहरू छपाउन पुस्तक पठाउँथे । भाषा-शुद्धि, मुद्रण-व्यवस्था, प्रुफ-संशोधन आदि गर्नुपर्थ्यो । उनले चौखम्बाको ठाडो भऱ्याङ चढेर जानुपर्ने एउटा घरको पहिलो तलाको कोठालाई आफ्नो सेवास्थल बनाए; विभिन्न पुस्तकको प्रकाशनमा सहयोग गरे । उनको अभिरूची अन्य सामाजिक साहित्यिक क्रियाकलापतर्फ पनि बढ्दै गयो । नेपाली यात्रीहरूको सेवा गर्ने उद्देश्य लिएर जन्मेको सामाजिक संस्था 'नेपाली संघ' मा उनी लागे । १९९३ को **उदय**मा यस संघको समाचार प्रकाशित छ । २०२० सालमा वाराणसीमा खुलेको नेपाली साहित्यकार सम्पर्क समितिमा सदस्य रहेर सहयोग पुऱ्याए । विद्याधर्म प्रचारिणी नेपाली समितिमा पनि उनले

उपमन्त्री रहेर काम गरेका थिए ।

काशीबहादुर श्रेष्ठले नेपालीमा कविता एक-दुइटा मात्र लेखेका छन् । उनका लेख-निबन्धहरू भने विभिन्न पत्रिकामा प्रकाशित छन् । **गोरखापत्र, प्रज्ञा** आदि पत्रिकाका साथै सबभन्दा धेरै **उदय**मा नै त्यस्ता लेख-निबन्ध हेर्न सकिन्छ । **उदय**का अङ्कहरूमा उनका 'आफ्नो कलम' बाट (सम्पादकीय) साह्रै महत्वपूर्ण रहेका छन् ।

**उदय**मा काशीबहादुर श्रेष्ठको सामयिक टिप्पणी इतिहास भएको छ - 'बिना जनैको बाहुन' । यसमा घतलाग्दो प्रसङ्ग छ, व्यङ्ग्य छ, सामाजिक सुधारका कुरा छन् । जनै लगाउँदैमा ब्राह्मणको कर्तव्य-कर्म हुने होइन र जनै नलगाएरै पनि जातीत्वको सेवाद्वारा उक्त कार्य हुन्छ भन्ने तथ्यलाई पनि यस स्तम्भले प्रमाणित गरेको आभास हुन्छ ।

**उदय** १९९३ देखि २०२४ सम्म चल्यो । नेपाली पत्रिका चलाउनु भनेको आफूलाई समर्पण गर्नु हो । काशीबहादुर श्रेष्ठले पनि परिस्थितिसित जुधे, आर्थिक क्षति बेहोर्नुपर्‍यो । यसले बीचमा केही वर्ष **उदय** निस्केन । २०२४ साल असोजसम्ममा यसमा जम्मा ८५ अङ्क प्रकाशित भएका छन् । उदयको ३१ औं वर्ष (आफ्नो कलमबाट) मा उनी लेख्छन् - 'बीचको केही समय **उदय**ले यसरी थलिनुपरेकोमा हामीलाई स्वयं जो कष्ट र क्लेश भयो त्यो व्यक्त हुन सक्ने होइन । स्वदेश, समाज तथा साहित्यको सेवा गरिरहने जुन एउटा अव्यक्त शक्तिबाट प्रेरणा पाइरहन्छ त्यसैको फलस्वरूप नै आज यो आफ्नो लक्ष्यमा अगाडि बढ्न सकेको छ ।'

यति दृढ आत्मविश्वास पनि कुण्ठित भयो । त्यसपछि फेरि **उदय** निस्कन सकेन । जे होस्, **उदय**ले गरेको नेपाली साहित्यको सेवा अविस्मरणीय छ । सबभन्दा महत्वपूर्ण कुरा **उदय**ले नवप्रतिभालाई उकास्न खेलेको भूमिका हो । आफ्नो सम्पादकीयमा नै काशीबहादुरले भनेका छन् -

'... **उदय**ले आफ्नो राष्ट्र भाषा र नेपाली साहित्यको जे-जति सेवा गर्दै आएको छ, त्यसबाट आफ्नो साहित्यप्रति रूचि राख्ने नयाँ-नयाँ मुनाहरू पनि प्रभावित भएका छन् र तिनलाई पनि साहित्यिक फूलबारीमा प्रस्फुटित गर्नमा ठूलो गुन लाएको छ । यसले वर्षौंनी नयाँ-नयाँ लेखक-लेखिकाको जसरी हौसला बढाउँदै उनलाई प्रकाशमा ल्याएको छ त्यो पनि नेपाली साहित्यिक जगत्मा बोध भएकै कुरा हो कि **उदयका** प्रत्येक अङ्कमा छापिने रचनाहरू नै यसका प्रत्यक्ष प्रसारण हुन् । उनको लेखादि, कथा, कवितालाई परिमार्जन- परिवर्द्धन जस्तो दुरूह कार्य गरेर पनि यथाशक्य स्थान दिई उनको साहित्यिक रूची र प्रेरणाको कदर गर्दै आएको छ । **उदय**को यस पुनित नीति र कर्तव्यले धेरैजसो देशवासी र प्रवासीको साहित्यिक भावनालाई जगाउन प्रश्रय प्रदान गरेको छ । यो **उदय**को निम्ति अभियान त होइन, परम सन्तोष, गर्व र प्रसन्नताको कुरा हो ।

यो **उदय**को मात्र होइन, काशीबहादुरको पनि आवाज थियो । दुवैको सम्बन्ध यति अटुट छ, काशीबहादुर र **उदय** पर्याय भएका छन् । कति जनाले उनलाई काशीबहादुर नभनेर 'उदयबहादुर' भनेको पनि मैले सुनेको छु । वस्तुतः काशीबहादुर एउटा इतिहास भएर गएका छन् - नेपाली साहित्यका, नेपाली पत्रकारिता जगत्का ।

काशीबहादुरलाई सम्झने को छन्; कहाँ छन् ? एकपल्ट २०३९ मा प्रज्ञा-प्रतिष्ठानले निम्त्याइएको थाहा छ । साहित्यिक पत्रकार संघले २०४० असोजमा अभिनन्दन गर्‍यो, सम्मानार्थ आजीवन सदस्यता प्रदान गरियो उनलाई ।

अनि त्यसपछि ? उनी ओझेलमा परेका थिए, हिँड्न-डुल्न बिलकुलै असमर्थ । **उदय**लाई जन्माउने, कैयौं नेपाली लेखकलाई हुर्काउने काशीबहादुर श्रेष्ठ काशीमा मानसिक पीडा र छटपटीका दिन काटिरहेका थिए । के उनीप्रति नेपाली साहित्यका साधक, संस्था र प्रेमीहरूको कर्तव्य थिएन त ?

खोइ के भयो, के भयो ! अब त समय बितिसक्यो । एउटा सुकेको रूख काशीमा ढलेर उसको खरानी पनि गङ्गामा विसर्जित भइसक्यो अब त उ आउँदैन, उसलाई देख्न सकिन्न । काशीका काशी र उदयका जन्मदाता अस्ताए । यसरी बिर्सदा-बिर्सदा कति महत्वपूर्ण समय घर्कीसकेको छ, पछुतोमा भुट्भुटिएर हुरूक भए पनि फेरि सच्याउन नसकिने कति कार्य नेपाली समाजमा भइरहेका छन् ।

काशीबहादुर गए पनि उनका कृति अझै छन् । नेपाली भाषा साहित्यका एक अथकसेवी व्यक्तित्वद्वारा प्रेरणा लिन सकिन्छ, उनका कृतित्वलाई समेटेर मूल्यांकन गर्न सकिन्छ । **उदयकै** एउटा अङ्क 'काशीबहादुर श्रेष्ठ स्मृति अङ्क' निकाल्न सके पनि राम्रो हुन्थ्यो । काशीबहादुरका छोरा दुर्गाप्रसाद श्रेष्ठ स्वयं साहित्यकार छन् । कर्तव्यबोध र श्रद्धा भावले उनलाई घचघच्याएको छ । यस सन्दर्भमा नेपाली साहित्यप्रेमीहरू खासगरी काशीस्थित नेपालीहरूले सोच्नु राम्रो हुन्छ कि ? काशीबहादुर श्रेष्ठको सम्झनामा केही त हुनै पर्छ भन्ने चाहना छ । हेरूँ, उनीप्रतिको समवेदनाको सार्थकता कहिलेसम्म पूरा होला ! ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

श्रीकृष्ण लामा / कमला लामा
**ङ्याम्बल कृषि फर्म तथा लघु उद्यम**
बनेपा–१२, भैंसेपाटी, काभ्रे

# व्यथित : बिर्सिएका केही सम्झना



कृष्णप्रसाद श्रेष्ठ
जन्म : वि.सं. १९९१ असार २३
धरान, सुनसरी
अवसान : वि.सं. २०७७ मंसीर १४

मनमोहन अधिकारीले स्व. व्यथितप्रति श्रद्धाञ्जलि व्यक्त गर्नुहुँदै राष्ट्रले एकजना अति नै सम्मानित व्यक्तित्व गुमाएको छ (कान्तिपुरः ३ असोज २०५५) भन्नुभएको छ । यो विराट व्यक्तित्वको प्रखर चिन्तन, साहसिलो राजनीतिक संघर्ष तथा कठोरतम कार्यको लामो श्रृंखलापछाडि रहेको विभिन्न उतारचढावबीच हेलिएको उहाँको जीवनमा राजनीतिक नेतृत्वदायी गतिविधि उत्तिकै महत्वपूर्ण कार्य रहेको छ । एक सृजनशील कवि तथा कुशल काव्यशिल्पीका रूपमा नेपाली, नेवारी तथा हिन्दी भाषामा दुई दर्जनजति पुस्तकका रचनाकारको रूपमा साहित्यिक सांस्कृतिक फाँटमा जति उच्च मूल्यांकन, प्रशंसा र परिचर्चा हुन्छ, एकतन्त्रीय निरंकुश राणाशाहीविरूद्ध उहाँले गर्नुभएको विद्रोह, मुलुकमा प्रजातान्त्रिक व्यवस्था प्राप्तिपछि पनि यसका उच्च आदर्श, मानवीय नैतिकता र सच्चरित्र राजनीतिक संस्कारको विकासका लागि गर्नुभएको एकल प्रयासलाई पनि हामीले बिर्सनुहुन्न ।

केदारमान व्यथितसित मेरो पहिलो भेट कहाँ, कसरी, कुन पृष्ठभूमिमा भयो, यकिन गरेर भन्न सक्तिनँ, तर वि.सं. २०१४ मा नेपाल कम्युनिस्ट पार्टीको दोस्रो महाधिवेशनको उद्घाटनसत्रमा आफ्नो पार्टीतर्फबाट शुभकामना वक्तव्य दिनुभएको चाहिँ म अझै पनि प्रस्टै सम्झन्छु । मन्तव्यका क्रममा हामी विभिन्न जिल्लाबाट आएका कम्युनिस्ट प्रतिनिधिहरूप्रति लक्षित गर्दै सामन्तले कृषकको शोषण गरेझैं वा पूँजीपति वर्गले श्रमजीवी वर्गमाथि ताण्डवनृत्य गरेसरह, पार्टीका नेताहरूले पनि उच्च तहका इमान्दार कार्यकर्ताहरूको शोषण गर्छन् भन्नुहुँदै यसबाट जोगिन तथा सके सशक्त प्रतिकार गर्न सचेत पनि गर्नुभएथ्यो । भूमिगत अवस्थाबाट भर्खरै खुला कार्य गर्न छुट पाएको छोटो अवधिमा सबै प्रकारका असमानता, अत्याचार, अन्याय र शोषणलाई जरैदेखि उन्मूलन गर्ने अठोट गरिआएका हामी युवाजोस र जाँगरयुक्त प्रतिनिधिहरूले उहाँको यो मन्तव्य साह्रै मन पराएथ्यौं र सम्भवतः त्यस महाधिवेशनका कार्यक्रियामा सबैभन्दा बढी करतलध्वनीबाट स्वागत र प्रशंसित पनि भएथ्यो । पार्टीनेताहरूले आफ्ना कार्यकर्ताहरूको शोषण कसरी गर्दा रहेछन् भन्ने आजको कटु अनुभव केही नभएको, तर सबै प्रकारका अन्याय र अत्याचारको विरूद्ध जुन इन्कार व्यथित गर्नुभएथ्यो, हामी प्रतिनिधिहरूको अन्तरकुन्तरमा निकै दिनसम्म प्रतिध्वनित भइरहेथ्यो ।

पूँजीवादी राजनीतिमा आएको विकृति र विसंगतिले कठोरतम, संघर्षशील लामो जीवन गुजारेका मुलुकका आदर्श चरित्रका पुरूषहरूमा पनि पछि देखिएका निकृष्टतम चरित्रका लोकलहरबाट वाक्क भई व्यथितले राजनीतिलाई शौचालय भन्न पुग्नुभयो । यस्तो भनाइ वर्तमान अवस्थामा प्रवाहित नीतिप्रतिको उहाँको सशक्त प्रहार हो । आफ्नो मुलुकको सर्वाङ्गीण विकासका लागि चाहिने राजनीतिक प्रतिवद्धता, युवकोचित कठोर कार्य गर्ने दृढता तथा देशभक्तिपूर्ण जाँगरिलो भावनाले सुसज्जित केदारमान श्रेष्ठले राष्ट्रको सेवामा शुक्रराज शास्त्रीको नेतृत्वमा

गठित नागरिक अधिकार समिति (वि.सं. १९९४) को संगठनमन्त्रीका रूपमा प्रवेश गर्नुभएको हो । शिवरात्रि मेलामा स्वयंसेवक संयोजक तथा विद्यालय र पुस्तकालय स्थापना गरी जनचेतना फैलाउने क्रममा वि.सं. १९९७ मा पक्राउ गरी केन्द्रीय कारागारमा बन्दी जीवन बिताउनुपर्‍यो । कविकेशरी चित्तधर हृदय र युगकवि सिद्धिचरणको सान्निध्य र संगतले कविहृदय प्रस्फुटित भई उहाँ काव्यरचनामा रमाउनुभयो भने फत्तेबहादुर सिंह, गणेशमान सिंह आदिको साहचार्यले उहाँमा मुलुकका लागि केही ठोस राजनीतिक कार्य गर्ने अठोट पनि सृजना भएको हो । छ वर्ष लामो जेलजीवनमा राणाशाहीविरूद्ध ज्वलन्त धारणा, आक्रोश र विद्रोहको भावना कुटकुट भरिएको छ तत्कालीन उहाँका रचनामा :

*मुक्त कण्ठ हाँसिरेछ*

*मुक्त कण्ठ गाइरेछ*

*इन्कलाब ! इन्कलाब !!* को हुँकार प्रतिध्वनित भएको छ ।

राजनीति र साहित्य दुवै फाँटमा व्यथितले प्रशस्त समय, सीप र साधन खर्चिनुभएको छ यद्यपि गणितीय हिसाबमा उहाँको भूमिका र योगदानलाई समान तहमा आँकलन गर्न मिल्दैन । खुला राजनीतिको दलीय गतिविधिमा मसल, माइन्ड र मनीको बर्चश्व हुने र बेलामौकामा निर्णायक भूमिका पनि खेल्ने भएकोले ससाना दलहरूको उपस्थिति दलीय रजिस्ट्रार कार्यालयको फाइलमा मात्र सीमित हुने सत्यतालाई आत्मसात् गर्दा व्यथितको दल पनि यही सेरोफेरोमा हराउन पुग्यो, तर उहाँको व्यक्तित्वको प्रचण्ड गतिशील कार्यले उहाँको क्रियात्मक भूमिका पञ्चायती व्यवस्थाका विभिन्न कालमा पनि सहज र सरल रूपमा कार्यरत रह्यो । राजा महेन्द्रप्रति उहाँको अपार भक्ति र उहाँको राजनीतिक कार्यप्रति अतिरञ्जित समर्थनले हामीजस्ता उहाँका शुभचिन्तकहरू केही काल टाढिनुपरे पनि सबैका आ आफ्ना आस्था र विश्वास, विचार र विचरणप्रतिको सम्मान तथा सत्ता र शक्तिको दुरूपयोग गरी आफ्नो भनाइ कार्यान्वयन गराउने क्रमबाट पन्छिनुभएका कवि व्यथित सम्मान, इज्जत, प्रतिष्ठा तथा आदरका शिखरमै रहनुभयो ।

यसै क्रममा धरानको बौद्धिक समाज भएको इन्द्रेणी क्लबमा मन्त्री व्यथितको एउटा सम्बोधन सम्झन चाहन्छु । राजाप्रतिको उहाँको गहिरो विश्वास, राष्ट्रपतिको उहाँको अपार माया तथा राष्ट्रियताप्रतिको उहाँको चनाखो दृष्टिकोण र सतर्क अभिव्यक्ति सर्वाधिक चर्चामा रह्यो । दलीय राजनीति, खुला प्रतिस्पर्धात्मक समाज तथा तत्काल मासिएको प्रजातान्त्रिक व्यवस्थाप्रति प्रतिवद्ध धराने बौद्धिक जमातबीच उहाँको भावपूर्ण अभिव्यक्ति, काव्यात्मक लक्ष्यदार भावभङ्गीमा तथा आफ्नो राजनीतिक संस्कारजन्य वस्तुगत समयसापेक्ष व्यवहारले सबैको मन जित्नुभएथ्यो । आफ्ना तीता राजनीतिक अनुभव र व्यावहारिक राजनीतिप्रति आस्थावान व्यथितले आफ्नो मन्तव्यक्रममा दलीय राजनीतिप्रति निन्दा, विघटित सरकार र व्यवस्थाको कठोर भर्त्सना तथा यसका लामा तपसिलका कुकृत्यहरूको भण्डाफोर गर्ने तत्कालीन व्यवस्थावादीहरूको एकाग्र उद्घोषणलाई नै बिर्सिदिएर तत्कालीन अवस्थाजन्य समस्याप्रति सजग रही प्रस्तुत हुनुभएकाले उहाँप्रति सहानुभूति, सद्भाव र सद्‌विचार छाएको थियो ।

आफ्नो दलको अवसानपछि दलीय राजनीतिबाट पन्छिनुभएका व्यथित राष्ट्रिय र अन्तर्राष्ट्रिय रूपमा तथा क्षेत्रगत हिसाबमा विभाजित विभिन्न वैचारिक समूहहरूबाट पनि तटस्थ र असंलग्न रहनुभयो । यस्ता संस्थाहरूको गतिविधिमा यदाकदा सामेल हुनुभए पनि आफ्नो स्वतन्त्र स्वाभिमानपूर्ण अभिव्यक्तिलाई नियन्त्रित हुन दिनुभएन । उहाँको यो गौरवशाली प्रवृत्तिले सबै पक्षबाट समान सम्मान र विश्वास पाइ नै रहनुभयो । सन् १९८३ मा नेपाल अफ्रो एशियाली जनएकता तेस्रो सम्मेलनको उद्घाटन गर्न प्रमुख अतिथिको आसनग्रहण गरिसक्नुभएपछि तत्कालीन फूटपरस्थ केही व्यक्तिहरूको आक्रामक व्यवहार, नाराबाजी र हुलहुज्जत तथा तोडफोडको कारवाहीमा पनि गजबको धैर्य, सौम्य आकृति तथा स्वतन्त्र चिन्तन राख्नुभएथ्यो । विदेशी प्रतिनिधिहरूको उपस्थितिमा भएको यस्तो लाजलाग्दो प्रदर्शनपछि सोही मितिमा अबेला रातिसम्म उहाँको निवासमा भएको दुवै पक्षका उच्च र जिम्मेवार प्रतिनिधिहरूको उपस्थितिमा वार्ता भएथ्यो । कुरा मिलेन, तर उहाँको सद्भाव र सहानुभूति हामी सबैले पछि पनि निरन्तर पाइरह्यौ र उहाँप्रति सहृदयी पनि भइरह्यौं ।

एउटा अर्को घटनाको पनि मलाई सम्झना भइरहेछ – अफ्रो एशियाली लेखक संघर्षको तेस्रो अन्तर्राष्ट्रिय सम्मेलनको, जुन लेबनानको राजधानी बेरूतमा भएथ्यो । सन् १९६० को दशकको कुरा, रूस र चीनबीच प्रचण्ड शीतयुद्ध भइरहेको बेला, एक अर्काले बोलाएको वा सामेल हुने नहुने कुरा प्रतिष्ठाको प्रश्न उठाई यस्ता गोष्ठी, अन्तर्क्रिया, गोलमेचमा सहभागी गर्न वा भाँड्न प्रशस्त परिश्रम र कुटनीतिक दवावसमेत प्रयोग हुने सामान्य अवस्था थियो । यस्तै पृष्ठभूमिमा व्यथित अध्यक्ष रहनुभएको नेपाली साहित्य संस्थानलाई यो अन्तर्राष्ट्रिय लेखक सम्मेलनमा सहभागी हुन आएको निम्तो सहर्ष स्वीकार गरी गोविन्द गोठालेको नेतृत्वमा

गणेशबहादुर प्रसाईं तथा यो पंक्तिकार स्वयंसमेत सामेल हुने प्रतिनिधिमण्डलको चयन भएथ्यो ।

रूसी राजदूतावासमार्फत् प्राप्त यो निम्तोलाई मन्त्री व्यथितको नेतृत्वमा रहेको संस्थाले स्वीकार गरी सहभागी हुन मञ्जुरी दिएपछि चिनियाँ पक्षबाट ठूलो दवाव हाम्रो सहभागितासम्वन्धी निर्णय बदल्न आएको रहेछ, पछि थाहा पाइयो । तर सहभागी हुन निश्चित भई, सामेल हुने सूचना पनि कायरोस्थित कार्यालयमा पठाइसकिएको पृष्ठभूमिमा र प्रतिनिधिमण्डलको छनोट र संयोजन पनि भइसकेको अवस्थामा भएको निर्णय बदल्ने प्रश्नमा पुनः विचार भएन ।

मेरो पासपोर्ट (राहदानी) काण्डले म यस सिलसिलामा व्यथितलाई अलि सकस र अप्ठ्यारो पनि पारेछ । म भूमिगत वाम राजनीतिक समूहको एक जिम्मेवार कार्यकर्ता पनि भएकोले स्वभावतः त्यस बेलाको पञ्चायती बन्द समाजव्यवस्थाको स्थितिमा स्थानीय केही मेरो विरोधी पञ्चायती कुतत्वको दुराग्राहमा तत्कालीन प्रधानमन्त्री सूर्यबहादुर थापाको ठाडो आदेशमा गृहमन्त्रालयको तीन पृष्ठ लामो टिप्पणीका आधारमा पासपोर्ट रोक्का भएथ्यो । सम्भवतः व्यथितलाई यस कुराको जानकारी थिएन, तर मेरो नामको चयन भइसकेपछि देखिएको यो अड्को फुकाउने काम पनि व्यथितले अंगभर गरिदिनुभयो । राहदानीलाई चाहिने सबै कागजात तथा अन्य सामग्री लिइ राहदानी लिन परराष्ट्र मन्त्रालय जानुभएका चित्तरञ्जन नेपाली (त्यस बेला शायद गृह मन्त्रालयमा उपसचिव हुनुहुन्थ्यो) वैरङ्ग फर्कनुपर्दा मसित असाध्य रिसाउनुभयो । हस्याङफस्याङ गर्दै कागजातका मुठा लिई रातारात आँखा गरी, अपमानतिजस्तो अनुभव गरी क्रुद्ध र रूष्ट भई चित्तरञ्जन दाइ फर्किरहनुभएको देख्दा मेरो मनमा चिसो पसेथ्यो – पक्कै सूर्यबहादुर थापाको ठाडो आदेशले मेरो नाममा राहदानी भएन होला भन्ने । व्यथितको मन्त्रालयअगाडिको कोरीडोरमा उभिरहेका हामी गोठाले र प्रसाईं तथा केही शुभेच्छुक अगाडि मलाई हेरी तपाईंले पहिले नै भन्नुपर्दैन ? भनी प्रश्न गर्दै व्यथितको कार्यालय पस्नुभयो । चित्तरञ्जन दाइको यो रौद्र रूप कसैले बुझेनन्, मैले मात्र लख काटैं । केही क्षणपछि चित्तरञ्जन दाइ फेरि हुरीसरह बाहिर निस्कनुभयो र पुनः उही बाटो परराष्ट्र मन्त्रालयतर्फ प्रस्थान गर्नुभयो । स्थितिको गम्भीरतालाई मेरो समस्याको गुत्थी सुल्झाउने कथा मैले सुनाउन लागिसकेथैं, मन्त्री व्यथित पनि कार्यालयबाहिर निस्कनुभई गम्भीर मुखाकृतिमा हामी तीनै जनालाई निवासमा आउन आग्रह गर्दै जानुभयो ।

साँझपख कविजीकहाँ जाँदा म अलि डराई पनि रहेथैं – नमीठो खप्की खानुपर्ला भन्ने आशंकामा । दुई दशक जेठा कविको मप्रतिको व्यक्तिगत बात्सल्यपूर्ण व्यवहार र सदाशयताले गर्दा म व्यक्तिगत रूपमा अलि नतमस्तक पनि थिएँ, तर उहाँले त्यस्तो व्यवहार केही गर्नुभएन । माथि उल्लेखित विवरणहरू कि निम्तो दिँदा रूसी राजदूतले बेरूतबाट रूसको लेखकसंघको निम्तोमा दसदिने भ्रमण गर्ने आग्रह, चिनियाँहरूको यो सामेल नहुने दवाव आदिबीच मित्रराष्ट्रको विचारसमेतलाई ख्याल गर्नुभई सम्मेलनमा भाग लिने, तर रूसको भ्रमणमा नजाने निर्णयको पृष्ठभूमि र महाभारत कथा सुनाउनुभयो (मेरो राहदानीबारेको जटिलताबारे केही तीतो टिप्पणी गर्नुहोला कि भनी त्रसित थिएँ, तर केही भन्नुभएन) । व्यथितको कुशाग्र राजनीतिक सोच र व्यावहारिक मिलेमतोको नीतिले दुवै पक्षलाई समान दूरीमा राख्नुभयो । यो अन्तर्राष्ट्रिय सम्मेलनमा भाग त लियौं, तर रूसी प्रतिनिधिमण्डलको निम्तोचाहिँ आफूहरू स्वदेश तुरुन्त फर्कनुपर्ने बहाना गरी पछिका निम्ति पर सार्नुभयो । चिनिया समाचार एजेन्सी सिन्ह्वाका प्रतिनिधिको सम्मेलन बहिष्कार गर्ने अनुरोध र यसो गरे युरोपका अन्य दुईचार मुलुकहरूको भ्रमण गराउने लोभलाग्दो प्रस्तावलाई पनि हामीले सधन्यवाद अस्वीकार गर्नुपऱ्यो । यस्ता सम्मेलन सोभियत बायुसेवाको मस्को भई आवतजावत गर्ने यात्राक्रम पनि नगरी काठमाडौं-दिल्ली-बेरूत सोझो रूटमा गयौं र सोही रूटबाट फर्क्यौं पनि ।

विभिन्न पत्रपत्रिकाका मेरा रचनाहरू, मूलतः कविताहरूको संकलन नभएको तथा यसको निरन्तरताको टुटसमेत भएको अनुभव गरी कवि व्यथितले यसको प्रकाशनमा समेत सहयोग गर्ने सदाशयता र वात्सल्यपूर्ण भावना व्यक्त बराबर गर्नुभए पनि आफू यस पक्षमा उदासिन नै रहेँ र संकलित रचनाको संकलन र सम्पादनतर्फ किन लागिनँ होला, आफै रनभुल्लमा छु ।

रामपुर साहित्य सेमिनारको तयारी सिलसिलामा व्यथितको सानिध्य प्राप्त गर्ने अवसर पनि पाएथैं । यसको संयोजनको सिलसिलामा उहाँको विचारको प्रस्तुतिमा पूर्वी नेपालका विभिन्न जिल्लामा समेत गर्न मौका पाएको हुँ । आफूले यो अवसर, साहचार्य तथा मञ्चको के कति उपयोग गरैं, गरिनँ वा यात्रा गर्न सकिनँ, यो अलग्गै कुरा हो । तर काठमाडौंबाहिरका, ममात्र होइन, मजस्तै थुप्रै वाङ्मय साधकहरूलाई आफ्नो रचनाको माध्यमबाट मुलुकको सेवा गर्ने वा गराउने उहाँले बराबर हौसला, मञ्च र नेतृत्व पनि गर्नुभएको छ । यस्ता गुण, उदात्त चित्त तथा सबैलाई समेट्ने विश्वबन्धुत्वको भावना भएका व्यक्तित्व थोरै मात्र हुन्छन् र केदारमान व्यथित यी थोरै महान्हरूमध्ये एक ध्रुवतारा हुन् । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछु ।

**राजभाई प्रधान**
बागडोल, ललितपुर

# नेपालको सन्दर्भमा इतिहास र यसको नालीबेली



केदारनाथ प्रधान
जन्म : वि.सं. २००३ वैशाख ७
बनेपा, काभ्रे
अवसान : वि.सं. २०७१ साउन ६

## १. इतिहास के हो ?

इतिहासलाई सजिलैसित 'बितेका कुरा' को रूपमा लिने गरिन्छ । संस्कृत भाषामा यसको अर्थ 'विगतमा यस्तो भएको हो' हुन्छ । अंग्रेजी भाषामा यसलाई 'हिस्टोरी' (History) भनिन्छ र यो ग्रीकेली भाषाको शब्द 'हिस्टोरिया' (Historia) बाट बनेको हो । ग्रीकेली भाषामा यसको अर्थ 'वास्तवमा के भएको हो ?' भन्ने हुन्छ । इतिहास के हो भन्ने सम्बन्धमा सर्वप्रथम ५०० ई.पू. तिर ग्रिकेली विद्वान हिरोडोटस् (Hirodotus) ले आफ्नो धारणा व्यक्त गरेका हुन् । उनले नै तात्कालिक स्थितिमा वैज्ञानिक पद्धतिअनुसार घटनाहरूको प्रत्यक्षदर्शीको आधारमा 'खाडी युद्ध' (Persian wars) नामक इतिहासको ग्रन्थ सर्वप्रथम लेखेका हुन् । त्यसैले उनलाई 'इतिहासका जनक' (Father of History) भन्ने गरिन्छ ।

इतिहास के हो ? भन्ने बारे अनेक अवधारणाहरू पाइन्छन् । आफूलाई ईश्वरका चक्र भन्ने अध्यात्मवादीहरू इतिहासलाई 'ईश्वरको अभिव्यक्त स्वरूप' 'ईश्वरको अनुग्रहपूर्ण रञ्जन' 'ईश्वरको अनुपम इच्छापत्र' 'ईश्वरद्वारा लेखिएको घोषणापत्र' आदि भन्ने गर्दछन् । इतिहासको मर्म नबुझ्नेहरू यसलाई 'उहिलेको खुइलिएको कुरा' भन्ने अर्थमा 'काल्पनिक गाथा' 'मिति-संकलनको पात्रो' र 'केवल शासकहरूको विवरण' भन्ने गर्दछन् । यथार्थवादी विद्वानहरू इतिहासलाई 'सत्यको खोज' 'विगतका घटनाहरूको विस्तृत रूप' 'जीवन अनुभवको खानि' 'मानव सभ्यताको कथा' आदि भन्ने गर्छन् । केही विद्वानहरूले यसलाई 'अतीतका घटनाको अवलोकन' 'अतीत र अनन्तबीचको सम्बाद' 'भूतकालको वैज्ञानिक लेखन' भनेका छन् । भौतिकवादीहरूको अनुसार इतिहास 'मानव-समाजको उत्थान र पतनको इतिहास' हो । मार्क्सवादीका प्रणेता कार्लमार्क्स (Karl Marx १८१८-१८८३ ई.) ले 'कम्युनिष्ट पार्टीको घोषणापत्र' (१८७५ ई.) मा लेखेका छन् - 'अहिलेसम्म विद्यमान रहेका सबै समाजहरूको इतिहास वर्ग संघर्षको इतिहास हो ।'

कतिपय विद्वानहरूको इतिहासको आलोचना गर्दा इतिहासलाई 'हानिकारक' 'महत्वहीन' 'निरर्थक' 'अनुपयुक्त' आदि भन्ने गरेको पाइन्छ । नेपालमा 'उहिलेको कुरा खुइलियो' भन्ने इतिहास विरोधी आव्हानको साथै 'आगो ताप्नु मुढाको कुरा सुन्नु बुढाको' भन्ने इतिहासको पक्षमा रहेको आहान पनि प्रचलित रहेको पाइन्छ । अतीतको खोजले वर्तमानको उपेक्षा हुने र भविष्य ओझेल पर्न जाने हुनाले इतिहासबाट व्यावहारिक लाभ हुँदैन भन्ने तर्क पनि सुन्न पाइन्छ । अध्यात्मवादीहरूले त इतिहासको आत्मा, ईश्वर र पारमार्थिक तथ्यको खोज

नगर्ने हुनाले दार्शनिक आधारमा अध्ययन गर्नु निरर्थक छ भनी आलोचना गरेको पाइन्छ । भाग्य र पूर्वजन्मलाई जीवनको आधारशिला मान्ने अध्यात्मवादीहरूले यसरी भूतकालको घोर उपेक्षा गर्नु आफैमा हास्यास्पद छ । तर वैज्ञानिक भौतिकवादीहरूले भने सही रूपमा इतिहासको समालोचना गरेका छन् । उनीहरूका अनुसार विगतबाट सिक्दै वर्तमानमा सही कदम चालेर भविष्यको मार्ग बनाउन खोज्नु समयको माग हो । भौतिक कुराहरूको अध्ययन गर्नु लाभदायक र सार्थक छ भने अभौतिक वा अवास्तविक कुराहरूको अध्ययन गर्नु लाभहीन र निरर्थक छ ।

## २. इतिहासका अङ्ग र पक्ष

इतिहासविद्हरूका अनुसार इतिहासका चारवटा अङ्गहरू हुन्छन् – घटना, स्थान, काल र व्यक्ति । यिनीहरूको संयोजनबाट नै इतिहासको निर्माण हुन्छ । तर समाजका टाठा-बाठाहरू वा यिनीहरूका भरौटे र धुपौरेहरू इतिहासको निर्माता मानवलाई नमानी अभौतिक वा अलौकिक ईश्वरलाई मान्दछन् । अझ अगाडि बढी आफैंलाई ईश्वरको अवतार वा दूत भनी इतिहासको निर्माता भन्न पुग्छन् । यसैको आधारमा इतिहासलाई शासकको विवरण, राजा-महाराजाहरूको कार्य भनी दरवारभित्र सीमित राख्न खोज्छन् । कुनै एउटा शासक वा वीर नायक समाजको एउटा अंश मात्र हो र ऊ नै सम्पूर्ण वा समष्टि होइन । शासन सत्तामा 'वीरहरू' पदासीन रहे तापनि समाजको उत्पादन वा कार्यमा सत्ताबाहिरका जनताको भूमिका प्रमुख रहेको हुन्छ । किनभने समाजका सम्पूर्ण उत्पादन कार्यहरू तिनीहरूले सञ्चालन गरेका हुन्छन्; यद्यपि वीरहरू तिनीहरूमाथि सत्ताको बलले हैकम चलाउँछन् । यही आधारमा भौतिकवादीहरू जनतालाई नै इतिहासको निर्माता भन्न पुग्छन् । अध्यात्मवादीहरू महाभारतका कृष्णले जस्तै 'अहं ब्रह्मास्मि' भन्ने गर्दछन् र सारा कुरा उनलाई चढाएर मुक्ति दिलाउने कुरामा विश्वास गर्दछन् । समाजको विकासमा प्रमुख भूमिका खेल्ने बहुसंख्यक जनतामाथि एउटा वा एकाध परिवारद्वारा हुने शोषण, दमन र उत्पीडनलाई तिनीहरू आफ्ना दुष्कर्म वा कुकृत्यहरूको परिणाम मान्दैनन् । उल्टो रूपमा उत्पीडित जनताको पूर्वजन्म, भाग्य, कर्म वा नियतिको फल भनी मान्दछन् । वास्तवमा इतिहासको निर्माणमा समाजका प्रत्येक वर्गको धेरै वा थोरै भूमिका रहेको हुन्छ । ठूला-बडा वा उत्पीडित वर्गको सत्तामा पूर्ण हैकम भई उत्पीडित जनता दबिएका छन् भने तिनीहरूले चाहे अनुसार समाजका कार्य जनताविरोधी जस्तो हुन पुग्छन् । यस अवस्थामा उत्पीडक वर्गको भूमिका गौण हुन्छ । स्थिति मल्लको समयमा भएको युद्ध, राजेन्द्र विक्रमको समयमा भएको कोतपर्व, ९७ सालको शहीद काण्ड, २०१७ सालको कालो काण्ड यसका उदाहरण हुन् । जब उत्पीडित वर्गले सत्तासीन उत्पीडकहरूको विरूद्धमा विद्रोह वा आन्दोलन गर्छ र त्यसमा जनता सफल हुँदा शासकहरू परिवर्तन वा सुधार गर्न वाध्य हुन्छन् । यस अवस्थामा जनताको भूमिका प्रमुख र उत्पीडक-शासक वर्गको भूमिका गौण हुन्छ । गोरखाको लिगलिग कोटका खड्का शासकको पतन, २००७ सालको आन्दोलन र राणाको पतन, २०४६ सालको आन्दोलन र परिवर्तन यसका उदाहरण हुन् । प्रत्येक घटनामा कुनै कारणको लागि समाजका दुईवटा वर्गका बीच संघर्ष हुन्छ, जसमा कुनै वर्गको भूमिका प्रमुख र कुनै वर्गको भूमिका गौण हुन्छ ।

इतिहासमा जनताको भूमिकालाई आजकाल सबैजसो इतिहासकारले सिद्धान्ततः मानी जनताको इतिहास हालसम्म नलेखिएको र अब लेखिनु पर्छ भन्न थालेका छन् । समाजमा रहेका सम्पूर्ण जनता (Masses of the People) मा उत्पीडित वर्गको अंश अत्यधिक हुन्छ । यसैले अधिकांश मार्क्सवादीहरू उत्पीडित वर्गलाई नै सम्पूर्ण विश्व वा इतिहासको निर्माता भनी मान्न पुग्छन् । मार्क्सवादका प्रणेता कार्ल मार्क्सले संसारका सबै वस्तुको निर्माता ईश्वर होइन मानव हुन् भने अर्थमा मानवले सबथोक बनाउँछ भनेका हुन् । यहाँ सम्पूर्ण जनता (Masses of the People) भन्नाले सबै तप्काका जनतालाई लिएको प्रष्ट छ । तर सोभियत रूसका मार्क्सवादीहरूले यसलाई जनताको समष्टि रूपलाई नलिई अंशको रूपमा उत्पीडित जातिलाई मात्र लिएको पाइन्छ । शासकहरूद्वारा जनतामाथि चलाएको क्रूर दमन र उत्पादनमा उत्पीडक वर्गले खेल्ने भूमिकाको कारण नै त्यसरी मानिएको हो । तर इतिहासको प्रत्येक घटना एउटा पक्षको भूमिकाले मात्र घट्दैन र यसमा दुई परस्पर विरोधी वर्गको भूमिका हुन्छ । यसमा एउटा पक्ष प्रमुख र निर्णायक हुन्छ र अर्को पक्ष सहायक र गौण हुन्छ । प्रत्येक निर्माण र विकासमा समाजका सबै पक्षको भूमिका हुन्छ तर वर्गीय दृष्टिले

सबैभन्दा ठूलो वर्गको भूमिका बढी हुन्छ र न्यून वर्गको भूमिका अपेक्षित रूपले कम नै हुन्छ ।

इतिहास विभिन्न पक्षहरूको समग्र वा समष्टि रूप हो । पक्षहरू भन्नाले आर्थिक, राजनैतिक, सामाजिक, साँस्कृतिक, धार्मिक, सैनिक, कूटनीतिक, वैधानिक आदिलाई मानिन्छ । कसै-कसैले इतिहासका यी पक्षहरूलाई प्रकारको रूपमा लिने गरेको पाइन्छ । त्यस्तै विश्व मानचित्रका महादेश, उपमहादेश, राष्ट्र, प्रान्त क्षेत्र वा जिल्लाको इतिहासलाई पनि अलग-अलग रूपमा लिने गरको पाइन्छ । तर यी सबै विश्व इतिहासकै अङ्ग वा पक्षहरू हुन् र विश्वदेखि अलग कुनै पनि देशको इतिहास हुन सक्तैन । नेपालको इतिहासलाई पूर्ण र वैज्ञानिक बनाउन यसका छिमेकी चीन र भारतको इतिहासदेखि विलकुलै भिन्न बनाएर लेख्न कठिन हुन्छ । यहाँको आर्थिक साँस्कृतिक आदि इतिहास लेख्दा छिमेकीहरूको सन्दर्भदेखि विलकुलै अलग पार्ने हो भने नेपालको इतिहास पूर्ण बनाउन सकिंदैन ।

पहिले शासकहरूको विवरण मात्र तयार पारी एकाध कुरा समेटेर राजनैतिक इतिहास लेख्ने गरिन्थ्यो र यसैलाई पूर्ण इतिहास मानिन्थ्यो । पछि इतिहासमा समाज, अर्थतन्त्र, सेना आदि सबैलाई समावेश गरिन थाल्यो । यो परम्परा अघि बढेपछि राजनैतिक, आर्थिक, सामाजिक, धार्मिक आदि पक्षका अलग इतिहास पनि लेखिन थाल्यो । त्यस्तै पहिले शासक वर्गको देनको रूपमा मात्र इतिहासलाई लिने गरेकोमा पछि दरवारको पर्खाललाई नाघेर इतिहासलाई ईश्वरको रचना होइन मानवको रचना भनी मानिन थाल्यो । इतिहासको निरन्तर अध्ययन गर्दै गएपछि इतिहासको तथ्यात्मक खोज तथा अध्ययनको आधारमा विश्व सन्दर्भसित पनि गाँसेर वास्तविक वा वैज्ञानिक इतिहास लेखिन थाल्यो । नेपाली सन्दर्भमा केही समय अघिसम्म इतिहास लेखन या त दरवार वा शासनको निर्देशनमा लेखिन्थ्यो या वास्तविक कुरा पत्ता लागे पनि शासक वर्गको कोपभाजनको डरले स्तुतिपरक मसलाहरू मिलाई वा सीमित भएर लेख्ने प्रवृत्ति अझै कायम छ । यद्यपि वैज्ञानिक इतिहास लेख्ने प्रयासहरू दिन-दिनै बढ्दै छ ।

## ३. इतिहासको क्षेत्र र उपयोगिता

प्रारम्भमा इतिहास वृतान्त वा वंशावलीको रूपमा शासक वर्ग अथवा राजनीतिमा मात्र सीमित थियो । पछि विविध विषयको खोज र अनुसन्धान हुन थालेपछि इतिहासको क्षेत्र विस्तार हुँदै गयो । इतिहास यति विस्तृत हुँदै गयो कि यो विविध पक्ष वा इलाका विशेषको पनि छुट्टै लेखिन थाल्यो । देशमा विद्यमान राजनैतिक पद्धति र सोको प्रभावमा रहेका इतिहासकारहरूको दृष्टिकोणको आधारमा इतिहासको स्वरूपको निर्धारण हुने गर्छ । निरंकुश शासक रहेको स्थिति वा इतिहासकार स्वयं शासक वर्गभित्र परेको खण्डमा इतिहास सही र वास्तविक रूपमा लेखिंदैन । यस्तो अवस्थामा इतिहासको क्षेत्र विशेषगरी राजनीति वा शासक वर्गको कार्यमा सीमित हुन्छ । जब समाजमा उदार वातावरण कायम हुन्छ त्यस्तो बेलामा इतिहासको क्षेत्र विस्तृत र व्यापक हुन पुग्छ ।

इतिहासको उपयोगिता सम्बन्धमा पक्ष र विपक्षमा दुवै थरि धारणाहरू पाइएका छन् । शुरू-शुरूमा युरोपेली महादेशतिर इतिहास पढाउन थाल्दा यसको शिक्षण असम्भव छ र यसको अध्ययन गर्नाले व्यर्थको भ्रमको विकास हुन्छ भनी आलोचना गरिएको थियो । नेपालमा राणाकालमा शिक्षण संस्थाहरूमा इतिहास पढाउन निकै नै सजग र सर्तक हुनु पर्दा वास्तविक इतिहास पढाउन निकै नै कठिन हुन्थ्यो । अचेल पनि नेपालको राष्ट्रिय इतिहास लेख्दा आधुनिक कालका शासकहरूबारे राणाबाहेक अरूको बारेमा लेख्दा अत्यन्त होसियार हुनुपर्ने स्थिति विद्यमान नै छ । शासक वर्गको स्वार्थ अनुरूप नै इतिहासबाट सत्य र तथ्यको अध्ययन नहोस् भनी यसको अध्ययन गर्नु हानिकारक, निरर्थक, अनुपयुक्त, महत्वहीन हो भन्ने भ्रम फिँजाइएको हो । तर यसै भ्रमलाई चिर्दै इतिहासका जिज्ञासु र अन्वेषकहरूले इतिहासको उपयोगिता पहिल्याई यसको अध्यननलाई अहम महत्व दिन थालेका हुन् । नेपालको इतिहास जगतमा कसैले "इतिहासले आफ्नो उपयोगिता सिद्ध गर्न सकेको छैन" भन्ने धारणा प्रकट गरेको पाइन्छ । इतिहास वा विज्ञान आफैं आफ्नो उपयोगिता सिद्ध गर्दैन र यो कुरा इतिहासका अन्वेषक र पाठकहरूले मूल्यांकन गर्ने कुरा हो । हिजोका राम्रा कुराबाट सकारात्मक ढङ्गले र नराम्रा कुराबाट नकारात्मक ढङ्गले सिकेर इतिहासको उपयोगितालाई जिज्ञासुले तौलने गर्छ । इतिहासबाट सही पाठ सिकी समाज र आफूलाई मिलाई भविष्यको बाटो तय गर्न सक्यो भने इतिहासको उपयोगिता सिद्ध हुन्छ । यहाँ एकजना विद्वानको भनाइ अत्यन्त सान्दर्भिक र उल्लेखनीय छ– "जो अतीतको प्रवृत्ति र प्रकृतिलाई बुझ्न सफल हुन्छ, उसले आफ्नो युगको मूल्यांकन गर्दा गल्ती गर्न सक्दैन ।"

## ४. इतिहासका स्रोत र सामग्री

इतिहास घटना घटेपछि मात्र निर्मित हुन्छ; यद्यपि घटनाको लागि परिपक्व स्थिति पहिलेदेखि नै बनेको हुन्छ । इतिहासलाई पहिल्याउन घटनाको वास्तविक र समग्र जानकारी लिइनु पर्छ । घटनाको जानकारी लिन "कहाँ, कहिले, कसरी, किन र के ?" भन्ने प्रश्नहरू अगाडि सारिनु पर्छ । यी प्रश्नहरूको उत्तर पाउन जुन आधार लिइन्छ ती नै इतिहासका स्रोत-सामग्री हुन् । यिनीहरू बिना वास्तवमा इतिहासलाई पहिल्याउन सकिँदैन । यी स्रोतहरू धेरै पाइन्छन् र सरलताको निम्ति यिनीहरूको वर्गीकरण पनि गरेको पाइन्छ । नेपाली इतिहासको सन्दर्भमा प्राप्त स्रोतहरूलाई साहित्यिक, वैदेशिक, नृःतात्विक र पुरातात्विक गरी चारवटामा वर्गीकरण गरी तल संक्षिप्त रूपमा चर्चा गरिन्छ । यीमध्ये पहिलो तीनवटा स्रोतहरूलाई सहायक स्रोत र अन्तिम स्रोतलाई मुख्य वा मौलिक स्रोतको रूपमा लिन सकिन्छ । सहायक स्रोतहरूको प्रमाणिकता पुरातात्विक स्रोत वा प्रमाणको आधारमा विश्वसनीय रहेको वा नरहेको भनी निर्क्यौल गर्ने गरिन्छ ।

*क) साहित्यिक स्रोत*

साहित्यिक स्रोतमा किंवदन्ती, पुराण, वंशावली, पुष्पिका वाक्य, ठ्यासफु, ऐतिहासिक चिठ्ठी-पत्रहरू आदि पर्दछन् । यी विषयहरू तथ्यमा आधारित हुन्छन् तापनि कतिपय कुराहरू त्यसयमा रहेका काल्पनिक सज्जा वा आवरणले गर्दा विश्वास गर्न कठिन हुन्छ । तर पुरातात्विक र नृःतात्विक स्रोतद्वारा पत्ता लगाउन नसकिने विषयमा यी स्रोतहरूमाथि भर पर्नुपर्ने बाध्यता रहेको हुन्छ । तल साहित्यिक स्रोतहरूबारे संक्षिप्त रूपमा चर्चा गरिन्छ ।

**१. किंबदन्ती :**

मानवले आफ्ना जीवनमा घटेका घटनाहरू बारम्बार सम्भनको लागि अनेक कथाहरू बनाउँदै आएका छन् । कथालाई रोचक र सुन्दर बनाउन अनेक आवरणहरू जोडेको पाइन्छ र पुस्तैनी रूपमा सुनाउँदै-सुनिँदै जाँदा अरू आवरणहरू पनि थपिन्छन् । मानव-जीवनमा धर्मको स्थान उल्लेखनीय बन्दै गएपछि कतिपय कथाहरूमा धार्मिक आवरण समेत लगाएको पाइन्छ । यिनै कथलाई किंवदन्ती, दन्तेकथा, लोककथा, अनुश्रुति आदि नाम दिएको पाइन्छ । अन्य कुनै स्रोतबाट थाहा नभएका र खण्डन नभएका विषयको सम्बन्धमा यस्ता कथाहरूको आधारमा पनि इतिहासको अध्ययन गरिन्छ । पुराण-महात्म्य र वंशावली अधिकांश मात्रामा यस्तै कथामा आधारित हुन्छन् । नेपाली वंशावलीका प्रारम्भिक पृष्ठहरू यस्तै कथाले भरिएको पाइन्छ ।

**२. समाजको परिवर्तन र यसको स्वरूप**

समाजमा हुने परिवर्तन दुई प्रकारका हुन्छन् - आधारभूत वा गुणात्मक (Qualitative) र सामान्य वा मात्रात्मक (Quantitative) । पहिलोमा समाजको स्वरूप आधारभूत रूपमा वा आमूल रूपमा परिवर्तन हुन्छ र त्यसबेला समाज पुरानोबाट बिल्कुलै नयाँ अवस्थामा परिणत हुन्छ तर त्यसबेला समाजको साविक वा विद्यमान शासकको परिवर्तन हुन पनि सक्छ र नहुन पनि सक्छ । जस्तै नेपाली सन्दर्भमा किरातकालीन युद्ध सरदारहरूको दास राज्य महासंघ (Confodoration of warring slave states) कायम रहँदाको नेपाली समाज दास अवस्थाबाट सामन्ती अवस्थामा बदलिएको बेला किराती शासकहरूको ठाउँमा नयाँ ठाउँमा नयाँ लिच्छवी वा वर्मन खलकको शासक वंश देखिन्थे । १८१६ ई. को सुगौली सन्धिको समयदेखि १९२३ ई. सम्मको अवधिमा राजनैतिक एवं समाजको सामन्ती अवस्था विदेशी पूँजीवादको प्रवेश भई अर्द्ध-सामन्ती तथा अर्द्ध-औपानिवेशिक अवस्थामा परिणत हुन पुग्यो । तर शासक वंश शाहहरूकै रहेको थियो । दोस्रो प्रकारको सामान्य फेरबदल वा सुधारहरू हुने गर्छ र शासक वर्गको परिवर्तन हुन पनि सक्छ र नहुन पनि सक्छ । जस्तै, नेपाली सन्दर्भमा गोपालकालदेखि किरातकालसम्म कायम रहेको दास अवस्थाको समाजमा तीनपटकसम्म सामान्य परिवर्तन वा फेरबदलहरू देखिए तर शासक वंश भने प्रत्येक पटक फेरिए । त्यस्तै मध्यकालमा नेपालको राजधानी मानिने भक्तपुरमा भोन्तश्री (बनेपाली) राजकुल र मल्ल राजकुलबीच चलेको द्वन्द्वको कारण दुवै राजकुलको अन्त्य भयो र यी दुवै राजकुल भन्दा बाहिरका स्थिति मल्लको उदय भएको थियो । तर समाजको आर्थिक, न्यायिक र सामाजिक ढाँचामा सुधारहरू देखिएका थिए । तर समाजको आधारभूत ढाँचा सामन्ती नै रह्यो र यसलाई सुदृढ पार्न समाजमा हिन्दूकरण र सामन्तीकरण गर्ने प्रक्रियामा बढी तीव्रता देखा पऱ्यो । यस प्रकारका सामान्य परिवर्तन वा सुधारहरू समाजमा बारम्बार हुने गर्छ । जब यस्ता परिवर्तनहरूले समाज र त्यहाँ रहेका मानिसको आवश्यकता पूरा नभै अचाक्ली रूपमा शोषण र उत्पीडनको कारण मानिसहरू सत्ताशीन वर्गको विरूद्ध

निर्णायक ढङ्गले नै जुझ्न पुग्छ तब समाजमा आमूल परिवर्तन आउँछ । फलतः समाजको स्वरूपमा सामान्य होइन आधारभूत वा गुणात्मक रूपले नै परिवर्तन आउँछ । जब त्यस्ता संघर्षहरूले सफलता हासील गर्न सक्दैन वा संघर्ष सामान्य आन्दोलनको रूपमा मात्र हुन्छ, त्यसबेला समाजमा सामान्य सुधार वा परिवर्तनहरू मात्र देखापर्छ ।

**३. समाजको परिवर्तन र विकास**

वैज्ञानिक भौतिकवादीहरूका अनुसार अहिलेसम्म समाजमा देखापरेका उत्पादन र उत्पादन सम्बन्ध पाँचवटा देखिएका छन् । तीन हुन् – पञ्चायती (कविला), दास, सामन्ती, पूँजीवादी र समाजवादी । पृथ्वीमा मानवहरू पशुझैं जङ्गली अवस्थामा रहेको बेला अथवा बस्ती, बस्ती गणजातिको प्रादुर्भाव नभएको वा समाजको प्रादुर्भाव भैनसकेको काल (आजभन्दा ४०-५० हजार वर्ष अघिसम्म) लाई समावेश गरिएको छैन । त्यतिबेलाको मानवको समूहलाई समाज भनिंदैनथ्यो र पशुको समूहलाई जस्तै समुदाय मात्र भन्ने गरिन्छ । त्यसबेला मानिसहरू चट्टान, लौरा वा ढुङ्गाका हतियारहरू कन्दमूल खन्न, फलफूल टिप्न र पशुहरूको शिकार गर्ने साधनको रूपमा प्रयोग गर्दथे । त्यसैबेलाको अर्थतन्त्रलाई संग्रह अर्थतन्त्र (Collective Economy) भन्ने गरिन्छ र वास्तवमा त्यतिबेला मानिसले योजनावद्ध रूपले आजको मानव-समाजमा जस्तै उत्पादन गर्दैनथे । पशु जस्तै हूल बाँधेर हिंड्ने, दैनिक पाएको बाँडेर खाने र भरे-भोलिलाई सञ्चित नगर्ने, बस्तीको ठाउँमा गुफा, ओडार वा झ्याङका कुरीमा बस्ने र स्वतन्त्र यौन-सम्बन्ध राख्ने गर्थ्यो  त्यस बेलाको समाजको पद्धति गुणहरू भन्दा केही भिन्न रहेको मानव तन्त्रको रूपमा लिन सकिन्छ ।

गुफा-ओडारलाई छोडी नदी उपत्यकामा आई छाप्रो बनाएर ठूलो हूल शाखाहरूमा विभाजन भएर बस्न थालेपछि मानव सभ्यताको इतिहासमा समाजको प्रादुर्भाव (आजभन्दा ४०-५० हजार वर्षअघि) भएको मानिन्छ । त्यसबेलादेखि समाजमा वर्गभेद नदेखिसम्मको काल (आजभन्दा ४ हजार वर्षअघि वा गोपालहरूहको उदयभन्दा अघिसम्म) लाई गण कविला वा पञ्चायती काल भनी मान्ने गरिन्छ । मानिसहरू समाजका मूली आमाको सन्तानको संख्या झाङ्गिएपछि उपलब्ध खाद्य सामग्री र गुफा-ओडारहरू आवादीको लागि अपर्याप्त भएपछि एउटै आमाकी सन्तान – दिदी-बहिनीहरू छुट्टिएर अलग-अलग ठाउँमा छरिएर बस्न थाले । मूल हाँगा आमाको समूहलाई कविला र तिनका छोरीहरूको समूहलाई गण भन्न थालियो । मातृप्रधान वा आमा मूली हुने अवस्थिति रहेको यस समाजमा कुनै वर्गभेद थिएन र आज जस्तै एकले अर्कोमाथि गरिने कुनै दमन, शोषण, छल-कपट आदि थिएन । त्यसबेला समाजमा सामूहिक श्रम, उत्पादन गरिन्थ्यो र सम्पत्तिमाथि सबैको सामूहिक स्वामित्व हुन्थ्यो । त्यसबेलाको आर्थिक प्रणाली जस्तै सामाजिक र विवाह पद्धति पनि सामूहिक नै थियो । त्यसबेला मार्क्सवादीहरू समाजको यस अवस्थालाई 'आदिम साम्यवाद' भन्ने गर्दछन् ।

पछि यसकालको उत्तरार्द्धतिर पशुपालन (आजभन्दा करीव १२ हजार वर्षअघि) र त्यसपछि कृषिको प्रादुर्भाव ( आजभन्दा करीव १० हजार वर्षअघि) ले अतिरिक्त उत्पादन हुन थाल्यो । यसले समाजमा श्रम वा उत्पादनमा आमा वा महिलाको स्थान गौण वा कम हुँदै गई पुरूषको स्थान प्रमुख वा बढी हुन थाल्यो । गर्भिणी अवस्था, बच्चाहरूको पालन-पोषणमा प्राकृतिक रूपले नै महिलाको अहम् भूमिका रहनाले विस्तारै महिलाहरू टाढाको ठाउँमा शिकार खेल्न जानुभन्दा बस्ती वा घर-आँगन र खेतीको काममा सीमित हुनथाल्यो । सामूहिक विवाह पद्धतिमा अनि उत्पादन र उत्पादन सम्बन्धमा भिन्नता आउनाले सबैभन्दा पहिले अन्तर्पुस्ता (आमा-छोरी) र त्यसपछि एउटै आमाका सन्तानहरूबीच हुने विवाह सम्बन्धमाथि पनि बन्देज लाग्दै गयो । फलतः समाजमा पुरूषहरूको स्थान प्रमुख बन्दै मातृप्रधानको ठाउँमा बाबुको पहिचानले पितृप्रधान वा पुरूष प्रधानको अवस्थिति देखियो । यस किसिमको स्थिति शान्तिपूर्ण ढङ्गले समाजमा आजभन्दा ५-६ हजार वर्षअघितिर प्रारम्भ भएको मानिन्छ । त्यसबेला समाजमा सत्ताको उदय भैसकेको हुनाले मातृ वा पितृ प्रधान समाजलाई मातृसत्ता र पितृसत्ता भनी संज्ञा दिनु ठीक हुन आउँदैन ।

आजभन्दा करीव ५ हजार वर्षअघितिर समाजको सुरक्षाको निम्ति छानिएका सुरक्षा टोलीहरू नियमित सेनाजस्तै हुन थाल्यो र समाजको रीतिरिवाज तथा चाडपर्व एवं नियम वा स्थितिहरू बसाल्न छानिएका धामी-पुरेत एवं सुरक्षाका लागि छानिएका वीर पुरूष वा युद्धनायक बीचको मिलिमतोले समाज अनेक अनेक किसिमका व्यववस्ताहरू देखिए । समाजमा एकथरि काममात्र गरी उत्पादन गर्ने तर सोमाथि स्वामित्व नहुने र अर्काथरि श्रम उत्पादनमा भाग नलिने र त्यसका साधन-औजारमाथि हैकम चलाउने

गरी दास र मालिक गरी दुईटा वर्ग देखिन थाल्यो । विभिन्न गुणहरूसित संघर्ष भई समातिएका युद्धवीरहरूलाई जबर्दस्त श्रम गराउने शक्तिको प्राप्तिले दासहरू देखिएका हुन् । यस्तो दास अवस्था समाजमा आजभन्दा करीव ४ हजार वर्षअघितिर देखिएको हो । आफ्नो हैकमलाई सुदृढ पार्न मालिक वर्गले नयाँ-नयाँ नियम-कानून, नियमित सेना, कर प्रणाली, दण्ड-सजायँ दिने अड्डा-जेलहरूको व्यवस्था गर्न थाले । नेपाली सन्दर्भमा गोपालहरूको कालदेखि दास अवस्था प्रारम्भ भई किरातकालमा विकसित भएको हो । समाजमा देखापरेका दासहरूको परिवारलाई एकाध वर्षका लागि खेती गरी खान जमिन दिई सामूहिक श्रम गराइन्थ्यो । यस प्रकारको जमीनलाई किराती समाजमा किपत भनिन्थ्यो र यसरी पाए बापत मालिक वर्गले लगाएका अनेक किसिमका झारा-विस्टिहरू तिर्नु पर्दथ्यो । यही कालमा समाजमा नयाँ नयाँ किसिमको चिन्तनको विकास भई दर्शन सँस्कृतिको उदय (कपिलवस्तुमा कपिलको साँख्य दर्शन र गौतम बुद्धको दर्शन, विद्रोह– जनकपुरमा उपनिषदीय– (वेदान्त दर्शन) भएको हो । दासहरूमाथि मालिक वर्गको अचाक्ली शोषण र दमनको विरूद्ध बारम्बार संघर्षहरू भई ४०० ई. पू. तिर लिच्छवी वर्मनहरूद्वारा किरातहरू पराजित भई समाजमा नयाँ व्यवस्था देखा पर्‍यो । मालिक वर्गको भूमि– सम्पत्तिमाथि एकलौटी स्वामित्वको अन्त हुन गयो र दासहरूले पनि पहिलेको खास अवधिमा पाउने 'किपट' को ठाउँमा स्थायी र निजी रूपमा घर-करेसाको लागि अलिकति भूमि पाए ।

समाजमा सामन्ती अवस्था प्रादुर्भाव भएपछि पहिलेका दास मालिकहरू सामन्त-कुलिन बने र पहिलेका नाङ्गा दासहरू अलिकति जमिन पाई मानव भए पनि व्यवहारमा सामन्त-कुलीनहरूकै खेतबारी जोत्नुपर्ने अवस्थाले भूमिको दास– भूदास (Sarf) बने । भूदास भनेको अहिलेको शब्दमा हलि-गोठाला वा हरूवा-चरूवाका रूपमा लिन सकिन्छ । त्यसपछि उत्पादनमाथिको स्वामित्वको एकलौटी मालिक तथा उत्पादनको वितरणको असमान स्थिति र किसान वर्गमाथि सामन्त वर्गले चलाएको निरंकुश शोषण, दमन र उत्पीडनले दुई वर्गबीच अन्तर्विरोध र संघर्ष हुन गयो । यस्तै संघर्षहरूको परिणाम किसानहरूलाई केही दिन विष्टि, कपडा वा अन्नको कर लिने गरी परिवारको संख्या अनुसार अरू जमिन पनि दिइन थाल्यो । कृषिमा सिंचाइ, नयाँ बीजन, धातु उद्योग, यातायात, शहर आदिको विकास हुन थाल्यो । पहिलेको वंशगत कुलिन तन्त्रको खारेजी सामन्तहरूलाई भूमि-उपाधि प्रदान, जग्गाको किनबेच (लिच्छवी कालमा लेख्यदान भनिन्थ्यो) गर्ने कानूनी व्यवस्था हुन थाल्यो । विस्टिहरूको साथै अन्य नयाँ कर Tripartite tax (भूमि-भाग, पशुपालन– भोग, व्यापार-कर (उत्सव कर आनि लगाउन थाल्यो । यही बेला सामन्तहरूले (इशापूर्वको अन्त्यताकादेखि), 'भट्टारक' दैवी उपाधि लिंदै आफूलाई ईश्वरका दूत भन्दै जनतालाई धर्म, भाग्य र कर्ममा अल्मल्याउने काम गरे । सामन्तहरूले भूमिमाथिको आफ्नो निर्भरतालाई कम गर्ने व्यापार तथा उद्योगमा पूँजी लगाउन थाल्यो र यसरी व्यापारिक पूँजीवादको प्रादुर्भाव हुन गयो । किसानहरू रोजी-रोटी गाउँको सीमित उत्पादनबाट नधानेपछि उद्योगहरूमा काम गर्न शहर-बजारमा पुग्न थाले । हिजो जनताको श्रम भूमिद्वारा सोझै लुटिन्थ्यो भने अब घुमाएर लुटिन थाल्यो । नेपाली सन्दर्भमा लिच्छवीकालको उत्तरार्द्धदेखि पूर्व मध्यकालसम्मको अस्थिरता र त्यसपछि नेपालको उद्योग र व्यापारको विकासमा ह्रास आउन थाल्यो । आधुनिक कालको पूर्वाद्ध मात्र होइन राणाकालको अन्त्यतिर समेत विकास हुन सकेको थिएन ।

१९०० ई. यता समाजको सामन्ती ढाँचामा व्यापारिक पूँजीवादको विकास हुँदै विस्तारै पूँजीवादी स्वरूप विकसित हुँदै समाजमा पूँजीवादी रूपमा बदलिन पुग्यो । हिजोका सामन्तहरू पूँजीपति र किसानहरू मजदूर वर्गमा बदलिन थाल्यो । तर गाउँ-घरमा भने उत्पादन, उत्पादनका साधन र प्रविधि परम्परागत नै रहनु, पूँजीको विकास हुन नसक्नु र जनतामाथि सामन्त वर्गको उत्पीडन पुरानै ढाँचाका हुनुले समाजको ढाँचा सामन्ती रह्यो । देशमा विदेशी पूँजी, उत्पादन र संस्कृतिको प्रभाव राजनैतिक, आर्थिक र सामाजिक रूपमा बढ्दै गए तापनि र राज्यसत्तामा राजतन्त्रात्मक वा गणतन्त्रात्मक पद्धति रहे तापनि आन्तरिक रूपमा सामन्ती तथा दलाल पूँजीपति र बाह्य रूपमा पूँजीवादी वा साम्राज्यवादी शोषण कायम रहेको पाइन्छ । यस किसिमको समाजको स्वरूपलाई अर्द्ध-सामन्ती तथा अर्द्ध-औपनिवेशिक भन्ने गरिन्छ । नेपाली सन्दर्भमा व्यापारिक पूँजीबाट पूर्ण पूँजीवादको रूपमा विकसित हुन नपाउँदा विदेशी उत्पादन, पूँजी र सँस्कृति १८१६ ई. को सुगौली सन्धिदेखि प्रारम्भ भई १९२३ ई. सम्ममा समाजको स्वरूप अर्द्ध सामन्ती तथा अर्द्ध औपनिवेशिक बनेको पाइन्छ ।

पूँजीवादी समाजमा मजदूर वर्गको श्रम-पसिनाद्वारा

प्राप्त उत्पादनमाथि पूँजीपति वर्गको हैकम र मजदूर वर्गमाथि निर्मम शोषण, दमन र उत्पीडन हुन थालेपछि फलतः पूँजीपति वर्गका विरूद्ध मजदूर वर्ग लगायत अन्य राष्ट्रिय पूँजीपति, निम्न पूँजीपति, धनी, मध्यम र गरीब किसानहरू समेतको संयुक्त संघर्ष भई समाज समाजवादी स्वरूपमा बदलिन पुग्छ । रूस, चीन, उत्तर कोरीया, भियतनाम, क्यूवा आदि मुलुकहरूमा यसरी नै समाज बदलिएको थियो । तर अर्द्ध-सामन्ती तथा अर्द्ध-औपनिवेशिक समाजमा सामन्त र पूँजीपतिवर्गका विरूद्ध संघर्ष हुँदा मजदूर-किसानको संयुक्त नेतृत्व र अन्य उत्पीडित सम्पूर्ण तत्वको समर्थन र सहयोग समेत जुटी नयाँ जनवादी समाजको निर्माण हुन्छ । पछि नयाँ जनवादी समाजलाई आर्थिक, सामाजिक एवं राजनैतिक रूपले विकसित हुँदै समाजवादी समाजमा रूपान्तरित हुन्छ । उपर्युक्त दुवै किसिमका मार्गहरूबाट निर्माण भएको समाजवादी समाज राज्य र वर्गबिहीन समाजको रूपमा विकसित हुँदै साम्यवादी समाजमा रूपान्तरित हुने मार्क्सवादी प्रस्थापना रहेको पाइन्छ ।

पूँजीवादी वा आदर्शवादीहरू उपर्युक्त भौतिकवादी-मार्क्सवादी विश्लेषणलाई मान्दैनन् । मानव तथा समाजको ऐतिहासिक विकास-क्रमको प्रारम्भिक चरणहरूलाई माने तापनि पूँजीवादी अवस्थादेखि यताको विकासक्रमको प्रश्नलाई आँखा चिम्लेर साम्यवादी प्रस्थापनाको विरोध तिनीहरूले गर्ने गरेको पाइन्छ । तर विश्वमा साम्यवादीहरूको बढ्दो प्रभावले गर्दा तिनीहरूले समाजवादको नाउँ सापटी लिएर मार्क्सको 'आर्थिक समाजवाद'लाई मानेको भन्दै 'समाजवादी प्रजातन्त्र' को सट्टा 'प्रजातान्त्रिक समाजवाद' (Democratic Socialism) को नारा अघि सारेको पाइन्छ । साम्यवादीहरूको विश्वव्यापी सङ्गठन – 'कम्युनिष्ट इन्टरनेशनल' को ठाउँमा पश्चिमका पूँजीवादीहरूले 'सोशलिष्ट इन्टरनेशनल' को अवधारणा सारेका थिए । नेपाली सन्दर्भमा यसखाले विचारको प्रतिनिधित्व १९५४ ई. देखि नेपाली काँग्रेसले गर्दै आएको छ । उसले 'प्रजातान्त्रिक समाजवाद' को व्याख्या गर्दै आइरहेको छ । सोभियत रूसमा गोर्बाचोभले तयार पारेका शिखण्डी बोरिस येल्सिनले अमेरिकाको बुई चढ्दै साम्यवादलाई लात मारेपछि पूर्वी युरोपमा देखिएको परिवर्तनपछि यसखाले 'टपरटुईयाँ समाजवादी' हरूले अब मार्क्स र समाजवादको नाउँ लिन छाडेको आरोप साम्यवादीहरूले लगाउन थालेका छन् ।

## ६. इतिहासको थालनी

आदर्शवादीहरूको अवधारणा अनुसार ब्रम्हाजीको सृष्टिलाई मान्ने हो भने उनले पृथ्वीको सृष्टि गरेदेखि मात्र होइन उनको सृष्टिको स्रोत – विष्णुको नाभिको कमलदेखि नै इतिहासको थालनी भएको मान्नुपर्ने हुन्छ । पहिले पश्चिमा मुलुकहरूमा इसाइ धर्म ग्रन्थअनुसारमा ६ दिनमा र इसाइ धर्मगुरू जेम्स इसर (१६५० ई.) का अनुसार २००४ ई.पू. अक्टोबर ६ तारिख विहान ९:०० बजेदेखि थालनी भई केवल ६ दिनमा सम्पूर्ण विश्व ब्रह्माण्डको सृष्टि भएको हो भनी सोचिन्थ्यो । यसलाई मान्ने हो भने नेपाली सन्दर्भमा नागजातीको अस्तित्वको बेलातिर मात्र त्यस्तो भएको हो भन्नुपर्ला । त्यस्तै हिन्दू धर्मअनुसार मान्ने हो भने सृष्टिको समयकाल काठमाडौं उपत्यकाको ललितपुर लूँभूमा कृषिको थालनी गरेताका वा 'वूश भूमी' को समयकालमा मात्र सृष्टिको आरम्भ भएको भनी मान्नु पर्ने हुन्छ । यसलाई मान्ने हो भने हामीले बर्दियाका ५ लाख वर्षअघिका, नवलपरासी-दाङका २ लाख वर्षअघिका र बूढानिलकण्ठका ३२ हजार वर्षअघिका मानव र तिनका अवशेष र बुटवलको १.१ करोड वर्ष अघिका वानर र मानवबीचका नरवानर-रामनरवानर (Ramapithecus) को दन्त अवशेषलाई नै अस्वीकार गर्नुपर्ने हुन्छ । भौतिकवादी वैज्ञानिकहरूले मानवको इतिहास वा तिनको क्रियाकलाप प्रारम्भ भएदेखिको इतिहासलाई इतिहास भनि मान्ने गर्दछन् । यसले आजभन्दा ४०-५० हजार वर्ष अघिदेखि मानव क्रियाकलापको इतिहासको थालनी भएको मान्नुपर्ने हुन्छ । तर मानव उद्भव नरवानरबाट विकास भई आजभन्दा ३०-४० लाख वर्षअघि भएको, तिनको पुर्खा वानरलाई ३ करोड वर्षभन्दा अघिको र सम्पूर्ण जीवनको पुर्खा 'अल्गीया' (Algaea) लाई आजभन्दा १.५ अरव वर्षअघि उत्पत्ति भएको मानिनाले र हामी रहेको पृथ्वीलाई आजभन्दा ४.५ अरव वर्षअघि उत्पत्ति भएको मानिनाले आदर्शवादीहरूको अवधारणा विल्कुलै मिल्न नआएको कुरा स्पष्ट हुन आउँछ । आजकाल पृथ्वीको सृष्टिदेखिको काललाई नै इतिहासको थालनीको काल भनी मान्ने गरिन्छ ।

नेपालको सन्दर्भलाई लिंदा नेपाल अवस्थित रहेको भूखण्डको निर्माणकाल आजभन्दा ५७ करोड वर्षभन्दा अघिदेखि नै नेपाली इतिहासको थालनी भएको भनी मान्नुपर्छ । अहिलेसम्म नेपालका वंशावली अनुसार चीनको महामञ्जुश्री वा भारतबाट आएका विष्णु वा कृष्णको चक्रले चोभारको

डाँडो काटेपछि आवादयोग्य भएको काठमाडौं उपत्यकामा 'ने' नामक मुनिले गोपाल वंशको सरदारको छोरालाई राजा तुल्याएपछि (भाषा वंशावली भाग १ पृष्ठ ४४) वा मञ्जुश्रीले गुह्यश्वरीदेखि देवपत्तनसम्म फैलिएको 'मञ्जुपतन' नामक शहर बसाली क्षत्रिय धर्माकरलाई राजा तुल्याएपछि (देवमाला, पद्मगिरि वंशावली, स्वयम्भु पुराण) नेपाली इतिहास थालनी भएको गलत अवधारणा पाइएको छ । नेपाली इतिहासका पाठक मात्र होइन नेपालका अधिकांश बुद्धिजीवीहरूमा पनि यस्तै गलत अवधारणाको प्रभाव पाइन्छ । तर तिनीहरू भाषा वंशावलीको प्रथम पृष्ठमा वर्णित सृष्टिको कुरापट्टि पटक्कै ध्यान दिँदैनन् र त्यसमा सृष्टिको संक्षिप्त वर्णनपछि पशुपति ज्योतिर्मय लिङ्गको उत्पत्ति कथाले संकेत गर्ने ब्रह्माजीको हाराहारीको समयपट्टि पनि ध्यान दिँदैनन् । नेपालमा २ करोड वर्षभन्दा अघिका जीवहरूमा अवशेष जनकपुर र दाङमा पाइएका छन्, लाखौं वर्ष अघिका मानवमा अवशेषहरू (मानव हातले बनाएका ढुङ्गाका हतियारहरू) माथि दृष्टि नै दिइँदैन । कतिपय इतिहासकारहरू प्राय इतिहासबारे लेख्दा साखुल्ले वैज्ञानिक वा ऐतिहासिक कालको इतिहासबारे लेख्दा वा बोल्दा आदर्शवादी नै बन्न पुग्छन् । कतिपय विद्वान्हरूले उत्तरबाट मङ्गोलहरू आए, दक्षिणबाट आर्यहरू आए र तिनीहरूबीच समागम भई नेपालमा नेपालीहरू जन्मिए र त्यसपछि नेपाल र नेपालीको सभ्यता र इतिहासको थालनी भयो भनी मान्दछन् । कोही भारतीय वा हिन्दू चश्मा लगाई कोही उत्तरी वा मङ्गोली चश्मा लगाई नेपाल र नेपालीलाई हेर्ने गर्दछन् । तिनीहरूले नेपाली चश्मा भए नेपालका कम्तिमा ५ लाख वर्ष अघिका वर्दिया दानवताल छेउका वर्दिया मानव करीव २ लाख वर्ष लाख वर्ष अघिका दाङ-देउखुरी, सुर्खेत, कास्की र नवलपरासीका मानव, ३२ हजार वर्षअघिका पूर्वदेखि पश्चिम र हिमालय छेउदेखि तराईका समथर मैदानसम्मका नयाँ ढुङ्गे युगका मानिसहरूलाई पनि देख्थे ।

## ७. इतिहास लेखनको परम्परा

विश्वको प्रत्येक मुलुकमा इतिहासको लेखन-परम्परा पुराण-महात्म्य इति वृत्तान्तको रूपमा थालनी भएको पाइन्छ । पहिले मानवद्वारा कथित अनुश्रुति वा कथाहरूको आधारमा लेखिएको पुराण-महात्म्यलाई साहित्यको अङ्गको रूपमा मानिन्छ । साहित्यका यी अङ्गहरूमा इतिहास पाइने हुनाले इतिहासलाई साहित्यको एउटा अङ्गको रूपमा पनि लिइन्छ । नेपालमा पुराण-महात्म्यलाई प्रारम्भिक इतिहास मान्न सकिने भन्ने अवधारणा पनि पाइन्छ । ग्रीसमा सबैभन्दा पहिला त्यहाँका विद्वान् हेक्रेटियस (Hecretius) (६०० ई.पू.) ले प्रचलित आख्यानहरूको आलोचनात्मक व्याख्या गरी इतिहास (विश्वका पर्यटन र स्थानीय वंशावलीहरूको ग्रन्थ) लेखेका हुन् । स्थलगत अध्ययन र अनुसन्धान गरी सर्वप्रथम वैज्ञानिक पद्धतिद्वारा इतिहास लेख्ने विद्वान् ग्रीसकै हिरोडोटस (Hirodotus ४८० ई.पू.) हुन् ।

पछि शासक वर्ग र समाजमा धामी-पुरेतहरूबीच गाढा सम्बन्ध कायम भएपछि शास वर्गको निर्देशनमा धामी-पुरेतहरूले इतिवृत्तान्त वा वंशावलीको रूपमा इतिहास लेख्न थालेको हो । इतिहासलाई दैवी योजना र शासकलाई ईश्वरको अवतार मानी पुरेतहरूले युरोप, अरब, एशिया, अफ्रिका आदि देशहरूमा इतिहास लेखेको पाइन्छ । त्यसपछि मध्यकालमा युरोपमा राज्य र चर्चको मिलिमतोमा पुरेत-पादरीद्वारा इति वृत्तान्तको रूपमा इतिहास लेखिन थाल्यो । नेपालका वंशावलीहरू पनि शासक वर्गको निर्देशनमा पुरेत वा सामन्तहरूले लेखेका हुन् । आधुनिक कालमा आएपछि राज्यको निर्देशन र धर्म तथा ईश्वरको प्रेरणामा लेखिएको भनिने इतिहासको विरोध हुन थाल्यो । प्रत्येक कुरामा समाज र मानवको भूमिकाको परिणाम भनी मान्न थालेपछि उन्नाइसौं शताव्दीदेखि पुरातात्विक अन्वेषण र उत्खननको आधारमा राज्य र चर्चदेखि स्वतन्त्र र आधुनिक पद्धतिको आधारमा इतिहास लेखिन थालेको हो । साथै भौतिकवादी दृष्टिकोणको विकास मार्क्सवादको प्रादुर्भाव भएपछि भौतिकवादी वा ऐतिहासिक विकासवादी चिन्तनको आधारमा इतिहास लेखिन थालेको हो ।

इतिहास लेखनको परम्परामा पूर्वी जगत् पश्चिमा जगत्भन्दा कम थिएन । वृहस्पति, भृगु, अङ्गिरा, व्यास, तुलसी, वाल्मिकी, वाणभट्ट आदिले भारतमा पुराण-महात्म्य लेखे । त्यसपछि मध्यकालमा विल्हण, नन्दिन आदिले इति वृत्तान्तको रूपमा इतिहास लेखेको पाइन्छ । नेपालको अभिलेखमा नै शासक वंशको वंशावली ४५४ ई. को चाँगुनारायणको अभिलेख पाइएकोले त्यसै बेलादेखि वा सोभन्दा अघिदेखि सम्भवतः इति वृत्तान्तको रूपमा इतिहास लेखिए । ७३३ ई. को पशुपतिको अभिलेखमा पनि लिच्छवी शासकहरूको वंशावली दिइएको छ । यी प्रमाणले प्राचीनकालदेखि नै नेपालमा इति वृत्तान्तको रूपमा इतिहास लेखिएको हुनसक्ने देखिन्छ । **अनुपरम** र **बुद्धकीर्ति**

जस्ता सुन्दर काव्य लेख्ने कविहरूले इतिहासको क्षेत्रमा तिनीहरूका आस्था क्रमशः हिन्दु र बौद्ध धर्म अनुसार लेखे होलान् । हुनसक्छ ती ग्रन्थहरू पछि नष्ट गरिए वा हुन गए । मध्यकालमा नेपाल आएका इसाइ पादरीहरूले पनि हजारौं ग्रन्थ नष्ट गरेका थिए, कैयौं ग्रन्थ विदेश लगिए । त्यसपछि पनि बाहिर चोरी निकासी भई कैयौं सामग्रीहरू पुगेका छन् । नेपालमा हालसम्म प्राप्त प्रमाणअनुसार चौधौं शताव्दीमा इति वृत्तान्तको रूपमा 'गोपालराज वंशावली' लेखिएको थियो । स्थितिमल्लको निर्देशनमा लेखिएको यो ग्रन्थका लेखक कुनै धामी-पुरेत वा शासककै परिवार वा सामन्त होलान् । चीन र भारतीय सन्दर्भमा यस्तै पृष्ठभूमिका लेखकहरू पाइएका छन् ।

१८५८ ई.मा प्रकाशित कर्कप्याट्रिकको ग्रन्थलाई नेपाली इतिहासको पहिलो ग्रन्थ मानिन्छ । पछि ह्यामिल्टन, हॉग्सन, राइट, बेन्डाल, लेवी, पेटेक, टुची, ल्याण्डन आदिले नेपाली इतिहासका ग्रन्थ लेखेका छन् । नेपालका प्रशस्ति-गायकहरूले इतिहास भन्दा पनि स्तुति-काव्यहरू-'राम शाहको जीवनी', 'पृथ्वीन्द्र विजय', 'पृथ्वीनारायणोदय', 'त्रिरत्नसौन्दर्यगाथा' आदि लेखेका छन् । भीमसेन थापाको समयकालमा इतिहासमाथि प्रकाश पार्ने काव्यहरू लेखिनुको साथै अभिलेखको अध्ययन गरी सुन्दरानन्द बँडाले इतिहास लेख्ने प्रयत्न गरेका थिए । स्वतन्त्र चिन्तन र लेखनमा लाग्दा बाँच्न समेत मुश्किल भएपछि सुन्दरानन्दले शासकको प्रशस्तिमा पनि काव्य लेखे तर स्वतन्त्र चिन्तक र अपार बौद्धिक प्रतिभा भएका यिनी बौद्ध धर्मावलम्बी हुनाले यिनले प्रोत्साहन पाएनन् र आफ्नो प्रयासलाई पूरा गर्न सकेनन् । राणाकालमा पनि शासकहरूको गुणगान नै इतिहासको मुख्य आधार थियो । ल्याण्डनले राणाहरूबाट ठूलो धनराशी हात पारेका थिए । पहिलेका नेपाली लेखकहरूले भारतमै बसी नेपाली इतिहासका ग्रन्थहरू लेखेका थिए । सम्भवतः प्रथम नेपाली लेखक मानिने अम्बिकाप्रसाद उपाध्याय पनि प्रवासमा लेखेर पनि शासकहरूको गुणगानबाट बच्न सकेका थिएनन् । बालचन्द्र शर्मा र डिल्लीरमण रेग्मीले राणाहरूको विरोधमा आफूलाई केन्द्रित गरे । १९६० ई. यता इतिहास संशोधन मण्डल जस्ता संस्थाहरू खोली नेपाली इतिहासको अध्ययन र लेखनमा संस्थागत प्रयास पनि भएको पाइन्छ । प्रारम्भमा बाबुराम आचार्य, बालचन्द्र शर्मा, डिल्लीरमण रेग्मी, सूर्यविक्रम ज्ञवाली जस्ता इतिहासकारहरू देखिए भने पछि नयराज पन्त, धनबज्र बज्राचार्य, तुल्सीराम वैद्य, ज्ञानमणि नेपाल, जगदीशचन्द्र रेग्मी, त्रिरत्न मानन्धर आदि देखिए । पाठ्यपुस्तक लेखकहरूले इतिहासका विविध विषयहरूमा पुस्तकहरू लेखेका छन् । वैज्ञानिक इतिहासको पक्षमा नवोदित लेखकहरू निरीश नेपाल, कृष्णबहादुर थापा, प्रेम खत्री, पेशल दाहाल, हरिप्रसाद श्रेष्ठ, शिवकुमार श्रेष्ठ आदि पनि देखिएका छन् । तर आजसम्म नेपालको समग्र इतिहास वैज्ञानिक ढङ्ले लेखिन भने सकेको छैन ।

## ८. इतिहास लेखनका कमीहरु

नेपाली इतिहासको लेखनमा अनेकौं कमीहरू रहेका छन्, जसको परिणाम अहिलेसम्म वैज्ञानिक इतिहास छैन । यस धारणालाई इतिहास क्षेत्रका सबैजसो कर्मीहरू स्वीकार गर्दछन् तर पूर्ण तथा वैज्ञानिक इतिहास लेखनमा लगनशीलता र सामूहिक प्रयासको थालनी हुन सकेको छैन । सबै कर्मीहरू आपसमा आलोचना-प्रत्यालोचना र टिकाटिप्पणी गर्छन् तर सबै एकै ठाउँमा बसी, कुनै विषयमा मन्थन गर्न रूचाउँदैनन् । तल इतिहास लेखनमा विद्यमान कमीहरूबारे संक्षिप्तमा चर्चा गर्ने प्रयास गरिन्छ ।

नेपाली इतिहासका स्रोत सामग्रीहरू कतिपय खोज गर्न बाँकी छन्, कति विदेशतिरका सरकारी तथा निजी संग्रहालयहरूमा राखिएका छन् (अमेरिका, फ्रान्स, बेलायत, जर्मनी, रूस, भारत आदि) । मध्यकालमा आएका इसाइ पादरी, ब्रिटीश दूतावासका कर्मचारीहरू र त्यसपछि नेपालका ठूलाबडाको संरक्षणमा अझै पनि बाहिर जाने क्रम कायमै छ । यस्ता कार्यमा संलग्न स्वदेशीहरू पैसाका लागि र विदेशीहरू पैसाका साथै कतिपयले नेपालको इतिहासलाई लुकाइराख्न वा पूर्ण रूपमा प्रकाश हुन नदिन पनि गरेका हुन सक्छन् । चीन र भारतका सामग्रीहरू पनि यस्तै ढङ्ले विदेशतिर लगी नष्ट समेत गरेको पाइन्छ । नेपालमा पाइएका सामग्रीको निर्क्योल हुन बाँकी छ र प्रकाशमा ल्याइएका विषय पनि हतारले गर्दा विवादास्पद बनेका छन् । सकारी निकायहरूमा रहेको कतिपय सबै अन्वेषकहरूले पाउन पनि मुश्किल छ । विदेशीहरू वा सरकारी निकाय वा त्रिभुवन विश्वविद्यालयका उच्चपदस्थ अन्वेषकहरू ती सामग्री प्राप्त गर्न सक्षम हुन्छन् र तिनीहरू 'स्तरयुक्त' र 'विशिष्ट' विद्वान् बन्न पुग्छन् । तर स्थापित पत्रिकाहरूमा लेख-रचना प्रकाशन गर्ने अवसर नपाएका स्वतन्त्र ओहदामा नरहेका अन्वेषकहरूका निम्ति ती अनिकालका बीउ सरह हुन्छन् । साथै तिनीहरूले अन्य स्वदेशी व्यक्ति सरह

आर्थिक सुविधा पाउँदैनन् र नेपालको लागि सहयोग स्वरूप प्राप्त रकमबाट विदेशी विद्वान्हरू नेपालमा 'विशिष्ट' विद्वान्हरूभन्दा कैयौं गुणा आर्थिक सुविधा प्राप्त गर्दछन् । यस्तो अवस्थामा स्वदेशी विद्वान्हरू हीनताबोध भई कुण्ठित बन्न पुग्छन् र विदेशी विद्वान् सरह विशिष्ट बन्न सक्तैनन् ।

इतिहास-लेखन क्षेत्रमा वैज्ञानिक दृष्टिकोणको अभाव वा अस्पष्टता पनि रहेको छ । नेपालको प्राग् इतिहासको सम्बन्धमा वैज्ञानिक दृष्टिकोणले सोच्ने र त्यसपछिको इतिहासको सम्बन्धमा आदर्शवादी दृष्टिकोणले सोच्ने पद्धति अधिकांश इतिहासकारहरूमा रहेको पाइन्छ । कोही-कोही लेखक वैज्ञानिक र आध्यात्मिक दुई दृष्टिकोणको बीचमा बसी निष्पक्ष र तटस्थ बन्न खोज्छन् । तर यसरी सोच्दा आफू कसैको पनि नहुने र वैज्ञानिक इतिहास लेख्न नसकिने बारे ध्यानै दिंदैनन् । अनुश्रुतिहरूको विश्लेषण र मूल्यांकन, नेपालका जाति विशेष, धर्म र इलाका विशेषको सम्बन्धमा पुर्वाग्रही सोचाइ उत्पन्न हुने जातीय, धार्मिक र इलाकीय साम्प्रदायिकता, नेपाली इतिहासलाई विश्व इतिहासको अंग नमान्ने जस्ता प्रवृत्ति पनि रहेका छन् । यस्ता कुराहरूको सम्बन्धमा वैज्ञानिक दृष्टिकोण अनुसार खोज र अनुसन्धान गर्ने र कुनै पनि पूर्वाग्रही अवधारणालाई नछोडेसम्म वैज्ञानिक इतिहासका हिमायती भनी जुनसुकै ढोल पिटे तापनि वैज्ञानिक इतिहास लेखिन सक्तैन । त्यस्तै दृष्टिकोणमा स्पष्टता नआइकन हालसम्म जनताको इतिहास लेखिएको छैन र अब लेखिनु पर्छ भन्दैमा जनताको इतिहास लेखिन सक्दैन । नेपालका विभिन्न जातिहरू तिनको संस्कृति र परम्पराको साथै तीसित गाँसिएका अनुश्रुतिहरूको योजनाबद्ध रूपमा संकलन गरी वैज्ञानिक दृष्टिकोणको आधारमा विश्लेषण र मूल्यांकन नगरी नेपालको पूर्वप्राचीन र आदि इतिहास एवं प्राग् इतिहासबारे सही रूप प्रकाशमा ल्याउन सकिंदैन ।

उपर्युक्त अवस्थितिहरूमाथि विचार गर्दा नेपालको पुरातत्व विभागले त्रिभुवन विश्वविद्यालय अन्तर्गतका इतिहास, संस्कृति विभागहरू र नेपाल एशियाली अनुसन्धान केन्द्रसित मिली योजनाबद्ध ढङ्गले खोज र अनुसन्धान तीव्र ढङ्गले गर्नुपर्छ । त्यस्तै इतिहासकारहरू र अनुसन्धानदाताहरूबीच संयुक्त रूपमा छलफल र प्रयासका निम्ति तिनीहरूको एउटा स्वतन्त्र र साझा सङ्गठनको निर्माण हुनु जरूरी छ । सरकारी वा कुनै पनि निकायबाट इतिहासकार वा अनुसन्धाताहरूमाथि कुनै पनि विषयलाई लिएर नियन्त्रण र निर्देशन नगरी स्वतन्त्रपूर्वक खोज-अनुसन्धान र प्रकाशन गर्न दिनुपर्दछ । अहिलेको स्थितिलाई ध्यानमा राख्दा पुरातत्वलाई सकारी भन्दा स्वतन्त्र निकायको रूपमा छुट्टै इन्स्टिच्यूट खडा गरी त्यसमा त्रिभुवन विश्वविद्यालयका सम्बन्धित विभागहरूलाई समेत मिलाई नयाँ ढङ्गले योजना बनाउन सके निश्चय पनि आजको अन्यमनस्क र अस्पष्ट स्थितिबाट इतिहास-लेखनको परम्परालाई अघि बढाई वैज्ञानिक इतिहास प्रकाशमा ल्याउन मद्दत मिल्ने कुरामा शङ्का लिनु नपर्ला ।

इतिहास-लेखनको निम्ति लेखकले आजको युगमा भूगर्भ विज्ञान, नृःतत्वशास्त्र, समाजशास्त्र, जीव विज्ञान, मनोविज्ञान आदि पनि जानकारी लिनुपर्नेमा नेपाली इतिहास जगत्मा यस किसिमको प्रवृत्तिको विकास भएको छैन । दोस्रो विश्वयुद्धपछि विश्वमा दुई विचारधारा अनुसार इतिहास लेख्ने परम्पराको पनि थालनी भएको छ । त्यस्तै देशभित्र पनि सत्तापक्ष र प्रतिपक्ष बीचको विपरित आस्थाले पनि इतिहास लेखनमा प्रभाव पार्न थालेकोले इतिहास वस्तुवादी हुन कठीन भएको पाइन्छ । ❑

# यो देशको भलो हुने काम गर्नुपर्छ शोषकको जरो किलो भत्काई दिनैपर्छ



केवलपुरे किसान
जन्म : वि.सं. १९८३ चैत्र २९
केवलपुर, लामिडाँडा, धादिङ
अवसान : वि.सं. २०६८ असोज २२

खासै नाम षड्‌ानन्द यो नराम्रो लाग्यो
पछि राखें देवीप्रसाद अलि राम्रो लाग्यो
फेरि थपेँ केवलपुरे यो छोटकरी नाउँ
म जन्मेको यही हो है केवलपुर गाउँ
भाइ बहिनी थिए अरे पैल्यै मानो खाएँ
यस्तै सुन्थे गाउँ घरतिर भन्न सम्म भ्याएँ
जेठो कान्छो सबै मै हुँ औताली नै पऱ्यो
बाको नाउँ हरिप्रसाद मैले लेख्नै पऱ्यो
आमाको चाहिँ माया देवी उमेरमा गइन
मलाई राम्रो थाहै छैन अैले के पो भइन
परिवारमा नाम चलेको म एक्लो नै परें
यसो हुँदा यी कविता यसो केरकार गरें
मुन्टुरो पुड्को पौडेलको छोरो नानी बाउ गाउँले नाउँ
पिठ्युँमा डोको थाप्लामा नाम्लो गर्थें म वेसी गाउँ ।

षडानन्द थियो अरे न्वारनको नाउँ
तिथी चाहिँ थाहै छैन खोज्न कता जाउँ
उन्नाइस त्रियासीमा म जन्मेको अरे
चिना टिप्पन पत्ता लगाउन धुइँ धुइँति नै गरे
मामाघर जीवनपुर भन्थे जिम्मल गाउँ
मैले सोद्धै सोधिन है ती मामाको नाउँ
हजुर बुबा अग्ला अग्ला ठाडा ठाडा जुँगा
नाडी माथी बाँधिराख्थे राता राता मुंगा
हजुरआमा ख्याउटी ख्याउटी अलि काली काली
मलाई उल्कै माया गर्थिन हत्ते हाली हाली
जिवा ज्यामै भन्ने चलन त्यो बेलामा थियो
मलाइ उल्कै खेल्नु पर्थ्यो गट्टा, डण्डी वियो
ती छ वटी छोरीमध्ये म साँहिलीको छोरो
म पनि त राम्रै छु है ख्याउटी चिल्लो गोरो ।

बालपना गाउँघर चहार्देमा बित्यो
धुलो माटो जम्मा गर्‍यो तेसै माथि सुत्यो
आफुभन्दा निर्धो भेटे पाक्‌पाक् पुक्पुक् पार्‍यो
बलियाको फेला परे बरबर आँशु झार्‍यो
खोजि खोजि भत्काइ दियो गौंथलीका गुँड
गाउँले आमा बोल्दैनथे पसारेर सुँढ
उप्रद छन् कति कति अटाउँदैन मन्मा
गाइले दुःख दिँदा रून्थे चौतारीको बन्मा
जवानीको कुरा चाँही न सोधौंन अैले
कान्मा मात्रै म भनौंला मौका पर्छ जैले
सबै भनौं समाजले मलाइ गिल्ला गर्छ
नफुस्काउँ तेस्तो कुरो जे जे पर्छ पर्छ
बेसै थिइन श्रीसंगिनी सावित्री हो नाउँ
रूपिङ गैरी गाउँमा पर्‍यो ससुराली गाउँ ।

गोठालो र पढ्ने कुरा सँगसँगै भ्याइयो
पछि आएँ कान्तिपुरमा अलि दुःख पाइयो
गाइ बाख्रा चराउँथें जेठा बाको घर
राति राति पढ्न भ्याउथें कठै के लाग्छ र
संस्कृतमा मध्यमाको पाइयो प्रमाण-पत्र
आन्दोलनमा भाग लिँदा परें अलपत्र
चारसालमा निकालिँजें पाठशालाबाट
अलि दिन कुरें मैले कालमोचनघाट
त्यसपछि देश निकाला मैले हुन पर्‍यो
आठ नौ मैन्हा मेरो बास बनारसमा सर्‍यो
त्रि.वि.वि.मा सोधपत्र मेरो छ है सानु
त्यै खोजेर पढि दिनोस् पुस्तक बन्छ सानु ।

द्यौसी खेल्न भैलो खेल्न म उम्रीनै बस्थें
ढल्केटोपी ढल्काएर च्यान्टे कम्मर कस्थें
भट्याउन नाच्न चाहिँ जानिन है मैले
द्यौताको नाम लिन पर्थ्यो सबैभन्दा पैले
केवलपुरका थानपति भिमसेन रक्षे गरे है
हो हो रक्षे गरे है भजनलयमा
असाध्य नै रमाइलो त्यो बेलामा हुन्थ्यो
बुद्रुक बुद्रुक उफ्रँदा त वरको हाँगो छुन्थ्यो
जन्त जान पाइन भने उसै मुर्छा पर्थे
मनै जान्छु जन्त भन्दै झगडा पो गर्थे
रातभर सिलक भन्थें गाला राता पारी

ती ब्यौलीको गाउँलेलाई दङ्दास नै पारी
भजन बालन केवलपुरमा सुन्न मैले पाइन
वरपर थियो होला तेता आँखा लाइन
तरूना र तरूनीको जुहारी चाहिँ सुन्थें
सुन्दा सुन्दै मायाप्रिती पागल जस्तो हुन्थ्यें
त्यै बेलाको जिन्दगानी आहा कति राम्रो
आज भोली त्यै जिन्दगी नराम्रो है चाम्रो ।

अैले जस्तो काटमार त्यो बेलामा थेन
कैले कैले गाउँमा बस्न मलाइ दिँदै देन
भागि आएँ कान्तिपुरमा मिल्यो भान्से काम
तिन्टा मोहोर जागिर थियो हरेराम राम
कसो कसो केही कविता कोर्न पट्टी थालें
पढ्नु बाहेक अरू कुरा भँडखालामा हालें
यो देशको भलो हुने काम गर्नु पर्छ
शोषकको जरो किलो भत्काइ दिनै पर्छ
पृथिवीमा आएपछि केही त गर्नै पर्छ
नाम राम्रो कमाएर मात्रै मर्नुपर्छ
यस्तै यस्तै तर्कनामा मेरो गयो बुद्धी
धन कमाउ भन्ने पट्टी हराएछ शुद्धी
गरीबको पक्ष लिंदै यहाँसम्म आएँ
थोरै थोरै पुरस्कार सम्मान धेरै पाएँ
यत्तिकैमा सन्तोष छ आराम साथ बस्छु
धन सम्पत्ति नहोस्न हरे हाँसीखुसी बस्छु ।

नाइके ठालु सामन्तको म हुँ ठूलो शत्रु
यिन्कै पछि लाग्ने चाँहि काम नलाग्ने पत्रु
चाकरीले मानिसको जरो किलो मास्छ
गरीवलाई रूवाएर यता महल हाँस्छ
बम्कीरन्छु ठाडै ठाडै अन्तिम घडिसम्म
जसो होला बाँचेकै छु अघाएर टम्म
संसारमा सबैभन्दा हिक्मतै हो ठुलो
हिँडिरहेछु आजसम्म किन हुनु लुलो
चाँडो ढिलो जानै पर्छ मनुष्यको चोला
निरासामा गाज्यो भन्दै नरिसाउनु होला ।

कसैकोनी कहिल्यै पनि बोकिन है झण्डा
जनताकै पछि लागैँ पार्दै दिमाग ठण्डा
कहिले काँही भोकै पर्नु स्वाभाविकै थियो

गाउँ गाउँमा बाल्दै हिँडे चेतनाको दीयो
प्रशासनको चिसो छिँडी चार घण्टा कुरें
देश निकाला हुँदा पछि बनारसै हिँडें
देवकोटालाई गुरू थापें अरू कति कति
उरन्ठेउलो बेला थियो तै सप्रेछ मति
साहित्यकै पछि लागें अन्त कतै गइन
आजसम्म कसैको नी झोला बोक्या छैन
बाघ आयो पैले निस्क्यो नौ सालको कुरो
आन्द्राभुँडी तेसैमा छ कविताको चुरो
कतै पाए खोजि पढ्नोस् अनि चिन्नुहोला
के पो रेछ गाँठे पौडेल याद गर्नुहोला ।

हलो जोत्न हुन्छ भन्दै मैले गोरू नारें
लामीडाँडा केवलपुरमा दिउँसै रात पारें
झण्डै झण्डै गोदाइ खाको बाहुनहरू तर्से
साउनको वर्षा जस्तै धेरै गाली वर्षे
प्रशासन भन्दा पनि गाउँलेको पो डर
मेरै थे है त्यो वेलामा गाउँ अलि पर
घट्ट आएर पसलमा यै हल्लाको चर्चा
धादिङ जिल्लै मुर्मुरियो यै हल्लाले गर्दा
देवीप्रसाद उल्लुरेछ भन्थे ठुलाठालू
बाहुन भै हलो जोत्ने साँच्चै रेछ भालु
गाली चाहिँ थुप्रै खाएँ तै पिटाइ खाइन
जति थुकोस समाजले घोस्से मुन्टो लाइन ।

उमेर छँदा जस्ले पनि चर्को कुरा गर्छ
क्रान्तिकारी मै हु भन्दै कापीपाना भर्छ
सधैभरि विचराको रहँदैन होस
राम्रोतिर लागौं भन्दा खुरमुरिन्छ होस
मान्छे न हो के के के के कुरा खेल्छ मन्मा
उठवस उठवस गरिरन्छ आँखा गाड्छ धन्मा
विस्तार विस्तार लोभ पस्यो बिग्रयो उस्को बानी
राम्रो काम छोडिदिन्छ बरा ! जानी जानी
श्रृङ्गार र विलासले साहित्यलाई थिच्छ
छोडिदिन्छ जनतालाई आफु मात्रै घिच्छ
बिग्रनलाई वेर हुन्न सप्रनलाई गारो
यस्तै हुँदा बगिरहन्छ खराबको धारो
हत्तपत्त कसैकोनी लाग्नु हुन्न पछि
व्यवहार हेर्दा त परिन्छ है खसि

यो जमाना यस्तै छ मरि मेट्नेको पेट भोको
कस्ले सुन्छ यहाँ गरीवको पल्टन छाँदा हालेर रोको
सुन पगाल्नलाई झरझराउँदो आगो चाहिन्छ
जुटेरै लडन सक्नुपर्छ त बल्ल अधिकार पाइन्छ ।

त्यो बेलाको राजनीति राणाहरू गर्थे
आफ्नै आफ्ना जम्मा हुँदै आफ्नै भुँडी भर्थे
जस्ले विरोध गर्छ उस्को लिइ दिन्थे ज्यान
गंगालालहरू भए बरा अन्तरध्यान
सामाजिक रीतिस्थिती केही राम्रै थियो
अैले जस्तो लथालिङ्ग अलि कमै थियो
अनुशासित थिए मान्छे यस्तो छाडा हैन
अब तेस्तो शुद्ध नेपाल भेट्दै भेटिंदैन
पश्चिमेली संस्कृतिले नेपाललाई छोप्यो
भारतले नेपाललाई हेप्नसम्म हेप्यो
राष्ट्रसंघको वडापत्र कुन्नी कता भाग्यो
ठुला हेपछन सानालाई नारामात्रै जाग्यो
यो चालाले कसरी पो रहला र देश
यस्तो प्रजातन्त्र भन्दा अर्कै आए वेश
प्रजातन्त्र के के भन्दै पिटाइ दिए झ्याली
हुनु खानु केही होइन ढाँचा मात्रै खाली
यी ठुलाको फुट्यो भुँडी जनताको सुक्यो
नेपालीको झगडामा अमेरिका उठ्यो
झगडाले सिमा नाघ्यो देशै अन्त दगुर्छ की
देशको सगरमाथा अर्कैले पो भकुर्छ की
कैले कैले कता कता लाग्छ मलाई शंका
यो नेपाल बन्ने हो की सोमालिया लंका ।

अैलेसम्म के के लेखें कसरी म गनौं
सम्झी साध्यै छैन बाबा ! कसरी म भनौं
अलि फुर्सत निकालेर सितापाइला आउनोस्
तेसै चाहिँ नआउनोस्नी कलम कापी ल्याउनोस्
केवलपुरका आन्द्राभुँडी जति त्यहाँ खोज्नोस्
धेरै कुरा पाउनुहुन्छ बाटो आफै रोज्नोस्
शोषिएका जनता हुन मेरा साथी भाइ
यिन्कै सेवा सुश्रुषामा बस्छु गीत गाइ
दिन ढल्दै गए पनि हिक्मतै हो ठुलो
सास बाँकि रहेसम्म किन हुनु लुलो
क्रान्ति गर्दा गर्दा मान्छे पृथ्वीमा खस्छ

पृथिवीमा बस्दा पनि उ क्रान्ति मै बस्छ
हार हुन्छ उस्को जब मर्ने बेला हुन्छ
छोडदिन म क्रान्ति भन्न लौ त कस्ले छुन्छ
क्रान्तिकारी कदम लिएर बढ्ने चर्को प्रतिक्षा गर
भिक्षाले हक पाइदैंन तगडा संघर्षको ठिक गर ।

ठाडो बस्न नसकेर ढल्यो तोरी बारी
पेटारेको लेक आयो फोल्पु खोलावारी
नार्गाजुनको लेक बर ओर्ल्यो तेर्से पानी
बाटा भरी सोद्छन मलाइ तपाईं कहाँ जाने
कहाँ जाने कता जाने खोइ म चाँही हिँडे मेरी आमा
*(तिमी बसे है)*
भैंसी चर्ने सानो चउर मलाइ हेरी बस्यो
उड्दै आको तम्मे ढुकुर ठ्याक्कै भैंमा खस्यो
लल्याक लुलुक भयो जम्मै सिमलीको बार
सत्ताइस गते मुङसिर थियो आइतवार
के के विचार गर्दै थिएँ के के भयो खै
मचाहिँ हिँडे मेरै आमा तिमी बसे है
*(केवलपुर छोडदा)*
नखोस्रोन नखोस्रो है श्रीमतीको नाउँ
कोठा थुन्दै यसो हेर्छु उनी बस्ने ठाउँ
भ्रम भएको जस्तो जस्तो कलम फ्यात्त खस्छ
आँशु धारा भललल पोल्टा भरि खस्छ ।

स्याहार सुसार शरीरको म आफैले गर्छु
जे पाउँछु त्यै खाएर दाम्रै भुँडी भर्छु
दुःख छैन खान लाउन राम्रै मान्नुपर्छ
बास बस्न दुख छैन सितापाइला घर्छ
साहित्यिक साथी भाइ आइरहनु हुन्छ
शिक्षितहरू आए अफ मनै सङ्लो हुन्छ
पत्रिकामा ध्यान चाहिँ निकै निकै जान्छ
एकलै दुकलै बस्दा चाहिँ पिरले मुटु खान्छ
टेलिफोनको घण्टी हो है मुखबोल्ने साथी
घरमा मेरो कोही छैन साहित्यिक साथी ।

यस्तो गन्थन बेला बेला आइ लागे हुन्थ्यो
अल्छि बुढो स्वादे जिब्रो निकै टाठो हुन्थ्यो
रिसाउँदिन हत्तेरिका झन उत्साह बढ्यो
सेलाएको मेरो जाँगर मास्तिर पो चढ्यो
कलम कापी नसमाको आठ नौ मैन्हा भाथ्यो
मेरो बुद्धि शुद्धी सबै जंगलतिर गाथ्यो
लडिरहन्थे कोठाभित्रै लडे जस्तै मुढो
काल पर्खेर बसे जस्तै केवलपुरे बुढो
तपाईंका प्रश्नहरू यै बेलामा आए
उठ उठ पौडेल बुढा भन्दै नारा लाए
उत्तर यी कस्ता लागे बताइ दिनु होला
मन नपरे खोला लगि बगाइ दिनु होला ।

जनमत पत्रिकालाई म स्याबासी दिन्छु
धेरैवर्ष पहिले देखि राम्रो सँग चिन्छु ।

❑

# बालककालमा दुःखको पहिरो



■ खड्गमान सिंह
जन्म : वि.सं. १९६४ फागुपूर्णिमा
काठमाडौं
अवसान : वि.सं. २०५१ असोज १७

श्री ५ बडामहाराजधिराज पृथ्वीनारायण शाहबाट बृहत् नेपालको निर्माण हुँदा श्रीपाली बस्न्यातहरूले सुरूदेखि मौसुफमा सेवा चढाउँदै आएका हुन् । पूर्व किरातमा राई-लिम्बूहरू वशमा आएका थिएनन् । एकजना बस्न्यात त्यहाँ पठाइए । उनले तिनीहरूलाई सम्झाई-बुझाई नेपालमा सम्मिलित गराए । निजको त्यो कामबाट खुसी भएर केहरसिंहलाई लमजुङ-तन्हौंको राजाको पदवी दिइयो । जङ्गबहादुरले नेपालको राज्यसत्ता हत्याउनुअघि नेपालको शासन चलाउन चार काजी रहन्थे । तिनमध्ये एउटा श्रीपाली बस्न्यात पनि थिए ।

संवत् १९०३ मा 'कोतपर्व' मच्याई खास-खास व्यक्तिलाई मारे । संयोगवश त्यस दिन बस्न्यातकुलकी बूढीमाऊको एघारौं दिन परेको रहेछ । धरहराबाट सामेल हुने बिगुल लाग्दा पनि बस्न्यातहरू गएनन् । बस्न्यातले बिहे गरेकी गङ्गाबहादुरकी बहिनीद्वारा कोतपर्व हुने सुइँको पाएर हो अथवा 'मर्दापर्दा त बिदा पाइन्छ' भन्ने कुरा भएर हो उनीहरू गएनन् र कोतमा मारिएनन् ।

कोतपर्वपछि जङ्गबहादुर र उनका भाइहरूको आधिपत्य जम्यो । उनीहरूको कान्छा बडामहारानीलाई नजरबन्दजस्तै गरेर राखे । हक्की, राजभक्त, देशभक्त, साहसीहरूलाई सखाप पारिहालेका थिए । निमुखा रैतीको कुरै भएन, मनपर्दी शासन चलाउन थाले ।

कोतपर्वमा नपरेका बस्न्यातहरूमध्ये केहीलाई मारे, धपाए । धेरैको सर्वस्वहरण गरे । निहुँ खडा गर्न उनीहरूलाई गाऱ्हो पर्दैनथ्यो-खोलाको मास्तिर पानी खान लागेको व्वाँसोले तलतिर पानी खान लागेको पाठोसित निहुँ खोजेझैं । पछिसम्म पनि बस्न्यातहरूमध्ये एक-दुईलाई कर्णेल, सरदार र अरूलाई सानोतिनो जागिर दिने गर्थे । जोरी खोज्लान् भन्ने आशङ्काले हुनेखाने बन्न नदिने र जीउज्यानै लडाइहाल्लान् भनेर तन्नम पनि हुन नदिने नीति उनीहरूप्रति राणाले लिएका थिए । हलि घोत्लिएर नियाल्दा बस्न्यातहरूलाई मात्र होइन, तमाम नेपालीलाई नै गरीब बनाउनुमा राणाले आफ्नो अधिकार र राज्य बलियो हुने ठानेका थिए । अरूको नाउँ चलेको पनि उनीहरू मन पराउँदैनथे । डिल्लीसिंहको नामले प्रख्यात 'डिल्लीबाजार'लाई अब डिल्लीबजार नभन्नू, 'जङ्गीबजार' भन्नू भन्ने आर्डर राणाहरूले फैलाए, तर जनताले मानेनन् । 'जङ्गीबजार' चल्न सकेन र 'डिल्लीबजार' आज पनि काठमाडौंमा नामी ठाउँको रूपमा छँदैछ ।

कोतपर्वपछिको जमाना आतंकपूर्ण थियो । म सानो छँदा बूढाबूढीहरू भन्दथे - अघि दरबारसँग सम्बन्ध रहेका परिवारका बाबु-आमा, खासगरी विधवाहरू, आफ्ना सानासाना छोराहरू राणाका शिकार नहोऊन् भनी देउता पुकार्थे, हरेक तरहले जोगाउँथे । १९०१ मा जन्मनुभएकी एउटी बज्यै त्यही

त्राहि–त्राहिको बेलामा हुर्केकी थिइन् । सानै उमेरदेखि राजदरबारमा काम गर्दै द्वारे भएकी रहिछन् । उनीबाट धेरै कुरा सुनेको हुँ । सारांशमा, भाइभारदार भन्नेले आफ्ना छोराहरूको हाजिरी, हुलियाझैं दिनुपर्दथ्यो ।

मेरा बुबाको नाउँ हो दिलीपसिंह, तर उहाँ प्रख्यात हुनुहुन्थ्यो 'पाखेकाजी' को नामले । महाराजको सलामी र चाकरीमा मेरा बाजे उहाँलाई लैजाने गर्नुहुन्थ्यो । एक दिनको कुरा, जङ्गबहादुरका भानिज पनि चाकरीका साथै रहेछन्, उनले घोडा चढेका थिए । महाराजले मेरो बुबालाई घोडा दिने विचारले "लौ, यसलाई लैजा, जुन घोडा छान्छ त्यही दिनू" भनेछन् । सवारहरूले तबेलाको ठूलो असल घोडा लिने सल्लाह दिए । बेचे पनि धेरै फाइदा हुन्न भन्ने आशय थियो । तर बुबाले एउटा सानो च्यान्टाघोडा मन पराउनुभएछ, ठूलो घोडो चाहिन्न भनेर । तर सानो घोडा छान्यो भनेर महाराजले 'पाखे' भनेछन् । त्यस बेलादेखि उहाँलाई सबैले 'पाखेकाजी' भन्न थाले । उक्त घटनाबाट बालक दिलीपसिंहको मनोवृत्ति थाहा पाइन्छ । ठूलो भएपछि सुख–सयलका साधन–सुविधा हुँदा पनि उहाँले आफूलाई नभई नहुने बाहेक बढी प्रयोग गर्नुभएन ।

जङ्गबहादुरका भानिज भक्तबहादुर साइनुमा दाजु थिए तापनि उमेरमा जेठाका सन्तान हुनाले मेरा बाबुभन्दा धेरै पाका थिए । उनका कुनै खास भाइका सन्तान थिएनन् । यता शील–स्वभावका नरम, प्रसन्न चित्त र निःस्वार्थ मेरो बुबालाई भक्तबहादुर निकै मन पराउँथे । अनि उनले भाइलाई नै आफ्नो हकवाला बनाएर राखे । तर त्यो निधो राणाहरूलाई मन परेको थिएन । एक दिन मेरो बुबा असल कस्मिराको कोट लाएर 'दरबार' जानुभएछ । राणाहरूले छेडपेच र आलोचना गर्न लागेछन् । तन्नेरी दिलीपसिंह केही बोलेनन्, तर कुनै कपडा लाउन पनि आफूखुसी नपाउनुले उनलाई निकै बिझ्यो । जवाफको रूपमा उनले बाह्र वर्षसम्म कोटै लाउन छाडिदिए । आजको नेपालमा यस प्रकारको घटना विलकुलै नगण्य छ, तर उसबेला त्यति गर्नु पनि साहसकै कुरो थियो । त्यस भनाइको पुष्टि अन्दाजी पचास वर्षपछि भएको यो घटनाले गर्नेछ । १९८६ सालमा भीमशमशेर 'महाराज' भए । वसन्तमणि कलकत्ताबाट पढेर नेपाल आएका थिए । उनी कोट लाउन छाडेर खास्टो वा कम्मल ओढेर हिँड्न लागे । राणाहरूमा खलबली पऱ्यो । ज. हिरण्यशमशेर हजुरिया जर्नेल थिए । वसन्तमणिलाई हाजिर गराइयो । अनि हिरण्यले झपार्दै भने –"मणि (आ.दी.) खानदानको, पढेलेखेका मान्छेको चाला यही हो ? ठूलो घरमा गएर थन्किन मन छ कि कसो ?"

सारांशमा, राणा–शासनको जमाना नै दोधारे थियो । गरे पनि सुख नाइँ, नगरे पनि सुख नाइँ । एउटा अत्याचारीले सडकमा तन्ना बिछ्याउन लाएछ । कसैले तन्ना कुल्चेर हिँड्यो भने "किन तन्नामाथि हिँडिस्, तेरै लागि बिछ्याएको हो कि ? भनेर गिरफ्तार गर्ने, छेउछाउबाट हिँड्यो भने "किन तन्नामाथिबाट हिँडिनस् ? के यो शोभाको लागि बिछ्याएको हो ?" भनेर अँठ्याउने । बस राणाशासकहरू ठीक त्यहीजस्ता थिए ।

एक पटक पञ्चकको जुवामा भक्तबहादुरको घरमा खाल जमेको थियो । केरा बाजेहरूमध्ये एकजनाले हारेछन् । मेरो बुबालाई "मलाई चार हजार रूपियाँ ल्याएदे" भनेछन्, सापटीको रूपमा । ढुकुटीबाट चारोटा थैला लिएर आउन्जेल बाजेको दाउ लागेछ । रूपियाँको रास थुप्रिरहेको थियो । भतिजाले रूपियाँ ल्याएको देखेर उनले त्यो चार हजार "तँलाई नै बकस भो" भनेछन् । बाहिर गएका भक्तबहादुर ठीक त्यसै बेला टुप्लुक्क त्यहाँ आइपुगे । भाइको नजिकै थैला परेको र आफूसँग ठ्याक नमिलेको काकाले 'बकस' भनेको सुनेर "क्या हो, क्या हो ?" भनी सोधखोज गरेछन् । सबै कुरा सुनिसकेपछि जन्ड र रवाफिलो स्वभावका भक्तबहादुर जङ्गिन थाले– "मेरो ढुकुटीको रूपियाँ मेरै भाइलाई बकस भनेर दिने ? नोकर ठानेर बकस दिएको हो कि ? तिनले बकस भनेर दिएका रूपियाँमा लौ मुति दे ।"

खेल त खतमै भयो, तर मेरो बुबालाई धर्मसंकट पऱ्यो । हिन्दूहरू धनलाई लक्ष्मी ठान्दछन् । लक्ष्मीपूजाका दिन रूपियाँ–पैसा पूजा गर्ने चलन अझै छँदै छ । उहाँले त्यसो गर्न मान्नुभएनछ, तर भक्तबहादुर आफ्नो टेक राख्न र काकालाई होच्याउन डटिसकेका थिए । बुबाले लाख नेहोरा गर्दा पनि उनले मानेनन् । आखिर लाचार भएर थैलाको एक छेउमा तुर्क्याइदिनुभएछ । मानिसको विनाश नजिक आएपछि ठीक–बेठीक ठम्याउन सक्तैन– अभिमान र अविवेकद्वारा उसका आँखा टालिन्छन् । पछि गरिबीको सामना गर्नुपर्दा मेरो बुबा बराबर 'लक्ष्मीको अपमान गरेको भोग हो' भन्नुहुन्थ्यो रे ।

रणोद्दीप 'महाराज' हुँदा धीरशमशेर कमाण्डचीफकै हैकम चलेको थियो । बाँकी रहेका भारदार, उनका

बालबच्चा छिमलेर राणा-शासन बलियो बनाउन उनै अघि सरेका थिए । भक्तबहादुरउपर पनि राजकाज मुद्दा चलाइयो । राणाहरूले कसैलाई मुद्दा लाउनुअघि सजायरूपी कोसेलीको पोको पारिसकेका हुन्थे, किनभने इन्साफ गर्ने उनीहरू आफैं हुन्थे । भान्जाबाबुसाहेव भएकाले भक्तबहादुरलाई फलामको सट्टा चाँदीको नेल ठोकी लघारेर पश्चिममा नजरबन्द गरे । यता उनको सम्पत्ति सबै हरण गरे । डिल्लीबजारको उनको ठूलो घरमा रणशमशेर कमाण्डचीफ बसे । त्यो घरको ठूलो ढोका आज पनि (डिल्लीबजारबाट बानेश्वर जाँदा पर्ने ओरालोनिर) छँदैछ । भक्तबहादुरकी मुखिनी (श्रीमती) लाई गुजारा गर्न मात्र केही जेथा छाडिदिएका थिए ।

एक त मेरो बुबाको स्वाभिमानमा ठेस लाग्ने, दोस्रो भक्तबहादुरको हकवाला बनिरहँदा राणाहरूको कोपभाजन बन्नुपर्ने । त्यसैले मेरो बुबा छुट्टिएर बस्न लाग्नुभयो । राणाको समयमा भारदार भनाउँदाका भाइ-छोराहरूलाई पनि आपसमा भाग लाउँथे । कोही कुनैकहाँ त कोही कसैकहाँ चाकरी गर्ने हुन्थे । साधारणतया मानिसहरू कुनै न कुनै राणाको चाकरी मन लागी-नलागी गर्दथे । मेरो बुबा देवशमशेरपट्टि लाग्नुभएको रहेछ । त्यसै कारण, देवशमशेरलाई हतकडी भिडाई लेखेटेपछि चन्द्रशमशेरले बुबालाई भए-नभएको अत्तो थापी बाँकी-बब्यौताको मुद्दा लगाए । उहाँलाई कुमारीचोकमा थुनुवा बनाए ।

त्यसताकाको थुनाइ पनि अनौठो थियो । सिपाही साथमा लिई साँझ-बिहान घर आई भात खायो, अनि दिनभर र रातभर थुनुवाको रूपमा अड्डामा बस्यो । उहाँलाई देख्ने, उहाँको शील-स्वभाव थाहा पाउने केही व्यक्ति आज पनि जिउँदा छन् । बेइमानी गरी सरकारी तहबिल मासेर खाने कुरै थिएन । चन्द्रशमशेरसँग माफी माग्ने कुरा सपनामा पनि चिताउनुभएको थिएन । पछि मेरी आमाले बिन्ती बढाउनुभएपछि एघार वर्षमा छुट्नुभयो ।

चन्द्रशमशेरले मठ र ठुठीहरूको पनि शोषण गरे । तारिफ के थियो भने त्यस कामलाई सुधारको मकुन्डो लाइदिएका थिए । आम्दानी आफ्नो गोजीमा हालेर कैयन् मठहरू आफ्ना चाकरबाजलाई दिने गरे । जनकपुरमा सुधार गर्ने निहुँले मेरो बुबालाई मेनेजर बनाई हुत्याए । त्यहाँ निकै झोज थियो । त्यहाँको महन्त ईश्वर गिरीसँग मुद्दा पर्‍यो । एक पटक भारततर्फ रेलको यात्रा गर्दा त्यो महन्त त्यहाँ आएछ । केहीबेर कुरा भएपछि सुतेको निहुँ पारेछ । बुबा पनि सुत्नुभएछ । ऊ बुबाको घाँटी थिच्नपुगेछ । बलतल गरी बुबाले छुटाउनुभयो । उताबाट फर्केर आएपछि बिरामी हुनुभयो । केही महिनापछि जनकपुरमा उहाँको देहान्त भयो ।

बारबार सर्वस्वहरण गरेकाले सम्पत्ति नाम मात्रको पनि थिएन । एकतर्फ बुबालाई तकलिफ, अर्कोतिर पाँच-पाँच छोराछोरीसमेतको पालन-पोषण गर्न आमालाई कति चिन्ता र कष्ट गर्नुपर्‍यो होला । विनाकसुर त्यसरी त्यतिका वर्ष थुनामा बस्दा मेरो बाबुको मनमा अवश्यै पनि राणासरकारप्रति घृणा, दोष र क्षोभ भयो होला । नरम शील स्वभावका मानिसलाई जनमभर सतायो भने उनीहरू केही वास्तै गर्दैनन् भन्ने कुरा होइन । अझ, असल शील स्वभावका मानिस न्यायप्रिय हुन्छन् । मेरो बुबा जान्नेबुझ्ने हुनुहुन्थ्यो । अन्याय गर्नेहरूसँग बदला लिने र सारा नेपालीलाई दुःखी बनाई जबर्जस्ती 'राजा' कहलाउने राणाको शासन समाप्त होस् भन्ने भावना उहाँको मनमा उठेन होला भन्न सकिन्न । बरू मलाई लाग्दछ उहाँकै भावना ममा सरेर व्यक्त भयो । बालककादेखि नै राणाहरूको अचाक्ली बिझ्नु र दुःख-कष्टमा धैर्य गरेर परिस्थितिको सामना गर्नु उहाँकै आशा आशिष फुलेफलेको ठान्दछु ।

डिल्लीबजारमा रहेको आफ्नै सत्तलमा माता दीर्घकुमारीको पाँचौ गर्भबाट संवत् १९६४ साल फागुन पूर्णेको दिन, चैत महिनामा मेरो जन्म भयो । दोस्रो गर्भबाट पैदा भएका मेरा दाजु एघार वर्षमै बिते र मभन्दा माथि तीनवटी दिदी थिए । यस कारण म एक्लो छोराझैं भएँ । बाबुआमाको प्रशस्तै ममता पर्‍यो । जेठो जाति हुँदा बूढीबज्यैहरूको पनि विशेष स्नेह रह्यो । अझ खनाल ज्योतिषी श्री रूद्रदेवले चिना बनाउँदा "यो बालक अनौठो हुनेछ, झन्डावाल हुने योग परेको छ' भनेकाले त झन् बढी स्नेहभाजन भएछु । यो कुरो मेरो जिद्दीपना र धेरै कुराको सोधखोज गर्ने बानी देखेर बूढीबज्यैले म सात-आठ वर्षको छँदा मलाई सुनाउनुभएको थियो । ज्योतिषीले मानिसको भाग्य बताउन सक्छन् भन्ने मलाई विश्वास लाग्दैन । खनाल ज्योतिषीलाई मैले देखेको थिइँ । शान्त शील-स्वभावका र बडो सज्जनजस्तो सम्झना हुन्छ । उसबेला असम्भवै ठान्नुपर्ने उहाँको भविष्यवाणी सत्य ठहरियो । मन्त्री नियुक्त भएपछि झन्डावाल पनि बनें ।

मेरो प्रथम चेतना जनकपुरमा खुल्यो । निडर स्वभावको भएकोले म दब्दिनथें । निहुँ खोज्ने बानी पनि

कम थिएन, रिसाहा पनि उत्तिकै । भात खाने बेलामा जे भन्दथें त्यही गर्दथे, तर तुरून्तै "मैले त्यसो भनेको हो त ?" भनी अत्तो थाप्तै भातको थालै हुत्याइदिन्थे । त्यसैको फलस्वरूप होला, पछि एक-एक सिताको महत्व सम्झनुपर्‍यो । मलाई थाहा छैन त्यो साढे चार वर्षको उमेरमा कसरी मैले पोखरीमा पौडी खेल्न जानेछु । एक पटकको कुरो हो, मेरो बुबाले मलाई के गर्नुभएन कुन्नि, म झगडा गर्न लागें । साँझको समय थियो । फतफताउँदै घरबाट बाहिर निस्केर केही पर गई एउटा छाप्रोको पालीमुनि बसें । अनि "हाकिम भएँ भन्दैमा यसो गर्न पाइन्छ ? म भोलि विहान जलेश्वर गएर बडाहाकिमकहाँ नालिस गर्छु" भन्दै कराउन लागें । मानिसहरू फकाएर घर फर्काउन आउँथे, म जान्दिनथें । रात चढ्दै गयो, अँध्यारो भयो । अनि "लौ त, राति यही सुत्छु, भोलि बिहान जान्छु" भनी त्यही बसेँ । बालककालको त्यो बानी पछि आएर एकतन्त्रै शासन भत्काउन र उसले थिचिराख्दा पनि हरेस नखाई उसलाई ढाल्ने काममा लाग्न ठूलो आड सावित भयो ।

एक पटकको कुरो हो । चकचक गर्‍यो भनेर मेरा भानिजदाइले मलाई थप्पड लगाए । केही नबिराएकोमा पिट्ने भनेर मलाई बडो नराम्रो लाग्यो । उनीहरू घरको पेटीमा कुरा गरिरहेका थिए । केही बेरपछि भान्दाइ एउटा हातले हुक्का समाई अर्को हातले नली तानेर तमाखु खान लागे । इबी साँध्न मौका छोपेर उनको गला चड्काएर म घरभित्र दौडे । यस्तै स्वभावले पछि मलाई बापबैरी दुनियाबैरी साध्न अघि सार्‍यो ।

चार-चार वर्षको उमेरमा अजङको हात्ती देख्दा सबैजसो केटाकेटी डराउँछन्, तर मलाई डर लाग्दैनथ्यो । बाबुआमाले मिठाई किनेर खुवाउँदा हरिप्रसाद भन्ने हात्ती रत्तिएको र माहुते सुडबाट चढेको देखेको थिएँ । निकै रमाइलो लाग्यो । अनि आमाको थैलीबाट पैसा चोरेर मिठाई किनी हात्तीलाई खुवाएर सुँड समातेर झुन्डिएँ । हात्तीले सुस्तरी उचाल्दै टाउकोमा पुर्‍याएपछि घाँटीमा बस्न पुगें । त्यो देखेर आमा र अरू आत्तिए । त्यो अभयपना ममा पछि देखिएको मर्न नडराउने स्वभावको बीउजस्तो लाग्दछ ।

बुबा स्वर्गे हुँदा म पुग-नपुग पाँच वर्षको हुँदो हुँ । बालकलाई मरणको के बोधा होस् ! सबै रोएकाले म पनि 'बुवा, बुबा' भन्दै रून लागें । आमाका धागा-चुरा फुकाल्न लागेको दृश्य म अझै सम्झन्छु । बिरामी परेर ओछ्यानमै पल्टिरहने बुबालाई भोलिपल्टदेखि देख्न छोडें । पिट्यो भने 'माथिको देवता (अजिमा) लाग्ला' भनेर मलाई बुबा पिट्नुहुन्नथ्यो, प्यारो गर्नुहुन्थ्यो । भोलिपल्टदेखि घरभरि फिँजिएको दिक्दारीले म पनि खिन्न रहन थालेँ ।

बुबा स्वर्ग भएपछि हामी काठमाडौं आयौं । ६८ सालको आखिरी हुँदो हो । उसबेला मोटरको बाटो थिएन । सक्नेले तामदान वा घोडा चढ्ने । नसक्ने डाँको चढ्ने वा पैदल आउँथे । बालक भएकाले म डोकोमा आएँ । हाम्रो घर थिएन । डिल्लीबजारको सत्तलमा बस्न थाल्यौं । जग्गा थिएन, लगानी थिएन । आमाले केही पैसा बचाउनुभएको हुँदा हो । त्यसैबाट हाम्रो गुजारा चल्न थाल्यो ।

त्यसताकाको चलनअनुसार कुनै हाकिम, अफिसर मरे भने 'मालिक' भनाउँदाकहाँ जोहरी पठाउनुपर्दथ्यो । बुबा स्वर्ग भएपछि यहाँका खास-खास राणाहरूकहाँ जाहेरी पठाइएको रहेछ । 'महाराजा' चन्द्रशमशेर र कमाण्डरचीफ भीमशमशेरले केही वास्ता गरेनन् । जङ्गीबाट जुद्धशमशेरले भने रिसल्लाद्वारा 'बर्खी सिद्धिनासाथ मकहाँ आउनु' भन्ने समाचार पठाए । उस बेला कुनै जर्सापकहाँ मानिसमात्र कसैकहाँ गयो भने गौरव मान्ने मनोवृत्ति थियो । जङ्गीलाठकहाँ रिसल्ला आएकोमा सबै छक्क परे, आमालाई लाग्यो ।

बर्खीपछि आमा मलाई साथ लिई जुद्धशमशेरकहाँ जाउलाखेल जानुभयो । केही कुरा भयो । खानेकुरा खुवाए । बिदा हुने बेलामा एउटा सेतो कपडामा रूपैयाँ पोको पारेर दिए । त्यसताका कागजी नोट थिएन । दसैं र बीच-बीचमा पनि खर्च दिन्थे । लाठसाहेबप्रति मेरो मनमा श्रद्धा जाग्यो । उनी बडो दयालु र बेस रहेछन् भन्ने लाग्यो । सवारीको मापदण्डले मैले उनी भन्दा ठूलो ठानेका 'महाराज' र कमाण्डरचीफले केही नगरेका, तर उनले त्यस्तो हेरविचार पुर्‍याएकोले उनीप्रति दिल झुक्नु स्वाभाविकै थियो । यसको कारण पछि कप्तान खण्डमान सिंहबाट पत्ता लाग्यो ।

धीरशमशेरका सन्तान अनगिन्ती थिए । सत्रजना त छोरै भए, छोरी पनि कम थिएनन् । नाति-नातिना पनि बथानै हुँदा हुन् । मुलुकीखानामा हात गाड्न र लखनौकी शरणार्थीनी बेगमको जवाहरात गुटमुट्याउन नपाएका धीरशमशेरलाई जहान-बच्चा हुर्काउनै धौधौ पर्दथ्यो । जेलमा कान्छा कालिगडबाट सुनेको थिएँ - भीमशमशेरले भनेका थिए- "हामी सानो छँदा कस्तो पानीजस्तो पातलो दाल

खानुपर्थ्यो !" सारांशमा, धीरशमशेरका बथानै लालाबालाले मन लागेको मीठो खान र फुर्मायसी खर्च गर्न पाउँदैनथे । त्यसताका मेरो बुबा रणशमशेर कमाण्डरचीफकहाँ काम गर्नुहुँदो रहेछ । उनका छोरा थिएनन् । बुबालाई पत्याउँथे । अपूतोजस्ताको धनको सदुपयोग गरी जुद्धशमशेरले बराबर खर्च दिलाइदिनुहुँदो रहेछ । जुद्धशमशेरले त्यही गुण मानेका रहेछन् । जे होस्, पछि पनि देखियो जुद्धशमशेर उनका दाजुहरूभन्दा कम धूर्त, बढी विवेकशील र केही गरूँ भन्ने खालका थिए । खप्तरी बस्न्यातकी छोरीपट्टिका पशमशेर आदि वा थापाकी छोरीपट्टिका आफूलाई ठूला पनि सम्झिन्थे ।

आज सम्झँदा-गुन्दा ताजुप लाग्दछ कस्तो दूषित वातावरणमा नेपाली जनताले गुम्सिरहनुपऱ्यो राणाको शासनकालमा । दुनियाँको शोषण गर्न उपाय बताउने र दलाल बन्ने, राम्रा तरूनी छोरीबेटी चढाउने, भए-नभएको चुक्ली लाउने र चाकरी गर्ने यी चार थरी रोलैले बढी मनपर्ने बन्दथे राणाहरूका । उनीहरू त्यस्तालाई जग्गा-जमिन बकस दिन्थे वा धन मोफसलका हाकिम, तहरिर बनाइदिन्थे । यी पछिल्ला खालकाले तलबप्रति यहाँका 'हजुरिया' लाई चढाएर जान्थे । अनि उता निर्धक्क भएर अन्नाधुन्न घुस खान्थे : कोसेली, सौगात र नजरानाले तलदेखि माथिसम्म रिझाउँथे, घर-जग्गा जोर्थे, धन-सम्पत्ति थुपार्थे । एउटा बडो चाखलाग्दो घटनाले यी सब कुरा खुलस्त हुनेछ । चन्द्रशमशेरको पालामा एकजना राणाजी कर्णेलले शमशेरविक्रमलाई तीनपटक दौडाहा गर्न पठाएका रहेछन् । उनी सज्जन थिए । दौडाहामा आफ्नो कर्तव्य पालन गर्नमा मात्र लागे । एक दिन सलामीमा उनले 'महाराज ! खान पुगेन' भनेर बिन्ती गरेछन् । 'महाराज' ले भने -"तँलाई तीन-तीन पटक दौडाहामा पठाइदिएँ । अब खान पुगेन भनेर मलाई के भन्छस् ?"

घर-जग्गा छैन, सत्तलको वास । चार छोराछोरी हुर्काउनुपर्ने । आमालाई कत्रो दु:ख-कष्ट र चिन्ताको सामना गर्नुपऱ्यो होला । आकलझुकल हुने र समयको साथै सेलाउँदै गएको (जुद्धले दिएको) मद्दतले के धान्थ्यो । आफूसँग नभएपछि अरूले हेरचाह गर्ने होइनन् । विशेष केही थिएन, तैपनि जो भएका भाँडाकुँडा, लत्ताकपडा एक-एक गर्दै बेचेर आमा हामीहरूलाई हुर्काउन लाग्नु भयो । ठीक त्यसैताका बुबालाई लागेको बाँकीमा सर्वस्व गर्ने भन्ने खबर आयो । कुन दुष्टले सुइँको दिएछन् कुन्नि । नदेखाई पनि सुख नपाइने रे । त्यसैले एकले एकसरो भाँडा, ओढ्ने ओछ्यान, लुगाका दुइटा बाकस र सायद बाजेको पालको होला राम्रो ठूलो पलङ राणा सरकारका सेनाबेनाले उठाई लगे । आमाको अनुहार अँध्यारो थियो । हामीहरू टुलुटुलु हेर्दै रह्यौं ।

सिरान र थैलीबाट पैसा झिक्ने कुलत जनकपुरमै लागेको थियो, अब पैसा चोरेर चुरोट खान थालें । त्यसताका 'होलीमार' चुरोट बिक्थ्यो । त्यसको बट्टामा सिनतान हालेको सानो पुरिया हुन्थ्यो । त्यसले पनि होली चुरोट खान पल्कायो । छ-सात वर्षको बच्चोले त्यस्तो सिनतान चुरोट खाएपछि के भलो हुन्थ्यो । रगतजस्तो पिसाब आउन लाग्यो । आमालाई हैरानी भयो । यता पैसा चोरेर खाँचो पार्ने, उता रोग उब्जाएर चिन्तित । चारेकाले हप्काउने, ठटाउने गरे तापनि आखिर आमाको हृदय ठहऱ्यो, बिरामी हुँदा चिन्ता लाग्ने र निको पार्न हरेक उपाय गर्ने नै भयो । उमेर त सानै थियो, तर आमालाई पिरोल्न मैले कुनै कसर राखिनँ । बेला कुबेला जतातत्तै अल्लारिँदै हिंडेको छ, छ । जात्राको समयमा टोलका ठिटाहरूको पछि लागि जात्रा हेर्न हिंड्थें, वर्षाको याममा पौडी खेल्न कहिले पशुपति त कहिले पाञ्चायन पुग्थें । कहिले साइकल चढेर खोच्याउँदै घर पस्थें त कहिले हातै मर्काएर । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

**जितेन्द्रराज कायस्थ / वीरेन्द्र फैंजू**
बनेपा, काभ्रे

# साधुको गिरफ्तारी

काटमारको कट्टर विरोधी साधु नदी किनारमा आश्रम बनाई बसे । नजिकैको हाटमा गाई काटेर मासु बेचिन्थ्यो । साधुले गाई बचाउन काटिने गाई किन्न थाले तर, व्यापारी झन फस्टाएको हुँदा साधु आफ्नो पापको प्रायश्चितका लागि गुरूकहाँ गए ।

गुरूले एउटा ढुङ्गो दिए । तिमीले हरेक बिहान जल चढाएर यसलाई पूजा गर्नु । यो ढुङ्गा जहिले ठूलो हुन्छ, त्यही दिन तिम्रो पाप कट्टी हुन्छ । धेरै वर्ष बित्यो, ढुङ्गा नबढेको हुँदा साधु दिक्क थिए । एक साँझ दुईजना लुटेरा आश्रममा आई बास बसे । बिहानीपख ती लुटेराले गाउँको कुनै एउटा घरमा आगो लगाउन त्यहाँ मान्छे जम्मा हुन्छन् । मान्छे नभएको घरमा गाई चोरेर भाग्ने सल्लाह गरेको कुरा साधुले सुनेछ ।

ती चोर निदाएपछि साधुले दुईवटैलाई काटेर शिर र गिँड छुट्टाए । बिहान पूजा गर्न जाँदा ढुङ्गा ठूलो देखे । पाप काटियो भनी साधु सन्तुष्ट भए तर केही क्षणमै उनलाई प्रहरीले गिरफ्तार गऱ्यो । तिनले देखेको ढुङ्गो लुटेराको थियो । सधैं पूजा गर्ने ढुङ्गो चैं अपराधको रगतले रङ्गिएको थियो ।



■ डा. गणेशकुमार पौडेल
जन्म : वि.सं. २००६ असार ६
सैंपुपुल, रामेछाप
अवसान : वि.सं. २०७९ असार ७

## आन्दोलन

हर्के, रामे र मदन तीनजना अति नै मिल्ने साथी थिए । जब जनआन्दोलन सुरु भयो, ती तीनै जना आन्दोलनमा लागे । हर्के र मदनभन्दा रामेले बढी बठ्याई जानेको थियो र आन्दोलनको अगुवाई पनि उसैले गरेको थियो । आन्दोलनमा प्रहरीको गोली लागेर मदनको मृत्यु भयो । हर्केको हातखुट्टा भाँचिएर अपाङ्ग हुनुपऱ्यो र रामे भने भाग्न सफल भयो ।

शहीद पार्कमा बिहानैदेखि चहलपहल छ । मन्त्रीजीबाट शहीदको प्रतिमा माल्यार्पण गरी अबिरको टीका लगाई फूलको गुच्छा चढाउने कार्यक्रम भएकोले मान्छेहरूको भीड लाग्नु स्वाभाविकै हो ।

मन्त्रीजीले हर्केलाई चिनेनन् किनभने हर्केजस्ता अपाङ्ग व्यक्ति अन्त पनि उनले देखेका थिए । हर्के भने निरास भएर त्यहाँ उसले एउटा कविता सुनायो ।

*आन्दोलनमा जो मर्छ*
*त्यो सहिद बन्दो रहेछ*
*आन्दोलनमा*
*जसको हातखुट्टा भाँचिन्छ*
*ऊ जिन्दगीभर*
*अपाङ्ग भई बस्नुपर्दो रहेछ*
*आन्दोलनमा जो भाग्छ*
*उचाहिँ नेता बन्दो रहेछ ।*

किनभने त्यहाँ प्रतिमा मदनको थियो, मन्त्री रामे नै थिए । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

केशव पराजुली
एवं
**भुँडीपुराण प्रकाशन परिवार**
बागबजार, काठमाडौं

# मौरी र मान्छे



■ गोविन्दबहादुर थापा
जन्म : वि.सं. २००२ मार्ग २७, भंगेरी, रामेछाप
अवसान : वि.सं. २०७६ असार २५

– मीतव्ययी बनी मौरी कर्तव्यनिष्ठ कर्ममा
लागेको हुन्छ मान्छे चैं छट्टु बद्‌मास भो किन ?
– नेतृत्व जसले दिन्छ संकेत उसको बुझी
मिलेर काम गर्छन् ती तर मान्छे भो बैगुनी
– थुङ्गा फूल चिनी वास्ना गुलियो रस माहुरी
चुसेर सिर्जना गर्द्या मान्छे बनेर बैगुनी
– सबै झिकेर लैजान्छ, वियोग गरी माहुरी
छुट्टिन्छन् अनि अन्तै गै भोकभोकै कठैवरी
– रूँदै झिँझिँ गरी छोड्छन् आवाज तर, मानव
हात चाटेर हाँस्ने त्यो कस्तो बैगुनी तुच्छ छ
– मौरीले कुभलो कैले गर्दैन सबको हित
गर्ने गर्दछ मान्छे चैं स्वाँगी ढोंगी असभ्य छ
– मौरीको गुण सिकेर इमान्दार भयो भने
मान्छे ईश्वर झैं हुन्छ बुद्ध कृष्ण सरीहुने
– परागसेचन गर्दै मौरीले फूल उब्जनी
गर्दै सजीवता छर्छ तर मानिस निर्घिणी
– मौरीको मह चोरेर बारूला अरिङ्गाल्ले
मौरी मारेर खाए झैं मान्छे दुर्जन हुन्छ रे !
– मौरीले कोप राख्दैन तर क्लेसित मानिस
बन्ने गर्दछ त्यो मान्छे चुक्लि फुक्लि र शोषक
– अप्ठेरो परदा अर्थात शत्रुको बदला लिंदा
खिल डोपेर मौरीले आफ्नो नै प्राण त्याग्दछ
– लाठी-मुङ्ग्री छुरी कर्द बर्बराहट बेगले
बल्छी बोकेर मान्छेले अन्याय गर्न सक्छ रे !
– मान्छेले नदी तानेर कृषि उद्योग क्षेत्रमा
लगानी गर्ने गरेको विज्ञान साथ लिकन
– जता तानो उतै बग्ने उद्देश्य सृष्टि चक्रमा
नदी पवित्र नै हुन्छ प्राणीको उपकारमा
– भन्नु पऱ्यो भने पानी मैलो फोहर जो जति
सफा सुग्गर पारेर नदी बग्छ यसैगरी
– सजीव प्राणी जो जो छन् तिनको जलन प्यासमा
प्राण सञ्चार गर्नेछ प्राणी अत्यन्त उत्तम
– समर्पित बनी घुम्दै ठक्कर कति हो कति
बनेर हिउँको ढिक्का बरफ अशीना हुने
– बदल्दै जीवन चक्र बाफ बनेर उड्दछ
प्राणीकै निम्तिमा पानी थोपा बनेर खस्तछ
– ब्रह्माण्ड सृष्टि भो जैले पृथिवी जसरी बन्यो
डाल्टनले सिद्ध गरेको विज्ञानसँग मिल्छ हो
– तसर्थ पानी चिनेर हाम्रा पूर्वजले पनि
प्रकृतिसँगको गर्व चिनेर रचना गरे
– यौटै हो धर्मको नाम शब्दब्रह्म फरकले
धर्म विभिन्न भाषित भूगोल तिर गाँसियो

## धर्मको नाम

– भगवान गड, साहेव, देव मालिक स्वामीजी
खुदा, राम, रव, ईरा, अल्लाह नाम ती लियो
– हिन्दु, बौद्ध र जैन, सैव इस्लाम शिख बैष्णवी
जोराष्ट्रियन हो त्यस्तै कक्रिसिख्न छन् जति
– सबै यी धर्मको नाम गीता कृष्ण जुनै भनौ
संसार ग्लोवलै पार्ने पानी छ अति उत्तम
– तर, त्यो मानिस भन्ने जन्तु जीवन चक्रको
व्याख्या गर्दो छ विज्ञान खोजीनीति अचम्मको
– जन्तु त्यो एउटै हुन्नन् हज्जार बीच एउटा
सज्जन व्यक्ति जन्मन्छ स्त्री वा पुरूष क्वैन होस्
– कुनै अद्यात्म विज्ञान बुझेर ईश्वर प्रति
भक्ति भाव गरी हिँड्छन् धामी झाँक्री कति कति

❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

नरबहादुर लामा / जगन्नाथ खड्का
एवं
**रोजन प्रिन्टिङ प्रेस परिवार**
नयाँबसपार्क, बनेपा, काभ्रे

# जनमतको भविष्य उज्ज्वल छ



**गोविन्द भट्ट**
**जन्म : वि.सं. १९९६ साउन ३**
**पुरेनवा, रौतहट**
**अवसान : वि.सं. २०६८ असोज २५**

विगत २५ वर्षदेखि निरन्तरता साथ प्रकाशित हुँदै आएको **जनमत** मासिकले साहित्यिक पत्रकारितामा आफ्नै विशिष्ट स्थान र पहिचान बनाइसकेको कुरामा कसैको मतभिन्नता रहेको छैन । त्यसले विभिन्न विषयहरूका आफ्ना पुस्तक प्रकाशन, नयाँ र पुराना पुस्ताका नेपाली साहित्यकार र नेपालभाषाका स्रष्टा एवम् तिनका कृतित्वहरूका विशेष अङ्क, विविध स्तम्भहरूका साथै अनेकौं पुरस्कारहरूकै स्थापना, राजधानीबाट टाढा रहेका साधकहरूलाई अगाडि ल्याउने तत्परता, जनमत पुस्तक अभियान, जनमत साहित्य वाटिका, स्रष्टाहरूको सम्मान, नियमित साहित्यिक गोष्ठी तथा सभा-समारोहहरूकै आयोजनाजस्ता अन्य विभिन्न सार्वजानिक क्रियाकलापहरूद्वारा एकपछि अर्को साहित्यिक सांस्कृतिक अभियानहरू पनि चलाएर साहित्यलाई जनताका बीच पुऱ्याउने दिशामा अनेकौं उपलब्धिहरू पनि हासिल गरिसकेको छ । यी सबै योगदानहरू मुख्यतः जनमतका सम्पादक श्री मोहन दुवाल र उहाँका सहयोगीहरूको कठोर परिश्रम, कर्मठता, कार्यक्षमता र सिर्जनशीलताकै प्रत्यक्ष परिणाम र प्रमाण हुन् । त्यसका लागि नेपाली साहित्यको एक पाठकका रूपमा वहाँहरू सबैप्रति म धन्यवाद व्यक्त गर्दछु ।

सुरुदेखि नै **जनमत**ले विना कुनै पूर्वाग्रह वा भेदभाव, निष्पक्षता साथ सबै पक्षका विचारहरूलाई स्थान दिएर साझा मञ्चका रूपमा नयाँ र पुराना, प्रजातन्त्रवादी र वामपन्थी नेपाली भाषा र देशका अन्यभाषाका साहित्यकारहरूलाई स्थान दिंदै, सबैका मत/अभिमत, अन्तर्वार्ता र समीक्षात्मक प्रतिक्रियाहरू प्रकाशित गर्ने र तिनका माझबाट मिलन-विन्दु खोज्ने उदारवादी, समन्वयवादी नीति लिंदै आएको देखिन्छ । केही पक्षहरूका दृष्टिमा जनमतको यो मध्यमार्गी अडान विवादको विषय पनि बन्न सक्ला र त्यहाँ प्रकाशित हुने रचनाहरूप्रति हाम्रो आ-आफ्नै विचार पनि होला तर मेरो सोचमा, नेपाली साहित्यमा त्यस्तो साझा मञ्चको पनि आफ्नै उपयोगिता र महत्व रहेको हुन्छ भन्ने कुरालाई पनि अस्वीकार गर्न सकिन्न । यस्तो साझा-मञ्चमार्फत् प्राप्त हुने विभिन्न विचारधाराहरूको मिलन भेट र स्वस्थ प्रतिस्पर्धा नेपाली साहित्य लाभान्वित नै भएको छ ।

हिजोआज नेपाली समाज विगतका विभिन्न घुम्तीहरू पार गर्दै नयाँ नेपालको रचना गर्ने महान् लक्ष्यतर्फ पाइला सार्न थालिरहेको बेला, **जनमत**ले पनि अब आफ्नो विगतका पच्चीस वर्षहरूको सिङ्हावलोकन र समीक्षा गर्दै भविष्यका लागि आफ्ना नयाँ नीति र कार्यक्रमहरूको रूपरेखा पनि निर्धारित गर्नुपर्ने छ । विगतमाझैं त्यसले भविष्यमा पनि अझै बढी सक्रियता, प्रौढता र स्पष्टतासाथ अबका नयाँ चुनौतीहरूलाई स्वीकार्दै नयाँ नेपालका लागि नयाँ साहित्यको रचना गर्ने र गराउने अभिभारा बहन गर्नेतर्फ पनि प्रभावकारी भूमिका खेल्ने छ र अझै लोकप्रिय हुनेछ भन्ने आशा हामी सबैले गरेका छौं । ०

# रेग्मीलाई बधाई र दुवाललाई धन्यवाद !

*श्री मोहन दुवालज्यू,*
*सम्पादक, जनमत*

तपाईंको लोकप्रिय र प्रतिष्ठित पत्रिकाले प्रसिद्ध भाषाविद् एवं साहित्यकार श्री चूडामणि रेग्मीका विषयमा एक विशेषाङ्क प्रकाशित गर्ने योजना बनाएको थाहा पाउँदा खुसी लाग्यो । यो एउटा गर्नुपर्ने काम नै थियो । यस्ता विषयमा तपाईंले विगत अनेकौं वर्षहरूदेखि जुन तत्परता देखाउँदै आउनुभएको छ, त्यसका लागि साहित्य तथा संस्कृतिका क्षेत्रमा लागेका हामी सबैले तपाईंलाई धन्यवाद दिनैपर्दछ ।

श्री चूडामणि रेग्मी मेरा पुराना मित्र पनि हुनुहुन्छ । राम्रो भाषा-साहित्य र संस्कृतिका प्रचार-प्रसारका साथै तिनको विकास र परिष्कार गर्ने दिशामा पनि यता चार दशकदेखि उहाँले अनवरत रूपबाट जुन उल्लेखनीय योगदानहरू गर्दै आउनुभएको छ त्यसको म एक प्रशंसक रहि आएको हुँ । त्यस्ता साधकहरूको हामीले कदर गर्नै पर्दछ ।

अहिले म सम्झन्छु - म ०१२/१३ सालतिर बनारसमा बसेर अध्ययन गर्दै थिएँ र त्यसै अवधिताका श्री रेग्मी पहिलो पटक कथाकारका रूपमा देखा पर्नुभयो । उहाँका कथाहरू सामाजिक विषयका साथै केही यौनपरक रोमान्सवादमा केन्द्रित रहेका हुन्थे । एक पटक उहाँको एउटा कथालाई लिएर प्रगतिवादीहरूबीच ठूलै वादविवाद चल्यो र त्यसमाथि अश्लीलताको आरोप पनि लगाइयो । पछि त्यसलाई कमरेड मनमोहन अधिकारीले पढेर यथार्थवादी भन्ने निर्णय दिएपछि मात्र त्यो मुद्दा छिनिएको थियो भन्ने कुरा मैले सुनेको थिएँ ।

त्यसबेलाको **नौलो पाइलो, उजेली, उदय, छात्रदूत, छात्रवाणी, छहारी** आदि पत्रपत्रिकाहरूमा बराबर उहाँका रचनाहरू पढ्न पाइन्थ्यो । त्यसबाहेक अझै उहाँ झर्रोवादी आन्दोलनमा पनि संलग्न हुनुहुन्थ्यो । हाम्रो भाषा, साहित्य र संस्कृतिलाई विदेशबाट हुने हस्तक्षेप वा अतिक्रमणबाट जोगाउनुपर्छ र हामीले आफ्नो राष्ट्रिय स्वाधीनताका लागि पनि आफ्नो मौलिकता तथा अस्मिता कायम राख्नुपर्दछ भन्ने आत्मवोधले गर्दा म पनि झर्रोवादको समर्थक थिएँ । अतएव त्यस आन्दोलनका सहयात्री रसहकर्मीहरूप्रति मेरो मनमा सम्मान रहनु स्वाभाविकै कुरा थियो । त्यसैबेला मैले बनारसमा उहाँलाई चिनेको हुँ र अहिलेसम्म हाम्रो मित्रता यथावत् ताजा रहिआएको छ ।

तपाईंले चूडामणि रेग्मी विशेषाङ्कका लागि निकै दिनअघि मसित एक रचनाको आग्रह गर्नुभएको हो र तपाईंको यस सद्कार्यमा सहयोग पुऱ्याउनु आफ्नो कर्तव्य पनि हो भन्ठानेर मैले त्यस आग्रहलाई सहर्ष स्वीकार गरेको हुँ । तर दुर्भाग्यवश, आखिरी बेलामा आएर मेरो आँखा दुखेको र डाक्टरले पनि केही समय निम्ति लेखपढ गर्न एकदमै रोक लगाइदिएकाले आफूले गरेको सो वाचा पूरा गर्न म असमर्थ भएँ । आशा छ, मेरो अवस्था बुझेर मलाई क्षमा गर्नुहुनेछ ।

श्री चूडामणि रेग्मी भाषा र साहित्यका क्षेत्रमा कवि, निबन्धकार, समालोचक, अनुवादक, भाषाशास्त्री, वैयाक्तिकरण, प्रकाशक, सम्पादक र पत्रकारका रूपबाट आफ्ना विविध योगदानहरूका लागि चर्चित हुनुहुन्छ र केही मात्रमा विवादास्पद पनि । त्यो कुनै अस्वाभाविक कुरो पनि भएन । उहाँसित अनेकौं कुराहरूमा मतभेद पनि हुन सक्ला, तर त्यसबाट उहाँका योगदानहरूको अवमूल्यन गर्नु उहाँप्रति ठूलो अन्याय हुन जानेछ । मलाई उहाँको स्पष्टवादी, खरो, खस्रो र सधैं केही न केही नयाँ सिर्जनात्मक काम-कुराहरू गरिहने जाँगरिलो, साहसिलो, स्वभाव साह्रै मन पर्छ । उहाँलाई धेरै विषयहरूमा हात हाल्ने, कसैसित कुरा नमिल्दा छिटै आफ्नो उग्र प्रतिक्रिया जनाइहाल्ने, हठी, एकलकाँटे र व्यक्तिवादी भन्ने आलोचकहरू पनि नभएका होइनन् । तर त्यो अर्कै पक्ष हो र त्यसबारे उहाँसितै बसेर छलफल गर्न सकिएला । मेरो विचारमा के कुराचाहिँ निर्विवाद छ भने चूडामणि रेग्मी भन्ने व्यक्ति नेपाली भाषा र साहित्य भनेपछि हुरूक्क हुने र तिनका लागि सधैं मर्न-मेटिन तयार रहने एक अथक साहित्य-योद्धा हो । उहाँ अहिले पनि नेपाली भाषा र व्याकरणमा वर्णविन्यासको सरल पद्धति बनाउन आफ्नै मान्यतासहित जुटिरहनुभएको छ । यस्ता सिर्जनात्मक व्यक्तित्वहरू हामीलाई अझै चाहिएको छ ।

यस विशेषाङ्क प्रकाशनको सुखद् अवसरमा म मेरो विद्वान् प्रतिभाशाली मित्र श्री चूडामणि रेग्मीको सुस्वास्थ्य र दीर्घायूको कामना गर्दै, नेपाली साहित्यको भण्डारलाई सुसमृद्ध पार्ने दिशामा उहाँले अब पछि पनि एकसे एक उपलब्धि हासिल गर्दै जानुहोस् भन्ने हार्दिक शुभकामना व्यक्त गर्न चाहन्छु । त्यसैगरी तपाईंको **जनमत**ले पनि साहित्य प्रकाशनका साथै साहित्यसेवीहरूको कदर गर्ने आफ्नो उज्ज्वल परम्परालाई यथावत् कायम राख्दै भविष्यमा पनि यसतर्फ नयाँ-नयाँ दृष्टान्तहरू अघि सार्नतर्फ सफलता पाउँदै जाओस् - मेरो यही शुभेच्छा छ !

**- गोविन्द भट्ट**



# गणित : दार्शनिक पक्षको एउटा अंश

*(द्रष्टव्य : नेपालभाषामा पाण्डुलिपिकै अवस्थामा अप्रकाशित रूपमा रहेको लेखकको कृति* ***ल्याखःयागु सोँपा झ्यालं*** *अर्थात्* ***गणितको तीनवटा झ्यालबाट हेर्दा****बाट परिमार्जित तथा संशोधित एउटा सानो अंश नेपाली भाषामा अनुवाद गरी यहाँ प्रस्तुत गरिएको छ । तीन झ्यालमध्ये १) गणित - मनोरञ्जन २) गणित - व्यावहारिक पक्ष र ३) गणित - दार्शनिक पक्ष । प्रस्तुत अंश गणित - दार्शनिक पक्षबाट उद्धृत एउटा सानो अंश हो ।)*



**जगत्‌बहादुर जोशी**
**जन्म : वि.सं. १९८७ असार २५**
**तानसेन, पाल्पा**
**अवसान : वि.सं. २०६८ चैत्र २३**

**शून्यको स्वरुप :**

शून्य भनेको रिक्तता होइन । शून्य अनन्तको प्रतीक हो । आधुनिक भाषामा यसलाई कण्टिन्यूअम (Continuem) भनिन्छ । शून्य एउटा विशुद्ध स्थिति पनि हो । यसलाई आधुनिक भाषामा क्वाण्टम (Quantum) पनि भनिन्छ ।

कुनै पनि पदार्थको खण्डखण्ड गर्दै गएमा पदार्थको अनन्त खण्ड हुन्छ तर त्यसको समाप्ति हुँदैन । पदार्थको खण्ड-खण्ड गर्दै जाँदा त्यसको सूक्ष्म स्वरूपको अनुमान मानिसको बुद्धिले गर्न सक्दैन । उसको युक्ति तर्कको जालले यसलाई समाउन सक्दैन अनि मानिसले त्यसलाई अनन्त भनेर चित्त बुझाउनुपर्ने हुन्छ । १ सेन्टीमीटरभन्दा लामो रेखामा कति विन्दुहरू छन् ? मानिसले गन्नै सक्दैनन् अनि अनन्त विन्दुहरू भन्ने गर्छन् । १ सेन्टिमीटरभन्दा लामो अथवा छोटो रेखाभित्र कति विन्दु छन् ? भनी सोधिए पनि अनन्त भन्ने नै प्रत्युत्तर आउँछ । कुनै वस्तु वा पदार्थलाई खण्डै-खण्ड गर्दै जाँदा त्यसको अन्त वा समाप्ति हुँदैन । त्यसैले शून्य भनेको रिक्तता होइन । १ से.मी. लामो रेखाभित्र हुने विन्दुहरूको संख्या पनि अनन्त १ से.मी. भन्दा लामो वा छोटो रेखाभित्रका विन्दुहरूको संख्या पनि अनन्तः द्विनद्वि मानिसको बुद्धि र जुक्तिले ती विन्दुहरूलाई गनेर पनि गन्न सक्दैन । त्यसैले यो अनन्त भयो । यस अनन्ततालाई व्यक्त गर्न मानिसले शून्यलाई प्रतीकको रूपमा लियो । त्यसैले गणितज्ञ श्रीधर तथा भास्कराचार्यहरूले शून्य+शून्य = ०, शून्य-शून्य = ०, शून्य x शून्य = ० भनी भने ।

यही सिद्धान्तअनुसार शून्यले १ लाई भाग गरे पनि शून्य नै प्राप्त हुन्छ, शून्यले जतिसुकै ठूलो संख्यालाई भाग लिए पनि शून्य नै प्राप्त हुन्छ भन्ने कुरा व्यावहारिक हुन गयो ।

शून्यको ठीक ठीक परिभाषा अत्यन्त कठिन छ । त्यसैले कसैले यसलाई V अर्थात् रिक्त आकाशको प्रतीक मानेर यदृच्छा विन्यते शून्य भनेर अज्ञात संख्याको रूपमा लिएका छन् भने कसैले यावत् तावत् अर्थात् जो सत् हो त्यही हो भन्ने अर्थमा लिएका छन् । जे भएतापनि शून्य विशुद्ध गतिको

सँगसँगै विशुद्ध स्थिति अर्थात् वृत्तात्मक पथको स्थिति पनि हो । गतिशीलताको गति उत्पन्न भएको स्थानदेखि उत्पत्ति भएको स्थानसम्म आएर नौलो बाटो प्रारम्भ हुने स्थानमा एउटा वृत्तात्मक पथको निर्माण भैसकेको हुन्छ । त्यही वृत्तात्मक पथको परिधिको स्थिति पनि शून्य हो । सरल रेखाको पथ भनिने वृत्तात्मक पथ त्यसको एउटा सानो अंश (segment) अथवा ज्या (arc) मात्र हो । सीधा देखिने बाटो अथवा रेखालाई सिधै सिधा तान्दै लगेमा त्यसको अन्त वृत्ताकारमै हुन्छ । पृथ्वीबाट अन्तरिक्षमा सीधा पठाइने रकेट, उपग्रहहरू सबैले पृथ्वीलाई परिक्रमा गरी वृत्तात्मक पथ नै बनाएका हुन्छन् । अतः शून्य वृत्तात्मक गति र स्थिति पनि भयो ।

**परिवर्तन र परिवर्तनको स्वभाव :**

दिनहुँ सूर्य उदाउने र अस्त हुने गर्छ । उदय र अस्तको प्राकृतिक वृत्तात्मक (वक्रात्मक) प्रक्रियाको भित्र व्यस्त हुने सूर्य त्यही एउटै हो अथवा अर्कै नयाँ हो ? प्रत्येक पूर्णिमामा आउने चन्द्रमा त्यही हो अथवा अर्कै ? आमावस्या पूर्णिमाहरू आउने गर्छन्, जाने गर्छन् । त्यही रात, त्यही दिन, त्यही सूर्य, त्यही चन्द्रमा आइरहन्छ अथवा परिवर्तन हुने तत्व त्यही भएपनि त्यसभित्र भिन्नता पनि हुने गर्छ ? फेरि-फेरि फैलिरहने मौसम, सुन्तला, आँप, बेलाबेलामा फुल्ने फूलहरू सबैलाई नयाँ सृष्टि भन्ने हो भने पनि यिनीहरू पुनरावृत्ति र पुनर्जन्मको प्रभावबाट मुक्त छन् भन्न सकिन्न । मानिसहरूको जीवनमा धार्मिक, व्यावहारिक, दार्शनिक, आध्यात्मिक आदि विभिन्न पक्ष सबैले शून्यको पुनरावृत्ति, वृत्तात्मक गति र स्थितिबाट प्रभावित भएका देखिन्छन् ।

कार्ल मार्क्सको भनाइअनुसार परिवर्तनको परिमाणात्मक (Quantitative) र गुणात्मक (Qualitative) दुई स्थिति हुन्छ । पानी तातिने र चिसिने, पानीको स्थितिले पानीमा हुने परिवर्तनको स्थितिलाई जनाउँछ । पानीको तापक्रम १००° सेन्टिग्रेड पुग्ने वित्तिकै पानी तरल अवस्थामा नभएर वाफ बन्न जान्छ । त्यस्तै पानीको तापक्रम झार्दै लगिएमा ०° सेन्टिग्रेड पुग्दा पानी तरल अवस्थामा नभएर हिउँको ठोस बन्न जान्छ । पानीभित्र भैरहने परिवर्तन चरम विन्दुमा पुग्नेबित्तिकै गुणात्मक परिवर्तन हुने गरेको देखेर प्राकृतिक नियम नै यही रहेछ भन्ने अवधारणा मानिसले लिएका छन् ।

यही धारणाले समाजको सामाजिक, व्यावहारिक, धार्मिक, आध्यात्मिक, दार्शनिक आदि सबै पक्षलाई प्रभावित गर्ने गरेको छ ।

सूर्यलाई बीचमा पारी अन्य ग्रहहरूले परिक्रमा गरिरहेता पनि पृथ्वीवासीका दृष्टिले सौरमण्डलका अन्य ग्रहहरूले पृथ्वीलाई नै परिक्रमा गरेको देख्ने गर्छन् । प्राचीन खगोलविद्हरूले सूर्यलाई ताराका रूपमा नलिई ग्रहको रूपमा र चन्द्रमालाई पृथ्वीको उपग्रहको रूपमा नलिई ग्रहकै रूपमा गणना गर्ने गर्दथे । सूर्य, चन्द्र, मंगल, बुध, बृहस्पति, शुक्र र शनि यी सात ग्रहहरूले पृथ्वीको वर्षा, वायु, वायुमण्डल, वनस्पति र जीवजन्तुहरूलाई प्रभावित गरिरहेका हुन्छन् ।

त्यसैले पृथ्वी लोकवासी मानिसको जीवनको व्यवहार पक्षमा यी ७ ग्रहहरूको अत्यन्त ठूलो अपरिहार्य सम्बन्ध रहन गएको छ । अतः दिनहरूका नाम यिनै ७ ग्रहहरूका नाउँमा रविवार, सोमबार, मंगलबार, बुधबार, वृहस्पतिबार, शुक्रबार र शनिबार रहन गएका छन् ।

प्रकृतिको कोषमा जन्मेका सबै वस्तु परिवर्तनशील हुन्छन् । वस्तुको परिवर्तन परिमाणात्मक रूपबाट प्रारम्भ भएर गुणात्मक रूपमा परिवर्तन हुने गर्छ । पृथ्वीको दैनिक गतिले दिनको परिमाणात्मक परिवर्तनलाई अगाडि अगाडि सार्दै जान्छ । यस्तो रविवारबाट प्रारम्भ भएर शनिबारसम्म अगाडि अगाडि बढ्दै जान्छ । ७ दिनको परिमाणात्मक परिवर्तनलाई चमर विन्दुको परिणाम मानियो । जहाँबाट नयाँ दिनको गुणात्मक परिवर्तन हुन जान्छ । यसलाई १ हप्ता १ साता भनी नामाकरण गरियो ।

एउटा शून्यको वृत्तात्मक गति पूर्ण हुनेबित्तिकै गणितको क्षेत्रमा १ अङ्कको जन्म भएजस्तै हाम्रा सामाजिक, व्यावहारिक, धार्मिक तथा आध्यात्मिक क्षेत्रमा पनि नयाँ नै अवस्था, स्थिति वा वस्तुको जन्म हुनजान्छ ।

७ ग्रहहरूको गतिशील प्रवाहले ७ दिनको एक हप्ता हुन गयो । सातौं अवस्था पार गर्ने बित्तिकै त्यहाँ गुणात्मक परिवर्तन हुनैपर्छ भन्ने धारणा दार्शनिक, सामाजिक, व्यावहारिक, धार्मिक चिन्तनहरूमा पनि आउन थाल्यो । यस प्रकारले ७ अङ्कले हाम्रो जीवनमा ठूलो भूमिका खेल्न थाल्यो ।

**नेवार जातिमा *न्हेन्हूमा बिगु* प्रचलन :**

नेवार जातिमा मृत व्यक्ति मरेको ७ दिनमा ७ दिनको भात न्हेन्हूमाको भात पकाई मृत व्यक्तिलाई खुवाउने

चलन छ । व्यक्ति मरेको सातौं दिन बत्ती बाली चढाउने, सात खुड्किलो भएको बाँसको भऱ्याङ बनाइन्छ, मृत आत्माले सातौं दिनको दिन चढाइएको भात र अण्डा खान आउँछ भनी सिखर्नीमा झुण्डयाइएको हुन्छ । शरीरबाट अलग भएको जीवात्मामा सातौं दिन गुणात्मक परिवर्तन हुन्छ भन्ने प्रवल धारणा नै यसको पछाडि रहेको देखिन्छ । मृत्युपछि हाम्रो स्थिति जस्तो सुकै भए पनि मृत्यु भएको सातौं दिन पछि फेरि अर्को गुणात्मक परिवर्तन हुनैपर्छ भन्ने धारणाकै आधारमा न्हेन्हूमा दिने चलन नेवार जातिको समाजले अपनाएको देखिन आउँछ ।

## सात पुस्ताको सम्बन्ध :

सात पुस्ताको रगत एउटै भएको परिवारबीच छोरीबेटी लिने दिने चलन समाजमा देखिंदैन । वर्तमान पुस्ताले गरेका कुशल वा अकुशल कर्मको प्रभाव सातौं पुस्तासम्म पर्ने गर्छ भन्ने धार्मिक तथा सामाजिक धारणा छँदैछ । यहाँ पनि सातौं पुस्ता पार हुनेबित्तिकै क्रान्तिकारी (गुणात्मक) परिवर्तन हुन्छ भन्ने धारणा नै व्याप्त भएको देखिन आउँछ ।

कुनै कुनै वैज्ञानिकहरूको मतानुसार सन्तान उत्पत्ति हुने शक्तियुक्त धातु (Gene) ८४ (अंश) भागले निर्मित भएको हुन्छ भन्ने मानिएको पाइन्छ । ती ८४ भागमध्ये ३८ भाग आफूले सेवन गरेका अन्नादिबाट उपार्जित हुन्छन् ।

२१ भाग बाबुको तरफबाट प्राप्त भएको हुन्छ ।
१५ भाग बाजेबाट प्राप्त भएको हुन्छ ।
१० भाग बाजेको बाबुबाट प्राप्त भएको हुन्छ ।
६ भाग बाजेको बाजेबाट प्राप्त भएको हुन्छ ।
३ भाग बाजेको पनि बाजेको बाबुबाट प्राप्त भएको हुन्छ ।
१ भाग बाजेको बाजेको पनि बाजेबाट प्राप्त भएको हुन्छ ।

यस प्रकारले वर्तमान पुस्ताको सम्बन्ध ७ पुस्ता अगाडिसम्म रहिरहन्छ । यही धार्मिक धारणा अनुसार वर्तमान पुस्ताले कुशल वा अकुशल कर्मले गर्दा ७ पुस्तासम्म स्वर्ग वा नर्क जानुपर्छ भन्ने धार्मिक तथा पारलौकिक धारणाको स्थापना हुन गयो ।

यस प्रकारले यस ७ को महत्वलाई लौकिक तथा पारलौकिक सम्बन्धसँग घनिष्ठता देखाउन वैज्ञानिक दृष्टिले पनि दरिलो आधार तयार गर्न खोजेको देखिन्छ । सातौं स्थितिले नै अन्तिम स्थिति हुन्छ भन्ने आधारमा नै पारलौकिक दृष्टिमा पनि जीव प्राणीहरू मुक्त नहुँदासम्म आ-आफ्ना कर्म, संस्कार तथा वासना अनुसार १. आदिलोक २. मोनादिक लोक ३. आत्मिक लोक ४. बुद्धिक लोक ५. मानसिक लोक ६. भुर्वलोक ७. भूलोक यी सातलोकमध्ये एउटा न एउटा लोकमा अलमलिई रहन्छन् । यी ७ लोक पार गरेपछि मात्र जीवको मुक्ति हुन्छ । यही नै सातौं अवस्थाको गुणात्मक रूप हुन आउँछ भन्ने अवधारणा यहाँ देखिन्छ ।

## आध्यात्मिक तथा वैज्ञानिक चिन्तनमा ७ को प्रभाव :

वैदिक ऋषिहरूले सृष्टिलाई ७ दिदीबहिनीहरूको संगीत भनेर सप्त स्वसारो अभिसं नमन्ते भनी भनेका छन् । एउटै हालको आधारमा उभिएको यो ७ लोक गतिशील भैरहन्छ भनी ऋषिहरूले एक अखो बहति सप्तनामा भनी भनेका छन् । वैज्ञानिक दृष्टिले पनि हेरियो भने पदार्थलाई उर्जा अवस्थामा गुणात्मक परिवर्तन हुन ७ अवस्थानै पार गर्नुपर्ने हुन्छ । विश्वको साक्षात स्वरूप हेर्नलाई सूर्यको ७ किरणनै ७ वटा झ्याल भएको देखिन आउँछ ।

नाद ब्रह्मको समवेत स्वर नै निखिल ब्रह्माण्डको रूप हो भनी ऋषिहरूले भने जस्तै समस्त खगोललाई ७ प्रकारका धागोहरूको तानाबानाले बुनिएको जाल हो भनी सप्त तन्तून वितावित्रे भनी भने । आधुनिक वैज्ञानिकहरूले पदार्थको तीन अवस्था (ठोस, द्रव्य, गैस) लाई मात्र नमानी पदार्थमा ७ अवस्था मान्ने गरेको छन् । उनीहरूका मतअनुसार पदार्थका यी ७ अवस्था हुन्छन् १. ठोस २. द्रव्य ३. गैस ४. प्लाज्मा ५. न्यूट्रोन ६. एपी प्लाज्मा र ७. विकिरणक्षेत्र । सृष्टि रथका चक्र घुमाउने पदार्थका यी ७ अवस्था बाहेक अरू के हुन सक्छ ? पदार्थको यी सात अवस्था पूरा हुने बित्तिकै शून्यको ढोका खुल्न जान्छ जहाँ अस्ति नास्ति (छ, छैन) भन्ने सार प्रश्न निराधार हुन जान्छ भनी धारणा राख्ने अध्यात्मवादी चिन्तन हुन गयो । वैज्ञानिकहरूले शून्यको यही गति र परिस्थितिलाई कण्टिन्यूअम र क्वाण्टम भनी भन्ने गरेका छन् ।

## पुनर्जन्म र अङ्क पुनरावृत्तिको प्रक्रिया :

घटना, मानिस र अंकले आफ्ना गतिको अवधि समाप्त गरेपछि फेरि फेरि पुनरावृत्ति गरिरहन्छ भन्ने

कुराहरूको प्रमाण धेरै भेटिने गरेको छन् । केही घटनाको पुनरावृत्ति कति कति अवधिमा भइरहन्छ भन्ने कुरा निश्चित रूपले ठोकेर भन्न गाह्रो छ ।

यहाँ हामी अङ्कको पुनरावृत्तिलाई ७ नियमले कसरी नियन्त्रण गर्ने रहेछ, त्यतातिर चिन्तन मनन गरौं । गणितको क्षेत्रमा उत्पन्न हुने १, २, ३, ४, ५, ६, र ७ सम्मका अङ्कहरूले यस्तो संख्याको जन्म दिन्छ जुन संख्याभित्र तिनै तिनै अङ्कहरूले निरन्तर परिक्रमा गरिरहन्छन् । जस्तै ७ ले १ लाई भाग गर्दा $^{१}/_{७}$ को भागफल पूर्णाङ्कमा नआई दशमलवपछि आउने .१४२८५७ यिनै अङ्कहरूको संख्या क्रमिक रूपले अनन्तकालसम्म पुनरावृत्ति गरिरहन्छन् । आवर्त (Recurring) को रूपमा दोहोरिरिहन्छन् ।

७ ले २ लाई भाग गरेमा अर्थात् $^{२}/_{७}$ को भागफल .२८५७१४ उनै ६ अङ्कको संख्या बन्न आउँछ । यही संख्याको (Set) निरन्तर क्रमिक रूपमा पुनरावृत्ति भैरहन्छ । तर तिनका अङ्कहरू अगाडि पछाडि पर्ने गर्छन् ।

त्यस्तै $^{३}/_{७}$ गर्दा भागफल .४२८५७१ आवर्त
$^{४}/_{७}$ गर्दा भागफल .५७१४२८ आवर्त
$^{५}/_{७}$ गर्दा भागफल .७१४२८५ आवर्त
$^{६}/_{७}$ गर्दा भागफल .८५७१४२ आवर्त

यसरी १ देखि ६ सम्मलाई ७ ले भाग गर्दा तिनै अङ्कहरू तलमाथि अगाडिपछाडि हुन्छन् । तर सातौं अवस्थामा ७ ले ७ लाई भाग गर्दा अर्थात् $^{७}/_{७}$ गर्दा भागफल पूर्णाङ्क १ हुन आउँछ ।

७ ले १, २, ३, ४, ५ र ६ सम्मलाई भाग गर्दा दशमलव पछि आउने अङ्कहरूले नै स्थान परिवर्तन गर्दै पुनरावृत्ति गरिरहन्छ । तर त्यही त्यही अङ्कहरूको पुनरावृत्ति भए पनि प्रत्येक अङ्कको मान मूल्य बेग्लाबेग्लै हुन्छ । त्यही त्यही Set को संख्याले निरन्तर पुनरावृत्ति गरिरहेतापनि अङ्कको क्रम मात्र समान हुन्छ । संख्या र संख्याभित्रको प्रत्येक अङ्कको मान मूल्य फरक फरक हुने गर्छ । जस्तै $^{१}/_{७}$ भाग गर्दा भागफल .१४२८५७, १४२८५७, १४२८५७ निरन्तर पुनरावृत्ति भइरहन्छ । पहिलो दशमलव पछिको मूल्य $^{१}/_{१०}$ हो भने दशमलव पछिको सातौं स्थान आउने त्यस्तै १ को मूल्य $^{१}/_{१००००००००}$ अर्थात् पहिलो १ दश खण्डको १ खण्ड हो भने दशमलव पछि सातौं स्थानमा आएको १ को मूल्य एक करोड भागको एक भाग हुन आउँछ । यस्तै दिनहुँ विहान उदाएर साँझ अस्ताउने सूर्य, त्यही पुरानो सूर्य भएपनि दिनहुँ नयाँ नयाँ भएर आएजस्तै पूर्णिमापछि आमावश्या र आमावश्या पछि पूर्णिमा आउने जाने गरेपछि त्यही पूर्णिमा र आमावश्या नयाँ नयाँ रूप लिएजस्तै ७ अवस्था चरमविन्दुको अवस्था हुनेगर्छ । अनि त्यही अङ्क वा अङ्क समूह (Set) को पुनरावृत्तिलाई त्यही अङ्क वा अङ्कहरूको समूह भन्न मिल्दैन भन्ने कुरा गणितको नियमले देखाउने गर्छ । प्रकृतिको विविधताको नियमलाई पनि यस्तै नियमले बुझ्न सकिन्छ ।

आइतबारदेखि शनिबारसम्म सात बारमध्ये आइतबार सृष्टि भएदेखि कति गइसके । कति जाँदै गर्नेछन् ! यसको गणना मानिसको मस्तिष्कले गर्न सक्दैन । अनि त्यसलाई अनन्त आइतबार भनेर सन्तोष लिने गर्छन् । सोमबारदेखि शनिबारबारसम्मका प्रत्येक बारको गति पनि त्यही हो । तर जेसुकै भए पनि प्रत्येक जाने र आउने बार त्यही होइन । त्यसको पुनरावृत्ति मात्रै हो । प्रत्येक गइरहने बारको महत्व, मूल्य र महिमा तथा स्थानमा धेरै धेरै भिन्नता रहेको हुन्छ ।

वनस्पति, जीव, जन्तु, प्राणीहरूमा आइरहने परिमाणात्मक परिवर्तन गुणात्मक परिवर्तनका सातौं अवस्थासम्म जन्ममरण र पुनर्जन्मको चक्रमा घुम्नैपर्ने प्राकृतिक नियम नै हुनुपर्छ । सातौं अवस्थामा पुगेपछि गुणात्मक परिवर्तन हुनेबित्तिकै गणितको क्षेत्रमा नयाँ शून्यको स्थिति प्राप्त हुन जान्छ अनि नयाँ १ को सृष्टि हुन्छ । डार्विनले प्रकृतिको यही नियमको अर्थलाई आफ्नो विकासवादको सिद्धान्तको रूपमा प्रतिपादन गरे । कार्ल मार्क्सले द्वन्द्वात्मक भौतिकवादको रूपमा प्रतिपादन गरे । त्यस्तै पुनर्जन्म, मुक्ति मोक्ष वा निर्वाणमा, आस्था राख्ने पूर्वीय आध्यात्मवादी ऋषि, मनिषि, महात्माहरूले भौतिक संसारको संरचना गर्ने तत्व १. पृथ्वी, २. जल, ३. वायु ४. अग्नि ५. आकाश यी पञ्चतत्व मान्ने गर्छन् । यिनैको क्रिया अन्तर्क्रियाले जीव जगत्को स्वरूप - तिनमा मन, बुद्धि र आवश्यक इन्द्रियहरूको संरचना हुन पुग्छ । मानिस पनि यिनै पंचतत्वहरूमा चलिरहने अन्तरक्रियाका प्रक्रियाअन्तर्गत सिर्जना हुने प्राणी हो । अध्यात्मवादीहरूका अनुसार मानिसको स्थूल शरीरको देहका अन्त भएपछि पनि सूक्ष्म शरीरको अन्त भएको हुँदैन । यो सूक्ष्म शरीर केवल तीन तत्वले बनेको हुन्छ । ती तीन तत्व १. अग्नि,

....... ***बाँकी ६४ पेजमा*** .......

# पारिजातका पत्रहरुभित्र लुकेका मर्महरु



जगदीश घिमिरे
जन्म : वि.सं. २००२ चैत्र २८
मन्थली, रामेछाप
अवसान : वि.सं. २०७० कार्तिक १४

*समयमा मैले रूप, शरीर, बौद्धिकता, गुण, महत्ता सबै बेच्न सक्नुपर्थ्यो त्यस पछि सायद म जीवनको यस ट्राजिक मोडमा आइपुग्ने थिइनँ ... कदापि ।*

– पारिजातको एक पत्रबाट

२०२० को दशकमा चर्चाको शिखर टेकेकी 'शून्यवादी' पारिजात 'राल्फा' र 'साम्यवादी' धारका दर्जनौँ कृति र जीवनशैली मार्फत् समेत चर्चित छन् ।

पारिजातसँग मेरो दोहोरी थिएन । उनले २०२७ सालमा छापिएको मेरो पहिलो उपन्यास **लिलाम** पढेपछि मलाई पहिलो पत्र लेखिन् । प्रतिष्ठित लेखिकाको प्रशंसात्मक पत्र पाएर त्यसबेलाको नवोदित लेखक मलाई सुखद आश्चर्य भयो । डेढ वर्षसम्मको चलेको हाम्रो पत्राचारको दोहोरीमा मसँग उनका सात थान पत्र छन् । अरू केही थिए, हराए ।

पारिजातले यी पत्रहरू आफ्नो जीवनयात्रा (३० फागुन १९९० – ५ वैशाख २०५०) को अति महत्वपूर्ण मोडमा लेखेकी हुन् । त्यो पनि संयोगवश – म परदेशमा भएकोले उनका यी भावनाले पत्रको बान्की पाए । मलाई काठमाडौंमा लेखक र पत्रकारका रूपमा पेट पाल्न हम्मेहम्मे परेका बेला छात्रवृत्ति पाएर पटना विश्वविद्यालयको विद्यार्थी हुन पुगेको थिएँ । म काठमाडौंमा भएको भए उनीसँग वार्तालाप हुन्थ्यो होला र उनका पत्रका मार्मिक बोली, प्रसङ्ग र भावनाहरू त्यसै बिलाउँथे होलान् ।

स्वभावतः यी पत्रहरूमा मूलतः उनका र मेरा कुरा छन् । तर यिनमा जीवन र जगत् पनि छ । यस लेखको मनसाय पारिजातको स्मृतिदिवसमा उनी प्रति श्रद्धाञ्जली र उनका अध्येता र मर्मज्ञहरूलाई यी पत्रका भावनाहरूबारे सूचित गर्नु हो । त्यसका लागि **अभिव्यक्ति** द्वैमासिकले यी पत्रहरूका स्कान तथा उतार समेत वैशाख २०६६ देखि हरेक अङ्कमा प्रकाशित पनि गर्ने भएको छ । फिरंगी शब्दहरूको लिपी बदल्नु बाहेक उद्धरणहरूको सम्पादन गरिएको छैन ।

भाजँगाल, कीर्तिपुरबाट २८ भाद्र २०२८ को पहिलो पत्रमा उनी लेख्छिन् –"जनताको दुःख सुख बोध एउटा धेरै मीठो शैलीमा अभिव्यक्त भएको पढ्न मन लागिरहेकै थियो । अचानक **लिलाम** हात पर्‍यो, अब त्यो तिर्सना केही कम भएको छ । **लिलाम** ठाउँ-ठाउँमा पाठकलाई पगालिदिने क्षमता राख्छ भावुकता छ र रोमान्सले होइन गरिबी बोधले । ... राजनीति र साहित्यिक एकताबारे तपाईको भन्नु के छ ?"

"भर्खर श्री ५ को स्वास्नीको बर्थ डे सिद्धियो । ... काठमाडौको अर्को नाउँ

हो "पैसा कताबाट कमाउन सकिन्छ ?" .. सुकन्याको बिहे भयो निर्मल लामासँग । तर–काम चलाऊ ।

"यो पत्रको विशेष आशय तपाईलाई शुभकामना हो । हामीले यो युगको आधुनिकतालाई नचिनाएर शायद देश र मानव विकासप्रति गद्दारी गरिरहेका छौँ ।"

त्यसपछि मैले उनलाई पहिलोपटक भेटेँ – उनको भाजँगालको डेरामा ।

संयोगवश मैले भाजँगालको त्यसै इलाकामा बसोबास गरेको पनि पन्ध्र वर्ष भयो । बिहान डुल्दा कहिले काहीँ पारिजात बसेको घरनिर पुगेर म उनलाई सम्झन्छु । पारिजात जत्तिका लेखक त्यहाँ बसेको कुनै सूचना वा सम्झाउनी नहुनु स्वाभाविक हो । भएको भए अचम्म हुन्थ्यो ।

बेलायतका सहरहरूमा ठाउँठाउँमा प्रतिष्ठित लेखकहरू बसेका घर घडेरीहरूका भित्ता–पर्खालहरूमा तिनको नाम र बसेको अवधि, कतैकतै सिर्जना गरेको कृतिको समेत उल्लेख भएको ससाना तर आकर्षक सूचना–पाटी देख्दा रमाइलो लागेको थियो । अझ लेक डिस्ट्रिक्टमा वर्डस् वर्थबारेका स्मारक र सूचनाहरू तथा स्ट्र्याटफोर्ड–अपन–एभनमा शेक्सपियरका नाट्यशालाहरूमा उनका अविरल चल्ने नाटकहरू र उनको नामका होटेल र अन्य स्मारकहरूले गर्दा साहित्यकार भन्ने जन्तु पनि केही हो जस्तो लाग्छ । लन्डनका मुटुमा भर्जिनिया ऊल्फ, आर्थर कानन डायल लगायत अनेक फिरंगी भाषाका महारथीहरू स्रष्टा बसेका सूचना पाटीहरूले सज्जित छन् । यो चलन अन्यत्र पनि होला । तर नेपालीले त्यसको सिको गर्ने बेला आएको छैन ।

म कसैको पनि सालिकको पक्षधर होइन – यौटाले थापेको सालिक अर्काले उखेल्छ । नउखेले पनि त्यो चराको बिस्टाले पूरित र फोहोर हुन्छ । तर देशको उल्लेख्य स्रष्टा बसेको र उनले गरेका कामको सम्झना ससानु सूचना पाटीले नै भए पनि गर्नु–गराउनु सभ्यता नै हो कि ?

भाजँगालबाटै १० मार्ग २०२८ मा पठाएको दोस्रो पत्रमा उनी लेख्छिन् – "**बैंशको मान्छे** लेखी सिध्याएँ । .. **रूपा** नामक पत्रिकाका भूपी शेरचनले लेखकहरूको एउटा लिस्ट बनाएर सम्पादक मण्डलीलाई म कहाँ पठाइदिएको रहेछ । मलाई लेखकहरूको नाउँ देखेर असाध्य हाँस उठ्यो – मोहन कोइराला, भूपी, शंकर लामिछाने, द्वारिका श्रेष्ठ, पारिजात, कृष्णचन्द्रसिंह प्रधान आदि । मैले भनि दिएँ – यी साहित्यकारहरूले अब आधुनिक बजारलाई धान्दैनन् साहित्य धेरै अघि बढिसक्यो तपाईंहरू नाउँको पछडि नजानुस् । त्यसपछि मैले फेरि आफ्नै लिस्ट बनाइदिएँ । अब शंकर लामिछानेको होइन जगदीश घिमिरेको कथा चाहिन्छ भनिदिएकी छु .. उनीहरूले तपाइँसँग एउटा कथा मागिदिने मलाई आग्रह गरेका छन् । .. यहाँ त पारिजातले प्रतिष्ठानको भत्ता खान थाल्यो भन्ने जोडदार हल्ला छ । वाहियात, म पनि एउटा प्रतिक्रियावादी सरकारको पैसा खान्छु ? (दिने कुरा प्रतिष्ठानमा चलेको रहेछ) कतिले बधाई कतिले गाली पठाइसके हरे !"

भाजँगालबाट पौष २०२८ मा पठाएको तेस्रो पत्रमा दिल्ली गएर उपचार गराउनेबारे उनी लेख्छिन् – "मलाई भने हतार लागेर मर्नु भइरहेछ । अब यहाँका व्यापारी डाक्टरहरूसँग सल्लाह गरेर एउटा रिकोमेन्डेशन लेखिमाग्न पर्‍यो भन्ने विचार छ ।"

यसबीच डेरा सरेर पुकुसी पुगेपछि ६ वैशाख २०२९ मा पठाएको चौथो पत्रमा उनी लेख्छिन् – "नयाँ रोग थपिनु, एउटी स्कटीश डाक्टरसँग भेट हुनु, डेरा खोज्नु, आर्थिक अवस्था नमिल्नुले दिल्ली जाने कार्यक्रम पछि सार्दा सार्दा आखिर वैशाख लाग्यो गर्मी चढ्यो .. डाक्टरहरूले तिमी सोझो र सक्रिय भएर हिँड्न सक्छौ भनी ग्यारेन्टी दिएका छन् । मान्छेको जीवनमा आशाको कति हात हुन्छ हँ ? .. त्यसो त आत्महत्या गर्न लागेको मान्छेलाई पनि तर्सायो भने झस्कन्छ । के आशा त्यो झस्कनु मात्र त होइन ?"

पुकुसीबाट जुलाई २४, १९७२ (१३ साउन २०२९) मा पठाएको पाँचौं पत्रमा लेख्छिन् – "मूर्ख स्वास्नी मान्छेमा दरिइन अस्वीकार गर्दा गर्दै पनि प्रशस्त मुर्ख्याईहरू दोहोरिरहन्छन् । २३ जुलाईमा तपाईंको एयर डकुमेन्ट हात पारेर चिठी पढि सकेपछि मलाई अत्यास लागेर आयो ।"

मैले उनलाई मेरो दोस्रो उपन्यास **साबिती**को पाण्डुलिपी एयर डकुमेन्ट गरेर पठाएको थिएँ । उनले दिएको ठेगाना नमिलेर त्यो चौरासी घुमेर निकैपछि बल्लतल्ल पुगेछ । उनले भनेको "मूर्खता" त्यही हो ।

पुकुसीबाटै १२ भाद्र २०२९ छैठौँ पत्रमा लेख्छिन् – ".. उपन्यास (**साबिती**) एकै सिटीङ्गमा सिध्याएँ । .. आम प्रगतिशील पाठकहरूले यसलाई प्रतिक्रियाबादी नै

भन्छन् बुझ्नेहरूले के भन्दो रहेछ हेर्नु छ । यहाँ यसै पनि अन्धो पठन हुन्छ ।

दिल्लीबाट पठाएको २९ माघ २०२९ सातौँ पत्रमा लेखिन् - "... भोग्नुको म चरम स्थितिमा पुगिसकेकी छु । ... यस वर्ष मेरो आन्दोलनहरूको वर्ष गाली, भर्त्सना, आलोचना, गलतबोध, मिथ्या आरोप, बदनामी, मृत्यु र आर्थिक संकटहरूको बीच म त्यो सुपरम्यान जस्तो भएको छु जसले यतिका आन्दोलनहरूलाई स्वीच दबाएर एकातिर मिल्क्याइदिएको छ मात्र एक्जिस्ट गर्नको निम्ति । जीवनले मदेखि अफ पनि हार खाएन जगदीशजी । काठमान्डु बसी सक्नु थिएन मानसिक तनावले गर्दा । थोरै रकम लिएर दिल्ली आएकी छु । ओ.पि.डि बाट उपचार गराउँदैछु । डाक्टरहरू हुन्छ भन्छन् हेरौँ ।

"... मैले काठमान्डुबाट सरकार, साथीभाइ कसैको पनि सहयोग पाइनँ । सहयोग शब्द नेपालीहरूको शब्दकोषमा छैन । मैले तपाईंलाई मेरो अन्तिम विकल्प "मुक्ति क्षेत्र" भनेकी थिएँ होइन ? मेरो यहाँ पर्मानेन्ट् ठेगाना छैन । यसैले तपाईंको दोहोरो चिट्ठी पाउने आशा नै भएन । भोलि नेपाली दूतावास जाँदैछु । प्रगतिशील पाठक र समालोचकहरूले मलाई यस्तो कर्नरमा पारिदिए उही पनि मौका हेरेर । यसपालि मैले देखेँ दुर्दशाको पनि मोलतोल हुँदो रहेछ । सोच्छु जुन स्वास्नी मान्छेले कहिले केही पनि बेच्न सकेन उसले दुर्दशा कसरी बेच्न सक्छ ? हास्यास्पद । समयमा मैले रूप, शरीर, बौद्धिकता, गुण, महत्ता सबै बेच्न सक्नुपर्थ्यो त्यस पछि सायद म जीवनको यस ट्राजिक मोडमा आइपुग्ने थिइनँ ... कदापि ।"

"**साबिती**" के हुँदैछ ? त्यसलाई लिएर एउटा गाली लेख्नु छ ।"

यी उद्धरणका भाव-भावनाहरू आफै बोलेका छन् । मैले प्रसङ्ग खुलाउन केही वाक्य संयोजन गरेको हुँ ।

पारिजातबारे धेरै लेखिएको छ । उनले तत्कालीन सरकारको सिदा-चामल अस्वीकार गरिन् भनिन्छ । यो कुरा उनले दोस्रो पत्रमा पनि लेखेकी छन् । गरिन् पनि होला । तर विदेशमा उपचार गराउन जानेबेला उनले "— सरकार र साथीभाइ" लाई सम्झेकी रहिछन् । त्यो स्वाभाविक पनि हो । विश्वेश्वरप्रसाद कोइरालाले आजीवन जुन व्यवस्थाका विरूद्ध विद्रोह र युद्ध समेत गरे उपचारका लागि त्यही व्यवस्थाको सहयोग लिएका हुन् । त्यो समर्पण थिएन ।

उनले **साबिती**बारे केही लेखिनन् । त्यो उपन्यासको आत्मामा कम्युनिस्ट विरोधी "एनार्किस्ट" थियो जसलाई मैले अराज्यवाद भन्ने गरेको छु र जसलाई उनले कहिल्यै पनि स्वीकार गर्न सकिनन् ।

उनी साम्यवादभित्र पस्दै थिइन् । म त्यहाँबाट बाहिर निस्कँदै थिएँ । हाम्रो भेट संघारमा भएको थियो । यी पत्रहरू त्यसैका अभिलेख हुन् । यिनले मलाई रन्थन्याएका छन् ।

आखिर त्यस्ता पीडाबाट नगुज्रीकन को "पारिजात" हुन सक्छ ?

❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

महेश कर्माचार्य
अध्यक्ष एवं
**पब्लिक सूत्रधार बहुउद्देश्यीय सहकारी संस्था लि. परिवार**
बनेपा, काभ्रे

# युगस्रष्टा कवि युद्धप्रसाद मिश्र र उहाँको अन्त्य अवस्थाको कथा



**जनकप्रसाद हुमागाई**
**जन्म : वि.सं. १९९४ असोज २८**
**बल्थली, काभ्रे**
**अवसान : वि.सं. २०६३ माघ २८**

युग स्रष्टा कवि, क्रान्तिकारी कवि, जनताका प्रिय साहित्यको प्रगतिवादी फाँटका योद्धा कवि युद्धप्रसाद मिश्रका बारेमा मैले सोचेको थिएँ - "उहाँको संघर्षशील विगत जीवन जे जस्तो कष्टकारक तथा दुःखदायी रहे तापनि लामो र कठोर संघर्षबाट प्राप्त वर्तमान समय अवश्य त्यस्तो हुने छैन । किनभने पछिल्लोपल्ट उहाँ बिरामी पर्दा देशमा पुरानो व्यवस्था ढलिसकेको थियो भने नयाँ व्यवस्थामा उहाँका सहकर्मी-सहधर्मीहरूकै बाहुल्य थियो ।

चाहे सात सालको परिवर्तनका निम्ति होस्, चाहे प्रजातन्त्र पुनः स्थापनाका निम्ति कविवर युद्धप्रसाद मिश्रको जुनसुकै अवस्था र स्थितिमा पनि उल्लेखनीय योगदान थियो । उदाहरणका निम्ति सात सालको जहानियाँ शासन विरोधी आन्दोलनमा सुविधायुक्त पारिवारिक जीवन र सरकारी जागिरको पर्वाह नगरी जनताका जायज हक, अधिकारका निम्ति संघर्षमा उत्रनु भै कठोर जेल यातना भोग्न पुग्नुभएको थियो भने सत्र साल काण्डपछि त्यसरी नै घर-परिवार र जागिरको सुख-सुविधा त्यागी जनताका हक-अधिकारका निम्ति लगभग २२ वर्षको कठोर भारत निर्वासनमा रही क्रान्तिकारी साहित्य रचना गर्ने र क्रान्तिकारी डफ्फाको अगुवाई गर्ने कार्य गर्नुभएको थियो मात्र होइन त्यसपछि देशभित्रै फर्की त्यसरी नै क्रान्तिकारी कवि, कलाकार आदिको प्रेरणाश्रोत बन्दै २०४६ सालको जनआन्दोलनको 'कालो पट्टी अभियान' मा समेत अगुवाई गर्ने ( उमेरले मात्र होइन, व्यवहार सबैले) दरा, खरा र जेठा कविका रूपमा समेत उहाँको संलग्नताले स्थान पाएको र खैलाबैला ल्याएको थियो । कविवर युद्धप्रसाद मिश्रका यस्ता अनेक उदाहरण छन् जसले व्यक्तिगत सुख, सुविधा, घर, परिवार, पैतृक सम्पत्ति, जागिर आदिको पर्वाह नगरी जीवनको प्रारम्भदेखि अन्त्य अवस्थासम्म देश र जनताका निम्ति देखाउनु भएको त्याग र गर्नुभएको बलिदानको सहज अनुमान गर्न सकिन्छ ।

उहाँका यस्ता त्याग र बलिदान जान्ने धेरै छौं, गुनगान र बखान गर्ने पनि निकै छौं । २००७ साल अघि बीरगञ्ज जेलमा उहाँसँगै यातना भोग्ने र त्यसपछि त्यसरी नै त्याग, तपस्या र बलिदान गर्दै आउनुभएका साहित्यकार श्यामप्रसादले आफ्नो भूमिगत जीवनमै पनि उहाँलाई भेटी उहाँका बिर्सिनसक्नु गुण र देनको प्रशंसा गर्नुभएको थियो र उहाँलाई त्यसरी भेट्न पाउँदा निकै प्रभावित हुनु भएको थियो भने बनारस र नेपालभित्र पनि एक साथ कार्य गर्नु भएका मोदनाथ प्रश्रितले पनि बेलाबेलामा त्यसरी नै भेटघाट र आदर, सम्मान

गर्नुभएको थियो । २०४६ सालको जनआन्दोलनको कालो पट्टी अभियानका सहयात्री साहित्यकार कमल दीक्षितले पनि सो आन्दोलनको सफलतापछि उहाँलाई भेटी उहाँको त्याग र देनको सम्मान जनाउनु भएको थियो मात्र होइन उहाँ बिरामी पर्दा एक पल्टको स्क्यानिङ खर्च समेतमा सघाउनु भएको थियो । कविवरको मुक्तिरामायण कविवरसँग किन्नु भएको थियो । उहाँले त्यसको मूल्य लिन नचाही फिर्ता गर्नु भएपछि "त्यसो भए यो नोटमा तपाईंको हस्ताक्षर गरिदिनुहोस् । तपाईंले दिनुभएको पुस्तक र फिर्ता गर्नुभएको यो नोट (नोट दश रूपियाँको थियो) एक साथ इतिहासका निम्ति मदन पुरस्कार पुस्तकालयमा सुरक्षित राख्छु" भन्नुभएको थियो र कविवर मिश्रले त्यो नोटमा त्यसरी नै हस्ताक्षर गरिदिनु भएको थियो ।

सो आन्दोलनको अर्की साहसी सहयात्री साहित्यकार पारिजातले कविवर मिश्रको नेपाल आगमनपछि भएको अभिनन्दनमा 'खादा' अर्पण गर्नु भएको र गुण गाउनु भएको सम्झना त्यसरी नै ताजै छ भने 'नाम जस्तै काम गर्न कवि' भनी गोविन्द भट्टले गर्नुभएको प्रशंसाले पनि त्यसरी नै सम्झना आउँछ ।

प्रा. जीवेन्द्रदेव गिरीले आफैं बिरामी हुँदाहुँदै पनि कविवर मिश्रलाई ठिमी, गट्ठाघरस्थित उहाँको निवासबाट फाँटदेखि सडकसम्म इष्टेचरमा र सडकदेखि अस्पतालसम्म अन्य सवारी साधनमा ओहोरदोहोर गराउने कार्यमा दिनुभएको साथ र पुऱ्याउनु भएको सहयोगको कुरा पनि कहिल्यै बिर्सन नसक्ने घटना बन्न गएको छ । मुकेश चालिसे, भक्तबहादुर नेपाली, कृष्णराम श्रेष्ठ, गङ्गादास श्रेष्ठ, कृष्णमोहन जोशी, त्रिरत्न शाक्य, कृष्णप्रसाद नापित, तुलसी सायमीहरूले देखाउनु भएको तत्परता पनि आ-आफ्नै प्रकारका छन् । गोपीचन्द्र कार्की पनि कविवर मिश्रबाट प्रभावित नयाँ पुस्ताका युवकमध्ये पर्नुहुन्छ । यस्ता नाम धेरै छन् र धेरैको लिन सकिन्छ । बनेपाका मोहन दुवाल, चन्द्रगढीका चूडामणि रेग्मी, पोखराका रविलाल अधिकारी र भैरहवाका दिल साहनी मात्र होइन वनारस बसाईंका डा. तुलसीप्रसाद भट्टराई समेत धेरैमा पुग्न सकिन्छ । कृष्णप्रसाद पराजुली पनि यस्तै महानुभावमध्ये हुनुहुन्छ भन्ने कुरा कविवर मिश्रको सम्झनामा लेख्नु भएको संस्मरणबाट थाहा पाउन सकिन्छ भने डा. तारानाथ शर्मा पनि उहाँको प्रशंसकमा पर्नु हुन्छ ।

तर यस्तै महानुभावमध्ये केहीका साथ र सहयोगलाई छाडी तुलनात्मक रूपमा समग्रमा भन्नु पर्दा माथि उल्लेख गरिएझैं पहिलोपल्ट उहाँ विरामी पर्दा र उहाँलाई अस्पताल ल्याउन, लान पर्दा, त्यहाँ भर्ना गर्न र उपयुक्त औषधी उपचारको प्रबन्ध मिलाउन र स्वास्थ्य परीक्षण गराउन खोज्दा अन्य सर्वसाधारण विरामीले जुन प्रकारको एक्लो यातना भोग्नुपर्छ र दुःख झेल्नु पर्छ यस्तै यातना भोग्नु र दुःख झेल्नु बाहेक कुनै सहयोग पुऱ्याउने र मानभाउ देखाउने खाँचो बोध गरिएको देखिएन ।

उहाँ जन आन्दोलनको प्रारम्भदेखि नै अलि अस्वस्थ हुनुहुन्थ्यो र त्यही स्थितिमा छोरा अरूणको पाखुरा समाती कवि कलाकारको कालो पट्टी अभियानमा सरिक हुन पुग्नुभएको थियो भने २०४७ वैशाखदेखि झन् अस्वस्थ हुनु भै लगातार अस्पताल धाउनु परेको थियो । राम्रो स्वास्थ्य परीक्षण हुन नसकेको र ओहोरदोहोर गरिरहनु परेकोमा चिन्ता व्यक्त गर्दै जाँचबुझ वा स्वास्थ्य परीक्षण कार्य पूर्ण नभएसम्म अस्पतालमै बस्ने व्यवस्था मिलाई दिए पनि ओहोरदोहोरको कष्ट भोग्नुपर्ने थिएन जस्ता दुःख पोख्दै आउनुभएको थियो । उहाँकै यस्तो कुरामा चासो लिनुपर्ने खालका र तहका मुख्य, मुख्य महानुभाव सबैलाई उहाँको यो व्यथा, दशा र अनुनय, विनय थाहा थियो ।

उहाँकै सभापतित्वमा प्रज्ञा भवनमा भएको विशेष कवि सम्मेलनमा पनि 'उहाँप्रति के गर्ने ?' भनी यो पंक्तिका लेखकले माइक मार्फत नै त्यहाँ उपस्थित बृहत् भद्रजनको ध्यानाकर्षित गर्ने कार्य गरेको थियो भने त्यसभन्दा अघि पनि यस क्षेत्रको नामी पत्रिका 'दृष्टि' मार्फत् 'कविवर युद्धप्रसाद मिश्रप्रति न्याय गर्नु जरूरी' भनी एउटा लामो लेख नै छपाएको थियो ।

कविवर मिश्रको भनाइ थियो – "सकिन्छ यहीं र यहाँ सम्भव देखिंदैन भने सम्भव भएको कुनै देशको अस्पतालमा एकपल्ट स्वास्थ्य परीक्षण गर्न पाए रोग खुटिन्थ्यो, उपचार गर्दा राम्रो हुन सके देशको सेवामा अरू केही वर्ष लाग्न पाइन्थ्यो । त्यसो हुन सम्भव रहेनछ भने पनि 'सक्दो प्रयत्न सबैबाट भएकै हो' भनी चित्त बुझाउन मिल्थ्यो ।"

हुन पनि यति हुन सकेको भए उहाँको मनमा पनि सन्तोष मिल्ने थियो भने उहाँका परिवार, उहाँका हामीजस्ता शुभचिन्तक र अन्य नयाँ पुस्ताहरूमा पनि उचित प्रभाव पर्नुका साथै कर्तव्यपरायणताको पनि एउटा राम्रो दृष्टान्त स्थापित गर्न पुगिने थियो । तर यस निम्ति

कुरो झिक्दा कसैले भन्यो- "अब उहाँ बूढो भइसक्नुभयो ।" कसैले भन्यो- 'उहाँका छोराहरू पनि छन् होलान् ?" कसैले भन्यो - "उहाँका नजिकका मान्छेले नै चासो लिएका छैनन् ।" कसैले त कानमा खुसुक्क यस्तो पनि भन्यो- "उहाँलाई केही भएकै होइन । मान-भाउ खोजेको !" मानिलिउँ केही नभएकै भए पनि र मान-भाउ खोजेकै भए पनि उहाँको इच्छा अनुसार एकपल्ट स्वास्थ्य परीक्षण गराई दिएको भए के बिग्रने थियो ? अनि देश र जनताका निम्ति घरवार र सुख वैभव सबथोक त्यागी सिङ्गो जीवन उत्सर्ग गर्ने त्यस्तो कविलाई पनि "उहाँका छोरा पनि छन् होइन ?" भन्नु उचित थियो ? थियो भने आफूलाई पर्दा आफूले जन्माएका छोरा भएमात्र साथ पाउने र नभए अकालमै मर्नुपर्ने जस्ता व्यवहारले भविष्यमा मिश्रज्यूजस्ता दरा, खरा र त्यागी वीर, वीराङ्गना देशले कसरी पाउन सक्ला र ? त्यस्तो आशा गर्न मिल्ला ? अर्को कुरा हृदयचन्द्रसिंह प्रधान, लक्ष्मीप्रसाद देवकोटा, गोपालप्रसाद रिमाल र गोकुलप्रसाद जोशी आदिका कष्टपूर्ण जीवन र दुःखद् मरनका बारेमा चिन्ता व्यक्त गर्ने र प्रश्न उठाउने गरिएको के स्वाँङ मात्र पारिएको हो ? होइन भने विगतका यस्ता दुःखद् कारणले गर्दा पनि चाहेको भए के एकपल्ट जहाँ लगेर पनि कविवर मिश्रको उचित स्वास्थ्य परीक्षण गराउन सकिंदैनथ्यो ? समयकै कुरा गर्ने हो भने पनि देशका सपुतहरूले रगत बगाएर ल्याएको प्रजातन्त्रको हर्ष र गर्वको समय थियो । रोगले फुर्सद नदिएको पनि थिएन । उहाँको रोगले लगभग एक वर्ष राम्रो बाटो पाउनु पर्याप्त कुरा थियो । यसो हुँदाहुँदै पनि 'उहाँका छोरा पनि छन् होइन ?' जस्ता विभिन्न गैरजिम्मेदारीका कुरा सुन्नुपर्छ र यस्तैमा उहाँ जस्ताको स्थिति र अन्त्य त "काग गराउँदै छ, पिना सुक्दै छ" जस्तो रूपमा भएको देख्नुपर्छ भने अन्य देशभक्त कवि कलाकारले न्याय पाउलान् भनी कल्पना गर्न सकिन्छ ? जहिले पनि आफ्नो सुख सुविधा खोज्ने उहाँको बानी भएको भए 'उहाँको बानी नै त्यस्तै हो' भन्न मिल्थ्यो । उहाँले व्यक्तिगत सम्पति थुपारिदिएको, उहाँका छोराहरू गैरजिम्मेदार भएको भए पनि त्यसो गर्न सुहाउने थियो । धर्म नछाडी भन्ने हो भने उहाँको र छोराहरूको के स्थिति छ भन्ने कुरा नजान्ने कमै छन् । उहाँले साँच्चै मर्का परेपछि मात्र आफ्नो मर्का पोखी हामीहरूको ध्यान आकर्षित गर्न खोज्नु भएको थियो । त्यसैले इमान्दार देशभक्त कवि कलाकारप्रति विगत र वर्तमानमा के फरक भयो ? किनभने मन ज्ञानले नै दृष्टि दिनुपर्नेमा खुद उहाँले ध्यानाकर्षण गराउँदा पनि त हामीले उचित अग्रसरता लियौं न वर्तमान सरकारको त्यो उदारता देख्न पायौं । सरकार सामू लिखित अनुरोध पठाउनु भएको कुरा पनि यो पंक्तिका लेख सामूको कुरा हो । ❑

## गणित : दार्शनिक पक्षको .......

२. वायु र ३. आकाश हुन् । यिनैबाट सूक्ष्म शरीर बनेको हुन्छ - यो छाया शरीर हो । यसलाई आवतजावत गर्दा कुनै वस्तु बाधक हुँदैन । ढोका बन्द भएपनि सूक्ष्म शरीर जहाँ पनि उपस्थित हुन सक्छ । प्रेतहरूको पनि सूक्ष्म शरीर नै हुन्छन् ।

मानिसहरूका आ-आफ्ना कर्म, संस्कार र वासनाले अतृप्त मन, बुद्धि, अहंकारले (आत्माले) देहान्त पछि पनि तृप्तिका लागि प्रयत्न गरिरहन्छ । त्यसैअनुसार मानिसको देहान्तपछि उसको कर्म, संस्कार र वासनाले पञ्च तत्वमाथि क्रिया प्रतिक्रिया गर्न थाल्छ र सात लोकमध्ये उसलाई अनुकूल उर्वर पर्ने लोकमा उसको जन्म हुन जान्छ । यस्तैगरी संस्कार र वासनाले गर्दा मानिसको पुनर्जन्म सात लोकमध्ये एकलोकमा निरन्तर चक्कर लगाइ नै रहन्छ । मुक्ति, कैवल्य वा निर्माणको अवस्था त सातै लोकबाट मुक्त भएर गुणात्मक परिवर्तनको त्यो अवस्था जस्तै हुन्छ जहाँ गणितको नियममा गुणात्मक परिवर्तन भएर शून्यको स्थिति पुगिन्छ । शून्य त्यो पूर्ण अवस्था हो जसमा जति अङ्कले गुणा गरे पनि त्यसमा वृद्धि हुँदैन । शून्यको अवस्थामै रहिरहन्छ । जति खण्ड खण्ड गरेर जतिले भाग लिए पनि शून्यको अवस्थामै कुनै कमी वा ह्रास आउँदैन । अतः शून्य रिक्तताको स्थिति होइन । त्यो अनन्तताको प्रतीक सँग-सँगै एउटा विशुद्ध गति र स्थिति पनि हो जसमा केही थपे पनि वृद्धि हुँदैन, केही झिके पनि घट्दैन । यस्तै शून्यले जब एकोडह बहुस्याम अर्थात् म एउटै छु विविध रूपमा प्रकट हुन्छु भन्ने संकल्प गर्नां मात्रले गणितको क्षेत्रमा १, २, ३, ४ आदि अङ्कहरूको सृष्टि भएझैं भौतिक संसारमा प्रकृति भएर विविध रूप र आकारहरूको सृष्टि हुनथाल्छ । अनि सातौं अवस्था पूर्ण हुनेबित्तिकै परिवर्तन र पुनरावृत्तिको चक्र अनन्त रूपमा चल्न थाल्छ । यस भावचक्रबाट मुक्तिको अवस्था पनि छ जो शून्य हो, निर्वाण हो, मुक्ति हो । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

**दिलसुन्दर श्रेष्ठ / दुर्गा श्रेष्ठ**

धुलिखेल, काभ्रे (हालः बानेश्वर, काठमाडौं)

# सुगत सौरभ महाकाव्यका आधारस्रोत



**डा. जनकलाल वैद्य**
**जन्म : वि.सं. १९९१ साउन १५**
**कोबहाल, ललितपुर**
**अवसान : वि.सं. २०७८ मंसीर २४**

कविकेशरी तथा साहित्यशिरोमणि महाकवि चित्तधर हृदयको उत्कृष्ट अमरकृति **सुगत सौरभ** महाकाव्य विश्ववन्द्य ऐतिहासिक राष्ट्रिय विभूति, चरित्रनायक सिद्धार्थ गौतम बुद्धका जीवनी, कर्मणि र दर्शन विषयको काव्यकृति हो । उक्त महाकाव्य सिर्जना रचना गर्न महाकवि हृदयले आफ्नो कल्पना, परिकल्पना र भाव प्रयोग गर्नुको साथसाथै महाकाव्यको चरित्रनायक ऐतिहासिक महापुरूष भएकाले सिद्धार्थ गौतम बुद्धसम्बन्धी प्रामाणिक सामग्री प्रशस्तै एक चित्तले चिन्तन, मनन, अध्ययन गर्नुभएको बुझिन्छ । स्वदेशी, विदेशी कविहरू र विद्वान्हरूका काव्यकृति र बौद्ध वाङ्मय ग्रन्थका भाव, अलंकार, रस, दर्शन र विचार पैंचो लिएर उहाँले आफ्नो कृति **सुगत सौरभ** महाकाव्यका सर्गहरूमा प्रसङ्ग, सन्दर्भ मिल्ने गरी प्रयोग गरेका देखिन्छन् । **सुगत सौरभ** महाकाव्यको मूल सर्ग पाठभन्दा अगावै रहेको "मा !" शीर्षकको मङ्गलाचरणसरहको रचना विशेषमा (४८ पङ्क्ति, पृष्ठांक नजनिएका, ने. सं. १०६३ दिल्ला, वि. सं. २००० आषाढ) महाकविले सो तथ्य खुलस्त अभिव्यक्त गरेको देखिन्छ । उक्त रचना विशेषलाई प्रस्तुत महाकाव्यको "पिखालखु मन्दः" पुराना भवन नेवार मन्दिर प्रसादको मूल प्रवेशद्वारमाथि जडान गरिएको विशेष भावका कलात्मक प्रतीक भएको वन्दनीय तोरण भन्न सुहाउँछ । महाकवि हृदयले प्राचीन काव्य परम्परा पद्धतिभन्दा भिन्नै तरिकाले मङ्गलाचरण रचनालाई कुनै सर्गभित्र नपारी छुट्टै स्थान दिईकन महाकाव्यका सवै सर्गहरूका अगुवाइ नै गराइएको छ । उहाँको काव्यमा भेटिने अनेक विशिष्टताहरूमध्ये यो एक दृष्टान्त हो ।

उपर्युक्त "मा !" रचनामा प्रथमतः उहाँले "देशभाषा", "राजभाषा" र "राष्ट्रभाषा" का रूपमा सम्मानित भइसकेको आफ्नो मातृभाषा नेपालभाषालाई वन्दना गर्ने क्रममा "सरस्वतीमाता" भनी लाक्षणिक उद्गार अभिव्यक्त गर्नुभएको छ । त्यति बेलासम्ममा उहाँ आफूले अध्ययन, मनन, चिन्तन, स्मरण गर्न भ्याएजतिका आफ्नै देशभाषाका कविहरू यथाक्रम कवीन्द्र प्रताप मल्ल (ने. सं. ७६२ - ७९४ / वि. सं. १६८० - १७३० शासन र काव्य रचनाकाल), श्रीनिवास मल्ल (ने. सं. ७७२ - ८०५ / वि. सं. १६८४ - १७४२ शासन र काव्य रचनाकाल), लक्ष्मी सुनन्दन द्विज (ने. सं. ९१९ / वि. सं. १८५६ तिर रचना), अभयानन्द स्वामी (ने. सं. ९५८ - ९८० / वि. सं. १८९५ - १९१७ काव्य रचनाकाल) बौद्ध पण्डित अमृतानन्द (ने. सं. ९२० - ९५१ / वि. सं. १८५७ - १८८८ काव्य रचनाकाल), सिद्धिदास अमात्य (ने. सं. १०४० - १०५० / वि. सं. १९७७ - १९८७ काव्य रचनाकाल) र उहाँको आफ्नै गुरू योगवीर सिंह (ने. सं. १०४५ - १०५९ / वि. सं. १९८२ - १९९६ काव्य रचनाकाल) का गुण,

काव्यप्रवृत्ति र विशेषता सटिक संकेत उल्लिखित गरेका देखिन्छन् । नेपालभाषा साहित्य इतिहासमा त्यसरी अग्रणी कविहरूका काव्य गुणसहित परिचय संकेत र गुण स्मरण आफ्नो कृतिमा सम्भवतः उहाँले नै सबभन्दा पहिले नेपाल भाषामा गर्ने गर्नुभएको हो । उहाँभन्दा पहिले आफूभन्दा पहिलेका कविहरूको प्रतिभा गुण सङ्क्षिप्त संकेत श्रीनिवास मल्लले रचेका दशावतार नाटक सङ्ग्रहमा रहेको एक गीतिरचनामा "ऋषिसम सिद्धिनर सिंह" र "कर्ण भीम समानका कवीन्दर प्रताप" भन्नेजस्ता उद्‌गार अनुसन्धान, अध्ययन गर्दा पत्ता लागेको थियो **(नेपालभाषाया प्राचीन काव्य सिर्जना** (ने. रा. प्र. प्रतिष्ठान, वि. सं. २०५९, पृ. ३) ।

उपर्युक्त "मा !" शीर्षकको रचनामा "जननी ! छ तथागतया वचन जुय धुंकल ज्ञान सरे सुमन" - यस अंशको नेपालीमा अनुवाद पूर्वप्राज्ञ श्री चित्तरञ्जन नेपालीले यसरी गर्नुभएको छ - वचन पुष्प हौ तिमी सुगतको / ज्ञान सरोवर बीच फुलेको ।।) । यस उद्‌गारमा महाकवि हृदयको आलोचनात्मक गुण संस्कार मुखरित भएको देखिन्छ । नेपालका प्राचीन ज्ञात-अज्ञात कविहरूले अनेक गीत र नाटक रचेर औ बौद्ध पण्डित कविहरूले बौद्धशास्त्र ग्रन्थहरू साधना गरेर नासोस्वरूप हामीलाई छोडेर गएका थिए भने बोध स्मरण गराउनुभएको छ । त्यस्ता बौद्ध वाङ्मय र काव्यपरम्परा प्रवाहित भएको नेपालमा महाकवि "हृदयले प्रस्तुत बुद्ध जीवनी र दर्शन विषयको **सुगत सौरभ** महाकाव्य रचना सिर्जना गर्ने ध्येयले संकल्प वचन अभिव्यक्त गर्नुभएजस्तो लाग्छ । उहाँले चिताएभैं **सुगत सौरभ** महाकाव्यमा उहाँको कविप्रतिभारूपी फूल ढकमक्क फुलेको औ सुवासित पनि भएको छ ।

*भिंन्याम्ह बुद्धिभवने दयक दयक*
*मां छन्त अग्रमहिषी बिल पद्‌वि ल्वेक*
*नेपाल-पालक कवीन्द्र जय प्रतापं*
*यो मा ! छको हृदय-छ्यैं दिसं प्राणनापं ।।*

(पन्ध्रैजना सब रानी छोडी कवीन्द्र प्रतापले तिमीलाई नै दिए अग्रमहिषीको मान । आमा गर लौ कृपा मलाई ।

- चित्तरन्जन नेपालीको अनुवाद साभार उद्धृत)

यी गीतिरचना अंशले काठमाडौ हनुमान ढोकाको जलधेनु शिलालेखको भाव संस्मरण गराउँछ । राजा प्रताप मल्लले त्यसमा संसारका प्रख्यात पन्ध्र भाषाहरूका प्रतिनिधिस्वरूप पन्ध्रथरी लिपि प्रयोग गरेको शिलाभिलेख र अभिलेख ग्रन्थमा नेपालभाषालाई "नेपाल भाषा", "स्वदेश भाषा" र आफ्ना गीतिरचनाहरूका अन्तिम पङ्क्तिहरूमा "नृपति श्रीप्रताप मल्लले सार अतछि खँ ल्हाय" - अर्थात् श्री प्रताप मल्ल राजा सार कुरा केही भन्छन्) जस्ता उक्ति उद्‌गार श्री प्रताप मल्ल राज सार कुरा केही भन्छन्) जस्ता उक्ति उद्‌गार लिपिबद्ध गराएका थिए । साथसाथै तत्कालीन पण्डित बुद्धिजीवीहरूलाई उपर्युक्त जलधेनु शिलापत्रमा उत्कीर्ण भएको लोकको अर्थ व्याख्या गर्न आह्वान गरिएको बुभिन्छ । तिनै भावलाई लक्ष्य गरी "मा ! छन्त अग्रमहिथी बिल पदविल्वेक" भनिएको बुभिन्छ । राजा श्रीनिवास मल्लले ललितपुर राज्यको मूल उपास्य देवता लोकनाथ, करूणामय, आर्यावलोकितेश्वर, बुंगद्यो इत्यादि नामले प्रख्यात रातो मत्स्येन्द्रनाथको आध्यात्मिक भावपूर्ण श्रुतिमधुर स्तुति गीतहरू संस्कृत, नेपालभाषा र मैथिलीमा रचेर ती गीत भजनकीर्तन गराइएका थिए । उपर्युक्त "मा !" रचनामा श्रीनिवास मल्लले "माता ! शब्द अम्बरद्वद्धारा तिमीलाई सिँगारेथे" भनेका हुन् । यस्तै नै महाकवि "हृदय" ले अन्य अग्रणी कविहरू "सदा शारदा" का रचयिता विप्र लक्ष्मी सुनन्दन, निर्गुण वेदान्त दर्शन गीतका रचयिता अभयानन्द स्वामी, श्रुतिमधुर नीतिश्लोकका रचयिता सिद्धिदास अमात्यका गुण स्मरण गरेका छन् । उहाँले आफ्नो गुरू योगवीर सिंहका गुण स्मरण पनि गरेका छन् । यसका अतिरिक्त उहाँले कृतज्ञता र आदर भावले उल्लेख गरेका अन्य प्रख्यात कवि एवं विद्वत्‌जनहरूमा आदिकवि वाल्मीकि, वेदव्यास, वाणभट्ट, क्षेमेन्द्र, श्रीहर्ष, जयदेव, भवभूति, माघ, भारवि, अश्वघोष र कालिदासका नाम विशेष अभिप्राय अर्थ आउने विशेषण उपाधिसहित उल्लिखित गरिएको दृष्टान्तबाट महाकवि "हृदय"ले तिनीहरूका कृति गहन अध्ययन गरीकन तिनीहरूका काव्यका भारसार, रस, अलंकार, नीति उपदेश सन्देश सुभबुभका साथ आफ्नो महाकाव्य **सुगत सौरभ**मा प्रसङ्ग सन्दर्भ मिलाई पैंचो लिई प्रयोग गरेका देखिन्छन् । त्यसो गर्दा उहाँले ती अग्रणी कवि विज्ञहरूका कृतिबाट हुबहु अनुकरण, अनुसरण नगरीकन नव महाकाव्य कृति नै सिर्जना गरिराखेको प्रस्ट देखिन्छ । उहाँले आफ्नो विद्वत्ता, कलासीप, अनुवाद, विषयवस्तु प्रस्तुतिको योग्यता निपुणताका साथै कवि प्रतिभा पनि उद्‌भासित गर्नुभएको प्रस्टै देखिन्छ । ❑

# रात



टी.आर. विश्वकर्मा
जन्म : वि.सं. १९९० बुद्धजयन्ती
विजयपुर, धरान
अवसान : वि.सं. २०४७ भदौ ४

रात हो यस्तै हुँदो रहेछ
दहिचिउरा मुछिँदो रहेछ
भावना बहेर आफैँलाई बहाउन खोज्दो रहेछ
कल्पना त्यस्तै मस्को र काठमाडौँ गइरहँदो रहेछ ।

काठमाडौँ मेरो बासस्थान
मेरी श्रीमती र छोराछोरीको जन्मस्थान
प्रिय छ यो ठाउँ मलाई
धरान मेरो जन्मस्थान प्रातःस्मरणीय छ ।

प्रिय छ मलाई मेरो नेपाल
मेरो जन्मभूमि र कर्मभूमिलाई
रात हो अहिले भोलि बिहान हुन्छ
विश्वास मेरो यो दिउँसो सपना होइन ।

रात हो विश्रामको समय
निदाउन खोज्छु तर सकेको होइन
तासजुवाको हल्लाखल्ला, सुत्न पाइएको होइन
तिहार रे, यस्तै हुन्छ रे, भइरहेछ ।

रात सायद एक्लो हुन्छ
म एक्लो छु, यसैले रात छ कि म छु
आधा रात भो अहिले निदाउन सकेको छैन
बेसमारी सुत्नु हुन्न, यो पनि बिर्सन सकेको होइन ।

रात कस्तो भयावह भएको
अँधेरो छ; दीयो र मोमबत्ती अनि बिजुलीले पनि
सकेको होइन यसलाई हटाउन भनौँ आउन नदिन
हार्न जानेकै छैन जस्तो छ रातले, अँधरो बढ्दो छ ।

रात आउँछ हो तर जानैपर्छ उसले
बिहान आउँछ अनि दिन

अनि मानिस उज्यालोमा जाग्छ
रातमा सुत्छ, सुत्ने र उठ्ने क्रम यस्तै हुन्छ ।

रात हुन्छ, हो रात हुन्छ
बिहान हुन्छ अनि दिन आउँछ ।

०००

रात हुन्छ, हो रात हुन्छ
बिहान हुन्छ अनि दिन हुन्छ
रात र दिन यस धर्तीका
अनि मानिसको भाग्य बन्छ ।

रातमा सुत्ने अनि विश्राम गर्ने
बिहानमा उठ्ने मानिस हुन्छ
काम र कर्तव्य उसको त्यो दिउँसो हुन्छ
मध्यान्ह यो जीवनकै उज्यालो बन्छ ।

रात अँध्यारो हुन्छ, चुक खन्याएझैं तर
दिन उज्यालो हुन्छ टकटकी सब देखिने
घाम हुन्छ उज्यालो त्यो न्यानो पनि हुन्छ
झलझलायमान त्यो जीवन र जगत् छर्लङ्गिन्छ ।

जीवन हुन्छ जगत्मा
जगत् हुन्छ जीवनमा अस्तित्व त्यसैमा उसको परिलक्षित
आरक्षित यही त उज्यालोको
रात होइन दिनको हो मानिसको ।

## सूर्य

सूर्य उदाएको यहाँ कति ठूलो
भूगोलजस्तो रातो गोलो, अझ गोलो
लोलोजस्तो तर होइन त्यस्तो होलो
रातले रङ्गिएको रक्ताम्यै जस्तो देखिने नौलो ।

लाग्ने यहाँको चालढाल आजभोलिको नौलो
अमिलो होइन मीठो रूसीहरूको औलोदौलो
खलिखाएका मान्छे यहाँका केस पाकेका
इतिहास र संस्कृति यिनको सुनौलो-सुनौलो ।

खेलेजस्तो हामी यहाँ आउनेले भैलो
दसैं होइन तिहार होइन तर यहाँ दीपावली सधैंजस्तो
देउसुरे चारै सुर भन्छन् यी पनि आजभोलि भैलो
सम्बन्ध, सद्भावना र मित्रता उदाइरहेछ
सूर्य बनेर ठूलो-ठूलो । ❑

# आँसुको पोखरी (शोकगीतिका) छोटो चर्चा



■ डिल्लीरमण शर्मा अर्ज्याल
जन्म : वि.सं. १९८८ चैत्र ७
नलाङ, आप्रीछाप, धादिङ
अवसान : वि.सं. २०७२ साउन ४

समालोचक डा. प्राध्यापक रविलाल अधिकारीज्यूसँग २०५७ साल चैत्र ३ र ४ गते धादिङ साहित्य समाजको आयोजनामा सम्पन्न राष्ट्रिय कविगोष्ठीमा सर्वप्रथम सामान्य परिचय भएको थियो । राष्ट्रिय कविगोष्ठीमा पाठ गरिएका कविताहरू **बिसौनी** नामक धादिङ साहित्य समाजको मुखपत्रमा प्रकाशित भएपछि त्यसको लोकार्पण पनि २०५८ साल मङ्सिर महिनामा डा. रविलालज्यूबाट नै भएको थियो । त्यति बेला एक रात मेरै घरमा बस्नुभएको थियो । त्यति बेलै मैले उहाँको विशेष परिचय लिनुपर्थ्यो, लिइएन । त्यो मेरो गल्ती थियो । **जमर्को** नामक पत्रिकामा राइकै रने हो हरिप्रसाद पनि शीर्षकको संस्मरण र **जनमत** मासिक पत्रिकामा तीन-चारवटा समालोचनाबाहेक उहाँका प्रकाशित कृति मैले पढ्न पाएको छैन । केवल एउटा उहाँकी आमा स्वर्ग भएको शोकमा लेखिएको **आँसुको अँजुली** (शोक गीतिका) उहाँले नै मलाई दिनुभएको थियो । एउटा उहाँले मलाई पैंचो लगाएर म ऋणी बनेको छु । समाजमा पैंचो नतिर्ने मान्छेलाई समाजबाट बाहिऱ्याउँछन् । म पनि पैंचो नतिर्ने मान्छे बनिन्छु कि भन्ने डरले म पैंचो तिर्न तयार भएको छु । वरिष्ठ समालोचक डा. प्राध्यापक रविलाल अधिकारीज्यूको मजस्तो सामान्य व्यक्तिले पैंचो तिर्न खोज्नु बाउन्नेले अग्लो रूखमा फलेको फल टिप्न खोज्नुजस्तै हो वा पौडन नजान्ने मान्छेले सप्तकोसी तर्न खोज्नुजस्तै हो अथवा अँध्यारामा जँघार तर्न खोज्नुजस्तै उपहासको पात्र त बनिने होइन ? जे होस्, आँटी छोरालाई बाघले पनि खाँदैन भन्छन् । त्यसैले आँसुको अँजुली शोककाव्यको चर्चा गर्न लागेको छु ।

**आँसुको अँजुली शोककाव्यको स्वरुप र प्रस्तुति :**

वरिष्ठ समालोचक डा. प्राध्यापक रविलाल अधिकारीज्यूकी माता राधिका अधिकारीको शोकमा यो काव्य जन्मेको हो । २०४० साल फागुनमा कलम रोएको सुनिएको थियो । २०४१ साल साउन महिनामा प्रकाशित भएको देखिन्छ । यो शोककाव्य महाकवि लक्ष्मीप्रसाद देवकोटाको **मुनामदन** काव्यको शैलीमा लेखिएको छ । उक्त शैलीमा ३, २, ३, २, ३, ३, सोह्र अक्षरहरूको एक पाउ हुने गीति शैलीमा लेखिएको मौलिक शोककाव्य हो । यसमा दसवटा शीर्षकहरू छन् भने जम्मा १३० गीतहरू गाइएका छन् । यो काव्यको सिरानमा बोल्नुपर्ने कुरा शीर्षकको भूमिका शास्त्रीय शार्दूलविक्रीडित छन्दमा लेखिएका नौवटा श्लोक छन् । यस शीर्षकमा गीतकारले आमाको वियोग खप्न नसकी सधैं रूँदा कलममा झरेको आँसुले यो काव्य जन्मेको छ । ती दुःखका दिन सम्झेर गीतकारले गीत गाउनुभएको हो । आफूलाई आइपरेको दुःख अरूलाई सुनाउँदा वा बाँड्दा आफूमा केही हलुका हुन्छ । यो विरहको गीत अरूले सुनून् या नसुनून्, गीतकार रूँदै पढ्नुहुन्छ । अन्तरात्मा रूँदा अरूले थाहा नपाऊन् भनी दिलभित्रको ताप हलुङ्गो होला भनी गीतकारले अन्तरात्माको पीर हटाएर शान्त हुन खोज्नुभएको छ । यो काव्य गीतकारको दृष्टिमा आँसुका थोपा गन्न सजिलाका निम्ति शोककाव्य निर्मित भएको हो । आँसुको कुनै सिलसिला हुँदैन ।

पत्रमा विरहका आँसुले आँखा चिसा भएका मात्र भेटिन्छन् । रून्चेले रूँदा उसलाई थाहा हुँदैन । राम्रो कलाको पनि खोजी गर्दैन । ऊ त बिसुरमा गला फारेर रोएको हुन्छ । गीतकारलाई आमा हुनेहरूले मलाई यो त कस्तो रून्चे रहेछ भन्छन् कि भन्ने डर पनि लागेको छ तापनि आमा मरेको भूमिका सुन्याइँ गरेर नरोई हाँसेर कति बस्न सकौंला र ? यो असम्भव छ भन्ने कुरा पनि पोख्नुभएको छ गीतकारले । जन्मेदेखि मैले बाँच्नका लागि जेजति गर्न सकैँ ती सबै आमाको आशीर्वादले नै हो । आज आमाले कहिल्यै नफर्कने गरी मलाई छोडेर जानुभयो । म नरोएर सुख पाउँछु ? मेरो मातृविरहको व्यथा बाँड्ने साथी पाएँ भने मलाई सन्तोषै हुन्छ र मेरो दिलको भार हलुङ्गो हुने कुरा व्यक्त भएको छ । उमेरमै आमा मरेर बिलौना गरी रून्छन् जो विरहको व्यथा निको पारेर बाँच्दछ, त्यस्तैलाई यो आँसुको पीडा हलुङ्गो हुने कुरा र यो आँसुको पीडा सुम्पेका कुरा गीतकारले शोककाव्यको भूमिकामा अभिव्यक्त गर्नुभएको छ ।

डा. गीतकार रविलाल अधिकारीकी आमा राधिका अधिकारीको शोकमा लेखिएको शोककाव्य हो । **स्वार्थका आँसु** नामक शीर्षकमा चौधवटा गीतहरू छन् । यसमा आमाले बेलैमा अभागी छोरालाई छोडेर जाँदा मनले पत्याउँदैन, मरेको पक्कै हो । मर्नेले संसार बिर्सियो, बाँच्नेलाई हैरानी थुप्रियो । म नोकरीमा जानुपर्छ । काम नगरी बढेकी बुहारीले अब निर्वाह कसरी गर्छिन् ? सासू मरेर म घरकी मालिक्नी भएँ भन्ने सोच्लिन् तर साना छोराछोरी कसरी हुर्काउँछिन् । एक्लै घरको धन्दा गर्नुपर्दा बुहारीले सासूको सम्झना नगरी सहन सक्छिन् ? रून मन नलागे पनि अरूको अगाडि रोएझैं गर्नैपर्छ । छोरो भोकाएको बेला कसले खान देला ? उनीबाट जन्मेको भए पनि सिहार त आमाबाटै भएको हो । नातिनी जन्मेर आमैलाई टोकी । कस्ती औजसे रहिछे । म सानो छँदा बाबा स्वर्ग भए पनि अभागी भए पनि आमाले घर धानेर मैले पढ्न पाएँ । दैवले आज मेरो शिरमा घनले ठोक्यो भनी गीतकार भन्नुहुन्छ ।

चौधवटा गीत भएको **व्यथाको कथा** नाउँको दोस्रो शीर्षकमा आमाको जीवन-कहानी दुःखै दुःखमा सकियो । मनको धोको नपुग्दै कालले पासोले बाँधिएर आमा गएकी कुरा पोखिएका छन् । बिहा हुने आस मारेर बसेका नपढेका पैतीस वर्षे बूढाको साथ बाह्र वर्षकी कलिली दुलही आमा भित्रिएकी थिइन् । त्यति बेला धनीका छोरा सात-आठ वर्षका हुँदैमा अर्काले भ्याउछ भनेर छ-सात वर्षकी छोरी सुम्पिहाल्थे भने गरिबका छोराहरूको बिहा कि त साटो हालेर गर्नुपर्थ्यो कि त किनेरै गर्नुपर्थ्यो । गीतकारका पिता गरिब भएकै कारण ३५ वर्षमा बिहा भएको होला भन्ने अनुमान गर्न सकिन्छ । बाबाले खेत देखाई रिन गरेर जूवा खेलेका हुँदा अर्काको अधियाँ खेती गरेर छोराछोरीको मुखमा जाउलो पारेको कुरा व्यक्तिएको छ । आमाले आफ्नै पेवा भैंसी बेचेर खेत निखनेकी हुँदा गीतकारकी आमा अत्यन्त परिश्रमी रहिछन् । उनले छातीमा मुड्कीले हानेर छोरा रविलाललाई पढ्नबाट नरोकेकाले काशीमा गई पढेर आएपछि गाउँकै मास्टर बनेको, केही समयपछि घर आमालाई जिम्मा लगाई गीतकारले श्रीमती र छोरालाई समेत साथमा लिएर पोखरातिर आएको, आमाले दुःखैदुःखमा जीवन समाप्त पारेको कथा बयान गरिएको छ ।

चौधैवटा गीतको **मनको धोको** नाउँको तेस्रो शीर्षकमा जिन्दगीको कहानी आँसु र हाँसो हो तापनि कहिल्यै आमाले हाँसोमा रम्न नपाएकी भीर, वन, पाखो, खेत, बारी गर्दागर्दै जीवन दुःखमै बित्यो । छोरो पढाएकाले गाउँको दुःख छोडेर छोराको साथमा सबै परिवार हाँसीखुसी बसौंला भन्ने आमाको धोको पूरा नभएको र गरिब परिवारमा दुःखैमा जन्मन्छ, दुःखैमा हुर्कन्छ, दुःखैमा दौडिन्छ । आखिर सुखको दिन कहिल्यै नआई दुःखैका रापले पोली जीवन बित्छ भन्ने दुःखीहरूको जीवनलाई गीतकारले तलको गीतले देखाउनुभएको छ : *दुःखैमा जन्म्यो, दुःखैमा हुर्क्यो, दुःखैमा दौडियो, ममताभित्रै सुखको आशा बोकेर पौडियो, आखिर बित्छ जीवन पोली दुःखैका रापले सुखको दिन आउँदैन कैल्यै नपोल्ने तापले ।*

चौधवटा गीतको **पौरखको पाठ** नाउँको चौथो शीर्षकमा घरधन्दाले बाँधिनुभएका गीतकार आमा जीवितै छँदा पढ्न, लेख्न फुर्सद पाउनु भएका तर आमा स्वर्ग भएपछि सबै कुरा समाप्त भएर गएका कुरा व्यक्तिएका छन् । बाबालाई पहिल्यै खाएको र आमालाई पनि खाएपछि आफैँ बूढो भएकोले चुरीफुरी हराएको, भेटिने जतिले समवेदना दिन्छन् । भविष्यका सुखको कल्पना गरी पढाउँछु भनेर छोराकी आमालाई साथमै लिई नौ डाँडापारि आउँदा पनि गाउँको घरमा मेलापात गरी आमा दृष्टान्त बनिएकी बेहोरा बयान गरिएको छ । गीतकारले आमाको प्रशंसा गरेको तलको गीतले छर्लङ्ग पार्नुभएको छ : अपढ नारी भए तापनि साहसी बनेर, इन्साफ गर्थ्यौ परेको बेलामा यसै हो भनेर, विचार गर्ने पेटमा थियो ज्ञानको अन्सार सुख र दुःख भोगेकी मान्छे बुझेकी संसार ।

शोककाव्यका नौवटा गीतको **विवशता** नाउँको पाँचौं शीर्षकमा गीतकारले आमाले बेलैमा छोडेर जाँदा आफूमा दैवको लाठी बज्रियो । बाआमा मर्न त मर्छन्, नियम सुल्टै

हो तापनि दैवले दया राखेन । जीवनदेखि वाक्क भएका मरेनौ भनी रोगले ग्रस्त भएर रून्छन्, उमेरदार मैरे आमालाई कालले लग्यो । विधिको नियाँ सुल्टो हो कि उल्टो, अन्याय सम्झेर पनि जुध्न नसकेका कुरा उकेलिएको छ । दूधको गर्वले मेरो प्रगति देखेर को हाँस्छ ? अब यो धर्ती कुल्चन पाउन्नौ, तिमीलाई उमेरमै लैजाँदा पनि सहेरै बस्नुपर्ने विवशता व्यक्त भएको छ । जो रोगी बूढा मर्न खोज्छन् तर बाँच्नुपर्दा रून्छन्, जो धेरै बाँच्न खोज्छन्, ती कालका छिटै आहार बन्दछन् भन्ने तलको गीत हेरौं :

जो मर्न खोज्छन् रोगी र बूढा बाँचेर रून्छन् ती, जो बाँच्न खोज्छन् ती कालका छिटै आहार बन्छन् ती, लागू छ यस्तै विधिको नियाँ निर्दयी चालाको, तैपनि उजुर लाग्दैन कहिल्यै अँह्निनेवालाको ।

नौवटै गीतको **पिँजडाको पन्छी** नाउँको छैटौं शीर्षकमा आमाकै बरखी बारेर कसरी बसूँ ? म पूर्वतिर लागे मावली रून्छन्, पश्चिमतिर लागे बहिनी-जुवाइँ रून्छन् । म कता जाऊँ मनको डाहा शीतल पार्न र आँसु झार्न । घरधन्दाको फन्दामा परेर आमा कहाँ छिन् खोज्न, डुल्न पनि नपाएको मरनघाटमा खरानी पारे पनि कतै जुम्लुङ्ग आमा भेटिने विश्वास गर्नुहुन्छ गीतकार । सासू-ससुराले पनि अब छोरी माइत आउँदिन, सासूको कुरा लाउन पनि पाउँदिन भन्ने बयान गर्नुभएको छ गीतकारले ।

नौवटै गीतको **नबिर्सिने इतिहास** नाउँको सातौं शीर्षकमा आमाले पसिना चुहाएर घरको जग बसालेको हो र मेरो अवस्था सुधारेको हो । तिमीले जीवन दियौ, चाहेको कुरा पुऱ्यायौ, भोकतिर्खा नभनी आमाले गरेको दुःख सम्झेर गीतकारले भन्नुभएको छ – आमाले जस्तो दुःखको जीवन शत्रुले नपाओस्, तिमीले लगाएको रिन बिर्सिएर म हिँडें भने मासिएस् भनेर सराप द्यौली भनी गीतकार डराउनुभएको छ । साथै आमाको मर्म र व्यथा नगने आफू कहिल्यै नगनिने, गुन बिर्सेर कृतघ्न बने म मान्छे नै भनिन्न । म प्रतिज्ञा गर्छु, कबोल गर्छु, वचन दिन्छु तिम्रा आँसु र पसिना राम्ररी चिन्छु भनी अभिव्यक्त गर्नुभएको छ । गीतकारले तेस्रो लाइनमा एउटै अर्थका तीनवटा शब्द – प्रतिज्ञा, कबोल र वचनबाट पुनरूक्ति दोष पार्नुभएको छ ।

चौधवटा गीत भएका **चाखिलो मरन** नाउँको आठौं शीर्षकमा आमा माघ महिनामा स्वर्ग भएकोले किरिया राम्ररी गरियो । छोराछोरी सबैले घेरेर भएको मरनमा अन्नपात घरभरि भएको बेला छोडेर जानुभएको हो । रोग लागेर दुःख सहनुपरेन । हेलाँ भएर बाँचिरहन परेन । यस्तै मरन हामीले पनि पाउँला कि ! मेरी आमाको मरन देखेर हर्षित भएझैं देखिन्छन् । राम्रो मरन देखेर रहर लाग्यो होला । रिसाउन पनि भएन । उमेर छँदै कसैले मर्न नपरोस्, चीँ चीँ भएर बाँच्न पनि नपरोस् भन्ने गीतकारको पनि विचार बुझिन्छ । घीन मानेर कसैले छिःछिः र दुरदुर कसैले गर्न परेन । स्वर्ग छ भने म रोएर बसे पनि तिमी हाँसेर बसे भनी गीतकारले इच्छा प्रकट गर्नुभएको छ । किरिया बस्दा साँझमा दैलोमा बत्ती बालेको, तिर्खा मेट्न पानी र घाममा ओड्न छाता दान गरेको, घाटमै लगेर नातिले दागबत्ती दिएर खरानी पारेर सतगत गरेका क्षेत्र बसेर स्थान गरी ढिकुरोमा तर्पण, पिण्ड दिएको, छोराले गर्नुपर्ने साँडेसाँडी, सपिण्डी गरेको, प्रेतत्वबाट छुटी स्वर्गमा जान्छ्यौ भनी अन्त्य अवस्थामा गर्नुपर्ने हिन्दूधर्मअनुसार सबै काम गरेर आमाका लागि भारा गच्छेअनुसार सम्पन्न गरेको कुरा गीतकारले बयान गर्नुभएको छ ।

चौधवटै गीत भएको **टुटेको नाता** नाउँको नवौं शीर्षकमा डाक्टर गीतकारको भनाइ छ – अब आमाको मधुरो स्वर सुन्न पाउँदिनँ । दुलही ! अब सासू ढस्केर बोल्न आउँदिनन् । छोरा ! तिम्रो सुसार गर्ने आमाको मुखमा आगो लगायौ, आमै अब आउन्नन् । पाँचै महिनाकी छोरी । तिमी औजसे देखियौ । व्यर्थै किन खिसिक्क हाँस्छ्यौ ? सुसार गर्ने हजुरआमा मरेर गइसकिन् । अब बहिनी पनि माइत आउन्नन् । गाईको दूध शिवजीलाई चढाउन करायुटारमा आउँदिनन् । यी पङ्क्तिकारले सानैमा गीत सुनेको थियो – *भालेपोथी जुटेका छन् मौरी घारैमा तिमी हामी भेट गरौं कर्पुरटारैमा ।* तर उहाँ लेखिएको छ करापुरटारमा । प्रेसमा गल्ती भएको हो वा त्यही नै ठीक हो, मलाई थाहा छैन । राधिका बज्यै अब गीतको भाकामा दुःखको कथा गाउँदिनन् । उनी गइसकिन् । गाई, गोरू, भैंसी, खेत, बारी, पर्खाल, कुलो भत्के पनि बनाउन राधिका आउन्नन् । अब घरको भित्री, बाहिरी सिंगार हुँदैन । किनकि घरकी लक्ष्मी गइसकिन् । घाँसपात वन सबै मासिन्छौ, रक्षा गर्ने शक्ति गइसकिन् । द्यौ-द्यौता, नागनागिनी, सीमे-भूमेलाई पूजा, धूपधुँवार कसले गर्छ ? तिमीहरू सबै अब उदार बन । आमाको चोला पौरखी थियो, हात लच्छिनको । सोचविचार राम्रो थियो । अहिले यी सबै गए । अब त्यहाँ बाँकी छ – कालको आहार नभएसम्म आँसुको सहारा बाँच्नैपर्ने ।

उनन्तीसवटा गीत भएको **रूने रहर** नाउँको दसौं शीर्षकमा गीतकारले मान्छेहरू हो ! वैरागी मलाई हाँसेन भनी नभन । पुर्ख्यौलीबाटै मुखमा हाँसो आएन । बा, आमा, म कहिल्यै हाँसेनौं । किनकि देखेको सपना कहिल्यै कसैको पनि पूरा भएन । यसबाट के बुझिन्छ भने गीतकारको गरिबी पुस्तौंदेखि परम्परा हुँदै अहिलेसम्म लिसो टाँसिएझैं

टाँसिएको छ । गीतकारले आफूलाई अभागी, जोगी वा आमालाई बेलैमा टोक्ने बताउनुभएको छ । के हँसी, के खुसी, के शान्ति र सुख हुन्छ । बेलैमा बाआमा स्वर्ग हुँदा टुहुरा भई बाँच्नु साह्रै दुःखदायी पीडाको अनुभूति गर्नुभएको छ गीतकारले बाआमा दुःखैदुःखमा पिल्सिएर असमयमै बिते । म पनि दुःखको बेलामा आँसु बगाई रून्छु, आँसुमा रून द्यौ भन्ने तलका मार्मिक गीतहरू पढौं – *धर्तीको निम्ति दुःखको भारा जून र घामको, म रून्छु सम्झी मर्म र व्यथा बाबा र आमाको रोएर मन हलुङ्गो हुन्छ आँसुमा रून द्यौ, रित्याई आँसु जलेको मुटु शीतलो हुन द्यौ, नरूने पनि गर्दछ त्यति रूनेले गर्छ जे, रूनेले आँसु बगाउँछ बढी रोएर हुन्छ के ? भन्दछौ मान्छे तैपनि पिरा आँसुमा रोएर, हलुङ्गो हुन्छ मनको ताप वेदना फोएर, दर्शन, नीति, आदर्श हाम्रा जे भनून पेलामा, सक्दैन मान्छे नरोई बस्न दुःखको बेलामा, त्यसैले रून्छु बगाई आँसु आँसुमा रून द्यौ, सुस्ताओस् ताप रित्याई आँसु शीतलो हुन द्यौ ।*

डा. रविलाल अधिकारी (गीतकार) ले आफ्नो जन्म दिने जननीको शोकमा लेखिएको **आँसुको अँजुली** नामक शोकगीतिका काव्य ज्यादै प्रभावशाली छ । यसले समाजलाई तुरून्त प्रभाव पार्छ । यो काव्य पढ्ने पाठक पढ्दापढ्दै गला रूँधिएर पढ्नै सक्दैनन् । पाठक मात्र होइन, स्रोताहरूका पनि सुन्दासुन्दै आँखा रसाएर आइहाल्छन् । विशेषगरी आमा नहुनेहरू त पढ्दापढ्दै वा सुन्दासुन्दै मुर्च्छितजस्तै हुन्छन् । वास्तवमा असल काव्य त्यही हो जसले समाजको मनलाई चुम्बकले फलामलाई तानेझैं तान्न सकोस् ।

यस शोककाव्यमा गीतकारले आफ्नो जन्मथलो, जिल्ला, गाविस, वडा, टोल, बाबा कति वर्षमा स्वर्ग भएका हुन्, आमा कति वर्षको उमेरमा स्वर्ग भएकी हुन्, नातिले दागबत्ती दिएको कुरा काव्यमा उल्लेख गर्नु भएको छ । ऊ कति वर्षको थियो । गीतकारका दाजुभाइ थिए वा थिएनन् । एउटी बहिनी थिइन् भन्ने काव्यमै उल्लेख छ । गाउँको घरबाट नोकरी गर्न पोखरा आएको कुरा उल्लेख धेरै ठाउँमा भएको छ । त्यो गाउँ कुन हो यिनीहरूको उल्लेख शोककाव्यमा भइदिएको भए सुनमा सुगन्ध आएजस्तै हुने थियो । बरू गाई, गोरू, भैंसी, पाडो, घर, गोठ, पर्खाल, खेत, कुलो, बारी, बाँस, घाँस, रूख, विरूवा, आदिको शोककाव्यमा उल्लेख भएको पाइन्छ । महत्वपूर्ण कुराहरूको उल्लेख नहुनुले गीतकारको कमजोरी अवगत हुन्छ ।

यस **आँसुको अँजुली** शोककाव्यमा अङ्गी (मुख्य) रस करूण छ । आफ्नो प्यारो वस्तु (आमा)को विनाशबाट करूण रस उत्पन्न भएको छ । यही भाव करूण रसको स्थायी भाव हो । यसैलाई शोक भन्दछन् । मरेकी आमा आलम्बन र आमाका गुणहरू र तिनीहरूलाई सम्झाउने वस्तुहरू (चीजहरू) उद्दीपन विभाव हुन् । रूनु, विलाप गर्नु आदि अनुभाव र मूर्च्छा, उन्माद, ग्लानि, चिन्ता आदि व्यभिचारी भाव हुन् । अङ्गीभूत करूण रसलाई अङ्गभूत वीभत्स रसले सहयोग गरेको छ । घीनलाग्दा चीजहरू देख्दा मनमा एक किसिमको क्षोभ (चञ्चलता) लाई घृणा भनिन्छ । यही भाव वीभत्स रसको स्थायी भाव हो । गन्हाउने, फोहरी चीजहरू आलम्बन र त्यस्ता चीजहरूमा स्याउँस्याउँती कीरा परेर ठसठसी गन्हाउनु उद्दीपन विभाव हो । वाक्क आउनु, थुक्नु, नाक छोप्नु, थुःथुः गर्नु, छिः छिः, दुरदुर गर्नु अनुभव र ग्लानि, रोग आदि व्यभिचारी भाव हुन् । वीभत्स रसको एउटा उदाहरण, जस्तै : गुहु र मूत फालेर सुसार गर्न नै परेन, मानेर घिन छिःछि र दुरदुर कसैले गरेन । यदि यस्तो गर्न परेको भए वीभत्स रसले करूण रसलाई बेसरी सहयोग पुर्‍याउँथ्यो । त्यस्तो गर्न नपरेको हुँदा पनि अलिअलि सहयोग त पुर्‍याएकै छ ।

यस **आँसुको अँजुली** शोककाव्य अन्त्यानुप्रास अलंकारले सिँगारिएको छ । उदाहरण जस्तै – *अर्काको खेत अधियाँठेक रोपेर दुःखमा, पारियो जाउलो छोरा र छोरी सबैको मुखमा ।*

पूर्णोपमा अलंकार जस्तै :

*मानेर मेरो पर्खाइ लामो अल्पायु मानेझैं*
*म मरिहाल्छु भन्दथ्यौ तिमी हतास भएझैं ।*

सहोक्ति अलंकार जस्तै :

*सुसार तिम्रो हुँदैन अब बिग्रेर जाँदैछौ*
*सिद्धियो भाग्य अस्ताइन् लक्ष्मी हन्डर खाँदैछौ ।*

जसरी गहनाले चिटिक्क पर्छ महिला, त्यसै गरी काव्य अलंकारहरूले चिटिक्क परेको हुन्छ । यस काव्यमा प्रायः शब्दहरू समास नभएका वा छोटा समास भएकाले प्रसाद गुण छ । त्यसै गरी वैधर्मी रीतिप्रधान काव्य हो ।

अन्त्यमा गीतकार अधिकारीले आफूलाई जन्म दिने दसधारा दूधले जीवन बचाउने, ममताले हुर्काउने र पढाउने आमाको शोकले झरेका आँसुका धाराले निर्मित **आँसुको अँजुली** शोकगीतिका प्रकाशित गरेर शोकले पीडित मनलाई शान्त पार्ने यो काव्य सह्राहनीय छ । सन्तान जन्माएर हुर्काउँदा आमाबाले जति दुःख भोगेका छन्, त्यसको रिन सयौं वर्षसम्म सेवा गर्दा पनि तिर्न सकिँदैन भन्ने नीतिश्लोक छ – **यं मातापितरौ क्लेशं सहेते सम्भवे नृणम् न तस्य निष्कृतिं कर्तु शक्यं वर्षशतैरपि** ॥ उक्त श्लोकानुसार गीतकारले आमाको केही रिन तिर्नुभएको छ भने अर्कोतर्फ समाजका निम्ति अनुकरणीय शिक्षा पनि दिनुभएको छ । ❑

# विचारान्तर परिप्रेक्ष्यमा उत्तरवर्ती



▮▮▮ थाम्सुहाङ् पुष्प सुब्बा
जन्म : वि.सं. २००५ माघ ७
लुङजक्यवा, याङ्नाम, पाँचथर
अवसान : वि.सं. २०७२ मंसीर १५

विचारान्तरले एउटा विचार जन्म्यो उत्तरवर्ती । त्यसलाई लीलाले भ्रम ठान्छ, सिर्जनशील अराजकताले सशक्त विचार र रङ्गले दुवै ठान्छ । त्यस्तै उत्तरआधुनिक खेमाका केही समालोचक र टिप्पणीकारहरू पनि आ–आफ्नै सुविधाको विचार राख्तछन् । काठमाडौँभन्दा टाढा सुदूरपूर्वको मोफसलमा एउटा विचार हुर्केको पक्ष स्वीकारेरै पनि प्रकारान्तरमा गाभ्छन् उत्तरवर्तीलाई ईश्वरबल्लभ । बहुलता चाहनु र वैश्विकीकरण अमान्य हुनुले आफैँमा अन्तर्विरोध देख्छन् डा० गोविन्दराज भट्टराई उत्तरवर्ती विचारमा । म देख्छु वैचारिक अन्तरले स्वयंबोधता र जातीय स्वपहिचानको अस्तित्वबोध उत्तरवर्तीभित्र । देख्नु र वैचारिक चिन्तनको पृथकीकृत तकाजाभित्र त्यसैले उत्तरवर्ती विचारलाई घोषणा र लेखनगत पनि पर्गेल्नुपर्ने हुन्छ । तर लेखनगतभित्र जातीय मिथकहरूको र राष्ट्रिय भाषाको यथेष्ट प्रयोगका कारण पर्गेल्नु त्यति सजिलो भने लागेको छैन । र नै भन्दै आएको छु – त्यति विघ्न अनेक प्रकारान्तर र विचारान्तरका बहुकेन्द्रीयताहरूको निर्माण नेपाली साहित्यभित्र भइसकेर पनि सम्मानजनक नेपाली राष्ट्रिय साहित्यको मर्दकेन्द्र निर्माण हुन सकेको छैन ।

बाँकी वैचारिक अन्तरताको परिप्रेक्ष्यमा उत्तरवर्ती समीप पुग्न सर्वप्रथम त उत्तरवर्ती विन्दुसमूहको घोषणापत्रतिरै उन्मुख हुनुपर्छ जसलाई राष्ट्रियताको तोलमोल गर्ने एकाधिकारवादीहरूको मर्दकेन्द्रभित्रै दमित अवस्थामा राखिँदा वैचारिक उत्खननबाट अझै नयाँ र सशक्त रूपमा उजागर गरिएको विचार ठान्दछन् पान्थरेली उत्तरवर्तीहरू । घोषणापत्र –

१. तथाकथित भूमण्डलीयकरणको अस्वीकार ।
२. समग्रतावादी सार्वभौमिक सत्यको अस्वीकार ।
३. स्वस्वायतता र आत्मनिर्णयको अधिकारको दावी ।
४. बहुलवादी नेपाली साहित्यमा नयाँ अस्तित्वको दावी ।
५. नेपाली साहित्यमा समग्र राष्ट्रिय साहित्यको समान मान्यताको दावी ।
६. उत्तरआधुनिक साहित्यनिर्माणमा पूर्वीय चिन्तनको सैद्धान्तिक खोज ।
७. सत्ताशक्तिनिर्मित इतिहासको अस्वीकार ।

उपर्युक्त घोषणाहरूका आधारमा आफ्नो वैचारिक अभिव्यक्ति राख्नुपर्दा स्थानिक र राष्ट्रियभन्दा बाहिर विश्वकै तोलमोल गर्नुपर्ने अवस्था उपस्थित छ । तर तेस्रो आयामयताका साहित्य सन्दर्भका वैचारिक प्रकारान्तरमा उत्तरवर्ती विचार भने विविध सम्मिश्रित विचारान्तरसहित स्वयंबोधताको विन्दुमा उजागरित देखिन्छ । त्यसैले अन्तर आँकडालाई छाडेर वैश्विकीकरण र बहुलताबारे केही भन्नुपर्दा आजको शताब्दीले पनि एक विश्व, एक राष्ट्र, एक भाषा र संस्कृतिलाई मान्यता नदिएर बहु राष्ट्र, भाषा र संस्कृतिलाई नै मुखरित गरिरहेको अवस्था छ । त्यसैले एकल

सत्तावादी वैश्विकीकरणबाट विश्वमा अटाउन खोजिएको सम्पूर्ण मानव अवस्थितिलाई आ-आफ्नै राष्ट्रियता, सार्वभौमसत्ताको लक्ष्मणरेखाले छुट्याएको छ, र नै बहुलता छ । त्यसैकारण एकल विश्व र बहुराष्ट्रको परिभाषामा पनि अन्तर भएकाले मौलिक स्वअस्तित्वको उत्तरवर्ती रोजाइ वर्तमान युगको प्रतिनिधि हो ।

नेपालका ऐतिहासिक कालखण्डहरूमा समग्रतावादी खेलहरू आउँदा अनेकन् युद्ध, सन्धि र सम्झौताहरू नभएका, नतोडिएका र आन्तरिक उपनिवेशले समग्रताको घाँटी ननिमोठेको पनि होइन । अतः इतिहासगत तायदातीले निरीह बन्न पुगेका समग्रताका पक्षधरहरूमा युगले चेतना भर्दा समग्रतावादी सार्वभौमिक सत्यबाट आफूलाई अलग पाउनु व्यावहारिकता र चेतनाबोध दुवै हो । यही प्रत्यक्ष व्यवहारगत चेतनाले स्वयंबोधताको पक्ष उजागर गरिसकेपछि आफैँलाई स्वतन्त्र ठम्याउँदा बेदखलरहित स्वेच्छाले आत्मनिर्णयको स्वायत्त अधिकार दावी गर्नुले उत्तरवर्ती विचार स्थानिक एवं सामाजिक धरालतमा निर्भयतापूर्वक उभेको ठहर लाग्छ । अझै नेपालको साहित्यिक रङ्गभूमिमा युगौँ अगावै हुर्केका र वर्तमानको मध्यवर्ती वा सीमान्तवर्तीसम्म फस्टिएका राष्ट्रिय साहित्यहरू एकल नेपाली नामधारी साहित्यको सत्ताभित्रै लोप गराइनाले समानान्तर विकसित साहित्यको अभावमा नेपाली साहित्य अपाङ्ग ठहरिने विचारलाई पनि समग्रमा बहुलतामुखी ठान्नैपर्छ । त्यसैले उत्तरवर्ती विचार बहुकेन्द्रीयताको निर्माण र नेपाली साहित्यको आधुनिकोत्तर मार्गचित्रको हैसियतमा उजागर भएको ठान्नु लज्जाजनक ठहरिँदैन । कारण, यसभित्र स्वअस्तित्वबोधता र परिवेशजन्य स्थानिक, सामाजिक, सांस्कृतिक, राजनीतिक एवं राष्ट्रिय साहित्यप्रतिको उत्तरचिन्तन भेटिन्छ ।

उत्तरआधुनिक नेपाली साहित्यका सन्दर्भमा त्यसो त सर्वप्रथम 'लीला' को दावी छ पूर्वीय सैद्धान्तिक परम्पराका बारे । तर त्यसलाई आत्मसात गर्दा नेपाली साहित्यको प्रारम्भ वा संस्कृत साहित्यका योगी, ऋषि र भक्तिवादतिरै उन्मुख हुनुपर्ला । कारण, लीलामा आएको लेखनधर्म प्रायः पुरातनकै विनिर्माणीकरण र आधुनिक नेपाली साहित्य लेखनको पनि विनिर्माणीय आस्थामा बाँचेको देखिन्छ । यो स्पष्ट उल्लेख गरिसकिएको छ – स्वयं अबोधताका कारण पूर्वीय सैद्धान्तिक मूल्य र मान्यताको ठोस निष्कर्षको अभावमा अर्काकै नक्कल र देखासिकीमा रमाउन हामी व्यस्त छौँ, जहाँ यथार्थ, मूर्त र संज्ञानका पक्षहरू जीवन बाँच्नका लागि अवलम्बन गरिन्छ त ती सबै अतियथार्थमा भ्रम मात्रै मान्ने हो भने मानवीय अस्तित्वको मूल्य र मान्यताको आवश्यकता किन ? यही प्रश्नले बिथोल्दा क्षणभङ्गुर जीवनको सार्थकताका निमित्त पनि पूर्वीय चिन्तनको सैद्धान्तिक परम्परामा मौलिक लेखनगत सिद्धान्त प्रतिपादन हुनुपर्‍यो । अतः यी अवधारणाहरूको आशावादी चिन्तनभित्र पराभौतिक, अमूर्त र उत्तरसंज्ञानका पक्षहरू मात्रै ल्याइनु भएन – कारण यसबाट उपदेशरहितको युगबोधीय र समाजसापेक्ष लेखनधर्म फस्टाउन सक्तैन । त्यसैले उत्तरवर्ती विचारमा जीवनको मूल्य र मान्यताका लागि आन्दोलित चिन्तनको प्रारम्भ भएको हुन सक्छ । तर यसबारे अरू बढी विचारविमर्श बढाउनु अहिलेका हकमा हतार गरेको ठहरिन्छ । यसका अतिरिक्त मानवीय सत्ता, सभ्यता र संस्कृतिको इतिहास प्रत्येक क्षणहरूसँगै आफैँ निर्माण भएर आउने क्रममा भत्किनु र लोप हुनुका कारक तत्वहरू पनि सँगसँगै आएका हुन्छन् । जहाँ एउटा सभ्यता र संस्कृतिको अनिच्छापूर्वक विनाश गरिन्छ, त्यहाँ मौलिक टुसो उत्जीवितै रहेको हुन्छ । त्यो पुनः र पुनः टुसाउँछ, पलाउँछ र झाँगिन्छ, तर स्वेच्छाले वर्जित वस्तु सदाका लागि लोप भएर जान्छ । त्यसैले स्वतःस्फूर्त निर्मित ऐतिहासिक पृष्ठभूमिको मौलिक टुसोको पुनरावृत्तिका लागि र त्यसको सम्यक् संरक्षण एवं परिपालनद्वारा स्वअस्तित्वको मौलिक चिनारी उत्जीवित राख्न सत्ताशक्तिको कारक तत्वद्वारा निर्मित इतिहासलाई अस्वीकार गरिनु पनि स्वीकार्य पक्ष नै देखिन्छ । अतः उपर्युक्त विचारविमर्शको मन्थनद्वारा उत्तरवर्ती विचारलाई केलाउँदा हालसम्मका लागि दृष्टिकोणीय निष्कर्ष के देखापर्छ भने :

क) उत्तरवर्ती विचार सर्वसत्तावादको विरूद्ध बहुलताको उद्घोषक ।

ख) कुण्ठाग्रस्त समग्रताको विरूद्ध स्वस्वायत्तता र आत्मनिर्णयको अधिकारको सम्वाहक ।

ग) नेपाली राष्ट्रिय साहित्यको निर्माणको पक्षधर र उत्तरआधुनिक नेपाली साहित्यलेखनमा पूर्वीय सैद्धान्तिक चिन्तनको अनुसन्धाता ।

घ) उत्तरआधुनिक साहित्यलेखनमा नयाँ अस्तित्वको सम्वाहक र स्वनिर्मित इतिहासको पक्षधर ।

ङ) स्थानिक र सामाजिक परिप्रेक्ष्यमा स्वपहिचानको आधारस्तम्भ ।

च) राष्ट्रिय भाषाका साहित्यहरूको समानुपातिक विकासको अग्रगामी विचार ।

सालाखालामा अहिलेसम्म उत्तरवर्ती वैचारिक आन्दोलनमा आफ्नो दृष्टिकोणले आँकेको पक्ष त्यति नै हो । अतः उत्तरवर्तीबारे जहाँ जोबाट जे दृष्टिकोण अथवा वैचारिक

अभिव्यक्तिहरू आए, आइरहेका छन्, ती सबै वैचारिक अन्तरदृष्टिका अभिव्यक्ति भएकाले अझै विचारविमर्श भइरहनु आवश्यक देखिन्छ । यसका अतिरिक्त विविध मौलिक चिह्न केन्द्रीयताका प्रयोगहरूसहित बहुलताभित्र स्वअस्तित्वको दावी उत्तरवर्ती लेखनमा प्रचुर मात्रामा आएको माथि नै जिकिर उठाइएकाले यहाँ केही उत्तरवर्ती साधक वा चिन्तकहरूको लेखन प्रकरणमा पाइने विचारान्तर कविताहरूका अंशहरू प्रयुक्त हुनु स्वाभाविक लाग्छ ।

क) युगौँ दमित स्वपहिचानको उद्घोष गर्दै भवानी तावा लेख्छन् :

*तर फुङ्लोती हाङ्मा*
*नाम्सामी-केसामी जन्माऊ*
*कलशमा*
*सेक्मारी फूल र अन्दङ् फूल राखेर*
*युद्ध छेड*
*म शोकसन्तप्ताको-मृत्युको*
*करङ भाँचिने गरी कुल्चिदिन्छु ।* (शान्ति)

पहिले आफैँलाई चिन्नु स्वपहिचान ठहरिन्छ । उपभोग भौतिक जगत्को र भौतिकीभित्रै प्राणीविशेषको गरेर मान्छेले सहिष्णुता, अहम्, धैर्य, आवेश आदिलाई मल्याएर राख्नु स्वभावतः विशेषता नै माने हुन्छ । तर आफैँलाई मान्छेले जब पूर्णरूपले चिन्छ तब मात्र मान्छेत्वको महत्व आफैँमा उजागर हुन्छ । त्यसरी स्वपहिचानमा आफैँलाई मान्छेत्वमा हेर्ने अरू उत्तरवर्तीहरू पनि विविध दृष्टिकोणबाट लेख्छन्:

२. इन्द्र फोम्बो :

*समूहमा आश्वासनका लोभहरू फलाक्ता*
*सारा मान्छेहरू प्रेतात्मा चढेको फेदाङ्माझैँ*
*एउटै ताल भएर नाचिदिन्छन्*
*तर वैमनस्यताविरूद्ध मुन्धुमहरू फलाक्तै*
*हायुङ ! जिन्दगीलाई साम्दोङ् फूलले सिँगारौँ*
*हायुङ ! जिन्दगीलाई लेक्वासेनले जगाऔँ*
*हायुङ ! जिन्दगीलाई बाधुम्वक्वाले छकौँ ।*
(याक्साको एउटा कुनाबाट)

३. मेदिनी पायअस लिम्बू :

*म*
*बिचरा म अरूले ठाने*
*कुनै मायालुको मायामा लट्ठिएझैँ*
*कुनै चतुर भाइको चेसुङ समाएर*
*त्यसैलाई जीवन ठानेर*
*रमाइरहेँ*
*तर त्यो नीरवता अब छैन*
*वर्तमानमा ।* (मैले मलाई देखेको कुरो)

४. थाम्सुहाङ यलम्बर :

*मेरो उराठिएको मुटुको मन्द गतिलाई*
*आफ्नै मस्तिष्कले शल्यक्रिया गरेर हेर्ने जमर्कोमा*
*आतुर भएको छु ....*
*मेरो अस्तित्वको गौरवतामा*
*खेओदेम्बा छाँगाको रमणीय दृश्य हेर्दै*
*लुङ्मादेनको विजय उत्सव मनाएको मात्र देख्न पाएँ ।*
(म उभिएको धर्तीमा मेरो कथा)

स्वायत्तताको हकमा पनि कलम उत्तिकै चलाएका छन् उत्तरवर्तीहरूले । विगतको साक्ष्य प्रवक्ता इतिहास हो । यसैको अभावमा घाम नअस्ताएको देशको अस्तित्व स्वामित्व ठहरिन नसकेको तथ्य वर्तमानले पनि बताउँछ । हत्केलामा भाग्यरेखा चिर्ने र परोपकारले सौराज्य निर्माण गर्ने युगहरूको समाप्ति उहिल्यै भइसक्यो । त्यसैकारण पनि अस्तित्वको विरासत पुनः निर्माणका लागि स्वस्वायत्तता रूचिकर ठहरिनु युगबोधीय चेतनाको नयाँ बिम्ब र स्वतन्त्रताको सार्वभौमजन्य मानवीय अधिकारप्राप्तिको सुखद तकाजा हो ।

अतः यही परिप्रेक्ष्यमा सगुन सुसारा लेख्छन् :

*चेप्जुले चलाको - राज्य*
*बाजेले चलाको - देश*
*बाउले चलाको - मुलुक*
*जाँडले मातेर कहिल्यै*
*कोङफुयुक्माको आँखा देख्नुपरेन*
*त्यसै र*
*म स्वस्वायत्तताको - प्रतीक !*
*म स्वस्वायत्तताको - अंश !*
*म स्वस्वायत्तताको - भाग !*
*म स्वस्वायत्तताको - तथ्य !*
(वर्जित गैँडाहरू र माउवा चेप्पाको निस्सीमता)

२. चन्द्रवीर तुम्बापो :

*अरूण टेकेर*
*यात्रामा निस्कँदैछु*
*हत्केलाको*
*आयुरेखा*
*लम्ब्याउँदै*
*अनवरत यात्रा तन्काएको छु ।* (अस्तित्वबोध)

३. समीर :

*नयाँ घाममा पुरानो छाला सुकाऊ*

*तिमीलाई विगत चर्चराउनेछ*
*किन सुकरातलाई मलहम माग्ने ?*
*स्थुङ्कोले दिनैपर्छ*
*तिम्रो घाउ वाटर लु को होइन*
*खलिवानको हो ।     (वौरिन्छौँ : नयाँ गाँठो पार्न)*

४. पृथराज थेगिम :

*हाम्रा फकताङ्लुङ*
*हाम्रा भुक्कुम्लुङ्लाई*
*रक्सीको भट्टीमा रक्सी पारेर*
*म कसरी पिउन सकिरहेछु ?*
*यो बलात्कारको सन्जालमा*
*जबर्जस्ती घिच्याइएका*
*घोकाइएका*
*आकाङ्क्षितका समयहरू*
*पुग्यो अब -*
*एक छिटाले स्थानीयको छ ।*
*(मातेको मान्छेको हत्केला र सूर्य)*

मूलतः मान्छेलाई आफैँले जाँच्ने कसी अस्तित्वबोध हो । यसैको अनविज्ञतामा पशुत्वको निर्वाह मान्छेले भोग्नु सत्य हो । त्यो बोधता व्यक्ति, जाति, समग्रता जेमा होस् प्रथमतः उजागर हुनुपर्छ र त्यसपछि आफैँले आफैँलाई खोज्ने र चिन्ने मार्ग प्रशस्त हुन्छ । वास्तवमा त्यसरी सरल वा जटिल मार्गहरू अवलम्बन गर्दा नै इतिहासको महत्वपूर्ण टुङ्गोमा पुग्न सकिन्छ, जसले आफ्नो अस्तित्वको गतिशील पहिचान दिइराखेको हुन्छ । यसरी पनि उत्तरवर्ती विचारको एउटा पक्ष अस्तित्वबोधतातिर उन्मुख छ । र, यस पक्षमा लेख्ने उत्तरवर्तीहरू प्रायः सबै नै हुन् / छन् । यद्यपि राज माङ्लाक लेख्छन् :

*कति न्यानो निलिबसेको समय यी दिनहरू*
*भत्भती हत्केलाहरूले छाती छेकेर मनमा*
*युमा ? को स्वर -*
*'लाजे झ्यालखाना धुजाधुजा च्यात्नू ...'*
*मैले सुनेँ*
*हजुरआमाको चौतारामा/उभिएर भन्छु :*
*- त्यो क्षण मेरो मुक्ति*
*यो क्षण मेरो विद्रोह*
*त्यहाँ क्षण मेरो गर्व,*
*(अस्तित्वको हिरासत तोडेर वर्तमान)*

२. वसन्त बस्नेत

*अथवा फिर्ता गर तिम्रा आदेशहरू*
*र फिर्ता गर*
*त्यो कालो रजिस्टर*
*हामी*
*'नोट अफ डिसेन्ट' लेख्छौँ*
*काला तिम्रा निर्णयहरूको विपर्यासमा*
*.....................................*
*स्वयंबोधताको झण्डा*
*त्यतिखेर*
*गाड्न सफल हुनेछौँ ।*
*(नोट अफ डिसेन्ट : कालो रजिस्टरमा)*

३. प्रकाश थाम्सुहाङ :

*खुला मञ्चमा उभिएर म*
*उन्मुक्तिको, निस्सीमताको र स्वतन्त्रताको भाव बोकेको*
*नवीन प्रजातन्त्रको गीत गाइरहेछु*
*सार्वभौमसत्ताप्राप्तिको अभीष्ट बोकेको*
*जनताको गीत गाइरहेछु । (नवीनताको शङ्खघोष)*

४. श्रीजङ्ग राई :

*आउँदो उँभौलीमा*
*छुमाङको दोष उडाउन सोलोन्चा खोज्दैछु*
*अब चाक्लुङधिमाले पनि मानवता बाँच्नुपर्छ*
*एउटा अर्को अध्यायका लागि*
*जहाँ हाँस्नेछन्, यायोम्बाका वैँसहरू ।*
*(छलाङ बैँसहरू यायोम्बाका)*

५. एल०बी० अगेन नेम्वाङ :

*तागे ताक्नाम् तिक्सिङ ...*
*त्यही आत्मविश्वासमा*
*इतिहास छ*
*खोज्न*
*यलम्बरका सन्तानहरू*
*उभिएको छु/उभिएका छौं । (यो को खोजी गरौँ)*

बस् ! प्रस्तुत उदाहरणहरूबाटै उत्तरवर्तीहरूको वैचारिक घोषणा र लेखनप्रवृत्तिको तालमेल स्पष्ट हुने भएकाले बाँकी उत्तरवर्ती विचारहरूलाई यहाँ उद्धृतिमा समावेश गरिएन । चूडान्तमा, उत्तरवर्ती सोच वा आन्दोलन सर्वसत्तावादका केन्द्रीकृत अखडाविरूद्ध स्वअस्तित्व, स्वशासनको बहुलगामी विकेन्द्रीकृत स्थापितता र बहुभाषी नेपाली साहित्यको उत्तरचिन्तनका हकमा विशुद्ध पान्थरेली युवाहरूबाट प्रतिस्थापित मौलिक पक्षको आन्दोलन भएकाले यसको निरन्तरतासम्मै विचारविमर्श भइरहनुपर्छ । अहिले नै किनारा लाउन असमर्थ छु । ❑

# मेरो कथा : मेरो व्यथा




डा. देवीप्रसाद ओझा
जन्म : वि.सं. १९९६ साउन १०
बमराडागाउँ, बैतडी
अवसान : वि.सं. २०६३ जेठ ६

### वंशपरम्परा

हाम्रा पूर्वजहरू चारभाई थिए, उनीहरू तेह्रौं शताब्दीतिर पर्वतराज डोटीमा भारतको कन्नौजबाट आएका थिए । उच्चकुलीन ब्राह्मण वंशका विद्वान् यी चार भाइहरूको नाम भाष्कर, प्रभाकर, तल्लास र वितल्लास थियो । आठौं शताब्दीदेखि भारतमा मुसलमानहरूको आक्रमण र अत्याचारबाट बच्न तथा समाजमा हिन्दू धर्म रक्षा गर्न निमित्त मैदानी भागबाट हिन्दूहरूको पलायन भएको थियो, यसै क्रममा भारतको कन्यूर, कुमाऊ गडवाल हुँदै धेरैजसो हिन्दूहरू डोटीतिर पनि प्रवेश गर्ने सिलसिलामा यी चारैभाइहरूको पनि यहाँ प्रवेश भएको कुराको संकेत इतिहासमा पाइने गर्दछ ।

यी चार भाइहरूमध्ये जेठा भाष्कर डोटीको खतेडीमा बसे तथा उपाध्यायक हटाइए । पछि पूर्वतर्फ जाँदा यिनका वंशजहरू खतिवडा भएका थिए । माहिला हाल दार्चुलाको लेकमगर्खामा बसे तथा त्यहाँ ओझा र मिश्र कहलाइए । साहिँला डोटीको पूर्वतर्फ लागे तथा त्यहाँ गएर गौतम कहलाइए । सबभन्दा कान्छाभाई वितल्लासले भने जुम्ली राजाकी मैया हारमातासँग स्वयंवर गरी विवाह गर्नुपर्ने ऐतिहासिक घटनाक्रममा पर्नुपरेको हुँदा उनका सन्तानहरू अछामको शाह राजवंशमा परिणत भएका थिए । यी चारैभाइहरू अभिगोत्रीय ब्राह्मण भएको हुँदा यिनका सन्तानहरूको रूपमा वंश वृद्धि भएका ओझा, मिश्र उपाध्याय, खतिवडा, गौतम तथा अछामी-शाह ठकुरीहरूको गोत्र आजसम्म सबैको अभिगोत्र नै रहेको कुरा यस कथन्को प्रमाण छ ।

मेरो वंशको सम्बन्ध लेकमा गएका ओझाहरूसँग रहेको छ । मेरा बाजे पूर्वजहरूमा भवानीदास र केदारदासको सम्बन्ध । अस्कोट भारतका पाल वंशीय कत्पूरी राजासँगको सम्बन्ध गुरू शिष्यको थियो । राजगुरूको रूपमा रहेका केदारदासले पछि बैतडीका चन्दवंशीय राजा कर्म चन्दलाई आफ्नो विद्वता र तपस्याको शक्तिद्वारा प्रभावित गरी उनको वंश पनि बचाई दिने काम गरेको हुँदा बैतडीका चन्द राजाहरूका राजगुरू-कुलगुरू पनि उनको पछि अहिलेसम्म हाम्रो ओझा वंशीय ब्राह्मणहरू नै हुने परम्परा कायमै छ लगभग १३ पुस्ता जति हाम्रो बैतडीमा रहेको बसोबास त्यतिबेला हाम्रो पूर्वजबाजे केदारदासलाई त्यतिबेला बैतडी कुत्लेककोटको चन्द राजा कर्मचन्दका पुत्र गर्भचन्दले विर्तामा दिएको वमराडा मौजामा रही रहेको छ । केदारदास ओझाको समय १४५० वि.सं. मात्र देखिन्छ । यसरी लगभग ६०० वर्ष जति हाम्रो बसोवास वैतडीमा रहेको देखिन्छ । हाम्रा बुवा स्व. रामचन्द्र ओझा त्यतिबेलाको आफ्नो समयका प्रसिद्ध समाजसेवी, प्रजातन्त्रप्रेमी विद्वान र भगवत्भक्त हुनुहुन्थ्यो । उहाँका हामी तेह्र

ओटा सन्तान भाई, बहिनीहरू छौं । म उहाँको साँहिलो पुत्र हुँ । हाम्रो वंशमा अनेक प्रसिद्ध व्यक्तिहरू भएका छन्, यिनीमध्ये मेरो बाजे पुरूषोत्तम ओझा एक हुन्, उनको जन्म वि.सं. १९२१ मा भएको र स्वर्गवास वि.सं. १९७२ मा भएको थियो । उनले १२ वर्षसम्म काठमाण्डुमा रही त्यतिबेलाको राजघरानाहरूमा पुराण वाचनमा सहभागी हुने गरेका थिए । उनलाई वैतडीमा नेपालका ओझाको नाउँले पनि चिनिन्थ्यो । मेरा बुबाको जन्म वि.सं. १९६३ मा र स्वर्गवास वि.सं. २०१६ मा भएको थियो । उहाँले आफ्नो समयमा हरिकीर्तन संस्थाको स्थापना, पत्रपत्रिका पुस्तकहरूको पठनपाठनको व्यवस्था सामाजिक सेवामा जातीय समानताको व्यवहार, सहिद दशरथ चन्दसँग गोप्य रूपले सहकार्य आदि गरेका थिए । प्रजातन्त्र प्राप्तिअघि, २००७ सालको क्रान्तिको बेला, उहाँलाई स्थानीय क्रान्तिकारी सरकारमा शिक्षा व्यवस्थाको जिम्मा दिइएको थियो । प्रजातन्त्रकालमा पहिले उहाँले नेपाली कांग्रेस जिल्ला कमिटीको महामन्त्री भएर काम गर्नुभयो । पछि सहिद दशरथ चन्दले काम गरेको दल प्रजा परिषद्ले आफ्नो विस्तार बैतडीसम्म गरेको हुँदा आफ्नो मूल दलमा नै रहेर जनताको सेवा गर्नुभयो । उहाँ आखिरी समयसम्म नेपाल प्रजा परिषद्को नेताको रूपमा चिनिनुहुन्थ्यो । उहाँले त्यतिबेला मगाउनु भएका भारतीय पुस्तक पत्रपत्रिकाहरू र नेपालीमा गोरखापत्र आदि समसामयिक पुस्तक र पत्रपत्रिकाहरू आजसम्म पनि हाम्रो घरमा सङ्कलित छन् ।

## जन्म र बाल्यकाल

मेरो जन्म वि.सं. १९९६ साल श्रावण १० गतेका दिन आफ्नो पुर्ख्यौली विर्ताको थलो वैतडीको बमराडागाउँमा भएको हो । मेरो वाल्यकाल सुखपूर्वक बितेको थियो । मेरा बुबा वैतडीका प्रतिष्ठित व्यक्ति भएका हुँदा मैले केटाकेटीदेखि आफ्नो घरमा आउने गरेका अनेक किसिमका व्यक्तिहरूलाई देख्ने गरेको थियौं । जोगी सन्यासीहरूदेखि लिएर स्थानीय भद्र भलादमी र सरकारी कर्मचारीको साथै साधारण मानिसहरूको सम्पर्क बुबासँग निरन्तर र प्रतिदिनजसो भइरहेको हुन्थ्यो । पुस्तक, पत्रपत्रिका पठन, पूजापाठ कथा वाचन संकीर्तन र तबला, हारमोनियममा गीत गायन जस्ता अनेका कार्यक्रमहरूसँग मेरो परिचय होश आएदेखि नै भएको थियो । त्यतिबेला वैतडीमा रामलीला नाटकको १० दिने आयोजनाको पनि मेरो बुबाको नेतृत्वमा हुने गरेको हुँदा केही ठूलो अर्थात् १०-१२ वर्षको भएपछि मेरो परिचय रामलीला नाटकको प्रकृयासँग पनि ग्रहण गर्न सके जतिसम्म भयो । मेरो समयमा नियमित रूपले स्कुल चलेको थियो, एकमात्र भाषा पाठशाला मेरो घर नजिक सदरमुकामगढीमा थियो । त्यसमा ३ कक्षासम्म पढाइ हुन्थ्यो । त्यहाँ पनि मैले केही दिन पढैं पनि । मेरो अक्षरारम्भ र अरू बढी अध्ययन गर्ने घरमा नै बुवा र दाईको रेखदेखमा भएको हो । त्यतिबेला हामीहरूले लघुसिद्धान्त कौमुदी, अमरकोश जस्ता संस्कृतका प्रचलित ग्रन्थहरूलाई नबुझेर भए पनि कण्ठस्थ गर्नु पर्दथ्यो । पछि मेरो पढाइको लागि घरैमा मास्टर राख्ने व्यवस्था भयो । सबभन्दा पहिले एक स्वामीजी जसको बाऊ हरिहरानन्द ब्रह्मचारी थिए, तिनबाट मैले शिक्षा पाएँ, पछि पिथौरागढ भारतका एकजना अङ्ग्रेजी मास्टरसँग पनि केही शिक्षा पाएँ । त्यतिबेला भारतीय पुस्तकहरू अङ्ग्रेजी-हिन्दीमा हामीहरू पढ्थ्यौं । खास विषय भनेको हिन्दी अङ्ग्रेजी र हिसाव नै हुन्थ्यो । यतातिर पढेपछि म सन् १९५५ तिर पहिलोपल्ट पिथौरागढ भारतको प्राइमरी स्कूलमा अपरक्लास अर्थात् कक्षा ५ को जाँच दिन लगभग घरबाट ३० किलोमिटर जति पैदल एकदिन हिँडेर पुगेको थिएँ । २००७ सालको क्रान्तिको बेला वैतडीको सदरमुकामगढीमा भएका घटनाहरू पनि मलाई केही सम्झना छन् । यहाँसम्म मेरो अनौपचारिक शिक्षा थियो । पिथौरागढबाट सात स्कूलहरूको परीक्षाकेन्द्र रहेको प्राइमरी स्कुलको ५ कक्षाको परीक्षामा प्रथममा प्रथम भएँ । त्यतिबेलाको त्यहाँको स्कूल इन्सपेक्टरले मेरो पीठ ठोकेर "शावास तुम बहुत योग्य लड्के हो" भनेको कुरा म अहिले पनि सम्झिरहेको छु । पछि म ६ क्लासमा भर्ना हुनका निमित्त पिथौरागढको सरस्वती देवसिंह हाइस्कूलमा गएँ । मेरा दाज्यू आत्माराम ओझा मसँग जानुभएको थियो । त्यहाँको प्रिन्सिपल मोहनसिंह मल्ल हुनुहुन्थ्यो । उहाँले मेरो लिखित र मौखिक परीक्षा लिनुभयो र दाइलाई भन्नुभयो कि "यह तो बहुत आगे है इसे ६ क्लासमें क्यों भर्ना करते है, इसे हम ८ क्लासमें रख देते है" यसरी ६-७ क्लास नपढिकनै ८ क्लासमा भर्ना भएँ त्यो पनि ६ महिना ८ क्लासको पढाइ त बितिसकेको थियो र ८ क्लासका ६ महिने जाँच चलिरहेको थियो । परीक्षा हुन बाँकी संस्कृत आदिको परीक्षा मैले दिएँ तथा पास पनि भएँ । वार्षिक परीक्षामा पास भएपछि ९ क्लासमा

गएँ र सन् १९५७ को यू.पी. वोर्डको हाइस्कूल परीक्षा दिएँ । त्यो साल म फेल हुन पुगेँ । फेल हुनाका दुई कारण मुख्य देखिए । एक त मेरो विवाह ८ क्लासमा पढ्ने बेला नै भएकोले मेरो पढाइको सट्टा घरगृहस्थी स्त्रीसुखतर्फ मेरो ध्यान बढी गयो । दोश्रो मैले ६ र ७ क्लास पढ्न नपाएको हुँदा मेरो गणित कमजोर हुन पुग्यो । फलस्वरूप गणितमा नै फेल भएर म घरमा बसेँ । त्यतिबेला भर्खर सदरमुकाममा पहिलो हाइस्कूल वैतडी हाइस्कूलको नाउँबाट खुलेको थियो । त्यसैमा मास्टरी गरेर मैले प्राइभेटबाट सन् १९६० मा हाइस्कूल पास गरेँ । हाइस्कूल पास गर्नुभन्दा पहिले मेरो गृहस्थी समस्याहरूले गर्दा मैले केही दिनसम्म त्यतिबेलाको सब इन्सपेक्टर अफ स्कूलर्स जोन नं ७ वैतडीको लागि क्लर्क मपेट भएर काम गरेपछि २०१९ सालमा वैतडी गौडा (हालको प्र.जि.अ. कार्यालय) मा खरदार पदमा नियुक्ति पाएँ । मेरो सरकारी नोकरीको सिलसिला प्रारम्भ भयो । योभन्दा पहिले केही दिन मैले भारतको ओ.एन.जी.सी. तृतीय श्रेणीको कर्मचारी भएर पनि काम गरेँ ।

सरकारी नोकरीको सिलसिलामा म सर्वप्रथम त्यतिबेला भर्खरै जिल्लाको रूपमा गठन भएको दार्चुलाको जिल्ला पञ्चायत कार्यालयमा का.मु.पी.डी.ओ. भएर काम गर्दाको बेला सन् १९६७ मा मैले आई.कम. परीक्षा यू.पी. बोर्डबाट प्राइभेट रूपले तृतीय श्रेणीमा पास गरेँ । सरकारी नोकरी भएकोले पढ्ने र परीक्षा दिने समय प्रायः कठिनाईले निस्कने गर्दथ्यो । तैपनि मैले बैतडी जिल्ला पञ्चायतमा पी.डी.ओ. कामु रहेकै बेला सन् १९७२ मा आगरा विश्वविद्यालयबाट तृतीय श्रेणीमा प्राइभेट बीए पास गरेँ । पासको लगत्तै मैले डडेल्धुरा जिल्ला पञ्चायतमा रहेको बेला सन् १९७५ मा पहिलो वर्ष एम.ए आगरा विश्वविद्यालयबाट र पछि आगरा विश्वविद्यालयको क्षेत्रभित्रै त्यसै वर्ष खुलेको कुमार विश्वविद्यालयबाट दोश्रो वर्ष एमए राजनीतिशास्त्र विषय लिएर पास गरेँ । यसमा मेरो द्वितीय श्रेणी आयो र आफ्नो ५८ प्रतिशत नम्बरहरू आएकोबाट उत्साहित भएर मैले कुमायूँ विश्वविद्यालयमा सन् १९७६ मा पी.एच.डी. को लागि आवेदन प्रस्ताव पेश गरेँ । प्रस्तावलाई युनिभर्सिटीले स्वीकृति दियो । मलाई केही आर्थिक सहयोग पनि विश्वविद्यालयबाट प्राप्त भयो । फलस्वरूप सन् १९८० मा मैले 'नेपालमा दलीय व्यवस्थाका दसवर्ष र पंचायती व्यवस्थाको राजनीति र इतिहास सन् १९५०-१९६०' शीर्षकले शोधग्रन्थ तयार गरी पी.एच.डी.को उपाधि प्राप्त गरेको थिएँ । यसरी औपचारिक शिक्षाको यो क्रम यहाँ आएर रोकिएको छ ।

## दाम्पत्य जीवन

मेरो विवाह २०११ साल माघ २६ गतेका दिन वैतडी नोहाटगाउँको प्रसिद्ध भट्ट परिवारमा पण्डित शिवदत्त भट्टकी जेठी सुपुत्री गंगादेवीसँग भएको हो । २०१६ आश्विनमा मेरी प्रथम सुपुत्री देवकीको जन्म भयो । त्यसपछि २०१९ माघमा मेरो जेठो पुत्र यज्ञप्रसादको जन्म भयो र २०२२ वैशाखमा माहिलापुत्र सतीशप्रसाद जन्मियो । पछि मेरा तीन सन्तानहरू भएका थिए । तैपनि सन्तान जन्मिने क्रम भने रोक्न अनुकूल परेन । २०२५ सालमा साहिँलो पुत्र अशोकप्रसादको जन्म भयो । २०२७ साल पौषमा छोरी हेमाको रूपमा दोस्रो सुपुत्रीले हाम्रो परिवारमा प्रवेश गरिन् । यसै क्रममा २०२९ चैत्रमा मेरो चौथो पुत्रको रूपमा विनोदप्रसादको जन्म भयो र २०३२ साल फागुनमा सबभन्दा कान्छो पुत्रको रूपमा मनोजप्रसादले जन्म लिएपछि मेरो सन्तानहरूको सङ्ख्या ७ हुन पुग्यो । दुई पुत्री र पाँच पुत्रहरूका लालनपालन, शिक्षादीक्षामा मलाई निश्चित रूपले केही गम्भीरतापूर्वक सोच्नुपर्ने स्थिति आएको थियो तर आज आएर मेरा पुत्र पुत्रीहरूले पढाइ र अन्य सामाजिक पारिवारिक व्यवहारको सामाजिक क्षेत्रमा सन्तोषजनक ढङ्गले प्रगति गरेको देख्न पाउँदा त्यतिबेला गम्भीरतापूर्वक सोच्नुपर्ने जो स्थिति थियो त्यो अहिले सहज र सुखमय सोचाइमा परिणत भएको जस्तो लाग्दछ ।

## आर्थिक स्थिति

मेरो बुबाको समयमा भूमिको माध्यमबाट नै आर्थिक स्थितिको मूल्याङ्कन हुने गर्दथ्यो । त्यस हिसावले हाम्रो पुर्ख्यौली जमीन धेरै भएको र हाम्रो जग्गामा अन्तबाट आएर बसेका ६० परिवार जति रहेका हुँदा अन्न, पैसा र जनशक्तिको कमी रहेको थियो । यसरी प्रतिष्ठित परिवारको सदस्य भएको नाताले मेरो सम्मान र विश्वास सबैले गर्ने गर्दथे । पछि पछि जग्गामा मात्रैमा निर्भर रहने आर्थिक स्थितिको बदलामा व्यापार नोकरी जस्ता विकल्पहरू खुलेको थिए । तर हाम्रा बुबाले ती दुवैतर्फ आफ्नो संलग्नता बढाउने प्रयत्न गरे पनि सफलता पार्न आर्थिक दृष्टिकोणले सक्नुभएन । ठूलो

परिवार र समयको साथसाथै परिवार धान्न खर्च पनि बढ्दै गएको सन्दर्भमा २००७ सालपछि जेठादाज्यू आत्माराम ओभ्राले सरकारी नोकरी वन विभागमा गर्न थालेका थिए । यसले गर्दा परिवारको आर्थिक स्थितिमा कमी हुने गरेको थिएन । हाम्रो एउटा घर र धेरै जग्गा डडेल्धुराको खुल्लेक गाउँमा पनि थियो । त्यहाँ मेरो सबभन्दा कान्छी आमा र भाइबहिनीहरू बस्ने गर्दथे । यसरी दोहरी घर भएकोले पनि हाम्रो घरखर्च बढ्ने गर्दथ्यो । बुबाको स्वास्थ्य अन्तिम समयमा राम्रो थिएन । उहाँलाई खोकी दमको व्यथाले सिकिस्त पारेको हुँदा उहाँले आफ्नो त्यतिबेलाको वकिल पेशाजस्तो लेखनदासको काम पनि गर्न नसक्ने हुनुभयो । त्यसै कारणले गर्दा हामी भाइहरूले नोकरी गर्नुपर्ने आवश्यकता पनि पर्‍यो । २००८ सालमा जेठादाई आत्माराम ओभ्रा, २०१३ सालमा माहिलादाई स्व. दयाकृष्णले सुब्बाको सरकारी नोकरी र २०१३ सालमा नै मैले पनि मास्टरीबाट सेवा शुरू गरेपछि आर्थिक स्थिति सुदृढ हुँदै गयो । पछि पछि सबै सातै भाइहरूले राम्रो शिक्षादीक्षाका साथै सरकारी र अन्य संस्थाहरूमा राम्रो पदहरू पनि पाउँदै गए । क्रमशः उन्नति पनि हुँदै गयो । अहिले आएर राम्रै गुजारालायक आर्थिक स्थिति छ । हामी सबै १० वर्ष पहिलेसम्म संयुक्त नै थियौ । हाम्रो केही घरजग्गा वीरगञ्जमा पनि थियो । हाल हामी सबै भाइहरू छुट्टाछुट्टै आफ्नो व्यवस्था गरेर बसेका भए तर पनि एक अर्कासँग स्नेह, सद्भावना र सहयोगलाई पनि निरन्तरता दिँदै आएका छौं ।

मेरो परिवारको बसाईसराईको क्रम २०१४ सालमा पूज्य दाज्यू आत्माराम ओभ्राको सरूवा वीरगञ्जमा भएपछि २०१५ सालदेखि वीरगञ्जमा भएको हो । त्यसपछि हाम्रो परिवारका सम्पर्क सूत्रहरू बैतडी, डडेल्धुरा र वीरगञ्ज गरी तीन ठाउँसम्म स्थापित हुन पुगेको थियो । २०२६ सालमा पहिलोपल्ट मेरो माइलादाई स्व. दयाकृष्ण ओभ्राले कञ्चनपुरमा जग्गा खरीद गरी विछुवा रौतेलीमा बसोवास थाल्नुभयो । यसपछि कञ्चनपुरतर्फ पनि हाम्रो आवतजावत र बसाईंको क्रम भयो । यसै क्रममा मैले २०३२ सालमा कञ्चनपुरमा सरूवा भई आउँदा यतैतिर आफ्नो परिवार ल्याई बसाईं आरम्भ गरेँ । २०३३ सालमा महेन्द्रनगर नगरपालिका अन्तर्गत घर तथा केही जग्गा जोडेर बसोवास गर्दै आएपछि सामान्यतयाः आवास तथा भोजनको लागि मेरो परिवारलाई यो घर र जग्गाले हालसम्म पुगेकै छ ।

विभूषण पदक आदि जस्तोलाई मैले खासै पाउने अवसर पाइनँ । आफूले मेहनत गरी प्राप्त गरेको प्रथम श्रेणी महेन्द्र विद्याभूषण स्वर्णपदक पाएपछि साहित्यको सेवा गरे वापत श्री ५ को सरकारबाट राष्ट्रिय प्रतिभा पुरस्कार पनि प्राप्त गरेको छु । वीरेन्द्र-ऐश्वर्य सेवा पदक पनि मैले पाएको छु । सम्मानित र अभिनन्दित भने म धेरै राष्ट्रिय र स्थानीय सङ्घसंस्थाहरूबाट भएको छु । मैले सर्वप्रथम २०१३ सालमा एक डेढ वर्षजति हाइस्कुल बैतडीमा मास्टर भएर काम गरेँ । त्यसपछिको एक डेढ वर्ष जति इन्सपेक्टर अफ स्कुल जोन नं. ७ बैतडी शाखा कार्यालयमा क्लर्क रहेर पनि सेवा गरेँ । यसै दौरान २०१६ सालको आधा आधीदेखि २०१८ सालसम्म भारतको प्रसिद्ध सरकारी संस्था आयल एण्ड नेचुरल कमीसन् (ओएनजीसी) मा देहरादूनबाट नियुक्ति पाई तृतीय श्रेणीको पदमा रहेर बदायुबरेली अकलेश्वर आदिस्थानमा पनि काम गरेँ । पछि एकचोटी घरमा विदा लिएर आएको बेला भर्खरै पञ्चायती व्यवस्थाको जगजगी रहेको र राष्ट्रियताको लहर चलिरहेकोले विदेश भारतमा गई नोकरी गर्नुभन्दा स्वदेशमा बस्नु ठीक छ भन्ने प्रेरणा त्यतिबेलाका बैतडीका बडाहाकिम श्री सत्यनारायण शर्माबाट पाई उहाँकै कार्यालय वैतडी गौडामा खरदार पदमा भर्ना भएँ । २०१९ सालमा खरदारमा नियुक्त भएपछि २०२० सालको प्रारम्भमा त्यतिबेला भर्खर गठन भएको नयाँ जिल्ला दार्चुलाको जिल्ला पञ्चायतमा मलाई सरूवा गरियो । त्यहाँको कायममुकायम पञ्चायत विकास अधिकारी (पी.डी.ओ.) भएर मैले तीनवर्षसम्म काम गरेँ । त्यसपछि मलाई एक तह अर्थात् ना. सुब्बामा प्रमोसन गरेर डडेल्धुरा जिल्ला पञ्चायतमा पठाइयो । २०२५ सालमा एकवर्ष जति त्यहीँ काम गरेँ । फेरि २०२६ सालमा पुनः म दार्चुला नै सरूवा भएँ । २०३७ सालमा मैले वैतडी जिल्ला पञ्चायतमा पनि काम गर्ने अवसर पाएँ । यी सबै ठाउँहरूमा मैले कायम मुकायम (पी.डी.ओ.) भएर नै काम गरेँ । २०३० सालमा मलाई डडेल्धुरामा प्र.जि.अ. नभएकोले तत्कालीन अञ्चलाधीश टेकबहादुर रायमाझीले डडेल्धुराको निमित्त प्र.जि.अ. गरेर पठाए । २०३१ सालसम्म त्यतिबेला जिल्ला पञ्चायत र सी.डी.ओ. अफिसमा काम गर्दै रहेँ । २०३१ सालको अन्ततिरबाट ६ महिनाजति मैले काठमाडौंमा त्यतिवेलाको पञ्चायत मन्त्रालयमा पनि काम गरेँ । २०३२ सालमा मैले लोक सेवा आयोगको

अधिकृतको खुल्ला र बढुवा दुवै परीक्षा पास गरेँ । मलाई महाकाली अञ्चलाधीश कार्यालयमा २०३२ सालमा ले.प.अधिकृतमा पठाइयो । म अलि स्वाभिमानी किसिमको व्यक्ति भएकोले मेरो केही कुरामा तत्कालीन अञ्चलाधीश गणेशमान श्रेष्ठसँग कुरा बाझेपछि मैले काठमाण्डुमा गएर आफ्नो सरूवा मागेँ । मलाई नेपालगञ्ज क्षेत्रीय कृषि निर्देशनालयमा अधिकृत गरेर पठाइयो । लगभग डेढवर्ष जति मैले त्यहाँ काम गरेँ । पछि केही दिनको लागि महेन्द्रनगरको महाकाली सिचाईं योजनामा पनि मैले २०३४ को प्रारम्भमा अधिकृत भएर काम गरेँ । यसैबीच मेरो सरूवा हुलाक सेवा विभाग अन्तर्गत भयो र २०३४ को अन्तदेखि २०३५ को आधा आश्विनसम्म मैले वीरगंज पोष्ट अफिसको पोष्टमास्टर अधिकृत भएर काम गरेँ । २०३६ सालको मध्यदेखि पुनः मलाई धनगढीस्थित सेती हुलाक नियन्त्रण कार्यालयमा हुलाक नियन्त्रकको पदमा पठाइयो । मैले त्यहाँ २०३९ सालको अन्तसम्म काम गरेँ । २०३९ सालको फाल्गुन महिनामा मलाई त्यतिवेला भर्खरै स्थापना भएको क्षेत्रीय सदरमुकाम दिपायलको क्षेत्रीय हुलाक निर्देशनालयमा हुलाक निर्देशकको पदमा सरूवा गरियो । यो बीच मेरो प्रमोसन, उपसचिव (रा.प.द्वितिय श्रेणी) मा भइसकेको थियो । यसैबीच २०४३ सालको हिउँदमा श्री ५ वीरेन्द्रको भ्रमण मुकाम दिपायलमा एक डेढ महिनासम्म हुने कारण देखाई मलाई डोटी जिल्लामा पञ्चायतको एलडीओ पदमा सरूवा गरी अन्य नियमित कामका साथै सवारी भ्रमणको जिल्लास्तरीय काम पनि गर्न लगाइयो । पछि २०४४ सालको अन्ततिर मलाई डडेल्धुरा जिल्ला पञ्चायतको एलडीओमा सरूवा गरियो । त्यहाँबाट २०४७ सालको प्रारम्भमा मलाई रामेछाप जिल्ला पञ्चायतको एलडीओमा सरूवा गरियो । त्यहाँ म धेरै दिन बसिनँ र मलाई अछाम जिल्लाको एलडीओमा २०४७ सालको मध्यबाट सरूवा गरियो । त्यहाँ काम गरिरहेकै बेला २०४८ को प्रारम्भमा मलाई दार्चुला जिल्लाको सीडीओमा सरूवा गरियो । त्यतिबेलाको सरकारले निजामती सेवा नियमावली २०४९ लागू गरेपछि कर्मचारीको सेवानिवृत्तका लागि उमेरको हद र सेवा अवधिको हद तोकियो । जस अनुरूप ३० वर्ष सेवा अवधि पुगेको कारणले २०४९ को अन्ततिर सी.डी.ओ.बाट सेवानिवृत्त भएर घरमा आई स्वतन्त्र जीवनयापन गर्न लागेँ ।

### भ्रमण

मैले आफ्नो जीवनमा भारतका महत्वपूर्ण धार्मिक र औद्योगिक शहरहरूको भ्रमण गरेको छु । समुद्रपारको हकमा मैले तालिमको लागि थाइलैण्डको बैंककमा २ महिना बस्ने मौका पाएको छु । चीनको तिव्वतमा पनि सरकारी डेलिगेसन अन्तर्गत एकपटक गएको छु । कैलाश मानसरोवरको यात्रा यो दौरान गर्ने अवसर पाएको छु ।

### तालिम–प्रशिक्षण

मैले नोकरी सिलसिलामा अनेक प्रकारका तालिम र प्रशिक्षण लिएको थिएँ । यिनको अवधि कम्तीमा एक सप्ताहदेखि बढीमा दुई महिनासम्म रहेको छ । पंचायत प्रशिक्षण केन्द्र र स्टाफ कलेजहरूजस्ता संस्थाहरू पनि यसमा थिए । बैंकको अन्तर्राष्ट्रिय दुतावास प्रशिक्षण केन्द्रमा पनि मैले दुई महिने प्रशिक्षण अन्तराष्ट्रिय हुलाक व्यवस्था संचालनमा सम्बन्धमा लिएको छु । सेवा निवृत्त भएपछि पनि अनेक सामाजिक स्वयमसेवी संस्थाहरूमा गोष्ठी तालिम आदिमा भाग लिएर संचार आदिको विषयमा जानकारी पाएको छु ।

### संस्थागत सङ्लग्नता

मैले सेवा निवृत्त भएपछि धेरैजसो सामाजिक र साहित्यिक संस्थाहरूसँग आवद्ध रहने मौका पाएको छु । यसमध्ये सुदूर पश्चिमाञ्चल सामाजिक सेवा तथा अनुसन्धान समितिको नाउँले महेन्द्रनगरमा कार्यरत सामाजिक सेवा र साहित्यको विकासको लागि गठन भएको संस्था प्रमुख छु । अहिले म धेरै संस्थाहरूमा संलग्न छु । कतिपय संस्थाहरूबाट पदावधि सकिएको पनि छ ।

– जिल्ला संघ चालक हिन्दु स्वयंसेवक संघ, महेन्द्रनगर
– अध्यक्ष, सुदूर पश्चिमाञ्चल सामाजिक सेवा तथा अनुसन्धान समिति महेन्द्रनगर
– सदस्य नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान (गद्य विभाग) काठमाडौं
– स्वतन्त्र पत्रकार, सूचना विभागद्वारा मान्यता प्राप्त
– अध्यक्ष कर्मचारी पदपूर्ति समिति जिल्ला विकास समिति महेन्द्रनगरका साथसाथै धेरैजसो सामाजिक सांस्कृतिक र साहित्यिक संस्थाहरूको सल्लाहकार, आजीवन सदस्य र पदाधिकारीको रूपमा जोडिएको छ । मैले सेवा निवृत्त भएपछि श्री ५ को सरकारले तोकिदिएको उच्चस्तरीय

जग्गा समस्या समाधानको अध्यक्ष भएर काम गरेको छु । ५ वर्षसम्म रा.प्र. प्रतिष्ठानको प्राज्ञ सदस्य पनि रहेको छु । शिक्षाको क्षेत्रमा पनि म अहिले सिद्धार्थ विज्ञान क्याम्पसको व्यवस्थापन समितिको सदस्य विगत ६ वर्षदेखि रहँदै आएको छु । शिक्षा मन्त्रालयले नयाँ खोलिने सुदूर पश्चिम विश्वविद्यालयको स्थापना गर्ने सम्बन्धी कार्यदलको सदस्यमा पनि मलाई मनोनित गरेको छ । वास्तवमा केटाकेटीदेखि नै मैले विभिन्न पत्रपत्रिकाहरूसँग लेखापढी गर्ने प्रयत्न गर्ने गर्दथेँ । घरमा आउने पत्रपत्रिकाहरूमा छापिएका विज्ञापनहरूबाट म प्रेरित हुन्थेँ । एकवाजी मैले थाहा पाएको थिएँ कि अखिल नेपाल स्टुडेन्ट फेडरेसन के हो भनेर तर अखबारमा पढेर त्यस संस्थाको गठन आफूले पनि गरेको भनी दुईचारजना साथीहरूको नाउँ लेखेर काठमाडौं पठाएँ । पछि नियमित रूपले दुई वर्षजतिसम्म काठमाडौंबाट फेडरेसनको शाखाको रूपमा चिट्ठी सर्कुलर प्राप्त भै रहन्थे । बीचमा काठमाडौंमा हुने सम्मेलनमा प्रतिनिधि पठाऊ भनेपछि त्यो क्रम टुटेको थियो । आजसम्म पनि एक दुई त्यस्ता पत्र मसँग छन् । भनाइको तात्पर्य के भने म केटाकेटीदेखि नै केही नयाँ गरूँ भनेर जिज्ञासुको रूपमा आफूलाई उभ्याउने र सक्रिय गराउने प्रयत्न गर्दथेँ । अहिले आएर मैले केटाकेटी हुँदा नै प्रतिवद्धता जाहेर गरेको लेखनको प्रक्रिया र संस्थागत संलग्नताको प्रवृत्तिले मलाई समाजमा सक्रिय तुल्याउनमा मद्दत र ऊर्जा दिइरहेको जस्तो मलाई लाग्दछ ।

## साहित्यिक प्रेरणा र प्रभाव

सानो उमेरदेखि नै मैले घरमा पढ्ने, पढाउने र लेख्ने लेखाउने वातावरण देखेको थिएँ । फलस्वरूप किताब र पत्रपत्रिका पढ्नेतर्फ रूचि बढेपछि लेखनतर्फ पनि मेरो मन रमाउने गर्दथ्यो । पूज्य दाज्यू आत्माराम ओझाले लेखनकार्य थालेपछि यसको प्रभाव पनि ममा पऱ्यो । बुबा रामचन्द्र ओझा पनि स्वयम् कविता लेख्नुहुन्थ्यो । केटाकेटीदेखि हुँदा नै कविताहरू अरूले लेखेका आफ्नो कापीमा सारेर भए पनि म सन्तोष गर्ने गर्दथेँ । पछि-पछि यसले मलाई कविता लेख्नेतर्फ पनि प्रेरित गऱ्यो । मेरो मनमा नेपाली साहित्यकार कविमध्ये लेखनाथ पौडेलका गद्य कविताहरू जुन भाषा पाठशालाका किताबहरूमा 'पिजराको सुगा' जस्तोमा थियो । तिनको प्रभाव परेको थियो । भारततिरका कविहरूमा अयोध्यासिंह उपाध्याय 'हौँ औध' र मैथिलीश शरण गुप्ताका कविताहरूको प्रभाव मेरो बाल मनमा परेको थियो । स्थानीय तवरमा लोकविताहरू र लोकगीत लोकसाहित्यतर्फ पनि मेरो रूचि बाल्यकालदेखि नै रहेको थियो । धार्मिक ग्रन्थहरूका भजनकीर्तन, कथावाचन पूजाआजातर्फ पनि मेरो रूचि केटाकेटीदेखि नै बढेको थियो । गद्यलेखनतर्फ भने मेरो रूचि स्थानीय तवरमा लेखिएका इतिहास र वंशावलीका कुराहरू तथा देउताहरूको उत्पति आदिको वर्णन गरिनाले बढेको थियो । लेखनको छाप भने खासै कसैको पनि ममा परेको जस्तो लाग्दैन । किनकी मैले जुन पनि लेखेँ वा सिकेँ त्यसमा त्यतिबेलाको वातावरण प्रोत्साहन र सहभागिताको कुनै पनि अवसर मैले पाउने किसिमको स्थिति मेरो वरिपरि कतै पनि मौजूद थिएन । त्यसैले जे पङ्क्ति लेखियो वा गरियो त्यो आफ्नै स्वतः स्कुले प्रवृत्तिको नै कारण सम्भव भयो । यसले गर्दा खासै साहित्यिक मापदण्डहरूको विषयमा आफूलाई जानकारी पनि भएन र प्रेरणा पनि प्राप्त भएन । साहित्यिक गोष्ठी, सभा, प्रवचन आदि हाम्रो समयमा कतै केही हुँदैनथ्यो । हाम्रो घरमा आउने गरेका २००७ साल भन्दा पहिलेका पत्रपत्रिकाहरूमा पटनाको **जनता**, मोठको **संकीर्तन**, गोरखपुरको **कल्याण**, कलकत्ताको **विश्वमित्र** र हाथरसको **संगीत** आदि भारतीय थिए । नेपालको भने एकमात्र गोरखापत्र आउँथ्यो ।

## लेखनको प्रारम्भ

लेखनको सामान्य सुरूवात भइरहने समय केटाकेटीताका नै रहे पनि पत्रपत्रिकामा रचना छपाउने उत्साह भने पूज्य दाज्यूको रचनाहरू काठमाडौंको **प्रगति**, **गोरखापत्र** आदिमा र भारतको बनारसका **दीपक** आदिमा प्रकाशित हुन थालेपछि जागेको थियो । यसरी २०१४ सालमा पहिलोपटक मेरो रचना कविताको रूपमा बनारसबाट निस्कने 'दीपक' मासिक पत्रिकाको मुखपत्रमा छापिएपछि म अत्याधिक प्रेरित भएँ । त्यसपछिका दिनहरूमा काठमाडौंको **साहित्य** र **स्वास्नीमान्छे** नामक दुई पत्रिकाहरूका साथै बनारसको दीपक र आमा पत्रिकामा पनि मेरा कविता र अन्य रचनाहरू छापिएका थिए । मैले पहिलो रचना खण्डकाव्यको रूपमा पुस्तकाकार २०२१ मा प्रकाशित गरेको थिएँ । त्यसपछि गद्यलेखनतर्फ मेरो ध्यान मोडियो र मेरा गद्य रचनाहरू विविध विषयमा **गोरखापत्र, मधुपर्क, रूपरेखा, हिमानी, सिंहनाद**

आदिमा छापिइरहे । केही पुस्तक र रचनाहरू काठमाडौंका आवधिक पत्रपत्रिकाहरूमा पनि छापिँदै रहेका थिए । यो क्रम मेरो सरकारी नोकरीको फुर्सदी वा फुर्सदको हिसावले कहिले बढ्थ्यो र कहिले घट्थ्यो पनि तर लेखन भने टुटेको थिएन । त्यो क्रम आजसम्म पनि चालु नै छ । अहिले २०४६ देखि फुर्सद भएकोले काठमाडौंका साहित्यिक, दैनिक र अन्य पत्रपत्रिकाहरूमा निरन्तर मेरा रचनाहरू प्रकारित भइरहेका छन् । यो बीच मैले २०२२ सालमा **हिमालय** पत्रिका र २०२६ सालमा **महाकाली** पत्रिकाको सम्पादक पनि भएँ ।

## प्रकाशित पुस्तकहरु

मैले पहिलो पुस्तक २०२१ सालमा लेखिएको **कोतपर्व** खण्डकाव्यको रूपमा छपाएको थिएँ । त्यसपछि मैले त्यो दौरान कथा, गीत र काव्य लेखेको थिएँ तर २०२३ साल आषाढमा दार्चुलामा गएको ठूलो भूकम्पले गर्दा मेरो बस्ने गरेको क्वार्टर समेत भत्केर त्यसमा मेरा सबैजसो कागजपत्र पाण्डुलिपि सरसामानहरू पुरिए तथा लगातारको वर्षाले गर्दा काम नलाग्ने भयो । म त्यतिबेला जिल्ला बाहिर भएकोले म त्यहाँ पुग्दा सबै नोक्सानी भइसकेको थियो । पछि त्यति अनुकूल मिलेन र कुनै पुस्तक लेखेर छापिएन । २०४६ सालमा धेरै अन्तरालपछि लेखहरूको सङ्ग्रहको रूपमा **समसामयिक चिन्तन** प्रकाशित भयो । पछि २०४९ मा सेवा निवृत्त हुँदा **डोटी क्षेत्रको इतिहास संस्कृति** प्रकाशित भयो । यति बेलासम्म मेरो रूचि कविताबाट हटेर संस्कृति, इतिहास, र क्षेत्रीयस्तरका अन्य विषयवस्तुहरूतर्फ मोडिएको हुँदा सबैजसो लेखन गद्यमा नै सीमित भयो । २०५१ मा दशरथचन्दको जीवनी प्रकाशित भयो । २०५२ मा **कैलाश मानसरोवर यात्रा** प्रकाशित भयो । २०५७ सालमा **सुदूर पश्चिममा जनचेतनाको विकास** र **२००७ सालको क्रान्तिको इतिहास** प्रकाशित भयो । २०६० मा **सुदूर पश्चिममा पत्रकारिता** प्रकाशित भयो । २०६१ मा नै **सुदूर पश्चिमको साहित्य र साहित्यकारहरू** प्रकाशित भएपछि केही पुस्तकहरू यस्तै प्रकारका शोधमूलक र सुदूर पश्चिमको इतिहास, धर्म, संस्कृति र सम्बन्धित अहिले तयारीमा छन् । पुस्तकाकार बाहेक अरू लगभग ४०० जति विभिन्न विषयमा लेख रचनाहरू मेरो काठमाडौंबाट प्रकाशित हुने मासिक र दैनिक पत्रपत्रिकाहरूमा लेखी छापिएका छन् । स्थानीय तवरमा प्रकाशित हुने पत्रपत्रिकामा पनि मेरो धेरै रचना लेखहरू फुटकर विषयहरूमा केन्द्रीत भई छापिएका छन् । विषयवस्तु भने समसामयिक राजनीतिक, सामाजिक विकासदेखि लिएर सु.प.क्षेत्रको इतिहास, संस्कृति तथा शिक्षा आदिमा केन्द्रित रहने गरेको छ । मेरो रूचि पहिलेदेखि लेखन र पत्रकारितातर्फ रहेको कारणले सर्वप्रथम सुदूर पश्चिममा पत्रिका प्रकाशन गर्ने र दर्ता गराउने सम्पादकको रूपमा पनि मैले काम गरेँ । त्यसमा पनि २०२२ सालतिर **हिमालय** त्रैमासिक पत्रिका प्रकाशित भएको थियो । त्यसपछि २०२६ सालतिर वैतडीमा **महाकाली** मासिक पत्रिका पनि सम्पादन गरेँ । २०३९ सालमा धनगढीमा **'माध्यम'** नामले सांस्कृतिक पत्रिका पनि सम्पादन गरेँ । २०५२ सालमा महेन्द्रनगरमा **अनरो** पत्रिका सम्पादन गरी गैर सरकारी संस्थाहरूको मुखपत्रको रूपमा यसलाई स्थापित गर्ने प्रयत्न गरेको थिएँ । अहिले स्वतन्त्र पत्रकारको रूपमा मान्यता पाई काम गर्ने गर्दछु ।

हाम्रो समयमा मानिसले के बन्ने भन्ने लक्ष्यहरू निर्धारण हुँदैनथे । मैले प्रायजसो कुनै बेला विगतको आफ्नो जीवनक्रमको उपलब्धि र वैचारिक प्रतिवद्धताको विषयमा विचार गर्ने गर्दछु । त्यतिबेला मलाई लाग्छ, हाम्रो जन्म, पालनपोषण, शिक्षादीक्षा जुन कालमा भएको थियो र जुन वातावरणमा भएको थियो त्यस अनुसार मानिसको जीवनका केही लक्ष्यहरू पहिलेदेखि नै निर्धारित भएर आएका हुन्थे । त्यसमध्ये पहिलोमा पढे लेखेर नोकरी गर्ने, दोश्रोमा धर्मकर्म सामाजिक प्रचलनहरूमा सहभागिता दिने र तेश्रोमा केही हुन सके समाजको भेला गरी पुण्य आर्जन गर्ने, त्यसै कारणले यी लक्ष्यहरू भन्दा बाहिर गएर साहित्य, कलाकौशलतर्फमा संलग्न हुनु भनेको त्यतिसारो आम कुरा हुँदैनथ्यो । मैले भने पूर्वनिश्चित लक्ष्यहरूको पालना सम्मान गर्नुको साथसाथै साहित्य रचनातर्फ पनि ध्यान दिएको कुरालाई मैले अहिले विचार गर्दा यो लक्ष्य नभनेर एक प्रवृत्तिको परिणाम मान्नुपर्ने हुन आउँछ । त्यसैले अरू सामान्य मानिसहरूका लक्ष्यहरूलाई पनि मैले आफ्नो जीवनक्रममा मान्यता दिएर तिनलाई प्राप्त गर्न प्रयत्न गर्दै रहेँ तर प्रवृत्तिगत रूपमा आएको साहित्य रचनाको पक्षमा त्यतिसारो सफलदायी हुन सकेन भन्ने कुरा मैले स्वीकार गर्नुपर्दछ ।

❑

**नेपाली साहित्यिक पत्रकारितामा सुन्दर नाम बनाउन सफल**
**जनमत मासिकले त्रिशताङ्क (३०० पूर्णाङ्क) प्रकाशन**
**गर्न सफलता प्राप्त गरेकोमा जनमत परिवारलाई**
**हार्दिक बधाई ज्ञापन गर्दछौं ।**



## नेपाल हृदयरोग निवारण प्रतिष्ठान काभ्रे शाखा

*Nepal Heart Foundation, Kavre - Banepa*

Fb.com/nepalheartbanepa, Email: nhfbanepa@gmail.com Phone No: 986069533 9841458486

**मुटुलाई माया गरौं ।**

**मुटु स्वस्थ्य राख्नको लागि यी १० वटा कुराहरुमा ध्यान दिनुहोस् ।**



१. चुरोट, सुर्ती, गुट्खा र खैनी खाने बानी त्यागौ ।

२. दैनिक ३० मिनेट छिटो छिटो हिंड्ने, व्यायाम गर्ने, योग गर्ने बानी बसालौं ।

३. हरियो तरकारी र फलफूल प्रशस्त खाने । नुन, चिनी, चिल्लो कम गरौं । मुटु मैत्री खाना खाऔं ।

४. बालबालिकाको घाँटी दुख्दा, टन्सिल बढ्दा तुरुन्त औषधी गराउनु पर्छ ।

५. मोटो शरिर भए तौल घटाउने प्रयत्न गर्नु पर्छ ।

६. पिर, चिन्ता नलिने । कसैसँग नरिसाउने । उत्तेजनामा नआउने सकारात्मक सोच राखौं।

७. उच्च रक्तचाप, मधुमेह, कोलेस्टेरोल आदि रोगलाई पालेर नराख्ने तुरुन्त उपचार गरौं ।

८. दैनिक ६-८ घण्टा सुत्नाले मुटुलाई आराम मिल्छ ।

९. अरुलाई सहयोग गर्ने । सामाजिक कार्यमा लाग्ने । दान दिने । मुटु मैत्री व्यवहार गरौं ।

१०. केहि समस्या नभए पनि नियमित रुपमा स्वास्थ्य परीक्षण गरौं । (कम्तिमा वर्षको १ पल्ट)

# नेपालमा प्रजातान्त्रिक आन्दोलन र प्रजातन्त्र सेनानीहरुको योगदान



**देवीलाल श्रेष्ठ**
**जन्म : वि.सं. १९८९ असोज ओख्लढुंगा**
**अवसान : २०५७ फागुन ३**

सन् १८५६ को सनदले नेपालमा एकछत्र राणाशासन कायम भयो । शाहराजाहरू, व्यक्तिहरू, सामाजिक सङ्घसंस्थाहरू नेपाल भूमिमै जन्मेका नेपालको पहिलो राजनीतिक दल नेपाल प्रजापरिषद् आदिहरूले यो शासनको विरोधमा चालिएका कदमलाई निर्ममतापूर्वक दबाए । यस्तै २००५ साल कार्तिकमा नेपाल प्रजापञ्चायतले राणाशासन आफैँले प्रदान गरेको २००४ सालको संविधानअन्तर्गत रही केही सुधारको माग राखी गरिएको आन्दोलनलाई समेत निर्ममतापूर्वक दबाएका कारण नेपाली काङ्ग्रेसले हिंसात्मक तथा अहिंसात्मक दुवै रणनीति अपनाई राणासरकारको अन्त्य गर्ने निर्णय गर्‍यो ।

अतः नेपाली काङ्ग्रेस सशस्त्र सङ्घर्षको तयारीमा लागिरहेकै बखतमा इन्द्रजात्राको दिन राजा त्रिभुवनलाई भगाएर लैजाने योजनाविपरीत त्रिभुवन स्वयं २१ कार्तिक २००७ सालको दिन प्रायः सबै परिवारका सदस्यहरूसाथ नेपालस्थित भारतीय राजदूतावासमा शरण लिन पुगे र २६ कार्तिकको दिन भारतीय वायुयानद्वारा दिल्लीतर्फ प्रस्थान गरे । सोही राति नेपाली काङ्ग्रेसले राणासरकारविरूद्ध सशस्त्र सङ्घर्ष सुरू गरे । केही दिनभित्रै राणासरकारविरूद्ध सशस्त्र सङ्घर्ष धेरै जिल्लामा फैलियो । तर काठमाडौँ, भक्तपुर, ललितपुरमा चाहिँ अहिंसात्मक आन्दोलनको गति मात्र दिनानुदिन तीव्र हुँदै गयो । जङ्गबहादुरको समयदेखि नै अभिन्न मित्र बनेको ब्रिटिस सरकारले राणासरकारको समर्थनमा ज्ञानेन्द्रलाई नै नेपालका राजा बनाउने कूटनीतिक चाल चल्न थाल्यो । यसै सिलसिलामा दिल्लीस्थित ब्रिटिस हाइकमिसनर फ्रयांक रबर्ट तथा सुदूरपूर्वका लागि घुमिरहने राजदूत एवं परराष्ट्र मामिलाका विशेषज्ञ सर इस्टर डेनिङ काठमाडौँ आउने भए । ती कूटनीतिज्ञहरू मार्ग ४ गते काठमाडौँस्थित गौचरमा उत्रने चाल पाउनेबित्तिकै महिलाहरूको ठूलो जमातसाथ हजारौँ जनता एयरपोर्टमा पुगे । हवाईजहाज उत्रनेबित्तिकै चारैतिरबाट भीडले हवाईजहाजलाई घेर्न चाहे । त्यत्तिकैमा लाठीचार्ज भयो र गोलीसमेत चल्यो । उक्त लाठीचार्ज र गोलीसमेतको परवाह नगरी 'हामी प्रजातन्त्र चाहन्छौँ, हामी त्रिभुवन चाहन्छौँ' भनी लेखिराखेको पत्र शान्ता श्रेष्ठले ती कमिसनका सदस्यहरूलाई दिन सफलता हासिल गरिन् । ज्ञानेन्द्रलाई कूटनीतिक क्षेत्रबाट मान्यता दिलाउने प्रयास पनि असफल भयो र मुक्तिसेनाले एकपछि अर्को जिल्लामाथि कब्जा गर्दै लग्यो ।

भारत सरकारलाई केही सुविधा प्रदान गरेमा भारत सरकारले पनि ब्रिटिस सरकारले जस्तै भूमिका निर्वाह गर्ला जसले गर्दा राणाविरोधी तत्वलाई दबाउन सकिएला र आफ्नो शासन लम्ब्याउन सकिएला भन्ने धारणाले १९५० को सन्धि,

जुन १९४८ देखि मस्यौदा गर्न सुरू गरेका थिए, त्यसमा मोहनशमशेरले हस्ताक्षर गरेका थिए । जेसुकै भए तापनि चीनले तिब्बतलाई मुक्त गर्ने खुला घोषणा र तिनीहरूको त्यहाँ सैनिक गतिविधिका कारणले गर्दा भारतले आफ्नो अडानलाई अबिलम्ब पुनः विचार गर्नुपर्ने थियो । भारतको सोचाइमा साम्यवाद तिब्बतमा पुग्यो भने यसका प्रभाव नेपालमा पनि पर्नेछ । तत्काल राजसंस्था नै (साम्यवाद रोक्न) यहाँको आन्तरिक परिवेशमा सबभन्दा उत्तम विकल्प हुन सक्तछ भन्ने धारणा भारतको रह्यो । अतः उत्तरतर्फ चिनिया साम्यवादी गतिविधि बढ्दै गएका कारण नेपालमा लामो समयसम्म सशस्त्र सङ्घर्ष चालु राख्नु भारतका हितमा नहुने भएकोले भारत सरकारकै दबाबमा भारत सरकारले मस्यौदा गरेको प्रस्ताव, जस्तो : क) राजा त्रिभुवनलाई नै राजा मान्ने, ख) राणा र काङ्ग्रेसको संयुक्त अन्तरिम सरकारको गठन, ग) सन् १९५२ भित्र संवैधानिक सभाको निर्वाचन गराउने मस्यौदा मोहनशमशेरले जनवरी १९५० मा घोषणा गरे । सोही प्रस्तावलाई राजा त्रिभुवनले १० जनवरीमा समर्थन गरी नेपाली काङ्ग्रेस र मुक्तिसेनासँग सशस्त्र आन्दोलन रोक्न आह्वान गरे ।

राजा त्रिभुवन, राणासरकार र भारत सरकारको बीचमा भएको कुनै पनि वार्तामा नेपाली काङ्ग्रेस अहिलेसम्म सम्मिलित भएको थिएन र दिल्लीमा भएको वार्ताका विकासमा आफूलाई (नेपाली काङ्ग्रेसलाई) कम महत्व दिइएको महसुस भयो । अतः राजा त्रिभुवनको घोषणालाई स्वीकार्नुको सट्टा नेपाली काङ्ग्रेसका अध्यक्ष मातृकाप्रसाद कोइरालाले यसरी प्रतिक्रिया दिनुभयो - ... नेपाली काँग्रेसको झण्डा र नेतृत्वमा नेपाली जनताले गरिरहेको सङ्घर्षको उद्देश्य नेपालमा सामन्ती व्यवस्थाको अन्त्य र पूर्ण प्रजातन्त्रको स्थापना गर्नु हो । जबसम्म नेपालकै जनताको हातमा प्रभावकारी रूपमा शक्ति हस्तान्तरण हुँदैन, तबसम्म जनतालाई अन्तरिम व्यवस्था मान्य हुने छैन । यो तथाकथित घोषणाले जनताको हातमा शक्ति हस्तान्तरण गरेको मानिन्न । यसको लगत्तै अनिरूद्र गुप्ताका अनुसार नेपाली काङ्ग्रेसका नेताहरूलाई दिल्ली बोलाइयो र १६ जनवरी १९५० मा आन्दोलन स्थगित गर्ने घोषणा नेपाली काङ्ग्रेसले गर्‍यो ।

नेपाली काङ्ग्रेसका अध्यक्ष मातृकाप्रसाद कोइरालाको युद्धविराम घोषणाको सारांश :

श्री ५ त्रिभुवनबाट बक्सेको वक्तव्यबाट उत्पन्न वातावरणमा भारत सरकारसित पूर्ण विचारविमर्श गरेर नै यस विषयकालमा हामी भारतका प्रधानमन्त्रीको आदेश स्वीकार गर्दछौँ तथा नेपालको समस्या चाँडै नै सन्तोषजनक रूपमा हल हुने विश्वास गर्दछौँ । तसर्थ सबै कार्यकर्ता र मुक्तिसेनाहरूले गरिरहेको सशस्त्र सैनिक कार्यवाही बन्द गरी नेपालमा शान्ति स्थापना गर्नमा सहायता गर्ने काम होस् । साथै सुधार र प्रगति ल्याउनुमा भारत सरकारद्वारा उठाइएको कार्यप्रति आभार प्रकट गर्दछौँ ।

दिल्लीसम्झौताअनुसार राजा त्रिभुवन २००७ साल फागुन ४ गते काठमाडौँ आउनुभयो र ७ फागुन २००७ सालमा निम्नलिखित घोषणा गर्नुभयो : ... औ हाम्रा प्रजाको शासन अब उप्रान्त निजहरूले निर्वाचन गरेको एक वैधानिक सभाले तर्जुमा गरेको गणतन्त्रात्मक विधानअनुसार होओस् भन्ने अहिले हाम्रो इच्छा र निर्णय भएकोले ... ।

यसरी १०४ वर्षको राणाशासन अन्त्य भयो र नेपालमा प्रजातन्त्रको बीजारोपण भयो । यथार्थमा भन्ने हो भने राजा त्रिभुवन, राणासरकार र भारत सरकारहरूका बीच दिल्लीमा लडेका कूटनीतिक लडाइँ नै २००७ सालमा प्रजातन्त्रको बीजारोपणका निर्णायक परिणाम हुन् । प्रजातन्त्रजस्तो अनवरत रूपमा चलिरहने प्रक्रियामा प्रजातान्त्रिक अभ्यास पनि अनवरत रूपमा चलिरहने हुनाले प्रजातान्त्रिक आन्दोलनको काम यस कार्यपत्रमा २००७ सालसम्म मात्र दिएको छु ।

## नेपालका सन्दर्भमा प्रजातान्त्रिक सेनानी :

प्रजातान्त्रिक सेनानीको परिभाषा गर्नुभन्दा अघि प्रजातन्त्र कस्तोलाई भन्ने यसको परिभाषा दिन सकेमा प्रजातन्त्रसेनानी कसलाई भन्ने भन्नुमा सजिलो पर्न जान्छ । प्रजातन्त्र भन्न जति सजिलो छ, प्रजातन्त्रको परिभाषा दिने काम त्यत्तिकै गाह्रो छ । कसैले प्रजातान्त्रिक सरकारलाई बहुसङ्ख्यक जनताको शासन भन्छन्, कसैले यसलाई मूर्खहरूको शासन पनि भन्छन् । कसैले यसलाई जुन दलले निर्वाचनमा बहुमत प्राप्त गरेको छ, त्यही दलद्वारा शासन गर्ने व्यवस्थालाई नै प्रजातान्त्रिक सरकार भन्ने पनि चलन छ । यसै परिभाषालाई मान्ने हो भने निर्दलीय पञ्चायत व्यवस्थालाई प्रजातन्त्र मान्नुपर्ने खण्ड आउँछ । किनभने २०३७ सालको जनमतसङ्ग्रहमा यस व्यवस्थाले बहुमत प्राप्त गरेको सर्वविदितै छ । यस परिणामलाई स्व० विश्वेश्वरप्रसाद कोइरालाले समेत स्वीकार गरेको सर्वविदितै छ । अहिले नेपाली काङ्ग्रेसले जनप्रतिनिधिसभाको निर्वाचनमा बहुमत प्राप्त गर्‍यो तर के साँच्चिकै बहुमत

....... *बाँकी ८८ पेजमा* .......

# म मेरा कविता र राजा



धुस्वां सायमि
जन्म : वि.सं. १९८७ जेठ १०
न्हूसाल, काठमाडौं
अवसान : वि.सं. २०६२ पुस २

सशक्त नेपाल/भविष्यको नेपाल/पृथ्वीनारायण शाहको साहस/त्रिभुवनको मुस्कान/महेन्द्रको संकल्प ।

यी उपर्युक्त पंक्तिहरू ३० वर्ष अगाडि संयुक्त राज्य अमेरिकाबाट अध्यापन कार्य सकेर आएपछि, द राइजिंग नेपालको अनुरोधमा त्यसबेलाका श्री ५ युवराजाधिराज र अमेरिकालाई लिएर लेखेको थिएँ ।

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको दर्शनभेट गर्ने मौका मैले जीवनमा तीनपल्ट समूहमा पाएँ ।

पहिलोपटक नागार्जुन क्याम्पमा बुद्धिजीवीहरूको एउटा दर्शनभेट कार्यक्रममा म पनि सम्मिलित थिएँ । सरकारसँगको पहिलो दर्शनभेट भएकोले म बढी नै सतर्क र तनावमा थिएँ । महाराजाधिराजले हामी सबैसँग बढो स्नेह र रूचि लिएर कुरा गरिबक्सेको थियो । विचारहरूको आदानप्रदानमा सबै व्यस्त थिए । तर कसैले आफ्नो व्यक्तिगत कुरा अथवा पदोन्नतिको कुरा चलाएमा सरकारबाट बडो कुटनैतिक प्रकारले हुकुम हुन्थ्यो, "तिमी थाक्यौ होला आराम गर ।"

महाराजाधिराजले हामीलाई निकटबाट चिनिबक्सने कार्यमा श्री ५ बडामहारानीले पनि सकभर सहयोग गरिबक्सेको थियो । बीचबीचमा प्रत्येक व्यक्तिकहाँ सवारी हुँदै, "खाना कस्तो छ" भन्ने हुकुम हुन्थ्यो ।

एकातिर मौसूफहरू दर्शनभेटलाई सहजतासित लिन व्यवहार गरिबक्सिन्थ्यो भने अर्कोतर्फ मजस्ता केही व्यक्ति त्यहाँबाट चाँडै फर्कन पाए हुन्थ्यो भन्ने भावना लिइरहेका थियौं त कोही यही मौका हो गुमाउन हुँदैन भनेर आफ्नो सिफारिस सरकारसमक्ष बिन्ती चढाउँथे ।

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रमको "प्रारम्भिक शासनकाल" विषयक ग्रन्थ तैयार गर्न मसहित तीनजनाको एउटा टोली जाँचबुझ केन्द्रमा कार्यरत थियौं । श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जन्म जयन्तीको दिन बर्सेनि जाँचबुझ केन्द्रमा कार्यरत अधिकारीहरू र महाराजाधिराजका सचिवहरूसहित एउटा रमाइलो भेटघाट कार्यक्रम हुने गर्थ्यो ।

यस उपलक्ष्यमा नाचगानको साथै कविता वाचन गर्ने कार्यक्रम पनि हुन्थ्यो । यस्तै कार्यक्रममा मैले आफ्नो कविता सुनाउने मौका पाएको थिएँ । त्यसैताका मैले सुनाएका कविता :

*म कुकुर हुँ पालिराखेको छ*
*मान्छे भए फालिसकेको होला*
*मान्छे हुँ बोल्न दिएको छ*
*देवता भए गाडिसकेको हुन्थ्यो ।*

यो कविता पाठ गरेपछि श्री ५ स्वयंबाट अर्को कविताको निम्ति हुकुम

बक्स्यो । हुकुमअनुसार मैले अर्को कविता पाठ गरें जसको मलाई याद भएको अंश यस्तो थियो :

*ए मञ्जुश्री !*
*एकपल्ट फेरि खड्ग प्रहार गर*
*चारैतिर*
*नागै नाग छ यिनीहरूको संहार गर ।*
*०००*
*तिमीले धेरैपल्ट सरकार बदल्यौ*
*केही भएन*
*अब एकपल्ट जनता बदली हेर*

मेरो कविता मन परेको तथ्य सरकारहरूको अनुहारमा झल्केको भावनाले बुझें ।

यस्श्री ५ वीरेन्द्रको विशेष व्यक्तित्वको पहिचानमा यथार्थतालाई लिएर म एकपल्ट फेरि सरकार संयुक्त राज्य अमेरिकामा होइबक्सिंदाको केही कुराहरू यहाँ चर्चा गर्न चाहन्छु ।

अमेरिकाको प्रसिद्ध चिडियाखाना "ब्रोन्क्स जू" मा एउटा पूर्व पिस कोर स्वयम्सेवकले नेपालीमा भनेका थिए – "मैले नेपालको युवराजाधिराजलाई एउटा अमेरिकी परिवारको अनौपचारिक भेटघाट कार्यक्रममा भेटेको थिएँ । युवराजाधिराज अति सरल स्वभावका इमान्दार हृदयका । इतिहासका एउटा अद्‌भूत संयोग । व्यवहारमा निष्कपट । विचारमा दृढता । जोसित भेट्यो सौजन्य र देवत्व पाउने ।

नेपाल नेपालीको निम्ति । विश्वसित मित्रता । एउटा नयाँ जाँगर । नवनेपाल । भविष्यको नेपाल ।

सरकारसित दर्शन भेट गर्ने इच्छा जाग्यो । तर यस्तो अवसर पाउन लाग्दालाग्दै विभिन्न कारणले गुमाएँ ।

तर अध्ययन समाप्त गरेपछि सरकारको नेपाल फिर्ती सवारी हुँदाको एउटा घटना नेपालीहरूमा चर्चाको विषय बन्न पुग्यो ।

सरकार मोटरमा राज होइबक्सेको थियो । मोटर चल्नै लाग्दा एउटा सानो नेपाली केटाले सरकारमा अभिवादन गर्दै भन्यो "बाई, क्राउन प्रिन्स ।"

एकक्षणको निम्ति वातावरण नै स्तब्ध भयो । सबैको मुटु काम्न थाल्यो । चारैतिर एउटा भय र त्रासको लहर देखापर्‍यो । "बाई नाउ, सी यू अगेन" सरकारले हुकुम भयो । मोटर चल्यो । मैले यन्त्रवत विचार गरें । यही हाम्रो नेपाल । भविष्यको नेपाल सशक्त नेपाल ।

यसै पृष्ठभूमिमा म सदा सर्वदा श्री ५ वीरेन्द्रको व्यक्तित्वलाई सम्झने गर्दछु । पार्टीविहीन व्यवस्थादेखि आजको बहुदलीय व्यवस्थासम्म ।

महाराजाधिराजसँग म मेरो अन्तिम (पछिल्लो) दर्शनभेटको कुरा उल्लेख गर्न चाहन्छु – गोकर्णको शाही क्याम्पछि विभिन्न कारणले राजदरवारमा नै वार्षिक भेला समारोह हुने भयो । त्यो दिन म अलि विचलित थिएँ । तीन वर्षमा नै उप-सचिवले राजाज्ञाबाट प्रमोसन पाएको तर म १५ वर्षभन्दा बढी सेवा गरेकोले पनि नपाएकोमा मलाई असजिलो र नमज्जा लागिरहेको थियो ।

यस्तै मेरो मनस्थिति भएको बेलामा राजदरवारका एक अधिकृतले मलाई आलोचनात्मक कविता नपढ्न अनुरोध गरे । यो कुराले एक प्रकारको वेदना भयो । यो कुर्सीको कस्तो बन्धन । तर मैले मेरो ब्रह्माण्डले देखे अनुसार गर्नुछ भनी सहभागी हुन गएँ । नियमित रूपमा सबैकुरा भयो । मैले कविता पढें । … केही शर्त केही सम्झौता/केही आस्थाप्रति अन्धभक्ति/केही मान्यताप्रति मौन स्वीकृति/आजको जीवन कस्तो कस्तो/मान्छेको भए पनि पशुभन्दा सस्तो/त्यस्तै, धारिलो चुप्पीलाई/भुत्ते बनाउनु छ भने/ मखन काट्ने गर/ विवेकी मान्छेलाई कुण्ठित गर्नु छ भने / जागिर देऊ काम नदेऊ ।

मलाई लाग्छ यी सबै कविताले नै धेरैको मगज रन्थनिसकेको थियो । तर मेरा जुन कविताले एउटा ज्वालामुखीजस्तै हलचल मचायो त्यसको केही अंश यस्तो थियो–

*ताराहरूसित ज्योति खोसेर*
*प्रकाश दिन खोज्ने ए ! मेरो मान्छे*
*पहाडहरू भत्काएर*
*अमृत दिन खोज्ने ए ! मेरो मान्छे*
*तिम्रो चारैतिर*
*दासै दास छ, लाशै लाश छ*
*ए ! मेरो मान्छे ! ए ! मेरो मालिक*
*मलाई इच्छा छैन*
*इतिहासको शिलाखण्डमा तिम्रो नाम*
*अंकित होस्*
*दासको राजा भनेर, लाशको बादशाह भनेर ।*

मेरो यो कविता सुनेर एकजना सचिवज्यूले मलाई भन्नुभयो : सरकारबाट विश्राम लिन यो भेला गरिबक्सेको तपाईंले वातावरणलाई नै तनावयुक्त बनाइदिनुभयो ।

त्यस्तै अर्को एकजना सचिवले त मलाई चिन्दै नचिने जस्तो व्यवहार गर्न लागे । कसैले यस कवितालाई मात्र होइन अरू कुनै कवितालाई पनि मन पराएँ भन्न

साहस गरेनन् ।

सबैलाई अब मेरो जागिर नै जाने भयो भन्ने पनि विचार आयो होला । सबैले मलाई अछूत जस्तो व्यवहार गर्न लागे । तर कुन्नि के कारणले म किंचित मात्रामा पनि विचलित थिइन । यस्तैमा सबैसित कुरा गर्दागर्दै सरकार म नजिक सवारी भयो र हुकुम भयो – "प्रोफेसर, आई अन्डरस्टाण्ड यू ।"

सरकारका यी शब्दहरूले मलाई नैतिक बल दियो । आफ्नो विश्वास आफूमाथि सशक्त भयो ।

राजसंस्थाबाट यस्तो मानवीय माया मैले एकपल्ट पहिले पनि पाएको थिएँ । त्यसबेला मेरो एउटा लेखले मन्त्रालय र सचिवलायमा हलचल मचाएको थियो । त्यसबेला नेपाली राजतन्त्रको उत्पत्ति विषयमा एउटा लेख लेख्दा यो भनेको थिएँ कि – "नेपालको राजा देवता हुन् । तर देवता भए जन्म लिएर होइन अथवा कुनै देवताले राजालाई देवत्व दिएर राज्याभिषेक गरेर पनि होइन । अपितु जनताप्रति राजाले गरेको जनहितकारी कामले जनताले श्रद्धापूर्वक राजालाई देवता बनाए ।"

त्यसबेला पनि मेरो जागिर नबच्ने कुरा भयो । तर पछि मैले थाहा पाएँ दरवारबाट कुनै सचिवले फोन गरेर त्यो लेख छापिएको अखबारलाई यस्तो लेख छाप्न मलाई उत्साहित गर भनेछन् ।

जागिरे प्रवृत्ति भएका मानिसहरूमा मेरो कविता पाठपछि त्यही मनस्थिति आउन थाल्यो । मित्रहरू टाढिन थाले । तर सबैलाई आश्चर्य त्यसबेला भयो जब सचिवालय मन्त्रालय कहींबाट सिफारिस नभएर पनि सोझै सरकारबाट गोर्खा दक्षिणबाहु पाएँ र लगत्तै त्यही वर्षमा मैले करिब १८ वर्षसम्म नपाएको पदोन्नति पनि पाएँ ।

मेरो निम्ति यो मात्र व्यक्तिगत सफलताको कुरा नभएर एउटा लेखकको स्वतन्त्र अभिव्यक्ति गरी सिर्जना गर्न पाउने कुराको जिउँदो प्रमाण लाग्यो । म एउटा जागिरे मात्र होइन एउटा लेखक पनि भएकोले गर्वित हुनु स्वाभाविक थियो । मलाई आज पनि स्मरण छ मैले आफैंसित त्यो क्षणमा भनेका थिएँ –"हेयर स्टाण्ड्स द म्यान, हेयर स्टाण्डस् द किङ्ग ।"

❑

## नेपालमा प्रजातान्त्रिक आन्दोलन .......

प्राप्त गरेको थियो त ? निश्चय नै बहुमतबाट प्रतिनिधि निर्वाचित भयो, तर यस पार्टीले सम्पूर्ण मतदाताको ३९% मात्र प्राप्त गर्‍यो । तर विपक्षीले ६१% मत प्राप्त गरेको थियो भने यस सरकारलाई कसरी प्रजातान्त्रिक सरकार भन्ने ? यो त अल्पमतको सरकार भएन र ?

जसले जेसुकै रूपमा प्रजातन्त्रको परिभाषा दिए तापनि हामी के भन्न सक्छौं भने प्रजातान्त्रिक व्यवस्थामा हरेक नागरिकको महत्वपूर्ण सहभागिता हुन सक्ने वातावरणको सिर्जना गराउन नसक्ने सरकारलाई प्रजातान्त्रिक सरकार भन्ने अधिकार हुने छैन । पूर्ण प्रजातान्त्रिक सरकारमा सबैले आफ्नो व्यक्तित्व विकास गर्ने समान अवसर पाउनुपर्दछ । हरेक नागरिकले शिक्षा, स्वास्थ्य, गाँस, आवास, सुरक्षाको पूर्ण ग्यारेन्टी पाएको हुनुपर्दछ । हामी के ठोकुवा गर्न सक्छौं भने हालसम्म अमेरिकालगायत कुनै पनि राष्ट्रमा पूर्ण प्रजातन्त्र आइसकेको छैन । तर हरेक राष्ट्र पूर्ण प्रजातन्त्रप्राप्तिका लागि प्रयत्नरत छ । यो क्रम निरन्तर रूपमा चलि नै रहनेछ । यो क्रम १०-२० वर्षमा पूरा हुने होइन । बेलायतमा प्रजातन्त्रको सुरूआत तेह्रौं शताब्दीबाट सुरु भए तापनि हालसम्म त्यहाँ पनि पूर्ण प्रजातन्त्र आइसकेको छैन ।

अतः यथार्थ रूपमा प्रजातान्त्रिक उपलब्धि प्राप्त गर्ने क्रममा सङ्घर्षरत व्यक्तिहरूलाई नै प्रजातन्त्रका वास्तविक सेनानी मान्नुपर्ने पृष्ठभूमिमा हेर्दा नेपालका सन्दर्भमा वि० सं० १९९३ उप्रान्त २००७ साल फागुन ६ गतेसम्मका राजनीतिक कार्यकर्तालाई नै त्यसअनुरूप सम्मान गरिनु उपयुक्त ठहरिनेछ । प्रजातन्त्रजस्तो अनवरत रूपमा चलिरहने प्रक्रियामा प्रजातान्त्रिक अभ्यासका क्रममा हुँदै जाने पछिका घटनामा विशेष योगदान गर्ने व्यक्तिहरूलाई प्रजातन्त्रको सेनानीको सट्टा सक्रिय राजनीतिक व्यक्तित्वका रूपमा स्वीकार गर्नुपर्ने हुन्छ । भारतवर्षमा भारत स्वतन्त्र नहुन्जेलसम्म प्रत्येक अङ्ग्रेजविरोधी स्वतन्त्रतासङ्ग्रामका सङ्घर्षशील व्यक्तित्वलाई स्वतन्त्रतासेनानीका रूपमा भारत सरकारले सम्मान गरेजस्तै पुराना राजनीतिक कार्यकर्ता सम्मान गुठी नेपालले निरङ्कुश राणाशासनविरूद्ध २००७ साल फागुन ६ गतेसम्म सङ्घर्षरत व्यक्तित्वहरूलाई काङ्ग्रेस, कम्युनिस्ट, पञ्च आदि कुनै भेदभाव नराखी २०४९ साल फागुन १ गते प्रजातन्त्रसेनानीका रूपमा सम्मान कदरपत्र, दोसल्ला, चौसल्लाद्वारा सम्मान गरिनु अत्यन्त प्रशंसनीय कार्य हो । सायद यसैको अनुकरण गरी नेपाली काङ्ग्रेसले पनि आफ्ना कार्यकर्ताहरूलाई प्रजातन्त्रसेनानी पदकद्वारा सम्मान गरिनु नराम्रो होइन । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

दिपेन्द्र श्रेष्ठ
अध्यक्ष, व्यवस्थापन समिति

गोपालकुमार पाण्डे
प्रधानाध्यापक

**फुलचोकी माध्यमिक विद्यालय**
ठैव, गोदावरी नपा

# शकुन्तलाको चिन्तन



**पारिजात**
**जन्म : वि.सं. १९९० फागुन ३०**
**लिङ्गे चियाबगान, दार्जीलिङ**
**अवसान : वि.सं. २०५० वैशाख ७**

भर्खर निर्माण भएको दुईतले घरको स्टोर सँगसँगै बनेको एउटा चिसो सिंडीमा काखमा स्याकिने छोरो तेर्साएर ऊन केलाउँदै शकुन्तला सोचिरहेकी छ । यतिखेर घडीले साढे आठ बजाइसक्यो, झोल भात पाकेर पनि सेलाइसकेको छ । शकुन्तलालाई थाहा छ आज उसको लोग्ने अलिकति आश्वस्त भएर, अलिकति रिझिएर आउने छ किनभने शकुन्तलालाई यो पनि थाहा छ कि उसको लोग्ने पियन हरिप्रसाद न्यौपानेको हाकिमले आफ्नी स्वास्नीलाई रिझाएको बेला अलिकति ड्रिङ्क गर्ने गर्छ त्यही मौकामा न्यौपानेलाई पनि अलिकति पिलाउँछ । यस्तो मौका महिनामा चार पटकभन्दा बढी हुँदैन बरू घट्छ । कहिलेकाहीं पाहुना आए पनि हाकिमनीले रक्सीको बोतल निकाल्दिनन् । स्वास्नी रिझाएर लोग्ने दामी रक्सी पिउँछ, स्वास्नी बेसकनै नखरा पारेर मात्र बोतल खोल्छे र केही त ऊ पनि रिझाएर लिन्छ । त्यसपछि बडो मसिनो तरिकाले पियन न्यौपाने रिझिन्छ । यी रिझाउनेहरूले आपसी अनुबंध राम्रै बुझेका छन् । यति हो न्यौपाने रिझाइनुको निम्ति रिझाइन्छ । यी सबैभन्दा अलग शकुन्तला छे जसलाई कसैले रिझाउँदैन र जसले कसैलाई कसैलाई रिझाउँदिन । शकुन्तला धेरै कुरा बुझ्छे । परिस्थितिले उसलाई त हाँगा-हाँगा हिड् म पात-पात हिंड्छु, यस्तो सिकाइसकेको छ ।

नौ त बजिसक्यो अझ न्यौपाने आउँदैन । भर्खर बस्ती बस्न लागेको यो पाखामा यति खेर रात हुनुको चकम्मन्न पर्याप्त भइसक्छ । शकुन्तला निधारमा गाँठो पारेर केही सोच्छे र मनमनमा आफैँसँग वार्तालाप गर्न थाल्छे । एकलै हुँदा वार्तालाप गर्ने आफैँसँग न हो । ऊ बोल्छे हाकिमको अनुहार त मैले राम्रोसँग देखेकी पनि । अँ, ड्रिंक गरेको बेला स्वर भने अलिक चर्को आउँछ । हाकिम्नी त मसँग सोझो मुख गरेर बोल्दिन । भान्सासम्म चियाउन पाएकी छ, नत्र बाहिर-बाहिरै । कुरा गर्न छोराको बाबु मार्फत् । "ए बाहुन ! आज तेरो दुलहीलाई भनी दे है कपडा यहाँ झिकीराखेकी छु सबै धोइदेओस्" अथवा "यहाँ भान्सामा सामान झिक्या छ अचार पारेर गइदेओस्" यी यस्तै-यस्तै त हो नि । होइन यी हाकिम्नी मसँग डराउँछिन् कि क्या ? कुन्नि वा ___श्री बाबु समानको हाकिमलाई कसले हेरोस् । हाकिम्नीहरू पनि तालतालका हुन्छन् । यो छोराको बाबुले एउटै हाकिमकहाँ चारवर्ष चाकरी गरिसक्दा मैले चार हाकिम्नीको घर-धन्दा भियाइसकेकी छु । पहिले बसेको ठाउँमा हाकिम्नी बेसै हो । म पनि भर्खरै गाउँबाट आएकी यहाँका चालामाला केही थाहा नाइँ । मालिक खाउँला जस्ता गरी हेर्थे मैले त मालिक्नीलाई भनिदिएँ -"मालिकलाई चिया पुऱ्याउन जान्न म, यत्रा-यत्रा आँखा खोलेर हेर्छन् ।" सर्पको खुट्टा सर्पले देख्छ भने जस्तै चेताइदिएकी हुन् विचारी मालिक्नीले "होश पुऱ्या है तेरो मालिकको बानी राम्रो छैन ।" यो हाकिम्नी त कस्ती छे, हाकिम उस्तै भए भनिदिनुपछ, म उस्ती भए मलाई भन्नुपर्छ । घरमा छिर्न पनि नदिने, काम पनि

लगाउने । म गरीबको रूप रङ्ग के छ र ? हाकिम्नी त सधैं सिंगार पारेर बस्छिन्, तर लाग्नेमान्छेलाई त रूपरङ्ग पनि चाहिन्छ होला र ?

ढोका घरक्क उघारेर न्यौपाने भित्र पस्छ । शकुन्तलाको एकान्तिता छुक्रिन्छ । दालमोठको एक प्याकेट स्वास्नीतिर फाल्दै भन्छ "ला भोलि छोराले खान्छ" "हाकिमको यति खेरसम्म गफ सुनिदिएको ज्याला यति हो" शकुन्तला व्यङ्ग गर्छे । व्याकुल आँखाहरूले स्वास्नीलाई एकपल्ट हेरेर न्यौपाने टुक्रुक्क भुइँमा बस्छ । यो उसको भात खाने मुद्रा हो । छोरालाई सुकुलमा सुताइदिएर शकुन्तला स्टोभ सल्काउँदै भन्छे "आज के भन्छन् नि हाकिम ?"

"सधैं जे भन्छ त्यही" भनी न्यौपाने विरक्तिको भाव देखाउँछ । "सधैं जे भन्छ त्यही भन्ने त मलाई पनि थाहा छ नि थप केही भन्यो कि भनी सोधेकी ?" शकुन्तलाको आवाज छिट्टो निखारिन्छ ।

न्यौपाने त्यस्तै व्याकुल आँखाले स्वास्नीलाई हेर्छ मानौं याचना गरिरहेछ, विवाद नगर थाकेको छु । भात खाइसकेर न्यौपाने चुरोट सल्काउँछ र छोराको नजिकै गुडुल्किन्छ । धन्धा सिध्याएर शकुन्तला ऊन केलाउन बस्छे र प्रतीक्षा गर्छे एउटा रूटिनबद्ध आदेशको । छोराको बाबु निदाइसक्छ "हस् हजुर" भन्नको निम्ति पनि उसले जागो बस्नै पर्छ । केही छिनपछि भ्यागुताहरूको सामूहिक आवाजलाई चिर्दै भान्सातिरको झ्यालबाट त्यो प्रतिष्ठित आदेश हाकिम्नीको पातलो भए पनि उच्चताबोध भएको स्वरमा आउँछ "ए न्यौपाने ! चनाखा भएर निदा है, काठ-पात, डण्डी यसै छ ।"

"हस् हजुर !" त्यसपछि दुवैतिरको झ्याल एक साथ बन्द हुन्छ - हाकिम्नीको जोड्ले र शकुन्तलाको विस्तारै । शकुन्तलाको जीवन एक किसिमको एक रस र विसंगत हुँदै गइरहेको भान शकुन्तलालाई हुन थालेको छ आजभोलि । चनाखो बस्नु र निदाउनु यी विपरीत अनुभवलाई एकै ठाउँमा मिलाउँदा कस्तो हुन्छ । यो अप्ठ्यारो विवादमा शकुन्तलाको मनस्थिति जान-अनजान अलिकति फस्छ । आज ऊ सोच्न थाल्छे माकुरालाई जालो लाउन कसले सिकायो होला, चराको बचरोलाई त माउले उड्ने सिकायो, पुतलीलाई कसले सिकायो । सोच्न नपाउँदै उसलाई चारथरी मालिक्नीको सम्झनाले चार सुरबाट बिथोल्छन् । शकुन्तला आत्मकेन्द्रित भएर आफैसँग बोल्न थाल्छे । यो हाकिमको घराँ सरेको पनि अब सात महिना हुँदैछ । यसो घर पनि कुरा, तेरो डेरा बहाल पनि बच्ने भनी उनैले ल्याएका हुन् । र यहाँ आएर पनि डेरा बहाल बचेको होइन क्यारे । खोइ के खा'छ के ला'छ ? सधैं यी हाकिम्नीलाई कराउन पर्ने किन होला ? चनाखो पनि बस्नु निदाउनु पनि रे एकैचोटि । मेरी आमै ! यो पनि हुने कुरा हो र ? कि चनाखै बस्नुपर्‍यो कि निदाउन पर्‍यो । जम्मामा भनिंदा भनेको हो । यी हाकिम्नीले हामीलाई कुकुर ठानेर यो चिसो छिंडीमा राख्न ल्याइछन् । माल सामान कुर्ने, भान्साको धन्धा गरि दिने, लुगा धोइ दिने मान्छे सित्थै पाए कसले राख्दैनन् । बस्नलाई अलि ओभानो ठाउँ पाए पनि ए ठीकै छ भन्नु । यो छोराको बाबु निम्छरा भएर यस्तो दुःख पाएको नि । रक्सी खाएको बेला कुराले दंग पारेर पठाउँछन् । मान्छे दिनदिनै खिइँदै गएको थाहा छैन । अब शकुन्तलालाई हाकिम्नी र न्यौपाने दुवैसँग झोंक चल्छ । न्यौपानेलाई काँधमा झक्झक्काउँदै शकुन्तला भन्छे "ए सानेको बा, कस्तो निद्रा हो । उहाँ भने हाकिम्नी दिनदिनै चनाखो भएर निदा भन्छिन् । आफू भने घुर्ने म चनाखो बस्ने ?"

न्यौपाने स्वास्नीलाई माया गर्छ यसले होइन कि ऊ लोग्नेको निम्ति दुःख गर्छे । त्योभन्दा बेग्लै अर्कै केही छ त्यो पनि न्यौपाने पनि बुझ्दैन । बुझ्नको निम्ति न्यौपाने स्वास्नीलाई प्रेम गर्छ । स्वास्नीको आँखामा सधैं केही खोजिरहन्छ ऊ । त्यस्तै-त्यस्तै भावपूर्ण आँखाले स्वास्नीलाई हेरेपछि भन्छ ल तँ सुत् न त म बसुँला ...ल आ ।"

हो यस्तै स्थितिमा शकुन्तलालाई लोग्नेप्रति माया लागेर आउँछ । ऊ सोच्छे यति पनि थाहा छैन उसको लोग्नेलाई कि यहाँ उनीहरू एकजना सुत्न र एकजना जागा बस्न आएको होइन । हाकिमको काठपात कुरेर घर बहाल बचाउनुभन्दा अलिकति महंगो छ सुखको मानो खाएर बिछ्यौनामा पल्टिने, थकानको निद्रा सुत्ने उनीहरूको रात ।

शकुन्तला भन्छे "के यहाँ हामी एकजना सुत्ने एक जागराम बस्ने कबोलमा आएका हौं ? तपाईंलाई थाहा छ यी हाकिम्नीले हामीलाई कुकुर ठानेकी छन्, कुकुर । सधैं राती-राती ए बाहुन् चनाखा भएर निदा है भन्नुपर्छ ? कुकुर जातमात्रै चनाखो भएर निदाउन सक्छ । निदाई राखेको बेला चोर-चकार आए कुकुरले तुरून्त चाल पाउँछ अनि भुक्छ । के हामी कुकुर हौं, यहाँ भुक्न आएका ? यस्तो चिसो छिँडीमा के होला यो सानेको हाल ?"

त्यै पनि विस्फारित आँखाले स्वास्नीलाई हेर्छ । ऊ आँखाबाट करूणा खोल्छ मात्र करूणा । स्वास्नीको निम्ति ऊसँग कुनै विकल्प छैन । दसौं हण्डर खाएपछि यही हाकिमले उसलाई काममा झुन्ड्याइदियो, ऊ त्यति जान्दछ । ऊ छातीबाट होइन मुखबाट बोलेको जस्तो गरी स्वास्नीलाई सम्झाउँछ - "भैगो जसोतसो सहुँ न त । हिउदाँ हाकिमले

ढलान गर्छु, भनेको छ त्यसपछि तँलाई अन्त कतै सारूँला ।"

शकुन्तलालाई बुझ्न गाऱ्हो पर्दैन कि उसको लोग्नेले उसलाई साँच्चै मुखबाटै सम्झाइरहेको छ व्यवहारमा ऊ यति पनि गर्न सक्दैन, हृदयमा माया र प्रेमको अपार सागर नै किन नहोस् । स्वास्नीलाई ऊ हवाईमहलको कल्पना दिन सक्ने मान्छे होइन त्यसैले मात्र मुखबाट बोल्छ । उसको औकात नै त्यति हो ।

त्यस रात, रातको एक बजेसम्म शकुन्तला ऊन केलाएर बस्छे र न्यौपाने – निदाउन र चनाखो बस्नुको साधनामा लीन भएर जागराम बस्छ । सायद निद्रा नलाग्नुको कारण अरू पनि हुन सक्छ । शकुन्तला सुत्ने तर्खर गर्छे । ऊ त्यो शकुन्तला होइन जसलाई दुर्वासाको अभिसाप परेको होस् । त्यसो त आजका शकुन्तलाहरूलाई बिना कुनै दुर्वासाबाट अभिशप्त दुष्यन्तहरूले परित्याग गर्ने गर्छन् । न्यौपानेको शकुन्तलालाई यस्तो भय हाल पटक्कै छैन । शकुन्तला आफैँसँग बोल्न थाल्छे "होइन यो हाकिम्नीले सधैं हाकिम बस्ने कोठाको झ्यालको पर्दा हाकिम आउना साथै लगाइहाल्छिन् । आफू देखा पर्ने ठाउँमा भने पर्दा पातलो छ र खुल्लै पनि राख्छिन् । मैले एक पटकसम्म बैठकको अनुहार देखेकी छैन । के यिनी मदेखि साँच्चै डराएकी हुन् त ? हाकिम पनि त त्यस्तो मान्छे होइन होला नि । यिनले मलाई नकच्चरी, नखरमाउली के नै ठानेकी छिन् हैं ?" प्रत्युत्तर नपाउँदै ऊ निद्राको पखेटाभित्र पसिसकेकी हुन्छे ।

आज, कुनै खास लामो अन्तरालपछि पनि होइन । केही फरक जरूर छ । खेत हुँदो झिलिन्चा देखिन थालेको छ, भ्यागुता कम कराउँछन् र दिउँसो झ्याउँकीरी कराउन थालेका छन् । घाममा सम्वेदनशीलहरूले दशैंको बास सुँघ्न थालिसकेका छन् । यसबीचमा खास त्यस्तो केही भएन । साने एकपल्ट निकै साह्रो बिरामी पऱ्यो, बस । आज, फेरि ऐजन, ऐजन – भएको छ । हाकिम ड्रिङ्क गर्न थालेका छन् । रिझाएका छन्, रिझिएकी छिन् सायद केही रिझाउन । –घटीमा एउटा बनारसी साडी । आज भारतीय लाहुरे पसेको छ त्यो घरमा । परिणामस्वरूप न्यौपाने अलिकति रिझिएर आउनेछ । सानेलाई एक पुडिया दालमोठ । शकुन्तला ओठको कुनामा हाँस्दै ऊन कात्न बस्छे उसको रूटिनमा पनि कुनै हेरफेर भएको छैन । ऐजन समयमा ढोका उघारेर न्यौपाने भित्र पस्छ । एक पोका दालमोठ स्वास्नीतिर मिल्काउँछ र भन्छ "भोलि सानेले खान्छ ।"

सुकुलमा बसी च्यूडो घुँडमा राख्दै सोध्छ "भात पा'को ?"

"पाको मात्र होइन, सिङ पनि उम्रिसक्यो ।" शकुन्तलालाई जीवनको एक रसताले चिथोरेर धेरै घाइते बनाइसकेको छ । ऊ चाहन्छे कतैबाट यसलाई बिथोलूँ । नयाँ केही होस् न, राम्रो नराम्रो जस्तो होस् ।

"हाकिमले आज के भने ?" चर्को स्वरमा सोध्छे । उही मुद्रामा जवाफ दिन्छ "आज अर्थोक के भने ?"

"कस्तो अर्थोक ल सुनौं ?"

तँ मुला बाहुन दस क्लाससम्म पुगेकै रहेछस् चोरचार गरेर भए पनि एस.एल.सी. पास गर । टाइप सिक तँलाई म बढुवा गराइ दिइ हाल्छु नि ....।"

कुरा टुंगिन नपाउँदै शकुन्तला आँखा स्थिर पारेर एकटक न्यौपानेलाई हेर्दै भन्छे- "सानेको बा तपाई मान्छे होइन, मैले आजको दिनमा भने-भने । तपाई मान्छे होइन । बरू आफू पनि अलिकति रक्सी घुट्काएर कराउनुस् न, मेरो छोरो अस्ति निमोनियाले झन्डै खुस्केको, जहानलाई बाथ होला जस्तो छ, उ त्यो स्टोरघरमा सर्छु । केको एस.एल.सी. अहिले । यो कोठाभन्दा त्यो स्टोर घर सुख्खा छ । त्यति त भन्न नसक्ने तपाई मान्छे होइन ।" शकुन्तला स्थिर आँखासँग आँखा जुधाउन न्यौपानेलाई निकै गाऱ्हो पर्छ । कि ऊ डिँड्छ कि पल्टन्छ तर आज त्यसो भएन ।

न्यौपाने मान्छे जसले सधैंको भन्दा कडा आवाजमा कराउँछ "तँ आइमाईलाई के थाहा छ ? म जस्तो सुईखुट्टे पियन एक्लैले_यामानाको हाकिमको केही पनि लछार्न सक्तैन । ह्याउ पुग्छ भने तँ गएर भन्न जा ।"

यति भनेर न्यौपाने फेरि च्यूँडो घुँडामा जोतेर बस्छ । ठीक त्यति नै खेर शकुन्तलाका आँखाका कुना र ओंठको कुनामा एउटा छरितो हाँसो अति छिट्टो खेलेर भाग्छ । ऊ भात तताएर पस्कन्छे र भन्छे "ल भात खानुस् नरिसाउनुस् ।"

आज यस परिवारमा स्थिति असामान्य छ । एउटा छरितो हाँसो खेल्न त खेल्यो शकुन्तलाको ओंठ र आँखामा तर मनमा अर्कै-अर्कै पैऱ्हो गएको छ । भात खाएर न्यौपाने सधैंझैं छोराको छेउमा गुडुल्किन्छ । शकुन्तला निष्क्रिय छे एकदम । उसको कान आज ठाडो छैन ऐजन आदेश सुन्नलाई । केही बेरपछि भुतप्रेतको कथामा जस्तै त्यो आवाज आउँछ "ए बाहुन अलि चनाखो ..।"

आज "हस् हजुर" भन्ने फिर्ती जवाफ जाँदैन । "निदायो कि क्या यो न्यौपाने खलक ?" यता फेरि मौन ।

गन-गन गर्दै हाकिम्नीले झ्याल जोड्ले लगाई । यतापट्टि बिस्तारै भए पनि झ्याल बन्द भएन । शकुन्तला सोच्न थालेकी छे उसको आजभोलिको जीवनको एक रसता कति बिथोलियो । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

कृष्णमान कायस्थ / मिरा कायस्थ

**मुकेश प्रतिष्ठान नेपाल**

बनेपा, काभ्रे

# टुक्रा-टुक्रा जिन्दगीमा बेरुप म बाँचेको छु



पूर्ण वैद्य
जन्म : ने.सं. १०५७ गुँलाथ्व १५
चोछैँ, भक्तपुर
अवसान : वि.सं. २०७८ भाद्र १०

कतिपय विचार
व्यवहारमा साट्न नसकी
आजको बजारबाट
जिन्दगी - म
कयौंपटक खोटो सावित भई
फर्केको छु ।
आफै भाउ हराएको
यस सहरबजारमा
अजङ्को टल्कने सापझैं -
बग्दै आइरहेको सभ्यताको जिउमा
चिप्लिएर
कैयौंपटक मैले आफैलाई -
हराएर आएको छु
आफैले आफ्नो हुलिया दिएर आएको छु

प्रचलित मूल्यको
शब्द विपरीत - म
दिनहुँ
अवमूल्यन -
अवमूल्यनको
सिँढीबाट खसेर
बैंसभरिको आँटमा
साँचेर ल्याएको
सिङ्गै रूप मेरो
छताछुल्ल पोखिएका छन्
हिलैहिलोको यस दोबोटोमा
कति टिप्नै नभ्याई
कतिपय मानिसको क्रूर अहम्‌मा
रूप मेरो चूर्ण भएको छ
जहाँकहीँ कुल्चिएर
यसरी आज म

आफ्नै बन्दो आकृतिबाट
धुजिएर च्यातिएको छु
टुक्रिएर फुटेको छु
आफ्नै इच्छित रूपबाट
विखण्डित - म
टुक्राटुक्रा जिन्दगीमा
बेरूप बाँचेको छु ।
रूप आफ्नो हराउँदै आएको छु ।
रूखको विशाल रूप
सूक्ष्मतामा घनीभूत बियाँझैं
कुण्ठित स्थितिको
सीमिततामा पाय्क - म
आफै रूपको
मात्र, प्रारूप
सीमितता र अनिश्चितताबाट घस्रंदै
आफ्नो रूपको आकाश खोज्न हिँडेको,
फैलिन -

तर, उज्यालो समय खोज्दा-खोज्दै
यहाँका फोहोर अँध्यारा समयहरूले
मलाई कति खाएका छन्
कीरा लागेको बीउझैं ।
सान्त्वनाले मात्र
टालेको जिन्दगी - यो ।
जहाँ पनि तन्काइराखेको
काँडे तार - यथार्थहरूमा मात्र
अड्केर -
जिन्दगी मेरो
जहाँ-तहीँ च्यातिएको छ ।

तिमीलाई थाहा छ -
जिन्दगी-म
जहाँ-जहाँ च्यातिएको छु
त्यहीँत्यहीँ नै मेरो समय
नाङ्गो देखिएको छ
घाउबाट पीपझैं
त्यहाँ मेरो सत्यबाट
वीभत्स र विसङ्गतिहरू
चुहिँदै आइरहेछन् ।

किर्तेमा नै अरूको प्रारब्ध
बेचबिखन हुने
यस सहर बजारमा
म फेरि आफैलाई बटुल्न आइरहेछु
चूर्ण भएका आफ्ना रूपका कनिकाहरू
सधैर्य जोड्न र फिँजाउन
म फेरि आफ्नो जमिन खोज्न आइरहेछु
मात्र, मोलतोलको यस धरातलमा
म फेरि आफ्नो मोल सोध्न आइरहेछु
आफ्नो विचार साट्न आइरहेछु ।
यहाँकै व्यवहारहरूमा ।

❑

*<u>नेपालभाषाका कविताहरू</u>*

# ई वइच्वन सहिद लुमंकेगु

जिग छँय्
जिगु मिखाय् जाय्क
ई वइच्वन
शहीदया लुमन्ति बेकुंच्यानाः
खः दिन वइच्वन
शहीद लुमंकेगु ।

आशां जिर्ण
शहीद स्वप्न !
सरां कःगु बाखंथें
चाह्यु जुयाच्वन
मन्त्रालये, शिक्षालये
थ्व गल्ली, सतकय्
बुइ खुसि सिथय्
मानु सुनां थियाः
वइत साकार यानाबीथें
थय् दँय् दँय् लिथ्वया
शहीदया स्वप्न !
सुथ बहनी

भुतुलिइ भुतुलिइ
ख्वः वइच्वन !

चिकुलाया ताः ताहाकःगुचा
जिगु लुखाय् पिउवइच्वन
छुं सः स्युम्ह जि
मखुथें न्यंक थन त्वह मोयाच्वना
केवल बाय्चा घाना
कर्तव्यनिष्ठ जि
थ्व लँय् थः स्वया जुयाच्वना
जि मतिई
सुनां बाखंजक कनाब्यु
बरू थन मस्तहे
गुलि उत्सुक,
गुलि जागरूक,
खः हानं दिन वइच्वन
शहीद म्हसिकेगु
शहीद लुमंकेगु
ई वइच्वन थ्व
त्याग व साहसया पूजा यायगु ।

❑

# थ्व लँ खः

थ्व लँ खः
केवल वनेगु
मेगु परिभाषा हे छु ?

थ्व लँ खः
पलाःत थन जीवन माःवइ
थ्वया अस्तित्व नं
पलाःखय्हे परमित
निखे निगू सि
लँ ववंथाय् वनाच्वंगु दु
कमजोर ध्वदुइवं
लँया अस्तित्व हे नुनेत
लँजुवाःया बेहोसय् बग्लिमारात थें ।

थ्व लँ खः
थन सुखदुःखया थाज्या यनि
मजिउम्हथें हुंकन तापाक च्वनाः

लिलिचिलिम्ह लज्यालु सुलिंमय्जु
उत्सुकता भ्रं तुतिया प्रेरणा
थ्व लँ खः
केवल वनेगु
मेगु परिभाषा हे छु ?

थ्व लँ खः
थन मौकात इसः थिसः जुइ
सफलता आयुबुक पिनाच्वनी
तुति सःजक बियावा
सर्प नं चिलावनि
छाय् वया नं ज्यान दु ।
मनया पाहाड नं
थन थेनेवं फिगःचा जुयाच्वनी
थ्व लँ खः
केवल वनेगु
मेगु परिभाषा हे छु ?
थ्व लँ खः
थन दम नं श्रमं पचय् याइ

वं लिसें वनेमास्तिं वइगु
थ्वइत पनिम्ह हे सु ?
तुति खः थ्वइत न्हुइम्ह हे सु ?
ई धुसिलुया हे वनेब्यु
दिपाः हे तनेव्यु
तर थ्व लँ खः
केवल वनेगु
म्वानाच्वनागुया दसु
थुकिया मेगु परिभाषा हे छु ?

❑

# जनता आफै बढ्नुपर्‍यो



■ पंकज चित्रकार
जन्म : वि.सं. १९८९ मंसीर
धुलिखेल, काभ्रे
अवसान : वि.सं. २०७९ वैशाख २५

जनताहरूको थाप्लोमा टेकी
महंगीले सगरमाथा चढ्यो
उपभोग्य सरसामानहरूमा
अकल्पनीय मूल्य बढ्यो
नुन र तेल मट्टितेलमा अनि
मलको पनि भाउ बढ्यो
सत्ताको मात लागेकाहरूले
जनता चुस्ने काम गर्‍यो ।

अन्नमा झिलिमिली आगो बल्या छ
पानी हाई करेण्ट भो
दिन रात सरकार निदाइरहन्छ
कुम्भकर्ण जस्तै भो
जो-जो कराऊ, जो चिच्याऊ
सुन्दैनन् ऊ बहिरो छ
जनता सधैं जुवा हारेका
हरूवा-जुवाडे जस्तै भो ।

भ्रष्टाचारले सीमा नाघेर
धरहराको टुप्पोमा अड्यो
काला बजारीयाहरूले यहाँ
दिनमै मध्यरात गर्‍यो
पसलैपिच्छे भाउ फरक छ
जनतामा लुटपाट गर्‍यो
न्याय दिलाउने वाचा गरेकाहरूले
खै कहाँ के पो गर्‍यो यहाँ ?

अनुदान आएको डलर सोर्दै
शासकले भुँडी भर्दछन्
जनताहरूको थाप्लोमाथि
ऋणको भारी थप्दै छन्
साहित्य अनुरागीहरू यहाँ
उपचार विना मर्दैछन्
कुर्सी ओगट्नेहरूले यहाँ
मर्म कसैको बुझ्दैनन् ।

भयो अब यहाँ सहिनसक्नु
जनता आफैं उठ्नु पर्‍यो
आ-आफ्नु हकहितको लागि
लड्नु परे पनि लड्नु पर्‍यो
हैन भने यहाँ बाँच्दैनन् कोही
भोकभोकै नै मर्ने भयो
बाँच्नु मानव अधिकार हो भन्थ्यो
त्यो पनि अब गुम्ने भयो ! ❑

# चट्याङ पर्लाजस्तो छ

गड्याङ्ग गुड्ुङ आवाज घन्क्यो
मेघ गर्ज्या जस्तो छ
चारैतिर अनिष्ट देख्छु
चट्याङ पर्ला जस्तो छ ।

कोही कसैको सामर्थ्य हुँदैन
चट्याङको बेग खप्ने यहाँ
भोलिको अनिष्ट रोक्न
समयमै सोच्नुपर्छ यहाँ ।

हैन भने टिक्दैनन् कोही
आँधीले उडाउँछ यहाँ
वर्षाको भेल उर्लेजस्तै
के-के भेल उर्लिन्छ यहाँ ।

त्यसबेला को कहाँ पुग्ने हुन्
कतिको जहाजै डुब्ने छन्
यस धरतीले खप्नै नसक्ने
अग्निज्वाला दन्किने छन् । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

**अर्जुन पराजुली /प्रा.डा. रामप्रसाद ज्ञवाली**
काठमाडौं, नेपाल

# जीवन र समय

अलिकति
समय ईश्वरसँग पैंचो मागेर
दिनभरि नै
घामको उज्यालोमा जीवनलाई
समयको तालिका चलाउन खोज्दा पनि
जतिसुकै फारो गरेर
समयलाई खर्च गर्दा पनि
यो पैंचो पाएको खुद्रा समयलाई सञ्चित गरेर
खुत्रुकेमा खसाल्नै पुग्दैन ।



बद्री पलिखे
जन्म : वि.सं. २००९ जेठ ३०
धरान, सुनसरी
अवसान : वि.सं. २०७५ असोज २

अलिकति
यो खुद्रा समयमा
आफूलाई पानीमा पखालेर
शुद्ध मनको बुद्ध आसनमा ईश्वरध्यानमा लगाउँछु
अलिकति समय
पढ्न र पढाउनमा लगाउँछु
केही समय
दिनभरिको थकाइले विश्राम र निद्रामा कट्छ
समय
यसरी नै खर्च हुन्छ
हातमा आयो शून्य हुन्छ ।

म
कवितामा समय पोख्छु
म कवितामा जीवन लेख्छु
म
जीवननदीमा सललल बग्न चाहन्छु ।

जीवन
घामको उज्यालोमा
एउटा
पोस्टर हुन्छ
पोस्टरमा म आफूलाई लेख्छु

र भित्तामा टाँस्छु
त्यो पनि अनपढ मूर्ख प्रहरीले सहन सकेन
हुकुम प्रमाङ्गी र अध्यादेश पालन गर्दै
च्यात्छ, बुटले कुल्चन्छ र सडकमा फ्याँकिदिन्छ ।

म
जीवनलाई रगतमा चोबलेर
समयको ब्रसले सहिदको तस्वीर बनाउन चाहन्छु
त्यो तस्वीरमा
त्याग र बलिदानको कथा लेख्न चाहन्छु
म
जीवनलाई गिलो माटो बनाएर
मुछ्दैमुछ्दै
एउटा देशभक्तको सालिक बनाउन चाहन्छु
सालिकमा
देशभक्ति र वीरताको प्राण भर्न चाहन्छु ।

म
यो ढल्किरहेको जीवनमा
यौवन फर्काउन चाहन्छु
म
जीवनलाई समयको गतिसँग
स्वतन्त्रताको सङ्गीतमा
राष्ट्रियता र प्रजातन्त्रको गीत गाउन चाहन्छु
तर समय
मसँग अनाथ हात फैलाएर
दयाको भीख माग्दैछ
जीवनसँग गुहार माग्दैछ ।

जीवन
ईश्वरको उपहार हो
मसँग ईश्वरले पैँचो दिएको
केही समय बाँकी छ
यो समयमा अमरसिंहसँग
केही देशभक्तिको भावना सापट मागेर
जतिसुकै सास्ती दिए पनि माफी नमाग्ने
बी.पी कोइराला हुन चाहन्छु
जतिसुकै कोर्रा बर्साए पनि ऐया समेत नभन्ने
तानाशाहीसँग नभुक्ने गणेशमान हुन चाहन्छु
जतिसुकै कठोर सजाय भोग्नुपरे पनि
एकरत्ति नदब्ने, नडग्ने, नभुक्ने टङ्कप्रसाद हुन चाहन्छु ।

हे ईश्वर !
मलाई समय थपिदेऊ
मलाई समय इनाम देऊ
म तिम्रो यो इनामप्राप्त समयमा
जीवनफूललाई
तिम्रो पाउमा चढाउन चाहन्छु ।

समय
रथ हो
जीवन सारथि हो
म यो रथमा
कृष्णसारथि भई अर्जुनको गाण्डीव उठाएर
महाभारत युद्धमा लड्दैछु
कृष्णको पाञ्चजन्य शङ्ख फुकेर
युद्धघोष गरिरहेछु
म
समयको रथमा जीवन सारथि भएर
महाभारत युद्ध लड्दैछु । ❑

# मुक्तकहरु



■ भक्त कार्की
जन्म : वि.सं. २०२४ वैशाख १६
पुलाचौर, म्याग्दी
अवसान : वि.सं. २०७८ असार ६

(१)
घन्किनुपर्छ आवाज परिवर्तनको लागि
दन्किनुपर्छ आवाज परिवर्तनका लागि
कसले रोक्न सक्छ जनताको आँधीबेहरी -
रन्किनुपर्छ आवाज परिवर्तनको लागि ।

(२)
नहुनु भन्छिन् आमा पति फाला
नहुनु भन्छिन् आमा मती फाला
ताल-तालका खाल-खालका हुन्छन् मान्छे
नहुनु भन्छिन् आमा गति फाला ।

(३)
मुखले रामराम बगलीमा छुराजस्तै
निधारमा खरानीको टिको मित्र सुराजस्तै
आकाशका ताराहरू खसाल्ने बातहरू
अल्छीका ढ्याङ्ग्रा कामभन्दा कुरा सस्तै ।

(४)
आदर्शका बातहरू ठूलाठूला
भित्रभित्र घातहरू ठूलाठूला
सिद्धान्तको खोल ओढेर –
आदर्शका मातहरू ठूलाठूला ।

(५)
मानिसका दाउहरू फरक फरक
छद्मभेषी नाउहरू फरक फरक
सदाचार र सद्भावका अगाडि–
जुँगाका ताउहरू फरक फरक ।

(६)
जहाँ दुःख उही घोच्छ मान्छे
विना तथ्य शंका उपशंका सोच्छ मान्छे
औंशीका सपनाहरू बोकेर –
पूर्णिमाको आश खोज्छ मान्छे ।

(७)
मन कहिले कर्कलाको पानी जस्तो
मन कहिले आँखाको नानी जस्तो
मन त शक्तिशाली हुँदोरहेछ –
मन त कहिले सुनको खानी जस्तो ।

(८)
मुठीदान गरौं मन फुकाएर
दानीजनको तन फुकाएर
एक दिए एक्काइस फलीफाप –
दयाको धन फुकाएर ।

(९)
सकारात्मक सोच छ
त्यहाँ जीवनको मोज छ
यही मन दुःखी यही मन सुखी –
सु-सृष्टि र सु-दृष्टिको खोज छ ।

(१०)
मलाई दुखियाको गीत प्यारो छ
समवेदनाको शीत प्यारो छ
भावनाले मन मुटु खान्छ –
मानवीयताको प्रित प्यारो छ ।

(११)
पूर्खाले चिनेको चौतारीमा बसेर एकैछिन बिसाई फेरौं न
दुःख सुखका कथा व्यथा आपसमा बाँडी मिसाइ फेरौं न
हाँसोमा हाँसो आँसुमा आँसु साटेर ज्वाला मनको –
मनमा उम्लेका तिता पिरा भावनाहरू चिसाइ फेरौं न ।

(१२)
आफ्नै आमाले लगाएको सुन भो हेंला
आफ्नै आकाशको जुन भो हेंला
खुनले लत्पतिएको आमाको छाती -
शहीदहरूको रगत/खुन भो हेला ।

(१३)
दिन ब्याउँदैछ रातको कुरा नगर भो
छिन ब्याउँदैछ घातको कुरा नगर भो
जीवन जीवन जस्तै भएर बगोस् –
अहम् दम्भ र मातको कुरा नगर भो ।

(१४)
आउ प्रिया सोचौं अब देशको लागि
घरबुना र खाडी भाङ्ग्रा भेषको लागि
नजिकको तिर्थ हेला भो हजुर हाम्रो –
सबै बराबर समान मेसको लागि ।

(१५)
एकमुठी माटो स्वदेशको लिएर उठ
यै मट्टीको काखमा जिएर उठ
स्वदेशको माटो शिरमा राखी -
स्वदेशको पानी पिएर उठ ।

(१६)
जातको झण्डा के बोक्नु र खै ? नेपाली कित्ता काटेपछि
भातको झण्डा के बोक्नु र खै ? नेपाली भित्ता फाटेपछि
उक्साएर राज गर्ने गिद्ध, ब्वाँसाहरू क्षितिजहरू हेर्दैछन्–
मातको झण्डा के बोक्नु र खै ? नेपाली बित्ता फाटेपछि।

(१७)
लाउँछ घाम एक दिन नआत्तिइ बस प्रिया
आउँछ साम एक दिन नआत्तिइ बस प्रिया
चञ्चल मनलाई जित्नुपर्छ आफैभित्र –
सपनाहरू पूरा होलान् नमात्ति बस प्रिया ।

(१८)
सार्थक जीवन त्यो हो जो दया बाँड्दछन्
सार्थक जीवन त्यो हो जो माया साट्दछन्
नाङ्गै आउनु नाङ्गै जानु के लानु छ र बरै –
सार्थक जीवन त्यो हो जो समवेदना साट्दछन् ।

❑

# प्रश्नोत्तरमाला



भानुभक्त आचार्य
जन्म : वि.सं. १८७१ असार २९
चुँदीरम्घा, तनहुँ
अवसान : वि.सं. १९२६ असोज ७

ठूलो नरक् कुन् छ भनेर जान्नू ?
यही शरीरै छ भनेर मान्नू ।
कस्तो स्वभाव् स्वर्ग भनेर जान्नू ?
तृष्णा छुट्या स्वर्ग भनेर मान्नू ॥

कुन् ज्ञान् छ ठूलो भनि लीनु पर्न्या ?
वेदान्तको ज्ञान छ दुःख हर्न्या ।
कुन् हो सहज् मोक्ष गरायिदिन्या ?
ज्ञान् हो अरूको किन नाम लीन्या ॥

कुन् मूल ढोका छ नरक्कि ? नारी,
लान्छे नरक् मोह ठुलो फिँजारी ।
कुन् धर्म हो स्वर्ग पुऱ्यायिदीन्या ?
तेस्तो अहिंसा छ बुझेर लीन्या ॥

सुत्न्या सुखै पूर्वक आद्मि कुन् हो ?
समाधि लायी रहन्या त जुन् हो ।
जागा कउन् हो कसरी उ जान्या ?
जो सत् असत्को छ विवेक गर्न्या ॥

कस्लाई हो शत्रु भनेर जान्नू
आफ्ना दसै इन्द्रिय शत्रु मान्नू ।
कस्लाई खुब् मित्र भनेर मान्नू ?
जीत्या तिनै इन्द्रिय मित्र जान्नू ।

दरिद्र नाउँ नरमा छ कस्को ?
विशाल तृष्णा घरमा छ जस्को ।
कुन् हो धनी सब् नरले कह्याको ?
सन्तोषले जो छ खुसी रह्याको ।

जिउँदै मऱ्याको भनि नाम् छ कस्को ?
उद्यम्-विना बित्तछ काल जस्को ।

अमृत-सरी कुन् छ भन्या ? निराशा
पाशा कउन् हुन् ? ममतै छ पाशा ॥

को छन् सुरा झैं अतिमोह गर्न्या ?
स्त्री जान्नु तस्तै गरि चित्त हर्न्या ।
कस्लाई विद्वान्हरू तुच्छ भन्छन् ?
जो कामदेव्को वशमा रहन्छन् ।

मृत्यु भन्याको भन आज कुन् हो ?
अप्यश् भन्याको तिमी जान जुन् हो ।
कुन् हो सबैले गुरू भन्नु पर्न्या ?
जो हो हितैको उपदेश गर्न्या ।

कुन् शिष्य हो शिष्य भनेर जान्नू ?
जुन् गर्छ सेवा उही शिष्य् मान्नू ।
कुन् दीर्घ रोग् हो सबलाई हर्न्या ?
संसार हो जन्मनु मर्नु पर्न्या ॥

यी दीर्घरोग् फेक्न उपाय कुन् हो ?
अनित्य सब् जान्नु विचार जुन् हो ।
भूषण् छ कुन् सज्जनले कह्याको ?
शीलै छ भूषण् बहुतै बन्याको ॥

कस्लाई खुब् तीर्थ भनेर मान्नू ?
जुन् शुद्ध मन् हो उही तीर्थ जान्नू ।
विद्वान् कउन् चिज्कन तुच्छ मान्छन् ?
कान्ता र सन् त्याज्य भनेर ठान्छन् ॥

कुन् सुन्न बेस् हुन्छ भनेर मान्नू ?
वेदान्तका बात् गुरूदेखि सुन्नू ।
कुन् ब्रह्म जान्नाकन हेतु मान्नू ?
सत्सङ्त वेदान्त विचार जान्नू ।

कौने बखत्मा पनि क्या नगर्नू ?
पाप्का अगाडि कहिल्यै नसर्नू ।
विद्वान् पुरूष्ले कति काम गर्नू ?
स्वधर्म थामीकन शास्त्र पढ्नू ॥

कुन् हो पशूतुल्य भनी कह्याको ?
विद्या नभै मूर्ख पडी रह्याको ।

सज्ज्न्हरू कस्सित सङ्त नगर्नू ?
खल्-पापि-निच्का नगिचै नपर्नू ।

कस्ता पुरूष मुक्त भएर तर्छन् ?
सत्सङ्ग - भक्तीहरू जो त गर्छन् ।
छोटो कउन् हो ? नलजाई माग्न्या,
कुन् हो बडो ? जो धनमा नलाग्न्या ॥

जन्म्यो कउन् ? जन्मनु फेर् नपर्न्या
मर्न्या कऊन् हो ? मरि फेर् नमर्न्या ।
कस्लाई लाटो छ भनेर भन्छन् ?
जो ता बखत्मा पनि चुप रहन्छन् ॥

कुन् सत्य हो सत्य कसोरि जान्नू ?
जुन् प्राणिको हित् छ उ सत्य मान्नू ।
कुन् छाडिदीन्या सुखि हुन्छ भन्छन् ?
स्त्री छाड्न सक्न्या सुखिमा गनिन्छन् ॥

मातासरी सुख दिन्या कुन चीज् छ जान्नू ?
विद्यै छ त्यस्तो अरू कौन खोज्नू ।
कुन् हो जती-जति दियो उति बढ्न जान्या ?
विद्यै रहेछ बुझि निश्चय तेहि मान्या । ❑

# बिर्सनै सक्दिनँ

विद्यार्थी जीवनको पहिलो विद्यालयलाई सायदै कसैले बिर्संदो हो । मैले त बिर्सनै कुरै भएन । मैले त विद्याथी जीवनका बहुमूल्य सात वर्ष बिताएको थिएँ त्यस विद्यालयमा । मेरो त्यो प्यारो विद्यालय गोर्खा मिलेट्री स्कुल हो । त्यो स्कुल भारतको देहरादुन, उत्तरप्रदेश (हाल उत्तराञ्चल) मा छ । सात वर्षको लामो जीवनमा घटेका बिर्सनै नसकिने केही स्मृतिहरूलाई म यहाँ प्रस्तुत गर्न चाहन्छु, ममा गुम्सिएर बसेका भावनाहरूलाई निकास दिएर मन हल्का गर्न चाहन्छु :



डा. भीमचरण थापा
जन्म : वि.सं. १९९१ फागुन २६
डोटी, अछाम
अवसान : वि.सं. २०६९

१.

सम्भवतः म १३-१४ वर्षको भइसकेको थिएँ क्यारे ! त्यस उमेरमा म अग्लो भइसकेको थिएँ, यद्यपि म दुब्लो थिएँ । म काठमाडौं ८-९ वर्षजति जेठाबुबा कप्तान स्व नारायणसिंह थापासँग बसेर पल्टनमा भर्ती हुन भनी देहरादुन पुगेको थिएँ । देहरादुनमा बुबाको संरक्षणमा बसेको २-४ दिनपछि बुबाले सोध्नुभयो -'के गर्छस् ? पढ्छस् कि पल्टनमा भर्ती हुन्छस् ?' द्वितीय विश्वयुद्धको त्यस समयसम्म पल्टनमा कम उमेरका केटाहरूलाई ब्वाइज ग्रुपमा भर्ना लिने चलन थियो । बुबाको प्रश्नको उत्तरमा मेरो मुखबाट निस्केको थियो -'पढ्छु ।' बुबाले एक महिना ट्युसन पढाउनुभयो । महिनाको अन्त्यतिर गोर्खा मिलेट्री स्कुलमा भर्ना गर्न फाराम भरिदिनुभएको थियो क्यारे ! एकजना गोर्खा मिलेट्री स्कुल देखेको केटोलाई ट्युसन पढाउने सरले मलाई स्कुल देखाउन पठाउनुभयो । म स्कुल पुगेँ । प्रधानाध्यापकज्यूले सोध्नुभयो -'कुन कक्षामा पढ्ने ?' मैले कक्षा चारमा पढ्ने इच्छा जाहेर गरेँ । हेडसरले तीनजना सरहरूकहाँ लग्न पिएनलाई अह्राउनुभयो । पिएनले पालैसित मलाई कक्षामा पढाइरहनुभएका सरहरूको अगाडि उभ्याइदिए । सरहरूले हिन्दी भाषामा विभिन्न प्रश्न गर्नुभयो । मैले केही बुझेँ, केही बुझिनँ । ६-७ रोपनी भएको बेन्ड घरको हाता ननाघेको केटोले हिन्दीमा के उत्तर दिएको होला भन्ने कसैले पनि कल्पना गर्न सक्ने कुरा हो । एक घन्टापछि मलाई हेडसरको अगाडि उभ्याइयो । म हेडसरको अगाडि आफ्नो तीव्र गतिमा धड्किरहेको मुटुको ढुकढुकी आफै सुन्दै उभिएँ । हेडसरले भन्नुभयो - 'तँ कक्षा चारमा पढ्न लायक छैनस् ।' मेरा आँखाबाट आँसुका थोपा झरे वा झरेनन् मलाई सम्झना छैन तर मेरो कालो-नीलो अनुहार देखेर होला उहाँको मुखबाट निस्कियो -'म तँलाई कक्षा चारमा राखिदिन्छु । पढिस् भने पास होलास् । सकिनस् भने घर फर्किने छस् ।' हेडसरका कुरा सुनेर मलाई स्वर्गकै राजपाट पाएको जस्तो लाग्यो । मेरा आँखा रसाए । हेडसरको नाम दीनदयाल रावत भएको कुरो मलाई पछि थाहा लाग्यो ।

उहाँ साँच्चै नै दीनहरूको लागि सारै दयालु हुनुहुँदो रहेछ ।

त्यसै दिन हेडसरको आज्ञाले पिएनले मलाई कक्षा चारमा लिएर गए । कक्षामा सर हुनुहुन्थ्यो । उहाँले उज्यालो मुख लगाएर मलाई प्रोत्साहित गर्नुभयो । कक्षाका विद्यार्थीहरूले पनि मलाई हातको सङ्केतले आफू नजिकको डेस्कबेन्चमा बस्न आमन्त्रण गरे । म शिक्षकको समीपमा बसेका विद्यार्थीको नजिक गएर बसैं । त्यस दिनदेखि नै म सात वर्षसम्म अर्थात् हाइस्कुल (एस.एल.सी. सरह) उत्तीर्ण नगरून्जेलसम्म त्यस विद्यालयमा अध्ययन गरिरहैं । लामो अवधिसम्म त्यस विद्यालयको विद्यार्थी रहेकाले मलाई त्यस विद्यालयको सम्भना आइरहन्छ ।

तीव्र बुद्धि भएको विद्यार्थी थिएँ भन्ने कुरोलाई म मान्दिनँ । काठमाडौंको भद्रकाली मन्दिरको दक्षिण बेन्ड मास्टर निवासमा लामो समयसम्म बसी घरैमा अक्षरज्ञान गर्दा म सामान्यभन्दा पनि तल्लो स्तरको विद्यार्थी भएको कुरा प्रमाणित भइसकेको थियो । हिन्दी भाषा मेरा लागि नौलो भाषा भएकाले पनि मेरो अध्ययनमा केही न केही छेकबार लागेको थियो । अर्धवार्षिक परीक्षा र वार्षिक परीक्षाले मलाई पर्खने कुरो भएन । विद्यालयमा प्रवेश गरेको तीन महिनामै अर्धवार्षिक परीक्षा आइपुग्यो । मैले के लेखैँ के लेखिनँ भन्ने कुरोलाई स्मरण गर्न सक्दिनँ । भूगोल विषयको एउटा प्रश्न र मैले दिएको उत्तरलाई भने म अझै राम्ररी सम्झन्छु । प्रश्न थियो – भारत की जलवायु कैसी है ? जलवायुको अर्थ म बुझ्दिनथैं । उत्तर दिनुपर्ने अन्य प्रश्नहरूको उत्तर लेखिसकेपछि मैले यस प्रश्नको उत्तरको बारेमा खूबै विचार गरैं । तर शब्दको अर्थ थाहा नभएपछि उत्तर के लेख्थैं ! भारतको जलवायु भनेपछि नराम्रो त नहोला भन्ने विचार गरी प्रश्नजस्तै एक पङ्क्तिमा उत्तर लेखिदिएको थिएँ – भारत की जलवायु अच्छी है । परीक्षा दिएको दुई तीन महिनापछि मैले आफ्नो अल्पज्ञानको बारेमा थाहा पाएँ । अर्धवार्षिक परीक्षामा म भूगोल विषयबाहेक सबै विषयमा पास भएको रहेछु ।

२.

कक्षा चारको वार्षिक परीक्षामा सबै विषयहरूमा राम्रो अङ्क प्राप्त गरी उत्तीर्ण भएँ । बेन्ड मास्टर निवासमा अक्षरज्ञान गर्दा सामान्य विद्यार्थीभन्दा पनि तल्लो स्तरको मानसिक क्षमता भएको भन्ने आक्षेपलाई हटाउन सकेछु । सैनिकका पढ्नमा राम्रा छोराछोरीहरूलाई सोल्जर बोर्डले छात्रवृत्ति दिने गरेको रहेछ । हाम्रो कक्षामा चार जनाले त्यो छात्रवृत्ति प्राप्त गर्न सफल भए । ती चारमध्ये म पनि एक जना परेछु । छात्रवृत्तिको रकम महिनाको पाँच रूपियाँ रहेछ । सन् १९४४ को कुरो हो त्यो । त्यसबेलाको पाँच रूपियाँको क्रयशक्ति अहिलेको रू. ३००।– भन्दा कम हुने थिएन । त्यो छात्रवृत्ति कक्षा आठसम्मको लागि स्वीकृत भएको रहेछ । चारवर्षको समयावधिमा आधीजति छात्रहरूको छात्रवृत्ति कम अङ्क प्राप्त गर्नाले रोकियो तर मैले कक्षा आठसम्म नै छात्रवृत्ति प्राप्त गर्न सकैं । वास्तवमा मेरो लागि त्यो अवधि विद्यार्थी अवस्थाको सबैभन्दा राम्रो अवधि थियो । चार रूपियाँजति महिनामा शुल्क तिर्नुपर्थ्यो तर वर्षको अन्त्यमा सैनिकका सन्तानले बाह्रै महिनाको रकम फिर्ता पाउँथे । म छात्रवृत्ति तथा शुल्कबाट फिर्ता भएको रकम बुबालाई दिँदैनथैं । बुबालाई त्यस रकमको चासो पनि हुँदैनथ्यो । म छात्रवृत्ति र शुल्कबाट फिर्ता भएको रकम व्यर्थमा खर्च गर्दैनथैं । हुलाकमा बचत खाता खोल्ने सुविधा थियो । मैले घरमा कसैलाई नबताई बचत खाता खोलेको थिएँ । खातामा डेढसयभन्दा बढी नै रकम सधैं हुनेगर्थ्यो । म कहिलेकाहीँ मात्र खाताबाट पैसा निकाल्थैं । मेरा बुबाले हवल्दार पदबाट पेन्सन लिनुभएको थियो । द्वितीय विश्वयुद्धमा उहाँले मिलेट्रीकै सप्लाई विभागमा लेन्सनायक पदमा पुनः सैनिक जीवन अपनाउनुभएको थियो । त्यसबेला मेरो स्थिति सुवेदार, सुवेदार मेजरका छोराहरूको भन्दा राम्रो थियो । मेरो गोर्खा मिलेट्री हाइस्कुलले मलाई विद्या मात्र दिएको होइन, धनसमेत दिएर मेरो प्रगतिमा ठूलो सहयोग गरेको थियो । त्यस्तो विद्यालयसित सम्बन्धित सबैको लागि मेरो जीवनको अन्त्य नभएसम्म शुभकामना सदासर्वदा रहिरहने छ ।

घटना त्यसबेलाको हो क्यारे जब म कक्षा ६ मा पढ्दै थिएँ । देहरादुनका सबै विद्यालयहरूले एक्कासि मासिक शुल्कमा डेढ रूपियाँजति बृद्धि गरे । हामीहरूलाई नराम्रो लागिरहेको थियो । हाम्रो विद्यालय सहरबाट निकै टाढा थियो । त्यसैले अन्य विद्यालयका विद्यार्थीहरूसित हाम्रो भेटघाट हुँदैनथ्यो । यस घटनाको प्रतिक्रियास्वरूप सहरका विद्यालयहरूमा हड्ताल छ भन्ने कुरा सुन्यौं । यस सूचनाले हामीलाई प्रोत्साहित गऱ्यो र भोलिपल्ट हामीहरूले कक्षा बहिष्कार गऱ्यौं । केही विद्यार्थी कक्षामा पढ्न बसे । सरहरू कक्षामा पढाउनु जानुभयो । हाम्रो हड्तालको

कार्यक्रम असफल हुने स्थितिमा पुग्यो भन्ने विचारले नै हामी उत्तेजित भयौं । हामीमध्ये केहीले कक्षामा पढ्न बसेका विद्यार्थीहरूलाई तान्दै बाहिर निकाल्यौं । विद्यालयको वातावरण पूर्ण रूपले खल्बलियो । हातपात गर्ने तथा तानेर कक्षाबाहिर साथीहरूलाई निकाल्नेहरूमा मैले खूबै सक्रियतापूर्वक भाग लिएको थिएँ । दुई तीन घन्टीपछि स्थिति शान्त भएको थियो अर्थात् कुनै पनि कक्षा सञ्चालन हुन सकेनन् । हेडसर र अन्य सरहरूले नेतृत्व लिने विद्यार्थीहरूलाई बोलाएर कुराकानी गर्न थाल्नुभयो । तर मलाई उपेक्षा गरी बोलाइएन । यसरी उपेक्षित हुँदा दुःख लाग्नु स्वाभाविकै हो । वास्तवमा सरहरूको दृष्टिमा म सबैभन्दा उद्दण्ड केटो मानिएको थिएँ, तर हेडसरले मलाई केही भन्नुभएन । ममाथि कुनै एक्सन पनि लिनुभएन । मलाई देखे पनि नदेखेको जस्तो गर्नुहुन्थ्यो । शुल्कबृद्धि सामान्य विद्यार्थीहरूको लागि अप्रिय घट्ना अवश्य थियो तर मजस्ता सैनिकका छोराको लागि त अप्रिय कुरो थिएन । सबैको शुल्क वर्षको अन्त्यमा फिर्ता भइहाल्थ्यो । मेरो लागि त खुसीको कुरो हुनुपर्ने । किनभने म त त्यो फिर्ता भएको बाह्रै महिनाको शुल्क बुबालाई थाहा नै नदिई आफ्नो बचत खातामा राख्थैं । शुल्क बढेको कुप्रभाव बुबामाथि भने परेकै हो तर मैले त बढी पैसा जम्मा गर्न पाउँथैं । मैले त स्वागत गर्नुपर्ने थियो । तर म त होहल्ला गर्ने केटो भएको थिएँ, गरिबहरूको पक्षमा उभिने व्यक्ति भएको थिएँ ।

कक्षा नौमा पुग्दा छात्रवृत्तिको लागि मजस्ता सबैले फाराम भरेका थिए । तर कसैले पनि छात्रवृत्ति पाएन । सायद हाम्रा विद्यालयको निवेदनको फाइल सोल्जरबोर्डको कुनै दराजमा थन्किन पुगेको थियो क्यारे । छात्रवृत्ति निणय गर्ने समितिको अगाडि त्यो फाइल पुग्नै सकेको थिएन क्यारे ।

कक्षा नौबाट उत्तीर्ण भई कक्षा दसमा प्रवेश गरेको एक महिना पनि नबित्दै छात्रवृत्तिको लागि दर्खास्त दिन सूचना गरिएको थियो । तर कक्षा नौमा कसैले छात्रवृत्ति नपाएकोले एक वर्षको लागि के दर्खास्त दिने भनी मैले निवेदन नदिने विचार गरको थिएँ । त्यो दिन म कक्षा सुरू हुनुभन्दा १०-१५ मिनेटअगाडि नै विद्यालय पुगेको थिएँ । म कक्षा दसको झ्यालनेर उभिन पुगेको मात्र के थिएँ, प्रधानाध्यापक दीनदयाल रावतज्यूको स्वर सुनैं -'भीमचरण, तैंले छात्रवृत्तिको लागि दर्खास्त दिएका छैनस् ?' मैले नदिएको कुरा निवेदन गरैं । 'तैंले त राम्रै नम्बर ल्याएको छस् । दर्खास्त दे ।' उहाँले मलाई आदेशात्मक स्वरमा भन्नुभयो । उहाँ आफ्ना अफिस कोठामा पुगिसक्नुभएको थिएन कि मेरा आँखा रसाइसकेका थिए । मैले उहाँ रिसाउनुभएको कुरा २-३ वर्षमा पनि बिर्सन सकेको थिइनँ । तर उहाँ त साँच्चै नै दीनदयालु हुनुहुन्थ्यो । माया गर्नु, कसैले गरेको गल्तीलाई बिर्सनु तथा सक्दो सहयोग सबैलाई गर्नु त उहाँको बानी भइसकेको थियो । त्यस्ता महान् आत्माप्रति म श्रद्धाअर्पण गर्नुबाहेक अरू के नै गर्न सक्छु र ! हेडसरले आज्ञा दिनुभएको ६-७ दिन बितिसकेका थिए । मैले फाराम भरेर पनि कार्यालयमा बुझाएको थिइनँ । निवेदनबारे नै कुरा गर्न विद्यालयको कार्यालयभित्र पसैं । भूतपूर्व सैनिक, गोल तथा गोरो वर्णका आकर्षक व्यक्तित्व भएका क्लर्क आफ्नो सिटमा बसिरहनुभएको थियो । मलाई देख्नासाथ उहाँको मुखबाट निस्क्यो -'तैंले दर्खास्त किन नबुझाएको ?' हकारेको स्वर थियो उहाँको । दर्खास्त मेरो खल्तीमै थियो । मैले भनैं - 'बुबा लखनउ जानुभएको छ । सप्लाईकै कामले जानुभएको हो । कहिलेसम्म फर्कनुहुन्छ थाहा छैन ।' मेरो विनम्र स्वर सुनेर उहाँको मुखबाट निस्क्यो -'लाटा, धस्का न आफै ।' मैले बुबाले हस्ताक्षर गर्नुपर्ने ठाउँमा बुबाको नाम लेखेर दर्खास्त उहाँको हातमा राखिदिएँ । एक महिनापछि थाहा भयो कि मेरो साथै अरू एघार विद्यार्थीहरूको महिनाको रू. १०।- का दरले छात्रवृत्ति स्वीकृत भयो भनेर । मैले कहिल्यै बिर्सन नसकिने विद्यालयबाट यसरी माया पाएको थिएँ ।

हाइस्कुलको परीक्षा हुनुभन्दा ६ महिनाअगाडि हेडसरले मलाई भन्नुभयो -'अङ्ग्रेजीमा तँ कमजोर छस् । मेहनत गर । शिवहरिको जस्तो हाल तेरो नहोस् ।' हेडसरले अङ्ग्रेजीका दुई पिरियडमध्ये एउटा लिनुहुन्थ्यो । त्यस बेलासम्म मैले दुई महिनाको छात्रवृत्ति पाइसकेको थिएँ । सत्तरी रूपियाँजति खातामा पनि थियो । एकजना सर साइन्स र म्याथ पढाउनुहुन्थ्यो । तर उहाँ सबै विषयमा राम्रो हुनुहुन्थ्यो । सहरमा घर भएकोले सहरका विद्यार्थीहरूलाई ट्युसन पनि पढाउनुहुन्थ्यो । गृहकार्य हेर्दा उहाँ विषयवस्तुको साथै भाषा पनि शुद्ध गरिदिनुहुन्थ्यो । ५०-५१ वर्षको अन्तरालमा मैले उहाँको नाम बिर्सें तर उहाँको अनुहारका स्मृति अझै मेरो मस्तिष्कमा ताजा नै छ । मैले उहाँलाई भेटैं र भनैं - 'सर, मेरो आर्थिक स्थिति राम्रो छैन । म तीन महिनाभन्दा

बढी ट्युसन पढ्न सक्ने क्षमता छैन । म महिनाको बीस रूपैयाँ दिन सक्छु ।' सरले ममाथि दया गरेर अङ्ग्रेजी पढाइदिनुपऱ्यो । उहाँले घर आउने हो भने पढाउन सक्ने कुरा बताउनुभयो । भोलिपल्टैबाट आठ माइलको दूरी पार गरेर सरको घर जान थालेँ । समय बिहानको थियो । उहाँले एक घन्टा अझै चाँडो आउने सल्लाह दिनुभयो । उहाँको घरमा गुरूआमाबाहेक अरू कसैलाई देखिनँ । उहाँले मलाई ट्रान्सलेसन, ग्रामर र पाठ्यपुस्तकबाट प्रश्नहरू दिनुभयो र भन्नुभयो -'म डेढ-दुई घन्टामा फर्कन्छु । मलाई भेटेर मात्र घर फर्कनु ।' म प्रश्नहरूको उत्तर लेख्न थालेँ । मलाई डेढ घन्टा बितेको थाहा नै भएन । घर फर्केर सरले सबै प्रश्नहरू करेक्सन गर्नुभयो तथा घरको लागि प्रश्नहरू दिनुभयो । मेरो र उहाँको यो क्रम पूरै तीन महिना चल्यो । त्यसपछि एकदिन उहाँले भन्नुभयो -'ल, भोलिदेखि आउनुपर्दैन । घरमा लेख्न अभ्यास गर्दैरहनू । सेकेन्ड डिभिजनको अङ्क तैँले पाउनेछस् ।' परीक्षाको लब्धांक हेर्दा मैले अङ्ग्रेजीमा ४५ नम्बर पाएको रहेछु । उहाँले मलाई अङ्ग्रेजीको एउटा पाठ पनि पढाउनुभएको थिएन । लेख्ने अभ्यासमा कस्तो जादू हुँदो रहेछ भनी म हिजोआज पनि आफ्ना ती दयालु र कुशल अध्यापकको प्रशंसा नगरी रहन सक्दिनँ ।

३.

हामीले पढ्दासम्म पूरै उत्तरप्रदेशमा कक्षा आठसम्म उर्दू भाषाको पनि पढाइ हुन्थ्यो । सातामा ३-४ पिरियड उर्दू भाषाको लागि पिरियड छुट्याइएको हुन्थ्यो । हामीलाई उर्दू पढाउने सर हिन्दू हुनुहुन्थ्यो । तर हामी आपसमा उहाँको बारेमा कुरा गर्दा मौलवीसर नै भन्दथ्यौं । उहाँ हामीलाई इतिहास पनि पढाउनुहुन्थ्यो । म विद्यार्थी छँदा घमण्डी नै थिएँ भन्न सक्दिनँ । तर मेरो मनमा के लाग्थ्यो भने इतिहास पनि सरहरूसित पढिरहने विषय हो र ? त्यसैले म कक्षामा इतिहासको पढाइ हुँदा विशेष ध्यान दिँदैनथेँ । घरमा पनि पढ्दैनथेँ । परीक्षाका दुई महिनाअगाडि न्यू फरेस्टको बोटानिकल गार्डेनमा गएर रोजै दुई-तीन घन्टासम्म इतिहासको पुस्तक पढ्थेँ । विद्यालयमा पढाइएको पाठ प्रत्येक दिन सरले पढाउँदा र घरमा पढेको भए परीक्षाको समयमा त्यति बढी मिहेनत गर्नु पर्दैनथ्यो । हाइस्कुल (एस.एल.सी.सरहको परीक्षा) दिन सेन्टअप परीक्षा दिनुपर्दथ्यो । कक्षा दसको अर्धवार्षिक परीक्षाको विशेष महत्व थिएन त्यसैले गर्दा केही अन्य विद्यार्थीहरूले गरेजस्तै मैले पनि कापीमा नाम मात्र लेखेर परीक्षाकक्षबाट बाहिर निस्केको थिएँ । त्यस परीक्षाले हाइस्कुल परीक्षाको तयारी हुन्छ भन्ने तथ्यलाई हामीले बुझेका थिएनौं । मूर्खता नै गरेको हुँ भन्ने कुरा मैले पछि अनुभव गरेँ ।

त्यस समयको एउटा घटनालाई म कहिलेकाहीँ अझै सम्झन्छु तथा आफ्नो विगतको मूर्खतामाथि हाँस्ने गर्छु । घटना त्यसबेलाको हो, जब म कक्षा आठमा पढ्थेँ । देहरादुनका घरका आँगनहरूमा खोलाहरूबाट ल्याइएका सानासाना गिट्टीहरू ओछ्याइने चलन थियो । हाम्रो विद्यालयको अगाडिको बाटोले नै आँगनको काम पनि गर्ने हुनाले चाक्लो आँगनमा गिट्टीहरू ओछ्याइएका थिए । इतिहासको पिरियड सवा तीन बजे थियो । त्यस पिरियडपछि छुट्टी हुन्थ्यो । कक्षाबाहिर आँगनमा बसेर नै इतिहास पढाउने मौलवीसरले इच्छा गर्नुभयो । सरलाई साथीहरूले कक्षाबाट कुर्सी ल्याइदिए । हामी अर्धगोलाकार रूपमा बस्यौं । म सरको अगाडि नपरेर उहाँको दाहिनेतिर परेँ । सर सारै सोझो हुनुहुन्थ्यो । खूबै मिहेनतले पढाउनुहुन्थ्यो । उहाँ पढाउन थाल्नुभयो । सबै साथीहरू ध्यानले सुन्न थाले तथा आवश्यक लागेको कुरा कापीमा नोट गर्न थाले । म त इतिहास किताब पढेरै बुझ्न सकिन्छ भन्ने नचाहिँदो विचार भएको केटो भएकोले पाठतिर ध्यान दिइरहेको थिइनँ । १५-२० मिनेटपछि मेरो मनमा शैतानी जाग्यो । मैले बीचको औंला र बूढी औंलाको टुप्पामा सानो गिट्टी राखेर सरको टाउकोको चारपाँच फिट माथिबाट जाने गरी एउटा गिट्टी उछिट्याएँ । कसैले थाहा पाएन । सर त पढाउनमा नै मस्त हुनुहुन्थ्यो । म एउटा कुनामा बसेकाले उहाँको ध्यान मतिर केन्द्रित हुने कुरै भएन । कुनै प्रतिक्रिया कतैबाट नआएकोले म झन् बढी उत्साहित भएँ । पढाइतिर ध्यान नदिने विद्यार्थी कक्षामा नचाहिने कुरो गर्छन् नै । सरको टाउको माथिबाट गिट्टी फाल्न सकेकोमा मलाई खुसी लागिरहेको थियो । म यति बढी उच्छृङ्खल भएँ कि लगातार १०-१२ गिट्टी त्यसी नै फालेँ । सरले मेरो उद्दण्डतालाई थाहा पाइसक्नुभएको रहेछ । उहाँ जुरूक्क उठ्नुभयो र मलाई समोतर पिठ्यूँमा हान्न थाल्नुभयो । उहाँले लगातार १२-१५ पटक हान्नुभयो । त्यसपछि रिसाएर मलाई हप्काउनुभयो । मेरा साथीहरू मैले पिटाइ खाएकोमा खुसी देखिन्थे । एक-दुई जनाले त शब्दले नै खुसी प्रकट गरेका थिए । म लज्जित भएको थिएँ । मौन भएर आफ्नो अपराध स्वीकार गरेको थिएँ । सर त महान् व्यक्ति हुनुहुन्थ्यो । भोलिपल्टदेखि उहाँको मप्रतिको व्यवहार सामान्य भइसकेको

थियो । मलाई लाग्छ त्यो उहाँको पिटाइ पिटाइ थिएन, आशीर्वाद थियो मेरा लागि ।

४.

गोर्खा मिलेट्री स्कुलको मेरो सात वर्षको अध्ययनकालमा दुईपल्ट शोकमा डुबेको थिएँ । म कौलागढमा बस्थेँ, तथा मेरा विनम्र तर विद्यार्थीहरूलाई अनुशासन पालन गराउनमा सारै सक्रिय सर गढीमा बस्नुहुन्थ्यो । उहाँबाट हामी सबै विद्यार्थी प्रभावित थियौं तथा सारै सम्मान गर्थ्यौं । उहाँको नाम भने समयको लामो अन्तरालले गर्दा सम्झना हुन सकेको छैन । एक दिन अचानक हामीले उहाँ बित्नुभएको समाचार सुन्यौं । हामी विद्यार्थी र शिक्षक सबै व्याकुल भयौं । हामी सबै उहाँको दाहसंस्कारमा सम्मिलित भएको मलाई अझै हिजोअस्तिको घटनाजस्तो लाग्छ । अर्को दुःखद घटना मेरा पूजनीय गुरू इन्द्रदेव शास्त्रीसित सम्बन्धित छ । उहाँ भारत विभाजनको बेला पञ्जाबबाट देहारादुन आउनुभएको थियो । उहाँ सहरमा बस्नुहुन्थ्यो । उहाँ विद्वान् र चरित्रवान् हुनुहुन्थ्योछ । सारै राम्ररी पढाउनुहुन्थ्यो । सारै राम्रा वक्ता हुनुहुन्थ्यो । विद्यार्थीहरू जहाँ उहाँलाई माया र सम्मान गर्थे, त्यहाँ उहाँसित डराउँथे पनि । उहाँ चक, डस्टर र किताब लिएर कक्षामा पस्नुहुन्थ्यो । उद्दण्डता देखाउने विद्यार्थीहरूलाई तर्साउन स्केल वा छडी लिएर कक्षामा पस्नुहुन्नथ्यो । उहाँका हात नै यति सक्षम थिए कि उहाँले पढाएका विद्यार्थीहरू उहाँलाई सम्झँदा पनि भयमिश्रित प्रेममा डुब्न पुग्थे होलान् । हामी सबै विद्यार्थी उहाँलाई सम्मान मात्र होइन माया पनि गर्थ्यौं ।

एकदिन १० बजे विद्यालय पुग्दा त्यहाँको वातावरण शोकमा डुबेको पाएँ । शोकको कारण विद्यालय बन्द गरियो । के थाहा भयो भने हाम्रा अति आदरणीय गुरू इन्द्रदेव शास्त्रीकी धर्मपत्नीको आजै विहान देहान्त भएछ । हामीमध्ये धेरैले किताब-कापीका झोला नजिक बस्ने साथीहरूको घरमा राख्यौं र गुरूको घर पुग्यौं । शवयात्रा हामी पुगेको केही समयपछि सुरू भयो । त्यस कारूणिक बेलामा गुरूलाई देख्दा हामीहरूले आफ्नो मनमाथि नियन्त्रण राख्न सकेका थिएनौं । दाहसंस्कारपछि आफ्नो घर पुगेर पनि मैले गुरूको डेराको कारूणिक वातावरणलाई बिर्सन सकेको थिइनँ ।

कोही रहोस् वा नरहोस्, संसारको गतिमा कुनै परिवर्तन आउने रहेनछ । भोलिपल्टैदेखि कक्षाहरू सञ्चालन भएका थिए । विद्यालय अगाडिको फुटबल मैदानमा विद्यार्थीहरूको चहलपहल पूर्ववत् नै देखिन्थ्यो । मचाहिँ आफ्ना श्रद्धेय गुरूलाई सम्झिरहन्थेँ । उहाँको एक झलक पाउन मेरा आँखा व्यग्र थिए । तर उहाँ चौध दिनसम्म आउनुभएन । आशौच बार्नुपरेकाले नआउनुभएको भन्ने कुरा थाहा हुँदाहुँदै पनि विद्यार्थीहरू र शिक्षकहरूको बीचमा अनायासै मेरा आँखा उहाँलाई खोज्न थाल्थे ।

एकदिन म र कमल रूकुम फुटबल ग्राउन्डको नजिकको सानो चौरमा बसेका थियौं । गुरू चौर अगाडिको बाटोबाट विद्यालयतिर गइरहेका देखापर्नु भयो । हामीहरू खुसी भयौं तर एक सुरमा हिँडेको देख्दा म उदास हुन पुगेँ । हामी के पनि अनुमान गर्न थाल्यौं भने अब त हाम्रा गुरू पहिलेका जस्ता हुनुहुन्न होला र गुरूआमाको वियोगमा उहाँ डुबिरहनुहुन्छ होला । जुन स्फूर्तिले उहाँ पढाउनुहुन्थ्यो अब त्यो स्फूर्ति कहाँबाट पाउनुहोला । आफ्नै दुःखबाट उहाँ मुक्त हुन पाउनुहुन्न होला । कति दयालाग्दो गरी टाउको निहुराएर उहाँ विद्यालयतिर गइरहनुभएको थियो । हामी गुरूकै बारेमा सोच्दै थियौं कि घन्टी बज्यो । हामी कक्षाभित्र पस्यौं । हिन्दी विषयकै घन्टी थियो । केही बेरमा नै गुरू कक्षामा पस्नुभयो । म पढिसकेको पाठको अगाडिको नपढेको पाठ खोज्न र कठिन शब्दहरूको माने लेख्ने कापी पल्टाउँदै थिएँ कि चड्याङ्को ध्वनि मेरा कानमा परे । आवाज आएतिर हेरेको त गुरूले रूकुमलाई दुई थप्पड लगाइदिएका रहेछन् । साथीले थप्पड खाएकोमा म दुःखी भइन, म त सारै खुसी भएको थिएँ । साथीले थप्पड खाए भनेर म रमाएको होइन । मेरो खुसी हुने कारण के थियो भने गुरू यति ठूलो दुःखमा पर्दा पनि हार्नुभएको रहेनछ । उहाँमा कुनै किसिमको निराशाले स्थान बनाउन सकेको रहेन छ । मलाई अलि खल्लो त अवश्य नै लागेको थियो । कारण रूकुमको सट्टा गुरूका हात मेरा गालामा किन परेनन् भनेर । गुरूका थप्पड थप्पड हुँदैनन्, आशीर्वाद हुन्छन् । मैले अध्ययनको पूरै अवधि, हाइस्कुलको परीक्षासम्म गुरूको थप्पड पाउन सकिनँ । गुरूको कुटाइको आशीर्वादको महत्व नै अर्कै हुन्छ ।

५.

१९५१ को हाइस्कुल परीक्षा (एस.एल.सी. परीक्षाको समकक्ष) दिन हामी कक्षा १० का छात्रहरू खूबै परिश्रम गरिरहेका थियौं । त्यतिबेला विद्यालयले विदाइ समारोहको आयोजना गऱ्यो । केही कक्षाका छात्रहरूले तथा गुरूवर्गले

हामीलाई शुभकामना मन्तव्य दिनुभयो । हाम्रो कक्षाका मनिटर मुनिया सिंहले धन्यवाद ज्ञापन गरेपछि कमर्सका सर ए.पी. सिंहज्यूले मलाई केही भन्नलाई प्रोत्साहित गर्नुभयो । तर मैले दुई शब्द व्यक्त गर्ने साहस जुटाउन सकिनँ । म त विगतका घटनाहरूमा रूमल्लिएर भयभीत हुन पुगेको थिएँ ।

जेठीआमाले म कक्षा आठमा हुँदा एकदिन मलाई भन्नुभएको थियो - आज मैले तेरो जन्मपत्री बाहुनबाजेलाई देखाएको थिएँ । बाजेले त तँ पढ्दैनस् भन्नुभएको छ । तेरो भावी जीवन पनि नराम्रो भएको कुरो बताउनुभयो । मैले उहाँका कुरालाई मौन भएर सुनेको थिएँ तर मेरो मनमा आँधीबेहरी चलेको थियो । मैले उहाँलाई केही भन्नै सकिनँ । एक सातापछि मैले उहाँसित जन्मपत्री हेर्छु भनेर मागेँ । उहाँले बाकसबाट निकालेर जन्मकुण्डली दिनुभयो । म नाता पर्ने छिमेकीको घरमा झ्याम्म गाँजिएको लौंचीको रूखमुनि गएँ । जन्मपत्री लामो थियो । पछाडि मसिनो कपडा टाँसी च्यात्न नसकिने गरी बलियो बनाइएको थियो । मैले के विचार गरेँ भने जुन वस्तुले जीवनमा अगाडि बढ्न प्रोत्साहित गर्दैन, त्यसलाई किन राख्ने ? मैले कैंची पनि सँगै लगेको थिएँ । मैले त्यसै कैंचीले जन्मपत्रिकालाई साना-साना अनेकौं टुक्रा पारेँ र रूखमुनि माटोमा गाडिदिएँ । जेठीआमाले पनि जन्मपत्री फिर्ता माग्नुभएन । उहाँले बिर्सनुभएको थियो क्यारे । म हेडसरले तँ अंग्रेजीमा कमजोर छस्, मेहनत गर । शिवहरिसिंहको जस्तो तेरो हाल नहोस् भन्नुभएका कुरा सम्झँदै थिएँ । मेरा ती साथीले हामीसँगै हाइस्कुल परीक्षा पास गरे । उनी सफल जीवन बिताउँदै छन् । मैले हरिद्वारको साइकल यात्रालाई पनि सम्झिरहेको थिएँ । साइकल धर्मशालाको हातामा राखेर हामी २० जनाको समूह पैदल डुल्दै थियौं। एकजना बामपुड्की काली आइमाईले पैसा मागी । कसैले ऊतिर ध्यान दिएन । म समूहको पछाडि थिएँ । मैले पछाडि फर्केर उसलाई हेरेँ । ऊ मलाई नै औंला ठड्याएर कराउँदै थिई - तू फेल हो जाएगा, तू फेल हो जाएगा । मैले साथीहरूको हुलमा उसको कथनमाथि वास्ता गरिनँ । पैसा पनि दिइनँ । हामी नयाँ ठाउँ हेर्नमा र गफ गर्नमा नै व्यस्त थियौं । राति सुत्दा जब बत्ती निभाइयो तब मेरो मस्तिष्कमा त्यस आइमाईको स्वरूप नाच्न थाल्यो । तू फेल हो जाएगा भन्ने वाक्य मात्र मेरा कानमा गुञ्जिरह्यो । मलाई दुई-तीन घन्टासम्म निद्रा नै आएन । म विदाई समारोहको बेला विचार गर्दै थिएँ - विदाइका शब्दहरू समारोहमा भनिसकेपछि फेल हुँदा कसरी फेरि कक्षा दसमा नै पढ्न आउने ? हुन त म फेल भएको भए सम्भवतः पढ्ने नै थिइनँ होला । अहिलेको कुरा मलाई थाहा छैन तर हामीले पढ्ने बेलामा हाइस्कुल परीक्षामा फेल भएका विद्यार्थी पुनः त्यसै विद्यालयमा कक्षा दसमै पढ्न पाउँथे । अचेल एस.एल.सी.मा असफल विद्यार्थीले पुनः त्यसै विद्यालयमा पढ्न पाउँदैन । एस.एल.सी.मा उत्तीर्ण नहुने विद्यार्थीले पुनः आफ्नै विद्यालयमा पढ्न पाउने नियम बनाउनु उचित होला । फेल हुने डरले नै विद्यालयबाट विदाइ गरिँदा म बोल्न सकिनँ । बोल्ने साहस नै भएन । त्यस घटनालाई म कहिल्यै बिर्सन सक्ने छैन । ❑

# राजकीय प्रज्ञा-प्रतिष्ठान



भीमनिधि तिवारी
**जन्म : वि.सं. १९६८ फागुन ३०**
**डिल्लीबजार, काठमाडौं**
**अवसान : वि.सं. २०३० जेठ १९**

वि.सं. २०१४ आषाढ ९ गते एउटा महत्वपूर्ण एवं अविवेकपूर्ण घोषणा भयो जसमा श्री ५ को कुलपतित्वमा 'रोयल नेपाल एकेडेमी' को स्थापना र सदस्यहरूको नाम प्रसारित तथा प्रकाशित भयो, तर मेरो नाम मात्र होइन, म भन्दा बूढापाका साहित्यकारहरूको नाम पनि त्यहाँ थिएन । मैले खूब गढेर सोचेँ - के आधारमा सदस्यहरू मनोनित भएका रहेछन् । उमेरको आधारमा ? - होइन, योग्यताको आधारमा ? - होइन, सेवाको आधारमा ? - होइन, । अनि यही निष्कर्ष र निश्चयमा पुगेँ - सदस्यहरू निराधारमा मनोनित भएका रहेछन् । वास्तवमा भनूँ भने श्री ५ लाई ओझेलमा पारेर गरिएको त्यो एउटा 'साहित्यिक षड्यन्त्र' गियो । पहिले जो नामहरू आएका थिए तिनमा कविशिरोमणि लेखनाथज्यूको समेत नाम थिएन र पछि प्रशासनमा रहेका शीर्षस्थ व्यक्तिले यो कस्तो एकेडेमीको गठन हुन लाग्यो जसमा कविशिरोमणिको नाम नै छैन भनेर जाहेर गरेपछि, राखिदिनू त भन्ने भएर उहाँ समावेश हुन पाउनु भयो । त्यसैकारण मैले लेखेको हुँ त्यो एउटा 'साहित्यिक षड्यन्त्र' थियो ।

त्यतिबेला एकेडेमीको सदस्य हुन पाउनु ठूलो इज्जत र सम्मान ठानिन्थ्यो । आर्थिक दृष्टिले पनि मासिक रू. ६००।- जब श्री ५ को सरकारका सचिवहरू त्यतिबेला त्यो भन्दा कम पाउँथे ।

यही अवसरमा भारतीय दूतावासका सांस्कृतिक सहचारीले आफ्नो निवासमा सदस्यहरूको सम्मानमा, रात्रिभोजको आयोजना गरेका थिए - सदस्यहरूका घाँटीमा मोटामोटा लामा माला, 'सरस्वतीका बालपुत्र' उद्गार । त्यसबेला अन्य उपस्थित व्यक्तिहरूका सहानुभूतिका आँखा बराबर मतिर परिरहेका थिए । म मौन ती सब दृश्य हेरिरहेको थिएँ । कार्यक्रम सकिएपछि, घर फर्कने बेलामा भऱ्याङबाट ओर्लदै एक सदस्य भवानी भिक्षुले आफ्नो घाँटीको माला झिकेर 'अब माला लगाउने तिम्रो पाली' (हिन्दीमा), भनेर मेरो घाँटीमा आफ्नो जूठो माला लगाइदिन खोज्दा बहिनी पुण्य प्रभाले उनलाई हप्काएकी थिइन् ।

त्यो महिनाभरि मलाई जो पनि सोध्ने - 'होइन, के भयो तपाईंको ??' कुनै सहानुभूतिले, कुनै आश्चर्यले, कुनै उपहासले, कुनै साधारण तवरले आदि अनेक ढङ्गले । घर, अड्डा, सडक जहाँ पनि प्रश्नका प्रश्न ओइरिन थाले । (हुन पनि त्यतिबेलासम्म म साहित्य सेवामा लागेको २३ वर्ष), विभिन्न पत्र-पत्रिकामा कैयौं कविताहरूको प्रकाशन, प्रकाशित साहित्यिक कृतिको संख्या २४ र उमेर ४६ वर्षको थिए ।

ती सबलाई हाँसेर म एकै उत्तर दिन्थें - "चीन पनि त राष्ट्रसंघको सदस्य छैन नि ।" यस्तो भन्दाभन्दै त एकदिन "म चीन हुँ" भन्ने कविता पो

लेख्न आइपुगेछु– धेरै कवि-सम्मेलनमा मैले यो कविता पाठ गरेँ, बीच बीचमा ठूलो करतल ध्वनिको साथ ।

२०१५ साल जेठ १५ गते बुधबार, बिहान म कुनै काम विशेषले साहेबज्यू पुरेन्द्रविक्रम शाहकहाँ गएको थिएँ । उहाँले मलाई देख्नासाथ बडो खुशी भएर हाँसेर भन्नुभयो - "ओहो ! मेरो तपाईंसित नभेटी नहुने थियो, बोलाउन पठाउन आँटेको थिएँ– आइपुग्नु भयो, लौ राम्रो भयो ।" मैले पनि एक उत्कण्ठामा सोधेँ - के कामलाई रहेछ ?

त्यसपछि उहाँले भन्नुभयो - "सरकारबाट हुकुम भएको छ, एकेडेमीमा नयाँ सदस्य थपिए भने म अवश्य विचार गरूँला भनी भीमनिधिलाई सुनाई दिनू । तपाईंमाथि सरकारको निगाह रहेछ ।"

मैले दोहोऱ्याएर सोधेँ । उहाँले तिनै कुरा फेरि भन्नुभयो । अनि मैले ती वाक्य अक्षरशः आफ्नो जेबी कापीमा सारेर राखेँ । (त्यो टुक्रा कागत अझै मसित छ - तेह्र-चौध वर्षअघिको कुरा ।)

त्यसपछि मलाई धैर्य भयो - एकेडेमीको सदस्य हुन पाउँछु भनेर होइन, राख्नु पर्ने मानिसलाई मैले छुटाएँछु भन्ने सरकारको हृदयमा लागेछ भनेर । अनि म मौन नै रहेँ, आफ्ना कार्य गतिमा बढ्दै गएँ ।

पछि सूर्यविक्रम ज्ञवाली सदस्य थपिनु भयो । सरकारमा मैले 'नयाँ सदस्य थपिए' भनेर सम्झनाको लागि जाहेर गरिनँ । त्यसपछि लैनसिंह बाङ्देल अर्का सदस्य थपिनु भयो । तैपनि म मौन रहेँ ।

सरकारको साथ युरोपको भ्रमणमा जाँदा आधा रातमा हवाइजहाज तेहरानमा इन्धनको लागि रोकिएको बेला राजदम्पत्ति मात्र राज भएको ठाउँमा झण्डै एक घण्टा जति अनेक विषय, विषयान्तरमा कुरा गर्न पाउँदा पनि मैले एकेडेमीबारे एक शब्द पनि बिन्ती चढाइनँ - सदस्य भएर बस्न पाऊँ भन्ने कुरा त परै जाओस् । अनि निदरल्याण्डस्मा राजकीय भोजको अन्त्यमा मेरो कविता पाठबाट सरकार अति नै प्रसन्न होइबक्सँदा, पानीजहाजको सफरमा मेरो कविता पाठबाट मौसुफ हर्षित भइबक्सँदा, त्यस्तै बोनको राजदूतावासमा भएको कवि-गोष्ठी जसमा सरकारबाट पनि केही कविता पाठ गरिबक्सेको थियो, मेरा कविता पाठबाट सरकार धेरै नै खुशी भइबक्सेको बेलामा पनि मैले 'एकेडेमीको सदस्यता पाऊँ' भनेर कुनै बेला बिन्ती चढाइनँ । उपरोक्त हुकुमबाट एकेडेमीमा नयाँ सदस्यहरू थपिएबाट नै म सन्तुष्ट र सफल मनोरथ भइसकेको थिएँ । तर यो कुरा मैले आजसम्म गोप्य नै राखेको थिएँ ।

पछि जब छोरीहरू स्नातक भए, छोराहरू पनि कलेजका छात्र, केही समझदार भएर आए, एक दिन मैले कुरैकुराको सिलसिलामा ती सबै कुरा 'एकेडेमीमा नयाँ सदस्य'मा नआएको बताइदिएँ । जहान, छोराछोरी, सबैले मलाई भने - लौ यी कुरा त हामीले थाहा नै नपाएका, ढिलो भइसकेछ, तर अझै पनि बेला छ, अब सरकारमा जाहेर गरेर सदस्य भएर नै बस्नुपर्छ भनेर चारैतिरबाट सल्लाह बर्साउन थाले ।

म आफ्नो सिद्धान्तमा अडिग नै थिएँ र मैले भनेँ - "प्रज्ञा प्रतिष्ठानको सदस्य भएर मात्र लेख्न सकिने होइन । लेख्ने खुबी आर्कै हो । चौध वर्षसम्म सदस्य भएर बस्नेले के कति लेखे, मैले प्रशासनमा बसेर पनि कति लेखेँ, खोइ यो देशमा प्रतिभा र परिश्रमको मूल्यांकन गर्ने मानिस ?"

तैपनि उनीहरूले मानेनन् । आफ्नो क्षेत्रमै बसेर काम गर्नुपर्छ, हजूर सदस्य भएर रहनुभएको भए आज झन् कति धेरै किताब लेख्नु हुन्थ्यो होला, मिल्दो वातावरण हुन्छ । 'यस्तै यस्तै कुराले मलाई पनि हो कि त जस्तो लाग्यो र जानु पऱ्यो क्यारे भन्ने इच्छा प्रकट गरेको मात्र थिएँ त्यसैबेला श्री ५ बाट कुलपतित्व त्याग गरिबक्सियो । अनि त प्रज्ञा प्रतिष्ठानको स्तर एकदम तल ओर्लियो– चुचुरोमा पुगिसकेको पर्वतारोही चिप्लेर आधार शिविरमा आइपुगेझैं । कहाँ सरकारको कुलपतित्व !! कहाँ एक साधारण व्यक्तिको कुलपतित्व ।

अनि त दिनरात मलाई यही पो हुन थाल्यो कहीं मेरो नाम पनि प्रज्ञा प्रतिष्ठानको सदस्यमा निस्कन्छ कि, निस्किहाल्छ कि । मेरो नाम ननिस्कियोस् भनेर बेलैमा भनसुन गर्नुपऱ्यो नत्र पछि फसाद पर्छ - नजाऊँ भने विरोध गरेको जस्तो हुने, जाऊँ भने आफ्नो निरन्तर ३७ वर्षको साहित्य तप नष्ट हुने, आत्म सम्मानको हत्या हुने । अनि मैले प्रतिज्ञाको अशोक स्तम्भ खडा गरेँ यस्तो संस्थाको सदस्य भएर (मर्यादा क्रममा जुनसुकै स्थानमा भए तापनि जनसाधारणमा चाहिँ श्री ५ को सरकारको उप-सचिवभन्दा पनि अझ तल्लो-सबै कुरामा) जान्नँ, कुनै हालतमा पनि जान्नँ ।

यस कामको लागि पहिले मैले सरदार हंसमान

सिंह श्री ५ को प्रमुख सचिवको घरमा गएर भनेँ – "लौ सरदारसाहेब, सरकारमा जाहेर गरिदिनु होस् । मेरो नाम राजकीय प्रज्ञा-प्रतिष्ठानको सदस्यमा नआओस् । मलाई बाधा पर्छ – मैले नजान पनि हुँदैन, जान पनि हुँदैन । म कठिन स्थितिमा पर्छु ।" सब कुरा अवगत गराएँ । त्यतिले पनि पुगेन कि जस्तो मलाई लाग्यो र मी.सु. ईश्वरीमान श्रेष्ठ श्री ५ को प्रमुख निजी सचिवको घरमा गएर यिनै कुरा मैले दोहोऱ्याएर भनेँ । तैपनि अझ पुगेन कि जस्तो लाग्यो र मे.ज.ज. सुशील चन्द्र हल्दार कहाँ, शाही चिकित्सक कहाँ गएर पनि यिनै कुरा बताएँ । यसरी तीनतिर भनेको छु, कतै न कतै तिरबाट त अवश्य पनि सरकारमा जाहेर हुनेछ, मेरो अनिच्छामा कसरी म प्रज्ञा-प्रतिष्ठानको सदस्य हुँला त भन्ने दृढतामा आजसम्म म आनन्दसाथ बसेको छु – आफ्नो तप र सम्मानलाई जोगाएर !

तर म मेरा आत्मीय जन र पाठकहरूलाई चाहिँ यति विश्वास दिलाउन चाहन्छु – प्रज्ञा-प्रतिष्ठानको सदस्य भएर भन्दा असदस्य भएर म बढी किताब लेख्न सक्छु, प्रत्यक्ष लेखि नै रहेको छु ।

त्यो त डुँडो संस्था हो, एउटा हात छैन, लङ्गडो संस्था हो, एउटा खुट्टा छैन । शुरूदेखि आजसम्म जब यत्रो व्यापक रूपमा नारी जागृति भइसक्यो, त्यहाँ सदस्यको त कुरै छोडुँ, सह-सदस्यमा पनि कुनै नारीले स्थान पाएका छैनन् । शिक्षा, साहित्य, संगीत, विज्ञान, कलाको क्षेत्रमा त्यहाँ रहन लायकका योग्य नारी नै नेपालमा छैनन् भन्नचाहिँ म सयमा सय नै सक्दिनँ । यस्तो पक्षपाती संस्थामा पक्षघाती हुन किन जाऊँ ? म जान्नँ, जीवनभर नै जान्नँ । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

**नरेन्द्रबहादुर श्रेष्ठ / निरु श्रेष्ठ**

नागपोखरी, नक्साल, काठमाडौं

# अज्ञात प्रारम्भलाई प्रारम्भ गर्दा



**भीम विराग**
**जन्म : वि.सं. १९९१ माघ १५**
**वीरगञ्ज, पर्सा**
**अवसान : वि.सं. २०६८ फागुन १५**

मेरो साहित्यिक जीवनमा यौटा कुरा सारै नै विचित्र रूपले अगाडि आएको मैले अनुभव गर्न पाएको छु । त्यो के भने अनायास रचनाको जन्म हुनु । बहुत कम यस्तो भएको छ जहाँ मैले रच्छु भनेर नै विषय लिएर लेख्न बसेको होस् । त्यसैले पनि कहिलेकाहीँ तपाईं कसको लागि लेख्नुहुन्छ ? भनी प्रश्न आउँदा मैले सधैं भन्ने गरेको छु - म पहिले आफ्नो लागि नै लेख्छु, छपाउन लायकको छ भने छपाउँछु अनि त्यो पाठकको लागि हुन्छ, अन्यथा फाइलमा रहिरहन्छ । भन्नुको तात्पर्य मेरो सोहरसाहर त मेरो बाहेक अरूको हुन सक्दैन, असल छ भने अरूले ग्रहण गर्छ पनि ।

हामी लेखकहरू यस मानेमा भाग्यमानी छौं, आफ्नो मनको कुरा अरूलाई सुनाउने माध्यम हामीसँग छ र त्यो शब्दका माध्यमबाट पाठकसम्म पुग्न सफल छ । तर साधारण मानिसको मनको कुरो त पानीको फोका नै त हो, आयो अनि मर्‍यो, सिद्धियो । अर्को पक्षमा, जति एउटा अलेखक मानिस रहस्यमय हुन्छ त्यति एउटा लेखक खुला आकाशझैं रहेको हुन्छ - लाग्छ ऊसँग रहस्य भन्ने कुरा नै केही छैन, पर्दा भन्ने कुरा नै केही हुँदैन । लेखकको मनभित्र पाठकहरू खुला रूपमा विचरण गरी उनीहरूलाई उसको रचनाबाट पहिचान बनाइरहेका हुन्छन् । अलेखकको मनभित्र प्रवेश गर्ने कुनै माध्यम हुँदैन । त्यसैले पाठक र लेखकको सम्बन्ध गहिरो हुनुको कारण रचना नै हो । तर पाठकसँग लेखकको सम्बन्ध रहेको हुँदैन । लेखकको एकाकीपन कसैलाई नचिनेर पनि चिनिरहनु नै लेखकको लेखकीय धर्म हो, विशेषता हो ।

हामी दुवै पनि एक-दोस्रोसँग परिचित थिएनौं - तर हामी दुवै एक-दोस्रोका पाठक चाहिँ थियौं - सायद अन्जानमा यसरी नै हाम्रो सुषुप्त सम्बन्ध गाँसिएको हुनुपर्छ । जब हामी आमनेसामने भयौं - आ-आफ्ना लेखकलाई प्रत्यक्ष देख्यौं अनि एक-दोस्रोलाई छामेर विश्वास जगाउन थाल्यौं । यसको लागि पनि समय लाग्यो - हामी एक-दोस्रालाई प्रभावित गर्ने प्रयासमा संलग्न भयौं । म अकिंचन सुदामा, मसँग के पो थियो र ? उहाँको सहयोगमा म थिचिनु स्वाभाविक थियो ।

एउटा समारोहमा मलाई सानो काम लगाएर ठूलो उपहारले सम्मानित गर्नुभयो । त्यो उपहार थियो एउटा मूल्यवान् कलम, जो लेखकसँग भावनात्मक सम्बन्ध राख्दछ । त्यही समारोहमा यो पनि भन्नुभयो उहाँले - यो कलमबाट एउटा स्तरीय रचनाको जन्म हुने छ भन्ने विश्वास गरेको छु । उहाँको स्तरीय रचनाको कल्पनालाई साकार गर्ने मेरो जीवनको एकमात्र आकाङ्क्षा रहन गयो । उहाँ हुनुहुन्थ्यो श्री कमलमणि दीक्षित । सहजतामा गहनता उहाँको आचरण हो,

मलाई त्यही मनपऱ्यो ।

मैले उपहारस्वरूप पाएको त्यो कलमलाई घरमा ल्याउन त ल्याएँ तर त्यस दिनदेखि म एउटा उत्कृष्ट रचनाको लागि छटपटिइरहेँ । मेरो चारैतिर चरा उडेजस्तो केही उडिरहेको भान हुन्थ्यो र कराइरहन्थ्यो – उत्कृष्ट, उत्कृष्ट, उत्कृष्ट ।

मसी ल्याई कलममा भरेर एउटा नयाँ कापीमा लेखेको थिएँ पहिलो अक्षर – जिन्दगी । त्यही थियो अज्ञात प्रारम्भको बीउ । म सुरूमा पूर्ण रूपमा अन्जान थिएँ यो बीउबाट के उम्रन्छ भन्ने कुराबाट । केही पानाहरूमा जिन्दगीको व्याख्या लेखिसकेर उत्कृष्ट समाजको निकृष्ट उत्पादन, जिन्दगी टुकुचामा पाएपछि यौटा बाटो पाउँछ कथानकले ।

म स्वभावले एकदम अल्छी छु । म बहुतै कम लेख्ने लेखकहरूमध्येको हुँ । मेरो पिठ्यूँमा कोही सवार नभै म हरकतमा नआउने बैल हुँ सायद । अचानक एकदिन मकहाँ दीक्षितजी पाल्नुभयो र भन्नुभयो – खोई कति लेख्नुभयो मैले दिएको कलमले ? उहाँको प्रश्नले म आकाशबाट खसेजस्तो भएँ । वर्षदिनअगाडि केही पाना लेखेर थन्क्याइराखेको कापी धुइँधुइँ खोज्न थालेँ । कुनातिर उपेक्षित कापी ल्याएर उहाँको हातमा हालिदिएँ । त्यो बेला मेरो हालत कुनै न्यायाधीशको फैसला सुन्न उभिएको एउटा निर्दोष अपराधीजस्तै थियो । उहाँले सस्वर कविता पाठ गर्न लाग्नुभयो, निरीह भएर उहाँको मुख हेरिरहेको थिएँ । करिब १० मिनेटमा पढेर सिध्याएपछि उहाँले भन्नुभयो -'लौ त्यो कलम त सार्थक भएछ । अर्कोपालि म आउँदा यो खण्डकाव्यको रूपमा पूरा भैसक्नुपर्छ । राम्रो छ, अहिले म विदा पाउँ' भन्दै हात जोडेर निस्कनुभयो । म अवाक् कमलमणिजीको मोटर गएको हेरिरहेँ । उहाँको प्रोत्साहन पाएपछि म यति उत्साहित भएँ कि दिनरात एक गरी लेख्न थालेँ । कमलमणिजीले त्यति नभन्नुभएको भए वास्तवमा टुकुचामै मर्थ्यो **अज्ञात प्रारम्भ** ।

त्यसपछिको घटना झन् वेदनापूर्ण छ । उहाँ साल्ट्र ट्रेडिङ्को अध्यक्ष भएको नाताले हेटौडा आइरहनुहुन्थ्यो र मसँग स्पष्टीकरणको रूपमा त्यो कापी मागेर पढ्नुहुन्थ्यो, केही सुझाव दिएर जानुहुन्थ्यो । कमलमणिजीले त्यसरी लखेटी–लखेटी आखिर खण्डकाव्य लेखाइछाड्नुभयो । आज म सोचिरहेछु – अन्यथा यो सम्भव थियो र ?

उहाँले माग्नुहुन्छ आउनासाथ भन्ने त्रासले नै मैले कथालाई छिटो–छिटो अगाडि बढाउँदै लिएर गएँ । **अज्ञात प्रारम्भ**को कथानक कुनै सुनियोजित कथा होइन । टुहुरो बालक अनाथालय जान्छ । त्यहाँबाट निस्केर सहरमा भोकभोकै घुमिरहन्छ तर उसको स्वाभिमानले मागेर खाँदैन, अन्तमा भोकले उसलाई पछार्छ एउटा सार्कीको पसलअगाडि । सार्की उसको जीवनदाता सावित हुन्छ । सार्कीको जवान हुँदै गरेकी छोरीलाई पढ्नुपर्छ भन्ने प्रेरणा दिन्छ । दुवै जवान मन एक अर्काप्रति आकर्षित हुन्छन् । तर लोकोपवादको डरले उसले त्यो घर पनि छोडेर पुनः जनमानसको भीडमा हराउँछ र राजनीतिमा लागेर जेल जान्छ । जेलबाट निस्किएपछि प्रजातन्त्रको लडाइँमा होमिएर एउटा खुट्टा गुमाउँछ र प्रजातन्त्रको प्राप्तिपछि सहिदको सपना पूरा भएजस्तो लाग्दैन र उसले भोक हड्ताल गर्छ र मर्छ । जाँदाजाँदै नयाँ पुस्ताको हातमा, सहिदको सपनाअनुसारको प्रजातन्त्र नआउन्ज्याल आन्दोलन जारी राख्नु भनी नेतृत्व सुम्पिन्छ ।

यसरी कडीमाथि कडी थपिँदै जाँदा कथानकको मोड यहाँ आएर टुङ्गिएको छ । लेखनको बीचबीचमा रमेश गोर्खालीको सहयोग कुनै हालतले बिर्सिनसक्नु छ । शीर्षक नै उहाँले जुटाइदिएर कथालाई सार्थक तुल्याइदिनुभएको छ । त्यसैगरी साझा प्रकाशनले मेरो कृति छापिदिएर ममाथि ठूलो गुण लगाएको पनि बिर्सिनसक्नु छ । त्यसैगरी साझामा जानु र छपाइकार्यलाई गति दिलाउनुमा गोविन्द गिरी प्रेरणाको सहयोगलाई पनि महत्वपूर्ण मानेको छु र सबैभन्दा महत्वपूर्ण मैले आफ्ना पाठकलाई मानेको छु जसले **अज्ञात प्रारम्भ** पढेर 'राम्रो छ' भने ।

*मान्छे भनेको मन हो जो यौटा हुन्छ*
*मान्छे देखिन्छ, मन कसले देखेको छ ।*

❑

# जनमतको महिमा



**महेन्द्रलाल प्रधान**
**जन्म : वि.सं. २००१ पुस १३**
**महाबौद्ध, काठमाडौं**
**अवसान : वि.सं. २०६९ मंसीर २**

प्रगतिशील समाजमा साहित्यको महिमा अपार भएको सबैले महसूस गरेको पाइन्छ । यसमा कसैले पनि बहस गर्नुपर्ने देखिंदैन । वास्तवमा भन्नुपर्दा देशको विकासका साथै रूपान्तरण, उन्नति-प्रगतिको बाटो देखाउनु नै साहित्य र साहित्यकारको कर्तव्य हुन आउँछ । यसै सिलसिलामा मैले देशको परिस्थिति, विसंगति, विकृतिबारे कविता केही कोरेको तथा थप कविता सम्बन्धमा विचार-विमर्श, छलफलका लागि अग्रज साहित्यकारको खोजीमा भौंतारिएको थिएँ । खोजीको सिलसिलामा गोष्ठी-भेलामा सहभागी भइरहेँ ।

कर्म गर्दै जाऊ, सफलता प्राप्त गर्न सकिन्छ भन्ने भावना बोकी विभिन्न कार्यक्रममा सहभागी भइरहेको बेला काभ्रे जिल्लाको बनेपाका साहित्यकार अग्रज मान्यवर मोहन दुवालसँग परिचयको मौका पाएँ । मौका चुकाउन हुँदैन भन्ने कुराले मनमा चुलबुल भइरह्यो । यसै क्रममा कविता सम्बन्धमा विचार राखी सहयोगको अपेक्षा अनुरोधसाथ प्रकाशित **फूलबारी** कवितासङ्ग्रह उपहारस्वरूप प्रदान गरेँ । सम्बन्ध आदान प्रदान हुँदै गयो । रचेका कविता अध्ययनका साथै **फूलबारी** कवितासङ्ग्रह चौथो अध्याय प्रकाशनका लागि भूमिका लेखनका लागि विशेष आग्रह गरेँ । अनुरोधलाई स्वीकार गरी साहित्यकार मोहन दुवालले भूमिका लेखी दिनुभयो । यसको लागि म आभार व्यक्त गर्दछु ।

जीवन संघर्षको पाटो हो । जीवनभर संघर्ष गर्नुपर्छ । समाधान र सामना गर्दै जानुपर्छ समस्या हट्दै जान्छ । यही भावना मैले मोहन दुवालसँग पाएँ । जीवनमा कति बाधा अड्चन आइपर्छन् उहाँको लेखमा वर्णन पढेको छु । धैर्यसाथ हिँड्नुपर्छ, समस्या आफैं हराउँदै जान्छ, यो ध्रुवसत्य हो । लुकीछिपी रहेका प्रतिभाको खोजी गरेर प्रकाशमा ल्याउने उद्देश्य राखी मोहन दुवालले **जनमत** साहित्य मासिक पत्रिका प्रकाशनमा ल्याई नयाँ प्रतिभा साहित्यकारलाई एकै स्थानमा राख्ने अभियान आरम्भ गर्नुभएको छ । यही कारणले साहित्यकारलाई एकै थलोमा समेटेको छ जनमतले । साहित्य संगठनको बीउ मोहन दुवालले जम्मा गरी साहित्यिक बारीमा छर्ने काम गरेको पाइन्छ । यसमा मजलजलको कार्य श्रीमती भारती दुवाल, कुशल सुपुत्री सिर्जना दुवालले होस्टेमा हैंसे गरी आज रजत जयन्ती (२५) वर्षसम्म पुगेको छ । सयौं वर्षसम्म **जनमत** प्रकाशन यसैगरी अघि बढ्दै जाओस् भन्ने यो घडीमा मेरो शुभकामना छ । यतिमात्रले मोहनदाइको इच्छा पूरा भएको देखिँदैन । साहित्य प्रतिष्ठान खडा गरी साहित्यको सेवा पनि गर्दै आउनुभएको छ ।

यसका अलावा विभिन्न सम्मानपत्र, कदरपत्र, प्रशंसापत्र, प्रमाणपत्र आदि प्रदान गर्ने कार्यक्रम सञ्चालनका लागि अनेक ट्रष्टको स्थापना गरेको पाइएको छ । उक्त कार्यक्रम निरन्तर चलिरहेको छ । साहित्यको विकासका लागि विभिन्न जातजाति, महिला पुरूषलाई समेटी महिना महिनामा साहित्य सभा गोष्ठीमा सहभागी भई भाग लिएको सम्झना इलइली याद आउँछ । बयान गरी साध्य नै छैन । अन्तमा जनमत साहित्यिक मासिक पत्रिका १३५ अङ्कसम्म प्रकाशित गरी रजत जयन्ती ( २५ वर्ष) समारोह कार्यक्रमको सफलताको कामनाका साथै भविष्यमा निरन्तर कार्य प्रगतिमा लम्कने र साहित्यिक फूलबारीको भूमि विशाल होस् भन्ने कामना गर्दछु ।

# एक झलक 'मानवीय संवेदना'को अनि मोहन दुवालको पनि



**माधवलाल कर्माचार्य**
**जन्म : वि.सं. १९८३ पुस १०**
**केलटोल, काठमाडौं**
**अवसान : वि.सं. २०७० फागुन ११**

कवि-चेत् भएको मानिसले आफ्नो मनको भावना पोख्दा उसका अभिव्यक्तिलाई संकेत र बिम्बहरूले सघाउन पुगिरहेका हुन्छन् । यो कुरा उसले थाहा पाइरहेको नहुन सक्छ, अञ्जानमै यसो भइरहेको हुन्छ पनि । यस प्रक्रियाले मानिसको भावभिव्यक्ति उक्ति-सौन्दर्यले पूर्ण हुन जान्छ, र यसैले त्यसको सम्प्रेषण अपेक्षाकृत रूपमा प्रभावकारी हुन पुग्छ । पुष्ट्याइँको लागि, एक रात देखिएको चन्द्रमाको दृश्यले उब्जाएको भावनालाई लिन सकिन्छ जसको अभिव्यक्ति यस्तो छ :

*चन्द्रमा रातभरि-भरि व्यथाहरू बोकेर आइदिन्छ*
*आकाश माथिबाट जब तलतिर बोकेर ल्याइदिन्छ*
*कुकुरहरू अँध्यारोमा तड्पिएर रोएजस्तो गरी -*
*उज्यालो मेरो तकियाको छेउबाट रोइदिन्छ ।*

(चन्द्रमा : सिर्जनाका फूलहरू)

यस्तो कवि-चेत् भएको मानिसबाट कुनै विचार प्रस्फुटित हुँदा पनि उसको अभिव्यक्ति त्यस्तै प्रभावपूर्ण अभिधा र अभिव्यञ्जनाको सहयोगले व्यक्त भइरहेको हुन्छ र सहजानुभूतिको रूपमा अनायासै सम्प्रेषित हुन खोजिरहेको हुन्छ । त्यस्तै चर्चा निषेधित एउटा विषम स्थितिमा सहज रूपले निस्केको एउटा विचारलाई लिन सकिन्छ, जुन यस प्रकार व्यक्तिएको छ :

*युगमाथि समयको लुछाचुँडी हुँदैछ चर्चा किन नगर्ने*
*जीवनमाथि नृशंस हमला बोल्दैछ चर्चा किन नगर्ने*
*आकाश ताराहरूसँगै चुपचाप सहेर निदाए जस्तै छ -*
*भोरका छाती चिर्न इस्पात जस्ता मुटुहरू किन नजुट्ने !*

(चर्चा : सिर्जनाका फूलहरू)

यी दुवै अभिव्यक्ति मोहन दुवालका हुन् जो **जनमत** मासिक पत्रिकामार्फत् देशको, जनताको र समाजको साझा सवालमा साहित्यिकहरूको जनमत जुटाउनमा जुटेका छन् । यी दुइटामात्र अभिव्यक्तिबाट पनि मोहन दुवाल प्रभावकारी कविताका प्रतिभा हुन् भन्ने स्पष्ट हुन्छ ।

वास्तवमा मोहन दुवालले आफूलाई यसरी प्रभावकारी रूपले अभिव्यक्त गर्ने प्रेरणा उनको आफ्नै घरको वातावरणबाट पाएका हुन् । उनका बुबा तथा सहोदर दाजुहरू समाज सेवामा लिप्त भएकाले समाज सुधारका हिमायतीहरू उनको घरमा भेला हुन्थे, र त्यही भेलामा हुने चर्चा-परिचर्चाबाट उनी अछुतो रहन नसकेर आफू पनि त्यही प्रकारले अभिव्यक्त हुनमा प्रवृत्त हुन्थे । फलतः

उनमा सुषुप्तावस्थामा रहेको प्रतिभाले जागृत हुने अवसर पायो र कालान्तरमा साथी-संगतिको संगतमा पर्नुका साथै सक्रिय जीवनका लागि देशको स्थिति-परिस्थितिसित परिचित हुन गएपछि त्यसमा पाइन चढ्नु स्वाभाविक हुन गयो । अनि मात्र कलाको निमित्त कलाको परिशीलन गर्ने प्रतिभामा सीमित नरही त्यो कलालाई कुराको निमित्त पनि परिशीलन गर्ने प्रतिभामा विकसित हुन गयो । आजको कवि मोहन दुवालको रूप यसै अनुरूप परिचालित छ भन्नुमा अन्यथा हुने छैन ।

यही क्रममा आज उनी मानवीय संचेतनाहरूलाई समेट्दै मानवीय संवेदनाहरूलाई अभिव्यक्ति दिइरहेका भेटिन्छन् । नदीको एक छेउमा उभिँदा यस्तै एउटा मानवीय संचेतना उनी एउटा दृश्यमा चलायमान भएको देख्छ, र त्यसमा ध्वनित मानवीय संवेदनालाई टिपेर उनी व्यक्त गर्छन् :

*मौसमले रूप फेरे झैं*
*नदीले पनि कहिलेकाहीं आफ्नो स्वभाव फेर्न सक्छ*
*हुनहुनाउन सक्छ*
*चुपचाप बग्न सक्छ*
*रूख, ढुङ्गा र माटाका ढिस्काहरू काँधमा राखेर*
*बलजफ्ती आफैसँग लान सक्छ ।*

(नदी छेउ उदाइएका विश्वासहरू; सचेतका धुनहरू)

यो अभिव्यक्तिलाई संकेतात्मक वा प्रतीकात्मक अवश्य हो, तर यसले कला र कुरालाई एकीकृत गरेर उनको प्रतिभाले उनको सुधारात्मक चेत्लाई क्रियाशील बनाउन लागेको स्पष्ट हुन्छ । यो कुरा देशमा बहुदल आई नयाँ संविधान बन्न लागेको पृष्ठभूमिमा व्यक्त भएको भन्ने जानकारीबाट सिद्ध हुन्छ ।

लगभग त्यही ताका उनीबाट अभिव्यक्त भएका निम्न पङ्क्तिहरू पनि यस सन्दर्भमा उल्लेख्य हुन आउँछन् । उनले लेखेका छन् :

*एक्लै रूँदै बस्नेहरू*
*ढाडस कसैको नपाएको पाएर*
*अँध्यारोसँगै रून खोजिरहेछन्*
*भोर नहुँदै उज्यालो खोज्नेहरू*
*बिहानको प्रतीक्षामा धैर्य गर्न सक्दैनन्*
*त्यसैले त झ्याउँकिरी कराएको आवाज कानमा राख्दै*
*अँध्यारोसँगै जीवन भोग्दैछन्*
*ढुकुरहरू आज सल्लाह गर्दै रोइरहेछन्*
*बिरालाका करूण स्वरहरू थर्किरहेछन्*
*अँध्यारो कतैबाट खसे जस्तो*
*रातमा पनि प्रकाशको रूग्ण आशामा*
*कोही चिच्याएको सुन्दै*
*बाँस-झ्याङमा चराहरू चिच्याइरहेछन् ।*

(जीवन अँध्यारो/उज्यालो : सचेतका धुनहरू)

यस्तै २०४६ सालको आन्दोलनको क्रममा उनलाई अनुभूति भइरहेको थियो :

*बिहान भइसकेको छ*
*सूर्य डाँडोमाथि केही खोज्दै*
*आए जस्तो छ*
*मानिसहरू यस बस्तीमा चल्मलाइरहेका छन्*
*नींदलाई आँखा र शरीरबाट फाल्दै*
*हाई काढ्दै शरीरलाई मजबूत पार्न खोजिरहेका छन्*
*त्यसैले त होला यहाँ पनि*
*पारिलो घाम केही खोज्न केही पाउन*
*आए जस्तै छ ।*

("मानिसहरू प्रकाशजस्तै फैलिन खोजिरहेछन्" : ऐ.)

यिनी उनै कवि हुन् जसले २०४२ सालको मध्यतिर एउटा सुकेको रूखलाई देख्दा 'सम्पूर्ण व्यथालाई आँखामा समेटेर, जीवनलाई बित्थामा लडेको मूढोझैं बनाएर, विश्वास र आस्थाका जरोहरू भाँचभुँच पारेर ठिङ्ग उभिरहेको' मानी आफ्नो भावनालाई यस प्रकार अभिव्यक्त गरेका थिए :

*सुकेको रूखलाई के विश्वास*
*परिवर्तनले काँचुली फेर्न सक्छ भनेर*
*रातपछि सुप्रभात बिहानी हुँदै*
*युग बितिरहने यथार्थसँग पनि झस्केर*
*आज पनि हिजोजस्तै*
*अतिवृष्टि र भूकम्पसँग पनि चुपचाप तर्सेर*
*सुकेको रूख*
*हेर ठिङ्ग उभिरहेछ*

(सुकेको रूख : सचेतका धुनहरू)

त्यो बेलासम्म सार्वजनिक जीवनमा उनी सक्रिय नै थिए । २०२१ सालदेखि शिक्षक भै आएको नाताले शिक्षण पेशामा लागेकाहरूको हक र हितको लागि गठित शिक्षक संगठनलाई अघि बढाउनमा पनि उनी लागेकै थिए । २०४९ सालपछि शिक्षण पेशा छोडेको कारणले हाल यस्तो सक्रिय जीवन छुटेकै भए पनि, वर्षौंसम्मको अभ्यस्त मन

र मस्तिष्कले समाजमा विद्यमान परिस्थितिलाई उपेक्षा गरी आफ्नो भावना तथा विचारलाई अभिव्यक्त गर्न छोडिहाल्नु सहज र स्वाभाविक पनि थिएन । यसै क्रममा आज उनका २०४१ सालदेखि व्यक्त भएका अभिव्यक्तिहरू **मानवीय संवेदनाहरू**को नामले कविताको सँगालोको रूपमा प्रस्तुत हुन आएका छन् ।

यस सँगालोमा संग्रहित अभिव्यक्तिहरू 'मानवीय संवेदनाका हरफहरू', 'मान्छेभित्रका कविताहरू', 'प्रकृति-गर्भका उच्छवासहरू', माया-प्रेमका प्रसङ्गहरू, 'बिम्ब/प्रतिबिम्बका रेखाङ्कनहरू' र 'परिवेशभित्रका सन्दर्भहरू' गरी छ ६ उपमूल शीर्षकमा विभाजित भएका छन् । 'मानवीय संवेदनाका हरफहरू' शीर्षक खण्डमा २०४१ सालदेखि २०५४ सालसम्म १८ वटा अभिव्यक्तिहरू परेका छन् भने 'मान्छेभित्रका कविताहरू' शीर्षक खण्डमा २०५१ सालदेखि २०५४ सालसम्मका १७ र 'प्रकृति-गर्भका उच्छ्वासहरू' खण्डमा २०४६ सालदेखि २०५४ सालसम्मका १४ वटा कविताहरू परेका छन् । त्यस्तै, 'माया-प्रेमका प्रसङ्गहरू' शीर्षक खण्डमा २०४७ देखि २०५३ सालसम्मका १० वटा अभिव्यक्तिहरू परेका छन् भने, 'बिम्ब/प्रतिबिम्बका रेखाङ्कनहरू' शीर्षक खण्डमा २०४८ सालदेखि २०५४ सालसम्मका र 'परिवेशभित्रका सन्दर्भहरू' खण्डमा २०४७ सालदेखि २०५४ सालसम्मका २१ वटा अभिव्यक्तिहरू परेका छन् ।

समग्रमा यसरी ९१ वटा अभिव्यक्ति संग्रहित यस सँगालोले देशको इतिहासको निवर्तमान ८ वर्षको कालखण्डलाई समेटेको छ, जब विस्तारित रूपले सम्झना गरेको खण्डमा, देशले तथा देशवासीले परिवर्तित परिस्थितिमा गाह्रोसांग्रो, उकालो-ओह्रालो, असजिलो-अप्ठ्यारो भुक्तमान भोग्नुपरेको थियो । यी नै देश, काल, परिस्थितिको वस्तुस्थितिमा जागरूक भई मोहन दुवालले यी अभिव्यक्तिमा आफ्ना आस्था र विश्वास अनुसार आफूलाई इमान्दारीपूर्वक कवितात्मक शैलीमा व्यक्त गरी, समाज-सुधारमा प्रवृत्त हुने प्रारम्भिककालमा पाएको प्रेरणा अनुसार, समाजको कल्याणहेतु विचार संवाहन गर्ने क्रिया गरेर, यी असजिला-अप्ठ्यारा, गाह्रा-साह्रा, उकाला-ओरालाहरू सम्याउन पाइने बाटो सुझाउने कामको निर्वाह गरेका छन् । यो कुरा निःशंक भन्न सकिन्छ ।

२०४९ सालदेखि २०५४ सालसम्म अभिव्यक्ति भएको "मानवीय संवेदनाका हरफहरू" शीर्षक खण्डमा उनी मानवताको खोजीमा लागिपरेका छन् । त्यो बेलाको स्थितिको पृष्ठभूमिमा मानिसमा मानवता नभएको देखिएको पीडाबोधले आक्रान्त भएको उनको भावनापूर्ण विचारले एकातिर मानव-अधिकारका विरोधीलाई चेतावनी दिएको छ भने, अर्कोतिर मानिसलाई जीवनको एवं जिउनुको अधिकारको यथार्थ अर्थ बुझी त्यसको संरक्षण तथा सम्वर्द्धनमा दृढताका साथ अगाडि बढी त्यो मनोवोचित अधिकारलाई स्थापित गर्न हौसला दिएको छ । अझ स्पष्ट भन्ने हो भने, उनी मान्छेमा मान्छे हुनुको बोध उद्‌बोधन गर्न प्रेरित हुन्छन्, र त्यही अनुसारका भावनात्मक विचारहरू यसमा व्यक्तिएका छन् । 'स्वतन्त्रताका हिमायती पनि मान्छे ... स्वतन्त्रताका बाधक पनि मान्छे ...!' भनी पाएको बोधलाई उद्‌घोष गर्दै उनी भन्छन् :

*प्रगतिमा जल्नेहरू*
*ढल्दै गएका छन्*
*काँढा कसैले*
*बाटोमा छर्किन खोज्दा*
*दुर्गति आफ्नै हुन्छ ।*
*इतिहास बुझिदिनुपर्छ .....!* (स्वभाव)

यस्तै सांकेतिक भाषामा हिम्मतलाई अघि बढाउने सुरमा उनी भन्छन् :

*फूलको माया गर्दा*
*काँढाको चोट सहनुपर्छ*
*हिमाल चढ्दै गर्दा हिउँको सङ्केत बुझ्नुपर्छ*
*प्रिय मान्छेहरू,*
*उज्यालोको खोजी गर्दा हामी भयभीत हुनुहुँदैन ।*
(उज्यालो/खोजी)

'मान्छेभित्रका कविताहरू' खण्डमा उनी मान्छेमा चेतना खोजिरहेका छन् । उनी बुझ्दैनन् :

*प्यारो धर्तीलाई किन कुरूप पार्दैछन् मान्छेहरू*
*उदास, उराठ र उमङ्गशून्य विचार किन हुर्काउँदैछन्*
*मान्छेहरू मन-मनमा कलुषितता हुर्काएर किन बाँच्ने गर्छन्*
*वाहियात विचार आखिरमा निरर्थक नै हुन्छ*
*उच्च भावको शिखर चढ्न खोज्ने मान्छेहरू*
*किन हैरान-हैरान छन्, परिवेश भोगेर एकनासले रुँदै छन् ..*
(लहरहरूमा अल्झिएका मान्छेहरू)

मानिसमा मानिसको चेतना नभएको पीडाबोधले पीडित उनको भावनाले एकातिर यो अचेतावस्था छर्लङ्ग्याएको छ भने अर्कोतिर यो चेतनालाई उघार्न आह्वान गरिरहेको

छ । यी नै कुरालाई व्यङ्ग्य पारामा उतारिएका उनका केही अभिव्यक्तिहरू यस प्रकारका छन्:

*देश खुस्कोस् वा भत्कोस्*
*अरू मरोस् वा झरोस्*
*मनमा अभिमान पालेको छु*
*आँखामा ईर्ष्या बाँधेको छु*
*म त यसरी ममा नै 'म' भई बाँचेको छु ।*
*फूल फुलोस् वा सुकोस्*
*घाम उदाओस् वा अस्ताओस्*
*मनमा अहम्ता साँचेको छु*
*मनमा कुरूपता हुर्काएको छु*
*म त यसरी ममा 'सीमित' भई हाँसेको छु ।*
*बुद्ध जन्मियोस् वा गान्धी*
*सृष्टि हाँसोस् वा नासियोस्*
*हत्केलामा स्वार्थ अँगालेको छु*
*खुट्टामा कपट सँगालेको छु*
*म त यसरी ममा नै सम्राट भई बाँचेको छु ।*

(अप्ठ्यारो मान्छेको मन)

'प्रकृति-गर्भका उच्छ्वासहरू' शीर्षक खण्डमा उनी यस्तै प्रकृतिको प्रतिच्छाया मानिसमा देख्न खोजिरहेका छन् । प्रकृतिमा देखिए जत्तिको मानवोचित चेत मानिसमा उद्बोधित भएको भए कस्तो हुन्थ्यो ! भन्ने भावनाले मानिसको अगाडि एकातिर दृष्टान्तहरू प्रस्तुत गरेको छ भने, अर्कोतिर मानिसलाई मानिसमा हुनुपर्ने आफैमा निहित चेतलाई उद्घाटित गर्न प्रेरित गरिरहेको छ । उनी भन्छन्:

*चराहरू ! हामीलाई पनि 'उन्मुक्तता' सिकाइदेऊ*
*चराहरू ! हामीलाई पनि म'ान्छे' हुन सिकाइदेऊ*
*उनको स्पष्ट उद्घोष छ -*
*घाम छेक्ने पर्खाल बन्न दिनु हुँदैन*
*विमति खोज्नेहरू ढल्दै जान्छन् ।*
*घामलाई छेक्न खोज्नेहरू*
*सियाँलमा पनि डढेका छन्*
*घामलाई अर्थहीन सम्झनेहरू*
*पर्खालमा पनि सडेका छन्*
*घाम त सडकमा मात्र होइन*
*चोक, आँगन, पीढीमा पनि उदाउने गर्छ*
*घाम सत्य हो -*
*विश्वास काँधमा झुण्ड्याएर*
*प्रीति आँखामा राखेर हुर्कने गर्छ ।*

यस्तै 'माया-प्रेमको प्रसङ्गहरू'मा उनको खोजी मान्छे-मान्छेमा माया र प्रेमको सम्बन्धको रहेको छ । मान्छे हौं भन्नेहरूमा एक-आपसमा माया-प्रेम नभई आफूमा आफै सीमित भएको देख्दा उनको भावनाले एकातिर मान्छेले बाँच्नुको अर्थ नबुझेको महसुस गर्दछ भने, अर्कोतिर 'धरतीका मानिसहरूमा पीडा र कपट नहेर्ने' हो भने, "माया र प्रेमका कुराहरू मान्छेका विश्वासभित्र फुल्ने उच्छ्वासहरू हुन्' भन्ने उद्घोष गर्छ । त्यो भावना अझ अघि गएर छरपष्ट हुन्छ :

*मानिसकै मुक्तिमा*
*घन्किरहने स्वरहरू*
*मानिसको अस्तित्व झैं*
*शिलालेख भएर टल्किदिन्छ*
*मान्छेलाई*
*मान्छे बनाइदिने दर्शन*
*ईश्वर वा अरू कसैले होइन*
*मान्छेले नै सिक्नुपर्छ ।* (सौन्दर्यका सिर्काहरू..)

यसप्रकार मानिसको संसारलाई मानिसको बनाउनमा अहम् भूमिका मानिसले नै खेल्नुपर्छ भन्ने अहं विश्वास भएका उनी "बिम्ब/प्रतिबिम्बका रेखाङ्कनहरू"मा मानिसमा मानिसकै रूप खोज्नमा व्यस्त छन् । मानिसहरूको संसारमा मानिसहरू मानिसहरू जस्तै नभएको भेटिएपछि पीडित उनको भावनाले प्रत्येक बिम्ब/प्रतिबिम्बमा एकातिर बाध्यता, विवशता र छेकवारका रेखाङ्कनको अनुभव गर्दछ भने, अर्कोतिर चर्को स्वरले हिम्मत बाँधेर संकुचितता पन्छाई अगाडि बढ्न रेखाङ्कन गरिएका आव्हान गुञ्जाउन प्रयास गर्दछन् त्यो प्रयासले व्यङ्ग्य गरेर एउटा दर्शन यसरी प्रस्तुत गर्दछ :

*जसले*
*बार्दलीबाट फोहोर फालेर*
*सभ्यताको डङ्का पिट्छ*
*ऊ पो साहुजी .... !*
*घिउसँग पिंडालु साटेर*
*मानवताको शङ्खध्वनि फुक्छ*
*ऊ पो साहुजी .... !*

*जसले*
*विश्वासघातमा जीवन रम्न दिएर*
*शालीनताको भाषण छाँट्छ*

*ऊ पो साहुजी ....!*
*जसले असत्यलाई जीवन दर्शन मानेर*
*सत्यलाई छेक्न रमाउँछ*
*ऊ पो साहुजी .....!* (साहुजी)

अन्ततः "परिवेशभित्रका सन्दर्भहरू" शीर्षक अन्तिम खण्डमा उनी मानिसहरूको मानवोचित भावनाको उदय भएको हेर्न अभिलाषा राख्दछ । मानिसहरू मानिस हुनुको विडम्बना यहाँ 'मानिसको मनमा भ्रमको खेती' गर्छन् र "मानिसको वस्तीमा विभाजनको रेखा" कोर्छन्, अझ त्यतिले नपुगेर "कलुषित मनहरूको यथार्थ बुझ्न गाह्रो" भन्दै "फूल भाँचभुँच गर्न सजिलो" मान्छन् र "सौन्दर्यको परिभाषा बुझ्न खोज्दैनन्" । यस्तो अनुभूत गर्नुपर्दा उब्जेको उनको भावनाले मानिसलाई एकातिर मानिसको स्वरूपलाई नियाल्न र सोच्न आग्रह गर्दछ भने, अर्कोतिर त्यसबाट मुक्ति पाउन अठोट गर्नतिर उत्प्रेरित गर्दछ । मानवीयताका संवेदनाहरूमा कसिङ्गर देखिएपछि त्यो भावना फुक्दै यसो भन्छन् :

*मान्छे-मान्छेमा मोहभङ्ग भएको यो कस्तो वातावरण*
*दाजुभाइमा, दिदी बहिनीमा साइनो चर्केको*
*यो कस्तो परिवेश*
*मान्छे - मान्छेमा विश्वास हराएको, कुकुरभक्तिको*
*यो कस्तो युग*
*यहाँ यसबेला पर्खाल तेर्सिएको छ*
*विश्वास कुकूरमा साटेको छ*
*बस्तीमा अचाक्ली अँध्यारो चढेको छ*
*खोई के भएको दिदी*
*अचेल दिनदहाडै सबैतिर कुकूर भुकेको सुनिन्छ ।*
(अचेल सबैतिर कुकुर भुकेको सुनिन्छ)

मान्छेलाई कर्तव्यबोध गराउन खोज्दै उनी स्पष्ट शब्दमा भन्छन् :

*कसैको बल मिचाइ भोग्नुमात्र 'बलात्कार' होइन*
*देखेर पनि नदेख्नु, सुनेर पनि नसुन्नु पनि 'बलात्कार' हो*
(प्रजातन्त्र र भोक)

यसप्रकार समष्टिमा विचार गर्दा, आजसम्मको उनको कविता-यात्राबाट स्पष्ट हुन्छ, मोहन दुवाल एक मानवीयताको हिमायतीका रूपमा विकसित भएका कवि हुन् र उनको कविता मानिसहरूमा मानवीय चेत सञ्चार गर्नमा लागि परेको छ । बाल्यकालमा फुर्दै विकसित हुँदै आएको उनको समाज सुधारको चेत र कविता-चेतले उनको यसतर्फका अभिव्यक्तिलाई प्रभावकारी बनाएका छन् । इत्यलम् !

❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछौं ।

रीता पहारी
अध्यक्ष
**हेमराज स्मृति प्रतिष्ठान परिवार**
बैदाम–६, पोखरा, कास्की

# कर्णाली लोकसाहित्यमा गाथाको एक उच्च स्थान



रत्नाकर देवकोटा
जन्म : वि.सं. १९९९ वैशाख १८
चन्दननाथ, जुम्ला
अवसान : वि.सं. २०६५ पुस १५

*कर्णाली लोक साहित्य भित्रका प्रमुख तीन विषयमध्येको तेस्रो विधा यहाँको केही ऐतिहासिक झलक प्रस्तुत गर्ने साँस्कृतिक विधा हो । यसभित्र भारत, गाथा, पडेली र लोककथा पर्दछन् । गाथालाई यहाँ प्रस्तुत गर्न सकिएको छ ।*

**गाथा**

जुम्लातिर यस गाथा शब्दले खासगरी वेद, पुराण, महाभारत र कृष्णचरित्र जस्ता ठूलठूला धार्मिक पुस्तकलाई वास्ता (पुस्तक लपेटेर राख्ने कपडा) गरेर राखिएको राता, सेता र पहेँलो वर्णका कपडाको टुक्रालाई गाथा भन्ने चलन छ । अर्कोतिर हाम्रो पूर्खाहरूले आर्जेको महत्वपूर्ण प्रतिष्ठा, आदर्श र मर्यादालाई पनि गाथा भन्ने चलन छ । अर्कोतिर गाथा शब्दले पौराणिक महापुरूषहरूको जीवनी र महत्वपूर्ण कुराको परिचय दिने ऐतिहासिक कुरालाई पनि गाथा भन्ने चलन छ । यहाँ प्रस्तु तीनओटा गाथाले पनि प्रागऐतिहासिक विश्वब्रम्हाण्डको संरचनाको उद्घाटन गरिदिएका छन् ।

पहिलो (क) गाथामा खगोलको सबभन्दामाथि नीलो आकाश छ, तल नीलो रह (दह) छ, त्यसै रहभित्र गमथैलीले खोल्याँस लगायो, त्यस खोल्याँसबाट सर्वप्रथम फुल पाऱ्यो । पहिलो फुल (अण्डा) लाई आकाशतिर फ्याँक्यो, दोस्रो अण्डालाई पातालतिर फ्याँक्यो, आकाशतिर फ्याँकेको अण्डाबाट महादेव जन्मे, पातालतिर फ्याँकेको अण्डाबाट कालु र कैलु भन्ने दुईवटा गाई जन्मे, महादेव रिसाएर घाँस र पानी रोकिदिए, गाईले रिसाएर दूध दिन छोडिन्, महादेवले घाँस र पानी दिए, गाईले महादेवलाई दूध चढाइन्, धुप (गर्मी) भए र संसारको सृष्टिक्रम चालु रह्यो" भन्ने कुराको वर्णन छ ।

दोस्रो (ख) गाथामा पहिलो, दोश्रो र तेश्रो वनमा जाँदा हरिण र चितुवा भेटिएनन्, चौथो वनमा जाँदा हरिण र चितुवा भेटिए, कसैले सुनको मृग देखेछ। रातो र पहेँलो वर्णको मृगलाई कस्तो वाणले कसले हानेर माऱ्यो भन्ने प्रश्नको उत्तरमा लक्ष्मणले पीछा गरेर रामले त्यस मृगलाई मारी लोटाएछन् र सीताले मृगलाई पकाई रामको ज्यूनार लगाइछन् । राम र सीतालाई वनमा पानीको तीर्खा लाग्दा लक्ष्मणले पानी कहाँ छ र के मा ल्याऊ भनी प्रश्न गर्दा यहाँबाट पूर्वतिर पानीको ताल र पोखरी छन्, सुनचौकी वा तामो वा अन्य कुनै जे साधन भेटाउँछौ त्यसैमा डोबेर छिटै पानी ल्याऊ भन्ने कुराको वर्णन छ ।

तेस्रो (ग) गाथामा छार्काभोट (डोल्पा) मा लामा ज्ञान गर्न बसे, त्यहाँ उनकी एउटी बहिनीले माग मागिन् । लामाले बाइस पाटनमा बस्नु भन्ने माग दिए । त्यहाँबाट उनी (बहिनी) तिब्रीकोटमा त्रिपुरासुन्दरीको नामले प्रख्यात भइन् । त्यहाँबाट मात्रा (बहिनी) मौरेपानी (मौरेको लेक) ठिन्केज्यूलाई छिनासीम सिंजा लामा-थाडा-सुनढुस्की-नौखुवा अछाम हुँदै बडी मालिकामा पुगेर स्थायी

आश्रम लिन पुगिन् भन्ने ऐतिहासिक कथन पाइन्छ ।

जुम्ला
ऐतिहासिक
(क) गाथा
माथि निली खगरय तल नीली रऽऽ
त्यै नीली थैलीले खोल्याँस तोल्याई
पैला खीनी पाड्यो फुल
आकाश उडाई
ताँ पछिको पाड्या फुल पातल दबाई
आकाश उडाई फुल जन्म्या महादेव
पाताल दवाया फुल जन्मिन् कार्लु कैलु (गाई)
महादेव रिसाई गया, थुन्या खड पानी
कालु कैलु रिसाई गैछन् लुन थप
महादेव खुशी भया खोल्या खड पानी
कालु कैलु खुसी भैछन् छोडीनन् धुप ।

(ख) गाथा (जीवनी)
एकरा वन ढंडी ढंडी दाज्यू ?
नैर मिल्या हरिना चितौल
दोसरा वनमा जाऊँ
दोसरा वनमा ढडी ढडी दाज्यू
नैर मिल्या हरिना चितौल
तेसरा वनमा जाऊँ
तेसरा वनमा ढंडी ढंडी
नैर मिल्या हरिना चितौल
चौथाला वनमा जाऊँ
यहीँ मिल्या हरिना चितल
कुन ज्यूले मिर्गैलो दोबा दोबाईछन्
कुन ज्यूले खैंचेछन् बाँण
रतन पिंयाला जसो मिरग्यैलो
सई क्या सलाया जसो सिङ
केसन काठको धन-धन क्यैलो
केसन काठको भलोज (धनको डोरी)
औलेन बौसेको धन धन क्यैल्यो
सिर्द्ध (?) पाटको ओज
कुन ज्यूले मिरिग्यैलो दौबा दौबाइन्छन्
कुन ज्यूले मारी लोटाया
लछुमनले मिरिग्यैलो दोब दोबायाछन्
रामज्यूले मारी लोटायाछन्
कुन ज्यूले मिरिग्यैलो पकवान् बनाया
कुनज्यूको लाग्यो ज्यूनार
सीताज्यूले मिरिग्यैलो पकवान् बनाइन्
रामज्यूलाई लाइग्यो ज्यूनार
काँछन् पानीका ताल पोखरी काँछन् पानीका तीर
जाऊन जाऊन माइलु लछुमन ? पानी खोजी ल्याऊ
पूर्वमा छन् पानीका ताल पोखरी, पश्चिम छन् पानीमा वीर
सुनमा झ्यारीमा देऊ भरी देऊ माउ देऊ
चीसी पानीय देऊ
सुनको झ्यारी सो बाडा रैगो
काँमाती पानीय दिऊ
चाँदीको झ्यारीमा देउ आया ? देऊ
देऊ, चीसो पानीय देऊ
चाँदीको झ्यारी सौबाडा रैगो
काँमाती पानीय दिऊँ
तामाका झ्यारीमाई, पेटमेरा साइराजायो ?
घटघटमा पेऊ, लछ लटया सेउ
०० (इत्यादि)

जुम्ला (ग) गाथा
छार्कामोट लामा चुम्मा बडा बस्या ज्ञान
द्यौन द्यौन गुरूज्यू ऐ काम भाग देउ
तुमरी भाग दीयाँ बइनै ? बाइसै पाटन
हुँई र बाट उठिन् माताज्यू तिम्रीकोट पहुँचिन्
तिम्रीकोट पर्सादय आलो छैकि बासी
जेठी बईनी तिमुराय यो ... ... भाग ... .. हईर बसिन्
हुईरबाट उठिन् माता मौन्यामातो पौंचिन्
मौन्या पानी हिउँचुलीय जुग जुग रयाई
मौन्या पानी पर्सादय आलो छैकी बासी
हैंरबाट उठिन् माता छिनासीत पौंचिन् ।
छिनासीम पर्सादय आलो छैकि बासी
द्यौन द्यौन गुरूज्यू अै हामी मिग द्यौन
हैंरबाट उठिन् माता लामाथाडा पौंचिन् ।
सिंजाखोला तल हरर ओलाई बास्या काग
हुईरबाट उठीन् माता सुनढुस्की पुगिन्
सुनढुस्कीका पर्सादय आलो छौकि बासी
दुईरबाट उठिन्माता ... ... ...
ताँईबाट हेरिन् माताज्यूले नौखुवा अछाम
उबो हेरिन् माताज्यूले माली जस्तोज्यूलो
हुँईरबाट उठिन् माता बडीमालीका पौंचिन् । ❑

# आफ्नो विषयको चर्चा



**राधिका राया**
**जन्म : वि.सं. १९८८ पुस १४**
**अनारमणि, झापा**
**अवसान : वि.सं. २०७० चैत्र १२**

(क)

मेरो नाम राधिका राया हो अनि साहित्यिक नाम पनि राधिका राया नै हो । मेरो जन्म १९८८।९।१४ हो । मेरो जन्म अनारमनी (झापा) वार्ड नं. ६ मा भएको हो । हाम्रा पूर्खाहरू धेरै मात्रामा काठमाडौंबाट, खरसाङबाट झापातिर बसाईं सरेका हुँदा आमाबुबा पनि यहीं बसोबास गरेको बुझिन्छ । म प्रायः दुई वर्षकी हुँदा बुबाले दार्जीलिङ हिमालयन रेलवे कम्पनीमा प्रशिक्षार्थी सिग्नलर अर्थात् तारबाबुको पदमा नोकरी पाउनुभयो । सन् १९१८ मा उहाँलाई कम्पनीले कटिहार (विहार) स्थित रेलवे सिग्नलर्स प्रशिक्षण केन्द्रमा एकवर्षीय प्रशिक्षणहेतु पठायो । त्यसपछि उहाँलाई सुकुनाछेउ अवस्थित राङटाङ रेलवे स्टेसनमा सिग्नलर पदमा नियुक्त गरियो । यसरी रेलवे नोकरीको सेवाकालमा उहाँ खरसाङ, दार्जीलिङ हुँदै धेरै मात्रामा घूम स्टेसनहरूमा कार्यरत रही सन् १९५३ मा सेवानिवृत्त हुनुभयो ।

हाम्रो खास घर सिपाहीधुरा (खरसाङ) मा थियो । हाम्रा हजुरबुबा बलभद्रसिंह रायमाझी सडक र रेल लाइनको काम हेर्ने भएकोले उहाँ रेलवे ठेकेदार हुनुभयो । बुझिन्छ, उहाँले सर्दारी र कन्ट्र्याक्टरीमा प्रशस्त धन कमाउनुभएको थियो । सुनिन्छ, सिपाहीधुरामा सबैभन्दा ठूलो घर हाम्रो भएको हुनाले त्यस घरलाई 'ठूलोघर' भनिन्थ्यो । नेपाली शैलीमा बृहदाकारको त्यो घर, ठूला-ठूला ढुङ्गाका पर्खालले निर्मित भएको त्यो घर, माथिल्लो तलामा सिंगै रूखहरू काटेर बिमहरू बसाइएको त्यो घर दार्जीलिङका वरिपरि अझसम्म कहीं पनि देखिँदैन । अब त पितापुर्खाको चिह्न त्यो ठूलो घरको नामनिशान छैन, तर त्यस घरका नातिनातिनीहरूको स्मृतिपटमा वरिपरि हरियालीले घेरेको त्यो ठूलो घर, साँझ-बिहान रङ्गविरङ्गका चरीहरूले गीतहरू अलाप्ने त्यस घरको चुचुरा र वरिपरिका दृश्य अटल, अचल रहेको छ । ठूलो घरको दायाँपट्टि वीरबहादुर छेत्रीको घर अझै पनि छ । ठूलो घर जाने बाटोछेउ सूर्य र जगत्का घर थिए, अर्थात् लालवीर छेत्रीको घर थियो, जगत अझै पनि हुनुहुन्छ । दारोगा वीरबहादुर छेत्री हाम्री हजुरमुमाका फुपूका छोरा छन् । यही नातामा रूपनारायण सिंह, प्रेम सिंह (फौजीमा अफिसर) अनि कान्छा काका (एन.सी.सी.मा मेजर) हाम्रा काकाहरू हुन् ।

सन् १९०५ को फरवरी, खरसाङ सिपाहीधुरामा जन्म लिएर सन् १९२४ मा प्रख्यात भएका साहित्यकार **भ्रमर** (उपन्यास), **कथा-नवरत्न** (कथासङ्ग्रह) का सफल लेखक, नेपाली साहित्य सम्मेलन दार्जीलिङका मन्त्रीत्व ओगटेका अनि **खोजी** पत्रिकाका सम्पादक, दार्जीलिङ म्युनिसिपलिटीका कमिस्नर, उपाध्यक्ष

पदसम्म पुगेका अनि १९३३ मा दार्जीलिङको कचहरीमा वकालतको काम आरम्भ गरी मृत्युपर्यन्त (सन् १९५५ सम्म) कार्यरत रहेका महान् साहित्यकार रूपनारायण सिंहको सम्झना अनि उनको बाल्यकाल हाम्रो ठूलो घरसित जोडिएको छ ।

त्यसैगरी २२ सितम्बर १९१८ सिपाहीधुरा खरसाङमा जन्म लिएका एक महान् प्रतिष्ठित साहित्यकार हुन् – इन्द्र सुन्दास । प्रथम श्रेणीमा न्यायाधिकारीसम्म भए अनि त्यसै पदमा केही वर्षसम्म दार्जीलिङमा रही उनी हालमा सेवाबाट निवृत्त भएका छन् । उनको **मङ्गली, नियति** उपन्यास, तीनवटा जीवनी, चारभन्दा बढी अनुवाद, **रानीखोला** (कथासङ्ग्रह), **साहित्यपथमा** (कथासङ्ग्रह), यस्तै अनेकौं प्रकाशित भएका छन् । उनले पनि बाल्यकालदेखि नै हाम्रो ठूलोघरलाई देखेका हुनाले हाम्रो ठूलो घरसँग गहिरो सम्बन्ध राख्दछन् अनि आजसम्म अझ पनि ठूलो घरका आफन्तहरू, यत्रतत्र छरिएर बसेकाहरूसित पनि ।

ठूलो घर र यी महान् साहित्यकारहरूले त्यस समयका खस्रा शब्द अनि भावलाई आफ्ना शैलीमा ढालेर नेपाली साहित्यमा नवजीवन प्रदान गरी बङ्गाली साहित्यको अनि हिन्दी साहित्यको दाँजोमा आउने तरखर गरेको हो । त्यस समयको परिस्थितिमा नेपाली कथा साहित्यको घडेरी खन्ने काम अति गाह्रो देखिन्छ ।

यसै सिलसिलामा ठूलो घर र ती दुई महान् साहित्यकारहरूलाई लिएर दार्जीलिङबाट शरद् क्षेत्रीले पनि लेखेको छ – सिलगढी सुनचरीमा साथै डी.बी. छेत्री (रायमाझी) कालिम्पोङ अनि टेकबहादुर रायमाझी, सिलगढीले पनि ।

त्यसै ठूलो घरको साहिँला छोरा श्री नन्दलालसिंह रायमाझी र लक्ष्मी रायमाझीकी माहिली पुत्री म हुँ । ख्यातिप्राप्त लेखक शरद् छेत्री, ठूली छोरी प्रभा गुरूमा प्रधानाध्यापिका, शारदेश्वरी प्राइमरी विद्यालय अनि बुबा माथवर छेत्री छन्दोबद्ध कवि, कलाकार, सङ्गीतप्रियका छोरा हुन् । भानुराज थापा निरोगी, उदीयमान युवाकवि सिक्किमवासी स्व. कान्छी बहिनी गुरूमा चन्द्रप्रभा र प्रधानअध्यापक के.के. थापाका छोरा हुन् । हामी ६ बहिनीहरूमा एक मात्र छोरा टेकबहादुर रायमाझी विशेष सुनचरीमा संस्मरण लेख्छन् अनि उनकी श्रीमती शारदा साहित्यकार छिन्, बङ्गाली र नेपाली साहित्यकी ।

हाम्रा बुबाले आफ्ना नाति-नातिनाहरूलाई कर्मठ सरदार बलभद्र सिंहले प्रशस्त पाएको सम्मान, प्रशंसा र धनबारे रोचक इतिहास सुनाउनुहुन्थ्यो अनि भन्नुहुन्थ्यो – नाशवान् वस्तुको लालसाले दुःख मात्र पैदा हुन्छ, विद्याप्रति सधैं आसक्त रहनु, विद्या नै साँचो धन हो । फलस्वरूप आज सबै शिक्षित छन्, तीन चार जना इन्जिनियर, एक डाक्टर, एक वकिल, दुई जना एम.बी.ए., शरद् साहित्यकार, सुवास कलाकार, हिमुलको उपप्रबन्धक ।

हामी धेरजसो घूम रेलवे स्टेसनमन्तिर अधिकांश काठद्वारा निर्मित दुईतले घरमा बस्थ्यौं । त्यहीँका भिरालो पाखा र माटोसित मैले माया गाँसेकी थिएँ । पारिपट्टि चिहानेडाँडो थियो । वारि रूखको फेदमा बसेर घन्टौंसम्म समय बितेर जान्थ्यो । मुमालाई आफूले लेखेका कथा सुनाउँदै सुझाव माग्ने गर्थें । चित्त नबुझे घूम मोनास्टरी रोडमा काजीमान कन्दङ्वा दाइ बस्नुहुन्थ्यो, उहाँलाई सोध्ने गर्थे । त्यसपछि हस्तलिखित पत्रिकाहरूमा होडबाजी चल्यो, घूमबाट **सयपत्री** पत्रिका प्रायः मैले नै सुन्दर हस्ताक्षर बनाई लेख्ने गर्नुपर्थ्यो । हस्तलिखित पत्रिकाको ज्योतिमा नै नेपाली पत्रपत्रिकाको जन्म भएजस्तो लाग्छ । कमल अच्छा राई रसिकको सम्पादकत्वमा निकालेको भानुभक्त विद्यालयबाट, रसिकज्यूको आग्रहमा मैले नै **कमल** पत्रिका सार्ने गरेकी थिएँ, अनि **ताण्डव** हस्तलिखित पत्रिका नेपाली उच्च कन्या विद्यालयबाट । सम्पादक मण्डलीमा आफू नै थिएँ । यसरी चारैतिर सक्रिय भई भाग लिएको सम्झना छ ।

मेरी परम मित्र साथी काली उपनाम थियो – पी. डोल्माको, मृत्युपछि मलाई आघात तुल्यायो । तिम्रो सम्झना मैले गद्यकविता लेखैं **प्रभात**मा लैनसिंह वाङदेलको सम्पादनमा, स्थान पनि पाएँ । त्यसपछि पारसमणि प्रधानको सम्पर्कमा आएपछि मात्र मेरा कथाहरू बामे सर्न थाले ।

मेरा समकालीन साहित्यिक लेखिकाबन्धुहरूमा जोरबङ्गलाबाट शान्ति राई, दार्जीलिङबाट लक्खी बरूवा, मधुमालती दाहाल, बसुन्धरा डुलू । धनकुमारी थापा, अमृता छेत्री, हीरामाया थापा, चन्द्रकला गुरूङ, मनु राई, सानुमती राई ।

लेखक-साहित्यिक बन्धुमा कवि स्व. अगमसिंह गिरी (तीनवटा खण्डकाव्य र तीनवटा कवितासङ्ग्रहका लेखक, दार्जीलिङ्मा भानुभक्त प्राथमिक विद्यालयका प्रधानाध्यापक), अच्छा राई रसिक (**लगन** र **दोभान** उपन्यास, **सप्तकोशी** रचनासङ्कलनका लेखक) हुनुहुन्थ्यो ।

कालिम्पोङबाट नरबहादुर दाहाल, घूमबाट लक्ष्मीदास बस्नेत, जगन्नाथ प्रधान, दाजु काजीमान कन्दङ्वा, जोरबङ्गला डिपोबाट जि. छिरिङ (स्व.) आदि थिए ।

त्यस समयको होडबाजीमा, साहित्यिक क्षेत्रमा रवीन्द्रजयन्ती समारोह हुन्थ्यो, हामी पनि भाग लिन्थ्यौं । त्यसपछिको भानुजयन्तीमा केही त्रुटि हुनु नै असम्भव थियो । आफ्नो संस्कृतिको झलकमा रामायण-पाठ, एकाङ्की नाटकसहित अन्य कार्यक्रम हुन्थ्यो ।

मैले बाल्यकालमा आफ्नो शिक्षा नेपाली उच्च कन्या विद्यालय (त्यसबेला प्रिन्सिपल अङ्ग्रेज भएको हुनाले, बोर्डिङ स्कुल भनिन्थ्यो) दार्जीलिङबाट नवौं कक्षासम्म आफ्नो पढाई सिध्याएकी हुँ । परिस्थितिवश मेरो भाग्यले दसौं कक्षा मैले शारदेश्वरी कन्या उच्च माविमा पढ्न पाएँ । हाम्रो प्रिन्सिपल हुनुहुन्थ्यो महान् त्यागी साहित्यकार स्वामी प्रबुद्धानन्द । नेपालीहरूमा शिक्षाक्षेत्रमा एक पथप्रदर्शक दीप, आज उनी छैनन्, तर त्यो दीप नेपालीहरूमा प्रज्ज्वलित भइ नै रहेको छ । त्यस समयमा त्यो विद्यालय कागझोडामा थियो, १९४८ तिर दार्जीलिङमा लक्ष्मीप्रसाद देवकोटा आउँदा हामी शारदेश्वरीका विद्यार्थीहरूले पनि स्वागत गरेथ्यौं । साथमा थिए – बालकृष्ण समज्यू । विद्यार्थीहरूको अनुरोधमा परदेशबाट मदन फर्केर आएपछि आफ्नी प्यारी मुनालाई सधैंको निम्ति गुमाउनुपर्दा दिदीसित गरेको बिलौनाको अभिनयले दर्शकगणमा अश्रु टपटप झरेको आफैंलाई थाहा भएन । त्यसपश्चात् समज्यूले पनि अभिनय गरेका थिए ।

त्यस बेलुकी मैले पनि मुनामदन किनेर घरमा लगेँ अनि जानी-नजानी भाका हालेर गीत गाएर आमालाई सुनाएकी थिएँ । आमा पनि रोएकी थिइन् । यसरी साहित्यमा मेरो रूचि बढ्दै गएको थियो । समय-समयमा गोर्खा दुःख-निवारक सम्मेलन दार्जीलिङले आयोजन गरेको नाटकमा पनि भाग लिने गरेकी थिएँ । सहयोगीमा स्व. बुद्धिमान साङदान, स्व. परशुराम रोका (साहित्यकार), पी.टी. लामा (समाजसेवक) आदि थिए ।

१९४७ तिर दार्जीलिङ अनि घूमपहाडतिर हाम्रा लोककवि धर्मराज थापा आउनुभएथ्यो । घूमपहाडमा पनि हामीले उहाँलाई स्वागत गरेथ्यौं । रेलका लिकहरूमा भारी बोकी अथवा डोको बोकी हिँडेका तरूनीहरूलाई देखेर कविता भनेर हिँडेको झझल्को अझ आलै छ । काजीमान कन्दङवा, स्व. जगन्नाथ प्रधान (साहित्यकार), डी.बी. लामा (समाजसेवक) पनि उपस्थित थिए ।

१९५०-५१ मा म सन्त जोसेफ कालेज, दार्जीलिङमा भर्ना भएर इन्टरमिडियटमा उत्तीर्ण भएँ । परीक्षा दिएर हामी १९५१ मा गजेन्द्रबहादुर प्रधानाङ्गसाथ लागी जन्मभूमि नेपालको सेवाका निम्ति कोही चैनपुरतिर लाग्यौं अनि कति धनकुटातिर । त्यसै समयमा पैदल हिँडेर जानुपर्ने, सूर्योदय नभई धरानदेखि उकालो लागेर साँझमा तमरखोलाको किनारमा पुगेका थियौं । साथी धनमाया तामाङ बेहोस भएकी थिइन् । मातृविहीना तिनी आफ्नी जननी जन्मभूमिको काखमा सधैंका निम्ति निदाइन् । कस्तो संयोग थियो !

१९५१ को २५ अगस्टमा दार्जीलिङमा मेरा समकालीन साथी अच्छा राई रसिकज्यूको मृत्यु भएको समाचार दाजु वीरविक्रम गुरूङ (साहित्यकार) ले दिए । उनी धनकुटा आएका थिए । यसको चार-पाँच महिनाअघि रसिकज्यूकै हस्ताक्षरमा हाम्रा पूज्य गुरू स्वामी प्रबुद्धानन्दको देहान्त भएको खबर थियो । नेपाली मात्रका लागि शिक्षाको राँको भएर देखापरेका आफ्ना अति नजिकका स्वामीज्यूको मृत्युमा मर्माहत हुनु स्वाभाविकै थियो । मैले आफूलाई सम्भालेर रसिकज्यूको पत्र पढी सिध्याएँथेँ । लेखेथे – मेरो शिक्षा अधुरो रह्यो, फाइनल दिने तरखरमा छु ।

मैले पनि प्रत्युत्तरमा लेखेथेँ –'पुस्तकहरू सबै घूमपहाडकै घरमा छन्, सानी बहिनी चन्द्रप्रभालाई भनेर लानोस् ।'

० ० ०

त्यसपछि जीवनगोरेटोमा धनकुटामा मेरो भेट विश्वेश्वरप्रसाद कोइरालाज्यूसित पनि भएथ्यो । उनले साहित्यिक लयमा मीठा आवाजमा भनेको आजैजस्तो लाग्छ – साहित्यको मिठास पाउन गारो छ । हिजो म भरियासित उकालो लाग्दा आकाशमा टहटह लागेको जूनलाई देखेर भनेँ – आजको रात कति रमाइलो छ । भरियाले वास्तै नगरी भन्यो – अब पूर्णे आउँछ नि हजुर, सधैं यस्तै हो ।

यस्तै गरी सत्यमोहन जोशीज्यूसित भेट भएथ्यो । उहाँले पनि साहित्यक्षेत्रमा निकै प्रेरणा दिनुभएथ्यो ।

धनकुटाबाट घर (घूमपहाड) आउँदा तमर नदीको किनारमा १/७ जी.आर.का ब्रिटिस अफिसरसित भेट भएथ्यो । यस्तै चिनारूले गर्दा १/७ जी.आर.को प्राइमरी स्कुल क्लुवांग (मलेसिया) मा थियो, शिक्षिकामा भर्ना भई सन् १९५४ तिर म विदेशिएँ, समस्या त्यस्तै थियो । बुबा रेलवे कर्मचारी १९५३ मा नै सेवानिवृत्त हुनुहुन्थ्यो । ठूली दिदी (शरद्

छेत्रीज्यूकी आमा) को बिहे भएको थियो, शिक्षामा अग्रसर भइरहेका मेरा भाइ (टेकबहादुर रायमाझी, सिलगढी) चारजना ससाना बहिनीहरू थिए, आर्थिक सङ्कटले शिक्षा अधुरो नरहोस् भन्ने एकमात्र उद्देश्यले म विदेशिएकी थिएँ, तर मन आफ्नै नेपाली संस्कृतिमा अल्झिरहृयो । पाठशालामा पनि आफ्नै नेपाल पहाडतिरका, मदेश तराईतिरका, दार्जीलिङ देहरादून, भाक्सूतिरका बालक-बालिकालाई मैले विद्यादान दिएकी थिएँ । सबैलाई मोह मैले दिएकी थिएँ, आफैले पनि धेरै माया बटुलिसकेकी थिएँ, शिक्षाक्षेत्रमा, गीतमा, नृत्यमा, आफ्नो संस्कृतिमा अनि स्काउटर पनि भएर बालबालिकालाई अगाडि बढाउने कार्यक्रममा सक्रिय भएथेँ ।

त्यहाँ पनि कति साहित्यिक साथीहरू र हामीहरू समय-समयमा भेटघाट गर्ने गर्थ्यौं । मेरा समकालीन साहित्यिक बन्धुहरू थिए - लक्ष्मीदास बस्नेत (साहित्यकार), चन्द्रबहादुर मुखिया, कृष्णराज लिम्बू, मेघबहादुर छेत्री आदि । सर्वप्रथम **उषा** पत्रिका हस्तलिखित पत्रिकाका रूपमा सञ्चालन गर्न लाग्यौं । सम्पादक मण्डलीमा आफू पनि थिएँ । यसरी साहित्यमा धेरै नै रूचि बढेर गएको थियो । १९६४ मा **उषा** पुस्तिकाको रूपमा देखापऱ्यो ।

सिङ्गापुर सैनिकबाट प्रकाशित हुने साप्ताहिक पत्रिका **पर्वते**मा मैले धेरै मात्रामा गद्यकविता, कविता, कथा, अनि संस्मरण लेख्ने गरेकी थिएँ ।

**सिङ्गापुर सैनिक** आकाशवाणीमा एकाङ्की नाटकप्रतियोगिता समयसमयमा हुन्थ्यो । १९५४ मा मेरो जीवनको इच्छा नाटकले सर्वप्रथम स्थान ओगटेको थियो । त्यसपछि कतिपय नाटकहरूमा आफैँ लेखेर, आफैले भाग लिने अवसर पनि पाएँ । सहयोगीहरू थिए श्रीमती लीना देवराज (दिदीज्यू), शेरबहादुर राई (मामाहजुर) चन्द्रबहादुर मुखिया (दाजुहजुर) ।

सन् १९६६ मा म ब्यारेकपुर (कलकत्ता) जहाँ ब्रिटिस ट्रान्जिट क्याम्प थियो, त्यहाँ हुँदा मेरो विवाह श्री बुद्धिमान लेप्चासित भयो । उहाँ १/७ मा क्याप्टन हुनुहुन्थ्यो । कर्मचारीहरूमा प्रमुख हुनुहुन्थ्यो । खेलकुदमा खेलाडी अनि सङ्गीतप्रिय ... समाजसेवक हुनुहुन्थ्यो । हालमा पनि त्यस्तो काममा अग्रसर भइरहने देखिन्छ । उहाँ कविता र सङ्गीतका आकाशमा देखिएका प्रतिभा चन्द्रमित लक्सम (वाइवा) का ठूलो दाइ हुनुहुन्छ ।

कतिपय स्मरणीय घटनाहरूमा एउटा आफूलाई मनप्रिय गडेको चिठ्ठी विषय लेख्दै छु । सन् १९६६ तिर १/७ जी.आर.का मेरा प्रधानाध्यापक स्व. डेभिड प्रधानले पत्रमा लेखेका थिए मलाई -'तपाईं हालमा ब्यारेकपुर ट्रान्जिट क्याम्पमा प्रधान अध्यापिकाको काम सम्हाल्नुहुँदै छ, विद्यालय परिवारबाट बधाई र शुभेच्छा ग्रहण गर्नुहोला । प्रायः १२ वर्षको अवधिमा तपाईं धेरै नै सम्मानित हुनुभएको - शिक्षाक्षेत्र, साहित्यिक क्षेत्रमा साथै अतिरिक्त क्रियाकलापमा । तपाईंलाई देखेर हामी गर्व गर्थ्यौं, अझसम्म गर्दैछौं । तपाईंका अघि पछि अनेकौं करतल ध्वनि, अभिवादन ( सलूट) हरू हुन्थे । तपाईं सधैं अटल भई आँधी-हुरीमा विजयी भई हँसमुख देखिनुहुन्थ्यो ।' त्यसबेला विगत जीवनका आनन्द र खुसीयाली सम्झेर मेरा आँखाहरू रूझेका थिए । डेभिड प्रधानज्यू हाम्रा साहित्यकार दान खालिङज्यूका भिनाज्यू हुन् ।

सन् १९७१ मा मेरो नोकरीको अवधि शेष भएपछि भद्रपुरका मेरा माइला बुबाका छोराहरू स्व. लालबहादुर रायमाझी र तिलक रायमाझीसित भेट गर्न म भद्रपुर आएँ । त्यसबेला भद्रपुरमा निम्नमाध्यमिक शिक्षकहरूका निम्ति अन्तर्वार्ता भइरहेथ्यो । मैले पनि बाबुराम नेपालज्यूको सहयोगले भाग लिने अवसर पाएँ । त्यस अन्तर्वार्ताकक्षमा टीकेन्द्र कार्कीज्यू पनि हुनुहुन्थ्यो । पछि उहाँ जि.शि.अ. पनि हुनुभएको थियो ।

उहाँकै समयमा २०२९ को अन्तदेखि शारदा निम्नमाध्यमिक विद्यालयमा शिक्षिकामा नियुक्त भएँ । प्रायः दुई वर्षपछि अमात्यज्यू जिशिअ भएको समयमा भद्रपुर माध्यमिक विद्यालय निम्नमाध्यमिक तहमा अङ्ग्रेजी शिक्षिकाका रूपमा अवसर पाएँ । यसरी प्रायः पुगनपुग बीस वर्ष नोकरी गरेपछि शिक्षण पेसाबाट निवृत्त पनि भएँ ।

वरिष्ठ साहित्यकार एस.एल. शर्माज्यू मेरा दाइ स्व. लालबहादुर रायमाझी (काजीसाहेब) का घनिष्ट मित्र हुनुहुन्छ । सिपाहीधुरा (खरसाङ) बाट रायमाझीहरू गिद्देपहाड (खरसाङ) मा पनि आएर बसेका थिए । काजीसाहेबको खास घर गिद्देपहाडमा थियो ।

त्यस समयमा कति साहित्यिक र राजनीतिक व्यक्तित्वहरू त्यहाँ आउने-जाने गर्थे, यिनीहरूमा शर्माज्यू पनि हुनुहुन्थ्यो । उहाँसितको मेरो भेट खरसाङमा भएथ्यो । त्यहाँ नेपाली उच्च कन्या विद्यालय, दार्जीलिङबाट वादविवाद-प्रतियोगितामा भाग लिन खरसाङ आएथेँ । यसमा विजयी भई फर्केको सम्झना छ । शर्माज्यूसितको परिचय अधुरो रहेन, भद्रपुरको साहित्यिक प्राङ्गणमा भेट भइ नै रहन्छ ।

भद्रपुर माविको प्राङ्गणमा मेरा अति नै सहयोगी बन्धुमा हाम्रा प्रधानाध्यापक प्रमोदचन्द्र शर्माज्यू हुनुहुन्छ । अनि सबै शिक्षक-शिक्षिकाहरूमा अति प्रिय सहयोगी थिए । सहयोगी बन्धु साहित्यकारमा बद्रीनारायण शर्माज्यू, जगन्नाथ गड्तौलाज्यू अनि मदन ढकालज्यू पनि हुनुहुन्थ्यो । विद्यार्थीहरूमा विशेष सुश्री कुसुम भट्टराई साहित्यमा अग्रसर भएकी थिइन् ।

हालमा म भानुनगर-२ भद्रपुर घर नं. २ मा आफ्नै घरमा बस्छु । मेरी एकमात्र छोरी डा. रविना लेप्चा हालमा बेलायत डाक्टरी पेसामा आफ्ना श्रीमान् डा. सुदीपसित दाम्पत्य जीवन सुचारू रूपले निर्वाह गरिरहेको समाचार बारम्बार सुनिरहेकी छु । क्याप्टन बुद्धिमान लेप्चा (डा. रविनाका बुबा) मेरा श्रीमान् धेरजसो दार्जीलिङतिर नै बस्नुहुन्छ । छोरीको मँगनीमा, बिहेमा आफ्नो उत्तरदायित्व, कर्तव्य सुचारू रूपले निभाउनुभयो - भद्रपुरमै बसेर । हालमा समय-समयको आवत जावतले हामी दुईको दाम्पत्य जीवनको अतीत सँभालिएर वर्तमानसित मितेरी लगाएको छ । यहाँ हाम्रा गाउँमा मेजर कर्ण गुरूङ (भानुनगर बोर्डिङ स्कुलका प्रिन्सिपल) अग्रज अफिसर हुनुहुन्छ क्याप्टेन बुद्धिमान् लेप्चाको ।

यहाँ हाम्रो गाउँ भानुनगरको वातावरण रमाइलो छ । यहाँ साहित्यिक बन्धुहरूसित समय-समयमा भेट भइ नै रहन्छ - देवकोटा स्मृति भवनको प्राङ्गणमा । यो ठाउँमै हुनुहुन्छ कृष्णाा छेत्रीज्यू, डा. हृषिकेश उपाध्यायज्यू, हीरा आकाशज्यू, इन्सपेक्टर के.बी. गुरूङज्यू, के.बी. कार्कीज्यू, लेखनाथ कोइरालाज्यू (शिक्षक), चन्द्रगढीमा चूडामणि रेग्मीज्यू, श्यामकृष्ण श्रेष्ठज्यू, भद्रपुरमा आदरणीय टीकाराम शर्माज्यू, दाइ एस.एल. शर्माज्यू, मालारानी मोक्तानज्यू, घनेन्द्र शर्माज्यू अनि शनिश्चरेमा सरोज ओलीज्यू, रोहिणीविलास लुइँटेलज्यू, बिर्तामोडमा भवानी थापाज्यू आदि धेरै धेरै नामहरू छन् । मेरा विद्यार्थी युवा कविहरूमा कुलराज कोइराला, अकवर अली, कृष्णा गुरूङ प्रशंसनीय देखिन्छन् ।

अन्तमा, भद्रपुर माविको सम्झना गर्दा मुखिया सरको नाम उल्लेख नभए अधुरो नै रहला । सात सालको प्रजातान्त्रिक सेनानी उनी, सुरूसुरूमा भद्रपुर माविमा प्रधानाध्यापक भई कार्यभार सँभाली, त्यसपश्चात लेखा र अङ्ग्रेजी शिक्षकका रूपमा देखापरे - मिलनसार, मुदृभाषी, अनुशासनप्रेमी थिए । निमा शिक्षक भई आठौं कक्षामा अङ्ग्रेजी पढाउनुपरेको खण्डमा उनीबाट मैले व्याकरणसम्बन्धी निकै सुझाव पाएथेँ । उनी ४१ वर्षसम्म शिक्षणपेसामा कार्यरत रही २०४४।१०।१५ मा सेवानिवृत्त भएका थिए । हामी दुवैको बिदाइ समारोह एकै दिनमा भएको थियो ।

हालमा उनी छैनन् । विद्यालयप्राङ्गणको क्वार्टरमा उनको अन्तिम दर्शन गर्न हामी भेला भएथ्यौं २०५७ असोज ४ गते । उनकी श्रीमती, परिवारको रोदन, क्रन्दन, उपस्थित वर्गका आँसुहरू र उहाँमाझ हामीहरूले पनि अन्तिम श्रद्धाञ्जलि अर्पण गर्‍यौं ।

उनको स्मरण परिवार, आफन्त, विद्यालय परिवारका साथै विद्यालयभवनका माटा, ढुङ्गा, प्रकृतिमा पनि समावेश भएको देख्छु म त । जहिले पनि आफूले परिश्रम गरी विद्यादान दिएका डा., इन्जिनियर, ठूला ठूला पदमा रहेका व्यक्तिहरूको सम्झना गर्थे उनी । सच्चा देशभक्त, सर्वस्व त्यागी, विद्वान् पुरूष, सफल र प्यारा आदरणीय शिक्षक र समाजसेवकका रूपमा स्मरणीय छन् रत्नकुमार मुखिया सर, भद्रपुर झापा, पूर्वाञ्चलमा ।

(ख)

२०५७ मा आफ्नै विषयमा लेखिएको चर्चा खण्ड (क) पनि अब पुरानो भयो । तीन वर्षको अवधि नाघिसक्यो । समय खुलुलुलु बगेर गएको खोलाझैं बितिरहेछ मन्दगतिमा, तर आफ्नो निम्ति त द्रुतगतिमा बहेको झर्नाझैं लाग्छ । यो पछिल्लो जीवनयात्रामा कति सहयोगी मित्र, आफन्त अनि मनैभित्र रहेका साहित्यिक मित्रहरू भने छुट्टिए । आफ्नै गाउँघरमा पनि साहित्यिक दाइ श्री एस.एल. शर्माज्यू, साहित्यिक यात्रामा सर्वप्रथम भेट भएका चिरपरिचित लैनसिंह बाङदेलज्यू अनि मलाई ताते गर्दै साहित्यको बाटोमा डोर्‍याउने दाजु काजीमान कन्दङवाज्यू आज जीवनयात्रामा कता बिलाए कता, तर आफ्नो साहित्य र कलामा अनुकरणीय देनहरू छोडेर गएका छन् - आउँदो पिँढीका निम्ति ।

जीवनमा घमाइला घडीहरू पनि आउँछन् अनि अँध्यारो घडी पनि आउँदो रहेछ । मैले आफ्नो विषयमा चर्चा गर्दा (क) मा आफ्नो श्रीमान्का विषयमा छोटो परिचय लेखेकी थिएँ - क्याप्टेन बुद्धिमान लेप्चाबारे । 'हालमा समय-समयको आवतजावतले हामी दुईका दाम्पत्यजीवनको अतीत सँभालिएर वर्तमानसित मितेरी लगाएको छ' भन्ने, तर यो परिचय पनि आज कथा नै बन्यो । उहाँ हुनुहुन्न आज । वैशाखको प्रभाती आउनुअघि नै अन्धकारमा विलीन हुनुभयो

२०५८ चैत्र २९ गते, बिहीबार ।

आज यो भद्रपुर १ मा म मेरी एउटी काली छोरी, कुमारी जोशी, चौथो कक्षाकी छात्रा मेरो बोल्ने साथी बनेकी छे । आफ्नो यो विशाल जीवनगाथा सम्झँदा झल्याँस्स याद आयो, झापाका कथाकार धरावासीज्यूले आफ्नो कथा **ब्रह्मपुत्रको पानीमा** उद्धृत गरेझैं –'किन अनिता (कथाकी नायिका) ले मलाई यसरी संसारमा नभएकै जस्तो माया गरी र फेरि किन संसारमा नभएकैजस्तो कठोर परित्याग पनि ?' यस्तै मेरो जीवनमा पनि यो कताकता मिल्दोजुल्दो घटना भयो, यो पनि संयोग भनूँ ! तर साहित्यिक यात्रामा भने म विस्तारै बहन थालैं र आफ्नो जीवनको मिलन–बिछोडको कथा कताकता पुरानो हुँदै गएपछि यथार्थतामा पाइला चाल्न पनि समर्थ भएँ ।

क्रमशः २०५८ मा साहित्यिक पत्रकार सङ्घ काठमाडौंबाट लोकप्रिया पुरस्कार, २०५९ मा नवरङ्ग साहित्यिक प्रतिष्ठान, झापा धरमपुरबाट अभिनन्दन, २०५९ मा नेपाली साहित्य समाज, उर्लाबारी, मोरङबाट सम्मान, २०६० मा अरनिको आवासीय मावि, विराटनगरबाट आफू सम्मानित र पुरस्कृत हुँदा आफ्नो जीवनकथामा खुसीको सन्देश उनलाई भन्न नपाउँदा कताकता केही हराएझैं लाग्यो ।

२०५९ माघमा जूही प्रकाशनबाट **जीवनको इच्छा** (एकाङ्कीसङ्ग्रह) प्रकाशित भयो भने २०५९ असार–भाद्रको साहित्यिक परिवार त्रैमासिक पत्रिका **वनिता** (मोरङ)का सम्पादक लक्ष्मी उप्रेतीज्यूले मेरो आफ्नो परिचय र मेरो विचार उल्लेख गरेकाले र अरू पनि समालोचकहरूले टीका–टिप्पणी गरी मेरो मनोबल बढाएकोले यसरी साहित्य–साधनामा लाग्दा उमेर बितेको र समय बितेको थाहा नै पाइन ।

अब यता २०६० सालमा जूही प्रकाशनले कथासङ्ग्रह **उनी गएको गोरेटो** र **तिमी नगएकी भए !** (दोस्रो संस्करण) प्रस्तुत गर्दै फेरि लेख–निबन्धहरूको सँगालो **आत्मकथ्य : विविध** प्रकाशन भएको छ । यसरी छरिएर र निसासिएर रहेका मेरा साधनाका सृष्टिहरू बाहिरिएका नेपाल र नेपालबाहिरका पाठकहरूमा आफ्नो मनोभाव छर्लङ्ग्याउन पाउँदा यो निराशामय एकाङ्की जीवनमा उज्यालो छाएको अनुभव गरिरहेकी छु ।

फेरि दुःखद सम्झनाले मलाई पिरोलिरहेको छ । विद्यार्थी जीवनमा मेरी साहित्यिक साथी बसुन्धरा कालिम्पोङ बरसना माध्यमिक विद्यालयकी प्रिन्सिपल थिइन्, तिनको पनि अकस्मात दुःखद मृत्यु भयो । मृत्युको मुखिन्जेल हुँदा पनि यो टिस्टावारि र पारिको बसाइले गर्दा मैले भेट्ने अवसर पाइनँ । साथी बसुन्धराविना कालिम्पोङ यात्रा अधुरो नै रहेको छ । तिनलाई सधैं नै विद्यार्थीहरूको प्रगति र आदर्शमा जुटिरहेकी देख्थैं म, होस्टेलका छात्राहरूमा माया छर्दै, माया बटुल्न पनि सक्थिन् । हाम्रा पूज्य गुरूबा टीवी मनेनज्यू बसुन्धराको शोकसमाचार सुनेर भन्नुहुन्छ – 'सधैं हँसिली, राम्री, आँटी विद्यार्थी तिनी, ठूलालाई कदर गर्ने, साना र समकालीनलाई माया राख्ने, विचरी बसुन्धरा मलाई अझ याद छ – कक्षामा 'नारी' विषयमा कति उत्कृष्ट लेख लेखेकी थिइन् । मैले कति खुसी भएर तिनलाई स्याबासी साथै साहित्यिक तारा भनी उपाधि दिएको थिएँ ।'

अन्तमा, भद्रपुर १२ (झापा) मेरो मायालु वासस्थान हो, जहाँबाट म दुःखमा पनि खुसीले र अहर्षमा पनि हर्षले बाँच्न सकेकी छु । साहित्यसुधा–रसपान गरेर नै हो, आफ्नो जीवनमा केही अभाव भए पनि परिपूर्ण भएजस्तै लाग्छ । साहित्य यस्तो अमृत रहेछ, कहिल्यै पनि तृप्त नहुने, नअघाउने । यसरी साहित्य नै मेरो जीवनमा अमृत बनी रहिरहोस् । मेरो जीवनको ठूलो चाहना यो पहिले पनि थियो, अब समेटिएर जीवनसम्मको निम्ति सहयोगी साथी बनेको छ । ❑

# लासमाथि पार्टी र संघसंस्थाको गिद्दे दृष्टि



रामप्रकाश गुरुङ समथिङ
जन्म : वि.सं. २०२६ माघ २९
फिदिम, पाँचथर
अवसान : वि.सं. २०७९ भाद्र ३०

'पुष्प सर प्राज्ञ हुनु भएकोमा बधाइ छ है । तपाईलाई यस पटक चाहिँ नेपाली कांग्रेस पार्टीले सम्झेछन् ।' 'मेरो अगाडि अरू सबैको कुरा गर तर कांग्रेस पार्टीको कुरा नगर साइँला ।' 'किन र सर ?' 'मलाई कांग्रेसले २०५६ सालको निर्वाचनताका नै कारबाही गरेको व्यक्तिलाई कांग्रेसको के कुरा गर्छौ ?'

उहाँ केही वर्ष अगाडि प्राज्ञ सदस्यमा मनोनित हुनु भएपछिको कुरा हो । तर मैले त्यति भनेपछि बिर्सी नै सकेको थिएँ । यी माथिका उहाँसँगको संवाद मलाई २०७२ साल मंसिर १६ गते विहान सम्झन बाध्य भएँ । थाम्सुहाङ पुष्प सुब्बाले २०७२ साल मंसिर १५ गते बेलुका ६ बजेर १० मिनेट जाँदा लगभग डेढ वर्ष लामो उपचारपछि हामीलाई छाडेर जानुभयो । थाम्सुहाङ पुष्प सुब्बाको मृत शरीरमाथि २०७२ साल मंसिर १६ गते विहान नेपाली कांग्रेस पार्टीको झण्डा ओडाइरहँदा माथिका संवादहरू सम्झन पुगेँ ।

थाम्सुहाङ पुष्प सुब्बा डेढ वर्ष अघिदेखिको विरामी । उहाँ विरामी भएको कुरा अनि उपचारमा लागेको खर्चको बारेमा उहाँको परिवार र हामी प्रेम ओझा, भवानी तावा र मलाई बढी थाहा हुन्थ्यो । म उहाँको छोरा यलम्बर थाम्सुहाङसँग नजिक भएकोले पारिवारिक र आर्थिक स्थितिको बारेमा अझ धेरै साह्रो गाह्रो थाहा पाउँथे । गत सालको उपचारमा भन्दा पनि यस पटक उहाँको परिवारलाई निक्कै गाह्रो भएको थियो । भन्नलाई जति सजिलो छ तर पैसा जुटाउनलाई त्यत्तिकै गाह्रो हुन्छ । उपचार खर्चमा गाह्रो भइरहेको कुरा उहाँका साइँला छोरा यलम्बर थाम्सुहाङसँग कुरा गर्दा थाहा हुन्थ्यो । किन भने हाम्रो पनि बाबु क्यान्सर रोगको कारण भरतपुर क्यान्सर अस्पताल चितवनमा उपचारको क्रममा हुनुहुन्छ । घरबाट हिँडेपछि कतिको खर्च हुन्छ भन्ने कुरा भन्नेलाई भन्दा पनि भोग्नेलाई थाहा हुन्छ ।

मैले उहाँलाई बढी चिनेको साहित्य क्षेत्रमा - तर त्यो भन्दा पनि उहाँ अहिलेको साहित्य भन्दा २०५६ साल भन्दा अगाडि राजनीतिमा सक्रिय मान्छे रहेछ । उहाँको राजनीतिको बारेमा उहाँसँग प्राज्ञ सदस्यमा मनोनित हुनु भएपछि मैले बधाई दिइरहँदा २०५६ सालको निर्वाचन ताका नै कांग्रेसले कारबाही गरेको व्यक्ति म भन्ने प्रसङ्ग चल्दा कसरी कारबाहीमा पर्नु भो त भन्दा मलाई यसरी सुनाउनु भएको थियो ।

'मैले राजनीति १५ वर्षको उमेर हुँदादेखि शुरू गरेको । पहिले कांग्रेसको तरूण दलबाट मेरो राजनीति शुरू भएको । मैले २०१५ सालमा रूख चिन्हमा भोट हालेको । राजनीतिमा सक्रिय भएकै कारणले २०२७-२०२८ सालतिर भारततिर जानुपर्‍यो । नेपालमा प्रजातन्त्र आएपछि नेपाल फर्के । अनि पुनः राजनीतिमा सक्रिय भएँ । नेपालमा पटक-पटक निर्वाचन भइरह्यो । मैले अब त मेरो पनि सांसद हुने योग्यता पुग्यो भनेर २०५६ सालको निर्वाचनमा सांसदको उम्मेदवारी

दावी गरेँ । तर मेरो पार्टीले कुरासम्म सुनेनन् । मलाई दिनुपर्नेमा अर्कैले टिकट पाए । मलाई मात्र हैन म भन्दा पनि पुरानो कांग्रेसका खम्बा मानिएका देवान दोर्जे थिङलाई सम्म कांग्रेसले बेवास्ता गरे । उहाँले २०५६ सालको निर्वाचनमा सांसदको उम्मेदवारी दावी गरेकामा उहाँलाई पनि टिकट दिएन ।

२०५६ सालमा भएको निर्वाचनमा पाँचथर क्षेत्र नं. १ बाट नेपाली कांग्रेसका उम्मेदवार दीपकप्रकाश बाँस्कोटाले टिकट पाए । देवान दोर्जे थिङले उम्मेदवारी नपाएपछि उनले कांग्रेसकै उम्मेदवार दीपकप्रकाश बाँस्कोटाको बागी उम्मेदवारी दिए । तर मैले चाहिँ बागी उम्मेदवारी दिइनँ । पाँचथर क्षेत्र नं. १ मा नेपाली कांग्रेसका दुई जना उम्मेदवार भए । दीपकप्रकाश बाँस्कोटा र बागी उम्मेदवार देवान दोर्जे थिङ । कांग्रेसको आधिकारिक उम्मेदवार बाँस्कोटा भएकोले सबै पार्टीका कार्यकर्ताहरूले बाँस्कोटालाई सघाउनु भनेर पार्टीले उर्दी गरे । मैले नेपाली कांग्रेसका आधिकारिक उम्मेदवार दीपकप्रकाश बाँस्कोटालाई सघाउनु पर्नेमा बागी उम्मेदवार देवान दोर्जे थिङलाई सघाएँ । त्यसपछि देवान दोर्जे थिङलाई सघाउने जति सबैलाई कांग्रेस पार्टीले कारबाही गरे । कारबाहीमा पर्नेमा पहिलो नम्बरमा देवान दोर्जे थिङ थियो भने दोश्रो नम्बरमा म । पार्टीले कारबाही गरेपछि म राजनीतिमा निस्कृय बसेँ र साहित्यमा सक्रिय भएँ । अहिले मैले कांग्रेस पार्टीमा भन्दा साहित्यमा सम्मान पाएको छु ।'

यही प्रसङ्गमा मैले उहाँलाई 'नेपालको राजनीतिक प्रचलन नै भन्नुपर्छ विरामी हुँदा र बाँच्दासम्म वास्तै गर्दैन । तर मरेपछि पार्टीको झण्डा ओढाउने चलन छ । पछि तपाईको मृत्यु पश्चात कांग्रेस पार्टीका नेताहरू तपाईको मृत शरीरमाथि कांग्रेसको चारतारे झण्डा ओढाउन आउँछन्' भनेँ । 'मेरो मृत्यु हुनुपूर्व भन्न सके भने छोराहरूलाई मेरो शरीरमाथि कांग्रेसको झण्डा नओढाइ दिनु भनिराख्छु । सक्छौ भने साइँला साहित्यिक झण्डा ओढाइ दिनु तिमीहरूले ।'

माथिको उहाँसँगको संवाद मैले लेखिरहँदा नेपाली काँग्रेस पार्टीका नेता र कार्यकर्ताहरूलाई पत्यार नलाग्ला । तर पार्टीबाट कारबाहीमा पर्नेहरूलाई हो कि हो कि जस्तो पनि होला । कहाँसम्मको सत्य हो उहाँले भनेको कुरा मैले त २०७२ साल मंसिर १६ गते विहान उहाँको मृत शरीरमाथि नेपाली काँग्रेसको चारतारे झण्डा ओढाइरहँदा विगतको कुरा सम्झन पुगेको कुरा स्मरण गरेको मात्र हुँ ।

उहाँको विरामीको बारेमा डेढ वर्ष अघिदेखि जानकारमा थिएँ म । उपचारमा लागेको खर्चको बारेमा पनि राम्रै थाहा थियो । यसपटक भने अलि विरामीले साह्रै हुने गरी च्याप्यो । विर्तामोड बिएनसी त्यसपछि विराटनगरमा लगेपछि उपचारमा केही सुधार भएन । २०७२ साल मंसिर १४ गते सोमबार विराटनगरबाट फिदिम ल्याउँदैछ भन्दा यलम्बर थाम्सुहाङसँग उनको काइँला भाइ सिकुमको डेरा इगल एफ.एफ. भएको घरमा गएर बस्यौ । बेलुका ११ बजेर २० मिनेट समय हुदै गर्दा एम्बुलेन्सबाट नाकमा अक्सिजन लगाएको अवस्थामा ल्याएका थिए । हामीले एम्बुलेन्सबाट निकालेर भित्र लगेर राख्यौ । रातभरि रुँगेर बस्यौ । उहाँले एक शब्दसम्म बोल्नु भएन ।

२०७२ साल मंसिर १५ गते मंगलबार । समय साँझको ६ बजेर १० मिनेट जाँदैथ्यो । सायद साहित्यकार थाम्सुहाङ पुष्प सुब्बालाई काल लिन आइपुगेको रहेछ क्या र ! मंगलबार ६ बजेसम्म सँगै रहँदारहँदै पनि मृत्युको बेलामा भेट नहुनु लेखेको रहेछ भन्नुपर्ला । उहाँलाई छाडेर म केही समय घरमा आएको थिएँ । घरमा आइपुगेको केही समयमा उहाँको मृत्यु भइसकेको नेपाल पत्रकार महासंघ पाँचथर शाखाका सचिव गिरीराज बाँस्कोटाले हैन राम सर तपाई संगै हुनुहुन्थ्यो । पुष्प सरको मृत्यु भएको कुरा जंग तामाङले फेसबुकमा लाएको छ । म त तपाईसँगै होला भनेर सोधेको । मैले तुरून्त यलम्बरलाई फोन गरेँ । उनले उठाएनन् । भवानी तावालाई गरेँ । उहाँको मृत्यु भइसकेको कुरा थाहा पाएँ । अनि सोही खबर गिरीराज बाँस्कोटालाई गरेँ ।

राजनीतिक पार्टीको नेता र कार्यकर्ताहरू विरामी हुँदा कसो गर्छ थाहा छैन । तर पाँचथरे लेखक तथा साहित्यकारहरू कोही विराम भयो भने यथासक्य आर्थिक सहयोग गर्ने हाम्रो चलन छ । त्यस्तै सहयोगको अभियान अन्तर्गत चोकमागु गाउँ विकास समितिका पूर्व अध्यक्ष तथा साहित्यकार वीरेन्द्र तुम्बापो 'प्रतिक'लाई पनि केही महिना अगाडि हामीले सहयोग गरेका थियौँ । त्यस्तै साहित्यकार थाम्सुहाङ पुष्प सुब्बालाई पनि मंसिर १३ गते ३१ जना लेखक, साहित्यकार र केही शुभचिन्तकहरूबाट २७ हजार ५ सय ५ रूपैया संकलन गरेर उहाँको साइँला छोरा यलम्बर थाम्सुहाङलाई हस्तान्तरण गऱ्यौं ।

म उहाँलाई मंसिर १४ गते फिदिम ल्याएदेखि सँगै छु । उहाँको अन्त्येष्टि गर्ने ठाउँ याङनाममा साहित्यकारहरू प्रेम ओझा, डि.एम. कन्दङबा, भवानी तावा र तिलविक्रम नेम्बाङसँग मंसिर १७ गते गाडी रिजर्भ गरेर याङनामसम्म मलामी पुग्यौ । उहाँको मृत शरीर आँगनमा राखेको खाटमा राखिएका थियो । उहाँको शरीरमाथि नेपाली कांग्रेसको चारतारे झण्डा त्यसभन्दा माथि किरात याक्थुङ चुम्लुङको झण्डा ओढाइएको थियो । उहाँको अनुहार मात्र देखिन्थ्यो ।

शरीर भरि झण्डै-झण्डा थियो । हामी पुगेको केही समयपछि उहाँको घर नजिकै आफ्नै जग्गामा अन्त्येष्टी गरियो । अन्त्येष्टीमा सकेसम्म सहयोग गर्ने काम भयो ।

उहाँको अन्त्येष्टिपछि झण्डाको बारेमा र झण्डा ओढाउने पार्टी र संघसंस्थाहरूको बारेमा उहाँको साइँला छोरा यलम्बरलाई सोधेँ । मरेपछि झण्डा ओढाउन तँछाड र मछाड गर्नेहरूले विरामी हुँदा उपचार खर्च भनेर केही सहयोग गरे ? पैसाको कुरा त परै जाओस् डेढ वर्षसम्म विरामी हुँदा थाम्सुहाङ पुष्प सुब्बाको विरामीको अवस्था कस्तो छ भनेर न त कांग्रेस पार्टीका नेता र कार्यकर्ताले सोध्यो न त किराँत याक्थुङ चुम्लुङमा बस्ने लिम्बूहरूले नै सोध्यो । मेरो बाबुको विरामीको बारेमा सोधीखोजी गर्ने पाँचथरे लेखक तथा साहित्यकारहरू बाहेक अरू कसैले पनि चासो राखेनन् । साहित्यकारहरूले थाम्सुहाङ पुष्प सुब्बाको शिघ्र स्वास्थ्य लाभको कामना गर्दै आर्थिक सहयोग गरे । **मेची पोष्ट** दैनिकमा श्रद्धाञ्जलीसम्म दिए । तर नेपाली कांग्रेस पार्टी र किराँत याक्थुङ चुम्लुङ संस्थाले भने मरेको लासमाथि झण्डा ओढाउन मात्रै तँछाड र मछाड गरे ।

आर्थिक रूपमा थाम्सुहाङ पुष्प सुब्बा अर्काको घरमा गएर बनी गर्नु चाहि नपर्ने । आफ्नै जग्गामा उत्पादन भएको अन्नले जेनतेन वर्ष दिनसम्म खानलाई पुग्ने । तर अरू आर्थिक श्रोत खासै नभएको । त्यसैले गर्दा पनि उहाँको उपचारमा निक्कै सकस भएको हुन सक्छ ।

उहाँ नेपालीभन्दा पनि बढी लिम्बू भाषा, साहित्य संस्कार, सँस्कृतिको बारेमा कलम चलाउने व्यक्ति । लिम्बू जातिको भाषा, संस्कार र सँस्कृतिको बारेमा खोज अनुसन्धान गर्ने व्यक्तिहरूलाई सहयोग पुगोस भनेर मुन्धुम पुरस्कार, सिरीजङ्गा पुरस्कार, बलिहाङ पुरस्कार र इमानसिं पुरस्कारको स्थापना गरेका छन् । जसको संयोजन किराँत याक्थुङ चुम्लुङ केन्द्रीय समितिले गरेको छ । यी पुरस्कार मध्ये पनि सबैभन्दा ठूलो राशी भनेको मुन्धुम पुरस्कार एकलाख रूपैयाको होला । सायद म गलत छैन भने गाउँमा बसेर लिम्बू जातिको बारेमा कलम चलाउने व्यक्ति उहाँ भन्दा अर्को छैन भन्दा फरक नपर्ला । धेरैजसो काठमाडौमा बसेर कलम चलाउने गर्दछ । तर काठमाडौको गाउँमा बसेका लिम्बूहरूले गाउँमा बसेर लिम्बू जातिको भाषा, संस्कार संस्कृतिको बारेमा खोज अनुसन्धान गर्ने व्यक्ति देखेनन् । बरू काठमाडौमा बस्ने लिम्बूलाई एक पटक मात्रै हैन पहिलो र दोश्रो पटक नै एकै व्यक्तिलाई एक लाख पुरस्कारको मुन्धुम पुरस्कार दिए । सानो रकमको इमानसिं पुरस्कार भने २०६९ मा यसो चित्तसम्म बुझाउनको लागि उहाँलाई दिए । एकै व्यक्तिलाई दुई-दुई पटक दिनुको सट्टा लिम्बू जातिको बारेमा खोज अनुसन्धान गरी यतिका धेरै कृति प्रकाशन गर्ने थाम्सुहाङ पुष्प सुब्बालाई एक लाखको मुन्धुम पुरस्कार दिँदा के फरक पर्थ्यो र ? तर काठमाडौमा बसेर पहुँच पुगेकाहरूलाई एउटै नामको पुरस्कार दोहोऱ्याएर दिए ।

आर्थिक सहयोगको कुरा चलिरहँदा थाम्सुहाङ पुष्प सुब्बाको बारेमा न त नेपाली कांग्रेस पाँचथर नै लाग्यो न त किराँत याक्थुङ चुम्लुङ नै । न त उहाँको दाजु भाइ नै लाग्यो न त थाम्सुहाङ समाज नै लाग्यो । उहाँको उपचारमा खालि पाँचथरे लेखक तथा साहित्यकारहरू मात्रै लागे । उनीहरूले झण्डा ओढाउनु भन्दा, हैन केही वर्ष बाँचोस् भनेर आर्थिक संकलन गरेर सहयोग गरे । कहाँ त्यति मात्र हो र ? साहित्यकारहरूले पैसा उठाएर सहयोग गरे भन्ने हल्लाले फिदिममा केही चर्चा पाएछ । मलाई कसैले सुनायो । याङनामकै एकजना थाम्सुहाङले अहिलेसम्म याङनामे थाम्सुहाङले एक रूपैया पनि दान मागेको छैन र थिएन पनि । तर पुष्प थाम्सुहाङको छोराले बाबुको उपचारमा दान मागेछ । हामी याङनामे थाम्सुहाङ जहरमान खानदानको बेइज्जत गऱ्यो भनेर कुनै होटलमा भन्दै थियो रे । खै मलाई सुनाउनेले कसरी सुनायो । भन्नेले त्यसै भनेको हो की सुनाउनेले बनाएर सुनायो । सुनाउनेले नै जान्ने कुरा हो ।

ज्यूँदो हुँदासम्म मतलवै नराख्ने राजनीतिक पार्टी र संघसंस्थाहरूले तँछाड र मछाड गर्दै लासमाथि झण्डा ओढाउनेहरूको झुण्ड देख्दा खै म त यसै भन्नै सकिन । जमिनभित्र नपुर्दासम्म लासमाथि झण्डै-झण्डा । अनि जमिनभित्र पुरिसकेपछि उनको चिहानको वरिपरी पनि फेरि झण्डै-झण्डा । यसरी झण्डा ओढाउन तँछाड र मछाड गर्ने पार्टी र संघसंस्था अनि दान मागेर थाम्सुहाङ जहरमान खानदानको बेइज्जत गऱ्यो भनेर गफ लाउनेहरूले बरू दुई चार हजारका दरले पैसा सहयोग गरेको भए उपचार पाएर तै केही वर्ष बाँच्थ्यो होला नि थाम्सुहाङ पुष्प सुब्बा । पार्टी र संघसंस्थाहरूले झण्डा ओढाएर गरेको सम्मानको बारेमा स्व.थाम्सुहाङ पुष्प सुब्बाले धन्यवाद भने त ? मरेपछि लासमाथि गरेको सम्मान के सम्मान । लासमाथि पार्टी र संघसंस्थाको झण्डा ओढाउन तँछाड र मछाड गरेर गिद्धे दृष्टि परेको देख्दा म त तीन छक्कै परे । त्यसैले सकिन्छ भने ज्यूँदो हुँदा नै सम्मान गरौं । ज्यूँदोमा खान मन लागेको केरा खान नदिनेहरूले मरे पछि केरा खान दिएर के काम !

❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा सुन्दर नाम बनाउन सफल **जनमत** मासिकले त्रिशताङ्क (३०० पूर्णाङ्क) प्रकाशन गर्न सफलता प्राप्त गरेकोमा जनमत परिवारलाई हार्दिक बधाई ज्ञापन गर्दछु ।

**कृष्ण सुवेदी (भारद्वाज मित्र)**

सिर्जनाबस्ती, बूढानीलकण्ठ-१२, काठमाडौं

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा सुन्दर नाम बनाउन सफल **जनमत** मासिकले त्रिशताङ्क (३०० पूर्णाङ्क) प्रकाशन गर्न सफलता प्राप्त गरेकोमा जनमत परिवारलाई हार्दिक बधाई ज्ञापन गर्दछौं ।




आकाश अधिकारी, अध्यक्ष

**गीतल प्रतिष्ठान नेपाल तथा नाटक मञ्च, तनहुँ**

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा सुन्दर नाम बनाउन सफल **जनमत** मासिकले त्रिशताङ्क (३०० पूर्णाङ्क) प्रकाशन गर्न सफलता प्राप्त गरेकोमा जनमत परिवारलाई हार्दिक बधाई ज्ञापन गर्दछौं ।



अनिल श्रेष्ठ, अध्यक्ष

**आँबुखैरेनी स्रष्टा समाज तनहुँ**

# सिंह सेनापति



**राहुल सांकृत्यायन**

**जन्म : ई.सं. १८९३ अप्रिल ९**
**आगरा, उत्तरप्रदेश, भारत**
**अवसान : ई.सं. १९६३ अप्रिल १४**




"हो, बहिनी रोहिणी ! यसमा कुनै सन्देह छैन, मलाई यसमा भीमको कुरा सुनेपछि त एकातर्फ राजाप्रति मलाई घृणा लागिरहेको थियो भने अर्कोतर्फ तिमीले ढिला गरेकामा चिन्ता भइरहेको थियो ।"

रोहिणी -"हो, ढिलो त भएकै हो । हामी स्नेहपूर्ण आग्रहमा परेका थियौँ ।"

कपिल -"स्नेहपूर्ण आग्रह ? यो पञ्चालको राजधानी कान्यकुब्जमा ? वैशाली या तक्षशिलाको कुनै बन्धु भेटिए कि कसो ?"

"बन्धु हैन कपिल दाजु !" रोहिणीले उसको काँधमा हात राखेर मुखमा हेर्दै भनिन् -"मैले राजकुमारी देखेँ ।"

"राजकुमारी देख्यौ, कुनै विचित्रको जनावर त देखिनौ नि ?"

"विचित्रको जनावरभन्दा पनि विचित्र, मलाई त त्यसमाथि दया पो आयो ।"

"दया !"

"हो दया, उनीमा हाम्रो तक्षशिलाका युवतीहरूमा जस्तो जीवन नै थिएन, उनी त गहनाले थिचिएकी कुनै निर्जीव पुतलीजस्ती पो लाग्यो । ती कुनै थाँत्रोबिनाको लहराजस्ती आश्रयविहीन पो देखिन्थिन् । यसर्थ मलाई उनीप्रति दया आएको हो ।"

"मलाई किन नलगेको त ? म उनको आश्रय बनिदिन्थेँ अनि तिमीलाई उनीप्रति दया देखाउने कष्ट नै गर्नु पर्ने थिएन"- कपिलले हाँस्दै भन्यो ।

रोहिणीले गम्भीरमुद्रामा भनिन् -"हैन कपिल दाजु ! मलाई नारीत्वको निरीह अवस्था अनि उनको बुद्धिहीनतामा अपसोच लागिरहेको थियो ।"

कपिलले रोहिणीको कपाल औँलाले तह लगाइदिँदै भन्यो -"रोहिणी बच्ची ! मैले नारीको अपमान देखेको छु । पश्चिमका इरान, बाबुललगायत अन्य पश्चिमा देशहरूमा नारीहरूलाई बिलासिताका लागि पुतली सम्झन्छन् । त्यो पनि गणतन्त्र हो जहाँ नारीको सम्मान नारीका रूपमा हुन्छ ।"

त्यस दिन राजकुमारीको अवस्था देखेर रोहिणीलाई यथार्थमा खेद भएको थियो । खानपिनमा त उनी सरिक भइनन् तर नाचगानका अवस्थामा उनीलाई टाउको दुख्न लागेकाले मैले उनीलाई लिएर नाउतिर लागेको थिएँ । केहीबेर गङ्गाको चिसो पानीले टाउको भिजाएपछि उनको पीडा कम भएको थियो । त्यसपछि दूधजस्तो जूनको टक परेको गङ्गाको सुकिलो बहावमा रोकिएको नाउमा उनी आराम गर्न पल्टिइन् । म नजिकै बसेर उनको मन खुसी पार्ने प्रयास गरिरहेको थिएँ, तर बीचबीचमा रोहिणीलाई राजकुमारीको रूपरङ्को याद आउँथ्यो र भन्न थाल्थिन् - "बिचरी अवोध बालिका ! मेरा बलिष्ठ र कडा हात देखेर द्रवित भएकी थिई । रूप नै नारीको बाँच्ने आधार हो भन्ने ऊ सम्झन्थी । धिक्कार होस् !"

"धिक्कार होस् प्रिये ! तर यसमा नारीको त्यत्ति दोष छैन, यदि यिनीहरूलाई हामीलाई झैँ सिन्धुका पश्चिमी किनारमा पश्चिमा सैनिकसँग लडाईँ गर्नुपरेको भए उनीहरू पनि गन्धारकुमारीहरूजस्तै सूरवीर र स्वतन्त्र हुन्थे होलान् ।"

"तर नारीको पनि बुद्धि त हुन्छ नि, उसले रूपको राम्रो-नराम्रो पक्ष त सम्झन सक्नुपर्ने होला नि त ?"

"बुद्धि त यी राजाहरूका हजारौँ प्रजासँग पनि त छ नि तर के उनीहरू राजाका हातका कठपुतली बनेका छैनन् ?"

यस प्रकारका कुराकानीले उनको चित्त चञ्चल भएको आभाषले मैले उनको मनलाई अन्तै फर्काउन चाहेँ र शिरमा हातले सुम्सुम्याउँदै भन्नलागेँ - "प्रिय ! हामी अब तक्षशिलाभन्दा वैशालीको नजिक पुगेका छौँ ।"

"नजिक छ ? तिमी त आठ महिना लगाएर वैशालीबाट तक्षशिला पुगेका थियौ ?"

"किनकि मलाई स्थलमार्गबाट हिँडनुपरेको थियो । तक्षशिला छाडेको दुइ महिना भइसकेको छ, मेरा विचारमा अब एक महिनामा हामी वैशाली पुग्नेछौँ ।"

"यति चाँडै ?"

"हो त हाम्रो नाउको गति पनि छिटो छ र रात-दिन चलिरहेको छ ।"

"अब महिनाभरिमै मैले आमा र वैशाली देख्न पाउने छु ?"

"हो, र शोमालाई पनि । मैले हाम्रो विवाहका बेला तिम्राबारेमा आमालाई पत्र लेखेको थिएँ, तर के ठेगान छ पत्र आमाले पाउनुभयो भन्ने ।"

"त्यसोभए, म एकाएक ढोकामा गएर उभिएपछि आमाले के भन्नुहोला ?"

"यस्ती सूनजस्ती बुहारी पाएर दङ्ग पर्नुहुनेछ । तर यस्तो हुने छैन, प्रिय ! गङ्गा र गण्डकीको सङ्गममा पुग्ने बित्तिकै हामीले वैशालीमा खबर पठाउनु पर्छ, हामीसँग तक्षशिलाका नागरिक समाज नै उल्टिएर आएको छ, त्यसको स्वागतका लागि लिच्छवीहरूले समय त दिनैपर्‍यो ।"

"त्यसोभए हामी त्यहाँ गङ्गाजीको किनारामा प्रतीक्षा गर्नुपर्ने हो ? कमसे कम मलाई शुभका साथमा अगाडि जान दिनु पर्छ नि ।"

"गङ्गाजीबाट वैशाली जान दुई बाटाहरू छन् - एउटा गङ्गाजीको बायाँ किनाराबाट पैदलै जाने, अर्को गण्डकी नदी हुँदै वैशालीको हाराहारीसम्म सानो नाउबाटै जाने र फेरि पैदल जाने । तर पछिल्लो बाटोहुँदै जान केही बढि समय लाग्दछ ।"

"हामी १८ जना छौँ र हाम्रा साथमा १२ वटा मात्र घोडा छन् ।"

"उल्काचेलमा हामी अरू घोडाहरू माग्न सक्नेछौँ । उपहारका लागि १० वटासमेत हामीलाई १६ घोडाहरू पुग्दैनन् । त्यसको त्यति समस्या हुने छैन, सहजमै जुट्नेछ ।"

"त्यसो हो भने प्रिय ! बाटामा त्यति ढिलाइ किन त ?"

"नागरिक समाजको स्वागतका लागि । त, तिमीलाई चाहिँ त्यस्तो हतार किन रोहिणी !"

"म जतिसक्यो चाँडो आमा र शोमालाई भेटन चाहन्छु ।"

"तर म बाटामा बज्जीदेशको सौन्दर्य देखाउँदै लैजाने छु । बिस्तार बिस्तारै पाँच या छ दिनमा वैशाली पुग्नेछौँ । त्यसबीचमा तिमी बज्जीका आँप र केराका सुन्दर बगैँचाहरू हेर्नेछौ, तिमीलाई गोपालहरूका गोठहरू पनि देखाउँदै लानेछु । हरिण र मयुरको सिकार पनि गरौँला । ती पाँच-छ दिनमा तिमीले बज्जीलाई राम्रोसँग देख्ने छ्यौ र वैशालीसँग पनि परिचित हुने छ्यौ ।"

"म अपरिचितका रूपमा जान चाहन्छु । त्यसमा थप आकर्षण र अनौठोपन पनि हुन्छ ।

रोहिणीको टाउको दुखाई कहाँ पो हराएको थियो । उनी छिटै जान आग्रह गरिरहेकी थिइन् ।

मैले उनको ओठलाई चुम्दै भनेँ -"ठीक छ प्रिये तिमी मलाई पनि छाडेर अघिअघि जान चाहन्छ्यौ ?"

"तिमीलाई त कुनै हालतमा पनि नागरिक समाजका साथै आउनु पर्दछ ।"

"र तिमीलाई पनि किन तक्षशिलाको नागरिक समाजमा सामेल नगर्ने त ?"

"अब त त्यसरी सामेल गरेर कहाँ हुन्छ र ?"

"तर रोहिणी ! हामी दुवै जना साथ-साथै आमाका अगाडि पुगूँ भन्ने मेरो चाहना थियो । भैगो तिम्रो जो इच्छा छ, त्यसै गर । तिमी अगाडि नै जाने भए मेरो घोडा शुभलाई दिउँला, तिमी उसैसँग जाऊ । तिमी दोस्रो दिनमा वैशाली पुग्नेछ्यौ ।"

"हो त प्रियतम !" बसेर गला मिलाउँदै भनिन् - "र म अगाडि नै गएर दुवैका लागि एक घर तयार गरौँला ।"

"घर त आमाकहाँ पाइन्छ, तर हामीले त आफ्नै घर तयार गर्नुछ - बाबुको घर ।"

"बाबुको घर ?"

"हो त, म आउने बेलामा त्यो थियो । आमा त्यसको

रेखदेख गर्नुहुन्थ्यो । वैशालीको बाहिरी भागमा हाम्रो एक सानो खेत पनि छ ।"

"र बगैँचा पनि ?"

"हो, हाम्रो खेतमै आँपको बगैँचा पनि थियो । मेरा बाबु त्यति धनी थिएनन् ।"

"पिता धनी नहुनु के तिमीलाई नराम्रो लाग्छ प्रिय ?"

"हैन, पिताजीले मलाई धेरै माया गर्नुहुन्थ्यो । धेरै धनी नहुनु राम्रो पनि थियो, त्यसै कारणले ममा साहस, धैर्यता र कष्ट सहने अभ्यासको विकास भयो ।"

"त्यसो भए हामीले हाम्रो घर र खेतीपाती आवाद गर्नुपर्छ ?"

"त्यसका साथै वैशालीको सेवाका लागि हामीले कम्मर कस्नुपर्छ ।"

"त प्रिय !" तिम्रा विचारमा के अब बिम्बसारले वैशालीमा आक्रमण गर्ने पक्का छ ?"

"वैशालीलाई नहराई अब मगधले एक पाइला पनि अगाडि सार्न सक्दैन । त्यसैले मेरा विचारमा उसको नीतिगत तयारी भनेको मात्र वैशालीका लागि नै हुनुपर्छ ।"

"त प्रिय ! हामी ठीक समयमा आइपुगेका छौँ ।"

"मलाई पनि त्यस्तै लागिरहेछ ।"

"के मैले पनि अब तरवार भीर्नुपर्ने हो ?"

"आवश्यकता पर्न सक्छ, हुनत निकै कम लिच्छबी महिलाहरू त्यस्तो गर्दछन् । तै पनि प्रिय ! हत्तपत्त तिमीले गरिहाल्नु हुँदैन, यताको सोच पनि निकै कमजोर हुन्छ, खासगरी महिलाका बारेमा ।"

"ए ! त्यसो भए मैले गुँडमा बन्द भएर रहनुपर्छ ?"- केही परिवर्तित स्वरमा रोहिणीले भनिन् ।

मैले उनको शिरलाई आफ्नो काखमा राख्दै भनेँ - "हैन प्रिया ! त्यस्तो हैन, तिमीले कसरी यस्तो अर्थ लगायौ ? म त भन्छु कि, यसको जानकारी मलाई पहिलादेखि नै चाहिन्छ ।"

"यसका लागि म तयार छु । मेरा हात तरवारको बिँडबाट टाढा रहनु नपरोस् ।"

केही घडी हाम्राबीच कुराकानी भयो । त्यसपछि रोहिणी निदाइन् । मैले उनीलाई कम्बल ओढाइदिएँ । किनारमा अझै नाचगान चलिरहेको थियो । मान्छेहरू मस्त थिए । नाउ बिहान सबेरै खुल्नेवाला थियो । यसैले मलाई डर लागिरहेको थियो कि, यी मान्छेहरू बिहानसम्मै पो नाच्ने हुन् कि ? तर रात आधी हुनुभन्दा पहिल्यै कतिपय यात्रीहरू नसामा बेहोस भइसकेका थिए र उनीहरूलाई ल्याएर नाउमा राख्ने क्रम चलिरहेको थियो । मलाई पनि कतिबेला निन्द्रा आएछ थाहै भएन । राती सपना देखेँछु । ठूलो लडाई भइरहेको रहेछ । नजिकबाट देख्दा त, एकातर्फबाट लिच्छवीहरू लडिरहेका छन् । म अब घोडचडीका रूपमा परिवर्तन भइसकेको रहेछु, मसँग तिनै महासिन्धु तटमा लड्दाका हतियारहरू रहेछन् । म शत्रु सैन्यलाई चिर्दै अघि बढेँ, देख्छु त एक हात्ती आउँदै छ । ताडको रूखजस्तो ठूलो त्यो हात्ती टाढै थियो । यत्रो ठूलो हात्तीसम्म मेरो भाला कसरी पुग्छ, म यही चिन्तामा थिएँ । यसैबीच मैले देखेँ कि - मेरो घोडा भूइँमा हैन आकाशमा उडदै थियो, मेरो उज्यालोको संकेत पाएर घोडा रूखहरूको माथि-माथिबाट दौडन लाग्यो । म सोझै हात्तीमाथि पुगेँ । देखेँ कि त्यस हात्तीमा मगधराज श्रेणिक बिम्बसार छन् । उनी मलाई देखेर थरथर काम्दै दयाको भिक्षा माग्न लागे । मैले उत्तेजित हुँदै भनेँ -"तिमीलाई एक पटक हराएर पनि छाडिएको थियो, अब यसपटक छोडिदैन ।" यसो भन्दै म आफ्नो तरवार उजाउँदै थिएँ निन्द्रा खुल्यो । देख्छु त, नाउ खोल्ने तयारी हुँदैरहेछ । चन्द्रमा अस्ताचलतिर पुगेछन् ।

हाम्रो नाउ फेरि त्यसै गरी निर्वाध रूपले चल्न थाल्यो । बाटामा दुइ-तीन ठाउँमा हामी रोकिँदै वाराणशी पुग्यौँ । बरूणा र गङ्गाको किनारामा अवस्थित वाराणशीको गङ्गातटीय भाग निकै रमणीय लाग्थ्यो । यहाँ हाम्रो चार दिनको बसाई भयो । किनकि काशीका सुन्दर वस्त्रहरू, चन्दन, धूपलगायतका सामग्रीहरू विश्वविख्यात छन् । रोहिणीलाई काशीको सामान्य भ्रमण पनि गराइयो । यसभन्दा अगाडिको बाटो विपतरहीत हुनाले दुइवटा साना नाउहरू लिएर हामी १८ जनाको टोली अघि बढ्यौं ।

गङ्गाका किनारमा टाढाटाढासम्म बालिनालीको हरियाली देखिन्थ्यो । कहीँकहीँ गोपालहरूका तथा माझीहरूका छाप्राहरू देखिन्थे । रोहिणीका लागि यी सबै कुराभन्दा पनि गङ्गाको गम्भीर अनि स्वच्छ धार नै आकर्षणको विषय थियो, जसमा उठ्दै बिलाउँदै गरेका छालहरूलाई उनी कौतुहलका साथ हेर्दथिन् । बालुवामा पसारिएर घाम तापिरहेका गोहीहरूलाई उनीले कतिसम्म त काठ भन्ठानिन्, तर जब नाउ नजिक पुग्दा तिनीहरू चल्मलाएर पानीमा पस्दा पो उनीलाई अचम्म हुन्थ्यो । र मैले बताइदिएँ कि - कतिपय समयमा यिनीहरूले मानिसलाई समात्छन् र निलीदिन्छन् पनि, तब उनको शरीर सिरिङ्ग भयो । गङ्गा र महीको सङ्गमबाट हामी दुई दिन र आधा मध्यान्हमा उल्काचेल (हाजीपुर) पुग्यौँ । ❑ *(अनुः भारद्वाज मित्र)*

# गोली टाउकोमा, घाउ मुटुमा



लक्ष्मण राजवंशी
जन्म : वि.सं. १९९२ साउन ३०
इन्द्रचोक, काठमाडौं
अवसान : वि.सं. २०७८ वैशाख ११

मुकेश कायस्थ जम्माजम्मी १५ वर्षको किशोर । उनी जोडतोडले नारा लगाउँदै सडकमाझ उफ्रिरहेका हुन्छन् । 'पटटट्ट' आवाज आउँछ । निरङ्कुश तानाशाहका तावेदारहरूद्वारा चलाइएको गोली सोझै उनकै मस्तिष्कभित्र गुप्तबास बस्न पुग्छ । तर उनी चाल पाउँदैनन् । जुरुक्क उठी मुक्का ताक्छन् । जवाफी नारा घन्काउँछन् - 'जिन्दावाद ! जिन्दावाद !!' उनका खुट्टा ललाकलुलुक हुन्छ । भुइँमा पछारिन्छन् । तर पनि ओंठहरू फफराइरहेका हुन्छन् । सायद उनी जुलुस हाँक्दैछन् - 'इन्क्लाब !'

२०६३ सालको बिहानी । सडक, गल्ली, बजार नाराहरूले गुञ्जायमान हुन्छन् । सैनिक गाडीहरू कतै मोर्चा कसी उभिरहेका हुन्छन् भने कतै भीड छिचोल्दै कुदिरहेका देखिन्छन् । जनताहरूको मनमा डर रत्तिभर देखिन्न ।

चीलझैं सिकारको खोजीमा मानिसका टाउकोमाथि हेलिकप्टर कावा मारिरहेको हुन्छ । '१०/१२ सय छुचुन्द्राहरूका बथान हुन् महाराज ! गद्दीमाथि आइलाग्न दिने छैनौं ।' यसरी गुलामहरू मालिकमा बिन्ती बिसाइरहेका हुँदा हुन् । मालिकका सडकमा जम्मा भइरहेका मानिसहरूका सके गिदी फोड्ने, नसके टाउको गनी बाबुको आँखा खोलिदिने मनसायले आकाशमाथि धुइधुइती चक्कर मार्दै थिए प्रिय पुत्र ।

मुकेश आकाशतिर टोलाइरहन्छन् । हेलिकप्टरको कर्कश आवाजले उनको होस खुल्छ । माथितिर ताकेर मुठ्ठी कस्छन् । फेरि ओँठ फरफराउँछ । सकी-नसकी चिच्याउँछन् - 'इन्क्लाब !' जनसागरको बीचबाट आएको प्रतिउत्तर उनको कानमा ठोकिन्छ - 'जिन्दावाद !' मुकेशले आँखा खोली त्यो आवाजतिर पुलुक्क हेर्छन् । फेरि आँखा चिम्लिछन् । सायद उनको मुखबाट निस्केको अन्तिम हुँकार 'इन्क्लाब' ले ती सत्ताले मात्तिएको राजाको दरबार बालुवामा ठडिएको तासको घरजस्तै गर्ल्यामगुर्लुम ढल्छ । राजवंश इतिहासको अँध्यारो कुनामा थन्किन्छ । इतिहासमा एउटा स्वर्णिम पाना जोडिन्छ ।

२००७ सालदेखि २०६३ सालसम्ममा जनआन्दोलनहरूले राणाशासनलाई उखेली रछ्यानमा मिल्क्याइन्छ । २४० वर्ष पुरानो राजतन्त्रले आँधीबेहरीमा लहरे पीपलको रूखले झैं माटो चाट्छ । 'मै हुँ जिउँदो विष्णु' भन्ने राजाको सातोपुत्लो उड्छ । 'जनताको नासो जनतालाई फर्काएँ' भनी कायलनामामा ल्याप्चे ठोक्छ । तर राजाका ठाउँमा पाइलैपिच्छे रजौटा र तिनका भाटहरू, प्रत्येक आन्दोलनपछि गुहुमा कीराजस्तै स्याउँस्याउँ उम्रिरहेका हुन्छन् । रूख ढालिए । तर जरा उखेलिएनन् । त्यसैले त होला जनता सधैं हारेकै हुन्छन् । धूर्त स्यालहरूले तर मारिरहेकै हुन्छन् । सायद अन्तिम लडाइँ लड्न बाँकी भएर होला । मुकेश

मनमनै नेपालको दुर्भाग्यपूर्ण इतिहासका पानाहरू पल्टाउँदै होलान् । मुकेशले हार मानेका छैनन् । उनी बाँचिरहेछन् । शरीरभरि वाण लागी युद्धको परिणाम हेर्न सास अड्याई लेटिरहेका भीष्मजस्तै अबको अन्तिम युद्धको साक्षी बन्न तम्तयार छन् मुकेश । तर फरक यत्ति हो कि अब हुने सङ्ग्राममा मुकेशले रगतपिपासु, सत्ताका लागि वंशै सत्यानाश गर्ने धृतराष्ट्रहरूलाई साथ दिने छैनन् ।

प्रतिभा सम्मान गुठीद्वारा आयोजित कार्यक्रमको प्रमुख अतिथि भई जाँदा मैले मुकेशको मुटु छाम्ने मौका पाएँ । २०६९ साल चैत १५ गते अपराह्न २:०० बजे । पाहुनाहरूले बनेपा नगरपालिकाको सभाकक्ष भरिँदै थियो । तर साढे दुई बजेसम्म पनि सम्मानित हुने व्यक्तित्वको आगमन भइरहेको थिएन । गुठीका सचिवज्यू मछेउ आउनुभयो । मेरो कानमा सुटुक्क रहस्य खोल्नुभयो 'मुकेश भाइ' आउँछन् । नभन्दै केही बेरमै ह्विलचेयर अघिपछि एक हुल मानिसहरू सभाभवनभित्र पस्छन् । मञ्चको दायाँतिर ह्विलचेयरमा लम्पसार परिरहेका मुकेशको टाउको भित्तातिर एउटा तकियामा अडिरहेको हुन्छ । हट्टाकट्टा शरीर । २२ वर्षका जवान मुकेशलाई टी.भी.को पर्दामा देखेको थिएँ । तर पर्दामा देखिनु र आफ्नै अगाडि भेटिनुको प्रभावको अन्दाज लगाउन सकिनँ । भित्रभित्रै मेरो मुटु निमोठियो । कार्यक्रम सुरू भयो । दोसल्ला ओढाउने पछिल्तिरबाट उनको टाउको उठाइरहँदा मेरो छाती ढक्क फुलेको अनुभूति हुन्छ । उनको हातमा एउटा चेक थमाउन अघि बढैँ । उनकी आमाले अह्राइन् - 'बाबु ! सरबाट चेक थाप ।'

उनका बायाँ हातका औंलाहरू सल्बलाउँछन् । विस्तारै उनका दुई औंलाहरूबीच चेक च्यापिन्छ । आँखाका ढकनी उघारी मतिर पुलुक्क हेर्छन् । एकछेउ ओठ फाटिन्छ । मतिर हेरेर मुस्कुराउँछन् । वीर आत्माका दुवै पाउ छोई ढोगेँ । आमा र छोराबीचको संवाद सुन्न म एक छेउ उभिरहेँ ।

मस्तिष्कभित्र गोली सिउरेका मुकेश र कालकुट विषले पालेर छटपटाइरहेका महादेवको पीडा झन्डै उस्तै देखिन्छ । समुद्रमन्थनबाट निक्लेको विष महादेवले ननिले संसार भष्म हुने । मुकेशको मस्तिष्कभित्र गोली नथुनिएको भए त्यही गोलीले अरूको ज्यान लिने डर । हो, गोलीले उनको बोली मनभित्र थुनिए । तर उनको छातीभित्र उर्लिरहेको ज्वारभाटाहरू सेलाउने छैनन् । त्यसैले त औँठ थिची मुकेश व्यङ्ग्य गर्छन् - 'ए हरामखोरहरू, ई, हेर, म जिउँदो छु । तर खबरदार मलाई जिउँदो सहिद बनाउने रहर नगर ।' उनका औंलाहरू चल्बलाउँछन् । औंला माथि सोझ्याउने प्रयत्न गर्छन् — 'हेर, यहाँ छ गोली !'

छोराको हाउभाउले आमाको अन्तर तरङ्ग खल्बलिन्छ । मुटुमा गाँठो पर्न थाल्छ । छोराको पीडा आफैभित्र समाहित गरी बसिरहेकी आमा छोराले नदेख्ने गरी आँसु पोख्न सक्दिनन् । पीडा लुकाउन छटपटिन्छिन् । आमाले उनको वेदना जिब्रोले दबाउने कोसिस गर्छिन् । छोराले नदेख्ने गरी झ्यालबाट सिगानसँगै आँसु पुछेर फाल्छिन् । छोरातिर हेरेर मुसुक्क हाँसिदिन्छिन् । मुकेश लाटा होइनन् न त उनी मूर्ख नै । उनी भित्रभित्रै पग्लिन्छन् । आमाका भिजेका परेला पुछ्न उनका औंलाहरू चल्बलाउँछन् । तर विवश छन् मुकेश ।

आमासित मौन क्षमा याचना गर्छन् - 'मैले धेरै पिरोलेछु हकि आमा ? मेरो मन राख्न तपाईं मन्द हाँसो हाँस्नुहुन्छ । होइन र आमा ? तपाईं मलीन अनुहारभरि तलाउको पानीझैँ आँसु छचल्किरहेको म देख्न सक्छु । आँसुको भाषा म बुझ्ने भइसकेँ । आँसुको अर्थ ऐनाभन्दा स्पष्ट छ आमा ।'

गोली र बोलीले मान्छे चिन्दैनन् । तर आमा तपाईंको बोलीभन्दा आँसुको भाषा म राम्ररी बुझ्छु । बोली नफुटे पनि मेरा हातखुट्टा मात्र चलाउन सकेको भए, सत्य आमा, म अरू केही कामको नभए पनि तपाईंका लागि चुलो फुकिदिन्थेँ । तपाईंको खुट्टामा तेल घसिदिन्थेँ । तपाईंको सेवा गर्न नसके पनि मैले आफ्नो जीउ त स्याहार्थें ।'

'किन यसरी बहकिन्छौ बाबु ?' छोराछोरीलाई स्याहार्दा आमाको छातीभरि मुहानमा पानी पलाएजस्तै ममता र आनन्दले विभोर हुन्छ । तिमी अझै सानै छौ । तिमीसित आमाको हृदय नाप्न सक्ने उमेर छैन ।

'हो, तपाईंको अगाडि म सधैँ नाबालक र अबुझ नै छु । आमा, म तपाईंलाई ढाट्न सक्तिनँ । आफ्नै दिसा-पिसाब पुछ्दा पनि नाकभित्र नमीठो दुर्गन्ध ठोकिन्छ । तपाई किन घिनाउनुहुन्न आमा ? भन्नोस् न आमा ?'

पेटभित्र गर्भाधान भएदेखि तिमी जन्मिसक्दा पनि तिमी मभित्रै समाहित छौ । आफ्नै रगतमाथि कसरी घिनाउन सकिन्छ ? आमा व्यक्ति होइन । ममताका प्रतीकका लागि आफ्नो सन्तान सधैँ एउटा भ्रुणजस्तै निष्कलंकित, स्वच्छ र सुन्दर हुन्छ । बाबु, तिमी यस्ता कुरा बुझ्न सक्दैनौ । भो, अब सुत्ने प्रयास गर ।'

'सत्य आमा, मलाई लाज लाग्छ - मेरो दिसा पुछ्न

टालो लिई तपाईं मेरो छेउ पर्नुहुँदा मेरा सारा शरीरका तन्तुहरू खुम्चिन थाल्छन् । इँजारको गाँठो खोली मेरो सुरूवाल तल सर्काउनुहुँदा आत्मग्लानिले मेरो शरीर भतभती पोलिन्छ । त्यो घडी, सत्य आमा, म आफूलाई मुर्दा ठान्छु । साँच्चै अचेत हुन चाहन्छु । तपाईंसित आँखा जुधाउन हम्मेहम्मे पर्छ ।'

'के कुरा गर्दैछौ यस्तो ? आमा पृथ्वी हो बाबु, धर्तीका अगाडि छुपाएर केही छोपिन्न । उघारेर लजाइन्न । तिमी किन उल्टो कुरा गर्दैछौ ? उमेर बढ्दैमा आमाका लीलाहरू बुझ्ने छैनौ । अब चुप लाग । सुत्ने समय घर्किसक्यो ।'

"तपाईंका हीराजस्तै टल्किरहने तपाईंको आँखामा बिहानी सूर्यको किरणले रङ्गाएको हेर्ने मेरो रहर मेटिन्न । कस्ती राम्री मेरी आमा । बादलले सूर्यलाई छोपेझैं बेलाबखतमा तपाईंको कालो कपालले आँखा छोपिन्छ । म आत्तिन्छु आमा ।"

"भो भो, बढ्ता नफुर्क्याऊ । आमासित यस्तो कुरा गरिन्छ र ? सन्तानहरूका आँखामा आमा कहिल्यै नबिटुलिने बिमिरो । लौ भैगो, तिम्रै कुरा पत्याएँ ।"

'बत्ती निभाऊँ ?'

एकछिन पर्खनोस् आमा । मनको कुरा भन्न दिनुहोस् । तपाईंबाहेक अरू को छ र मेरो कुरा सुन्ने र बुझिदिने ?

'लौ हेर रिसाएको । ल भन । आज म पनि सुत्दिन ।'

'अस्ति । अस्ति के ? मलाई बार र महिनाको नाउँ आउँदैन । मिति र गते गन्न जान्दिनँ । भन्न पनि सक्दिनँ । सबै समय मेरा लागि उस्तै । वर्षभरिको एउटै एकदिने पात्रोजस्तै । धेरै समयपछि गरम धूलो मिसिएको हावा चाट्न पाइयो । सत्य हो आमा, अस्ति मेरो गला भारी भयो । गलामा माला । काँधमा दोसल्ला । अनि सम्मानपत्रले मेरो छाती थिचिएको थियो । मलाई एउटा अनि खस्रो कागजको टुक्रा पनि समाउन लगाइयो । धेरैपल्ट मेरो नाउँ फलाकेका ती स्वरहरू मेरो कानमा आज पनि गुन्जिरहेका छन् ।'

'पटटटट् ।' त्यही बेला गोली चलेको आवाज सुनियो । म जिउँदो सहिद रे । हो आमा ? के म मुटुविहीन यन्त्रमानव हुँ ? के म नाक र मुखबाट सास तान्ने र फाल्ने एउटा यन्त्र मात्र हुँ । भन्नोस् न आमा, के म साँच्चै मरिसकेँ ? होइन, म बाँचिरहेको छु, बाँच्नेछु । सायद तपाईं पनि पत्याउनुहुन्न होला । किन बोल्नुहुन्न आमा ? के म मरिसकेँ ?

उनीहरूलाई भनिदिनोस् मुकेश मर्दैन । जन्मँदा तपाईंको काखमा थिएँ, आज ह्विलचेयरमा । यति फरकले के मान्छेको अस्तित्व मेटिन्छ ? यो उमेरमा फेरि एकपटक बच्चा भएछु । बस् । तर आमा, म मानिसहरूका कुरा बुझ्ने मात्र होइन, कति त म आत्मसात गर्छु । मनमनै साउती गर्छु । भन्नोस् आमा, के मैले झूटो बोलेँ ? बिन्ती छ आमा, मेरा लागि बैगुनीहरूका अगाडि हात नपसार्नोस् । म दुई हात जोडी तपाईंसित क्षमा माग्छु । बुबाको आशीर्वाद थाप्छु । शरीर मेरो अशक्त छ । म सकाउँछु, तर मातृत्व अपमानित हुन दिन्न । मेरो कारण मेरी आमामथि कसैले औंला नठड्याउन् । सतीको श्रापले डामिएको यो देशमा फेरि मेरी आमाको श्रापले धर्ती खरानी नहोस् ।'

'के सनक चढेछ तिमीलाई आज बाबु ? एकछिन पनि नबोली बस्न सक्तैनौ ।'

'त्यो प्रतिभा सम्मानले मेरा मनभित्रका सबै कुरा ओकल्न मलाई उक्साइरहेछ । मलाई भन्न दिनोस् आमा । गोलीले लट्टिएको मन मात्तिन दिनुहोस् ।'

'दुष्टहरूका लागि म बोझ बनिरहेको हुँला । उनीहरूका लागि म चिडियाघरको पाल्तु जनावर । आफूलाई देखाउँदै आफ्ना दुनो सोझ्याउनेहरूका लागि म दुहुनो गाई । रमितेहरूका लागि कठपुतली बनाइएको हुँला । तर आमा, जसले जतिसुकै डिङ हाँके पनि आत्मबलका पारखीहरूका आँखामा म खरो उत्रनेछु । वीरत्वको जिउँदोजाग्दो मिसाल हुँ म । के यो मेरो घमण्ड हो ? या आत्मप्रशंशा ?'

'म बुझ्दछु - तपाईं मेरो कोठाभित्र आउनुहुँदा मैले बोलेको सुन्न लालायित हुनुहुन्छ । तपाईं बुइँगलमा भएको बेला 'आमा' भनी कराएको सुनी एकै सासमा माथिबाट हामफाल्दै तल आउने तपाईंको मनोकामना पूरा गर्न सकिनँ । त्यसैले त तपाईं फर्की-फर्की मलाई हेर्दै बाहिरिनुहुन्छ । कतै तपाईंलाई चाल नपाउने गरी तपाईंको पिठ्यूँपछाडि मेरो मुखबाट स्वर फुत्किएको त छैन ? तपाई टक्क अडिएर मलाई नियालि रहनुहुन्छ ।'

'नढाँटी भन्नुहोस् त, के यो सत्य होइन ? यो घडीसम्म मैले तपाईंको इच्छा पूरा गर्न सकेको छैन । पर्खनोस् आमा असम्भव केही छैन । कुनै दिन घरिघरि आमा ! आमा !! भनी चिच्याइरहेँ भने झर्को नमान्नुहोला ।'

'आमा तपाईंको मातृवत्सलता, ममता र स्नेह अनि बुबाको आशीर्वादले ह्विलचेयरबाट कुनै बेला म जन्याकजुरूक उठी सैतानहरूको मुटु थर्काउनेछु - इन्क्लाब ! इन्क्लाब !! इन्क्लाब !!!' ❑

# पहाडी पुकार



**लक्ष्मीप्रसाद देवकोटा**
**जन्म : वि.सं. १९६६ कार्तिक २७**
**धोवीधारा, काठमाडौं**
**अवसान : वि.सं. २०१६ भदौ २६**

नेपाली भाइ, नेपाली बहिनी
सबैको गुहार छ ।
अँधेरी आज यी हाम्री आमा
देशको मुहार छ ।।

के छ र हाम्रो ठीक बन्दोबस्त
सब कुरा गडबड छ ।
बलियालाई पैसा नै लुट्ने
सधैंको हडबड छ ।।

भेडा र बाख्रासरीका हामी
हक आफ्नो देख्दैनौं ।
भेडा त बिक्छ रूपियाँ पाँचमा
हामी त बिक्दैनौं ।।

टोपी छ हाम्रो चिथरे घेरो
भोटो छ झल्लरे ।
ढुङ्गा पो फोडी खानुछ फापर
सास फेर्नु बल्ल रे ।।

पढ्नुको नाम 'क' पनि छैन
अँध्यारो संसार छ ।
ढिंडोको भरमा पसिना तरमा
गीत गाउनु मनसार छ ।।

पाठशाला छैन, पुस्तक छैन
पढ्नलाई एउटा ।
धन्य पो राख्छन् जिन्दगी हाम्रो
आकाशका देउता ।।

न अन्न हामीलाई, न वस्त्र हामीलाई
पेट फुट्छ ठूलाको ।
ठूलाका कुकुर दूध-भात खान्छन्
हामी जौ धूलाको ।।

बस्नुको नाममा स्याउले झुप्रो
बानरको भिरालो ।
जोत्न त हामीलाई गोरूझैं जोत्छन्
भारीको उकालो ।।

पैसाको नाउँमा एक कौडी छैन
जाँडका खामा छौं ।
सिकाउने हामीलाई कोही छैन हरे
पशुझैं लाखौं छौं ।।

हिउँदे बतास हिमालको चिसो
बालखका आङमा ।
चिसाम्मे जरो धामीले झार्छ
ओखती स्वाङमा ।

स्वास्नीलाई हाम्रो न बर्को एउटा
मजेत्रो केही छैन ।
दिउरी छ रित्तो, ढिंडो छ निस्तो
तिहुन हुँदैन ।।

घाम र पानी बीचमा हामी
बसेर कमाउँछौं ।
कमाउने हामी सुम्ठाउने ठालु
सित्तैमा मर्दछौं ।।

साझा छौं हामी केही थाहा छैन
अरूले ठटाउँछ ।
हामीलाई जोती मतलबको लागि
आफ्नो काम पटाउँछ ।

मैला र धैला, गन्हाउने थैला
भटमासे जुम्रेझैं ।
संसारमा हामी बेकम्मा भयौं
लुरे र लुम्रेझैं ॥

हामीलाई छैन अस्पताल कहीं
ओखती गर्नलाई ।
रोगाउने मान्छे सित्तैमा मर्छ
आहार नपाई ।

परदेश लाग्छन् बैंसालु केटा
ढिंडोले नपुगी ।
दरबान बन्छन् ढोकाका कुत्ता
यस्तै छ जिन्दगी ॥

आकाश खेती अनिकाल पर्छ
सरकारले कुत लिन्छ ।
मकैको चरी पासामा परी
कमाइ भुत्लिन्छ ॥

देशको पैसा ठूलाले हजम
हामी पो सारङ्गी ।
कञ्चट बस्छन्, गाला त सुक्छन्
मुख छ बेरङ्गी ॥

इन्साफ हामीलाई देखिन्न राम्रो
पैसाले जित्दछ ।
घुस्याहाहरू छाला पो काड्छन्
बलले जित्दछ ॥

हाम्रो छ राजा साह्रै नै असल
भन्न नै पाएनौं ।
विश्वास, भक्ति झन् हाम्रै मऱ्यो
मुख अझ बाएनौं ॥

डरले हामी सहेर बस्यौं
दुःखका साधुझैं ।

न खान पाई, न लाउन पाई
धैर्यका जादूझैं ॥

अधर्म तर शिरमा खाई
चक्कर घुम्दछ ।
कमाई खाने हक छैन हाम्रो
ब्वाँसाले ठग्दछ ॥

गरिबको निम्ति आवाज झिक्ने
झ्यालखानमा कुहिन्छन् ।
रूखमा फल्छन्, गोली पो खान्छन्
अथवा मुडिन्छन् ॥

छोरा र नाति जागिर खान्छन्
जीविका चलाउन ।
राणाको खुट्टा समात्न जान्छन्
तिनलाई खुसाउन ॥

हामीलाई थिच्ने, हामीलाई मिच्ने
जो धूर्त छली छन् ।
उनैको निम्ति लड्ने र मर्ने
सन्तान हाम्रै छन् ॥

कस्तो अचम्म हे लोकनाथ
कत्रो यो अत्याचार ।
बाबुको ज्यान छोराले लिने
कत्रो यो पापाचार ॥

यी नानी हाम्रा अबुझ कस्ता
विवेक हराउँछन् ।
गरिबका साथी देशभक्तमाथि
बन्दुक सोझ्याउँछन् ॥

गरिबको छोरो गरिबै हुन्छ
गरिब आहार ।
धनीको निम्ति गरिब मार्नु
आफैंमा प्रहार ॥

अब त साह्रै गलामा पुग्यो
गुम्सेको जिन्दगी ।
नउठाउँ भने हृदयको बोली
को होला पारखी ॥

खोला र नाला पहाडमा हामी
बसेर गीत गाउँछौं ।
हे पशुपति, हे गुजेश्वरी
भनेर कराउँछौं ॥

हामीलाई केही उज्यालो देऊ
देशको केही होस ।
हामीलाई खान-लाउन देऊ
बढाऊ केही जोस ॥

हौं हामी पनि मान्छे पो ठाकुर
पुच्छर त छैन रे ।
हक हाम्रो पनि देशमा हुन्छ
ईश्वरको ऐन रे ॥

देशको जति आम्दानी हुन्छ
खै खर्च हामीमा ।
लाउन र खान, बोल्नको हक छ
मानिस नामीमा ॥

सफा र सुग्घर राम्रो र दरो
खाएको, पिएको ।
कमाउँदो, जिउँदो, रातो र पीरो
खै हामी भएको ॥

सुत्दैनौं हामी, उठ्ने छौं सारा
ईश्वरका नाममा ।
अन्न र वस्त्र घर लिई छोड्छौं
इन्साफको नाममा ॥

ज्यानै पो जाओस्, प्राणै पो जाओस्
पर्वाह गर्दनौं ।
मानिसलाई चाहिने हक
नलिई छोड्दैनौं ॥

मर्नु त एकदिन अवश्यै पर्छ
पशुझैं नजिऊँ ।
मानिस हौं भने मानिसझैं जिऊँ
मानिसको हक लिऊँ ॥

❑

# जबसम्म धिराज र उनका दलका मान्छे नेपालमा रहन्छन्, तबसम्म नेपालको कहिल्यै उन्नति हुँदैन



लैनसिंह बाङ्देल
जन्म : ई.सं. १९२४ डिसेम्बर २१
चियाबगान, दार्जीलिङ
अवसान : ई.सं. २००३

२००८ चैत्र ३१ / २.५.५२

आज Britain and China Friendship द्वारा आयोजित तीन documentary films हेर्न गएको थिएँ । नयाँ चीनले कुन किसिमसित दलित जनतालाई मास्तिर तानेर ल्यायो, कसरी नयाँ देश निर्माण गऱ्यो तथा त्यसको निर्माण के भयो - ती कुराहरू यस चित्रमा देखाइए ।

New China को vast development देख्ता मैले नेपाल सम्झेँ । किनभने जुन चीनको जनता भोका-नाङ्गा थिए, जहाँ लाखौं मानिस प्रतिवर्ष खान नपाई मर्थे, आगोले तथा पानीले मर्थे, जुन देशको मनुष्य सदासर्वदा असीम कष्ट बेहोर्दै आइरहेका थिए - युगयुगदेखि जुन देशमा उही पुरानो रीति चलिरहन्थ्यो, उही चीन मुलुकमा नयाँ जीवन, नयाँ स्फूर्ति, नयाँ कुरा आइरहेका छन् । अघिको सरकार हुँदा जुन सांघाईजस्ता संसारको एउटा विराट नगरमा यश र आराम थियो - एक पक्षको निम्ति, एक मुठ्ठी धनी वर्गको निम्ति अनि जहाँ लाखौंलाख मनुष्यमा गरिब र अशिक्षा मात्र थियो । जुन शहरमा धनी वर्गका मान्छेहरू चाहिएको भन्दा बढ्ता आराम र ऐश्वर्यमा डुबिरहन्थे, जुन ठाउँमा लाखौं मानिस रेस कोर्समा लाखौं रूपैयाँ उडाउँथे, परन्तु उही नगरमा धनी गरिव सब एकसाथ दुःख-सुखको सहभागी भई एकसाथ रही सबथोक बराबर बाँडी, शिक्षाको महान् अध्ययन गरी अग्रसर भइरहेका छन् । अघिको सरकार हुँदा जुन रेस कोर्समा मानिसले रूपैयाँ उडाउँथे, आज उही ठाउँमा सारा गरिव किसानद्वारा उत्पादन गरिएको अन्न, सागसब्जी, फलफूलको प्रदर्शनी हुन्छ तथा देशको अन्न अभाव कसरी दूर गर्न सकिन्छ, कुन उपायले सारा जनतालाई प्रशस्त खान पुग्ला ती कुराको बारेमा यस ठाउँमा बराबर भाषण हुन्छ, प्रदर्शनी हुन्छ । अघि त्यसै ठाउँमा एक धनी वर्ग तथा विदेशी अङ्ग्रेज तथा अमेरिकनको निम्ति यश र सुखको साधन थियो तमाम गरिव जनताको उत्थानको निम्ति तथा तिनको दुःख दर्द हटाउनको निम्ति ती धनी र विलासी चिन्तित थिए र ? के तिनलाई आफ्नो स्वार्थभन्दा बढ्ता मनुष्य समाजमा कसरी तथा कुन हिसाबले ज्ञानको ज्योति फैलाउन सकिन्छ, कसरी तिनको दुःख दूर होला ती कुराको चिन्ता थियो र ? आफ्नो सम्पत्ति, आफ्नो व्यापार, आफ्नो धन इज्जत र जमिनबाहेक तिनलाई तिनको केही वास्ता नै थिएन । त्यसैले एक मुठी स्वार्थी विलासी यसरी आराम र सुखका साथ त्यहाँ जीवन निर्वाह गर्थे, अर्को गरिव जनताचाहिँ यी सब साधनबाट फरक रहेर कठिन जीवनयापन गरिरहन्थे । जुन

देशमा धनी र गरिवको बीचमा आकाश र पृथ्वीजस्तो फरक थियो, आज उही देशका मानिस एक छन् । सारा देशवासी एक छन् । सारा देशवासीको उन्नति आफ्नो उन्नति सम्झन लागेका छन् । यसभन्दा असल कुरा अरू के हुन सक्ला ?

जुन चीन देशको अघि त्यस्तो दुर्दशा थियो, जुन चीनलाई तमाम युरोप र अमेरिकाका मान्छेले गन्दैनथे - असभ्य भन्थे, आज उही चीन आफ्नो सारा देशको प्रगतिउपर गर्व गर्ने गर्दछ । उनीहरू आफ्नो असीम दुःख पन्छाएको अनुभव गर्छन् । उनीहरू नयाँ भूमिमा, नयाँ जनतासाथ, नयाँ स्फूर्ति र प्रेरणाका साथ काम गर्छन् । यो कुरा त संसारले देख्दैछ । कसैले यस कुराको खण्डन गर्नै सक्तैन । किनभने चीनजस्तो एउटा महान् देशमा यति चाँडै शिक्षा र सामाजिक उन्नति ल्याउन सक्नु सजिलो कुरा थिएन, तर त्यहाँ त गरेर देखाउनुपर्ने कुरा थियो ।

नेपालको इतिहासमा पनि यस्तै छ । अघि एक वर्ग मात्र धनी थियो । त्यो धनी वर्गमा राणा परिवार प्रसिद्ध थियो, अझ पनि छँदैछ । गरिव नेपालीहरूको पसिनाले कमाएको अन्नपानी, फलफूल, धन सम्पत्तिमा उनीहरू मोज गर्थे, उनीहरूमा जति आराम र ऐश्वर्य थियो, गरिव जनतामा उति नै दुःख र गरिवी थियो । उनीहरू जति आराम गर्न जानेका थिए, उति गरिव नेपाली दुःख र कष्ट गर्न जानेका थिए । तर एकदिन उनीहरूको त्यो पलाँसको खाँबो हल्ली सारा विनाशको अट्टालिका ढलेर पृथ्वीमा मिल्न आयो । त्यो परिणाम अवश्यम्भावी नै थियो ।

त्यसपछि आज जुन नयाँ दल खडा भएर यहाँ काम गर्न लागेका छन् । त्यो दल पनि केवल नाउँको निम्ति मात्र जनताको भलाई गर्न अघि सरिरहेका छन् । साँच्चि नै नेपालको उन्नति चाहने प्रवृत्ति यिनीहरूमा छँदै छैन । त्यसको के कारण होला भन्ने प्रश्न उठ्छ । एक त यिनीहरू यति दिन किचिएका थिए, आज सारा देशको बागडोर आफ्नो हातमा एक्कासि आइदिँदा यिनीहरू देशलाई भन्दा आफू र आफ्नो स्वार्थलाई बढ्ता सम्झन लागे ।

आज नेपालको जुन अवस्था छ, अघिभन्दा केही राम्रो छैन, केवल यति हो, अघि नेपालको सारा सम्पत्ति राणा परिवारकहाँ जान्थ्यो - अहिले त्यसो नभएर त्यो सम्पत्ति देशमा बाँडिन लागेको छ ।

तर यही रीतिले नेपालको अभ्युत्थान र चाँडै उन्नति होला भन्ने मलाई लाग्दैन । यस कुराको प्रमाण त अबको १५-२० वर्षपछि मात्र थाहा हुने हो । त्यसैबेला आजको कुरा फेरि दोहोऱ्याएर हेरूँला ।

नेपालमा केही नयाँ कुराको जरूरत छ । त्यति नभई नेपालको केही उन्नति हुने होइन । अहिले त धिराज (राजा) नै देशको सबभन्दा ठूलो मानिन्छन् र धिराजकै इसारामा धेरै कुरा चल्न लागेका छन् । हामीले सबै स्वार्थ त्यागेर नयाँ नेपाल नै बनाउने हो भने र नेपालको उन्नतिले सारा विश्वलाई परिस्कृत गराउने हो भने नेपालको निम्ति नयाँ कुराको आवश्यकता छ । अघि र अहिलेको शासक वर्गलाई पन्छाएर देशको हितको निम्ति अर्कै नयाँ दल आई काम गर्नुपर्छ । तर ती लोभी शासकवर्गले आफ्नो देशको उन्नतिको निम्ति आफ्नो ठाउँ छोड्न मान्लान् र ? देशको हित र उन्नति भनेर उनीहरू त्यत्रो त्याग गर्न सक्लान् र ? जबसम्म धिराज र उनका दलका मान्छे नेपालमा रहलान्, तबसम्म नेपालको कहिल्यै उन्नति हुँदैन ।



# सुदूरपश्चिम नेपाल (डोटीप्रदेश)का लोकगाथा



**वासुदेव भाइसाव**
**जन्म : वि.सं. २००० असार १५**
**पल्लाचौडली, बैतडी**
**अवसान : वि.सं. २०७८ पुस २५**

विविध विषम परिस्थितिहरूले गर्दा सुदूरपश्चिम नेपालमा इतिहास, कला र संस्कृति झल्काउने शिलालेख, ताम्रपत्र, मूर्तिहरू व्यक्तिगत प्रयोग र अन्य कारणहरूद्वारा नष्ट हुँदै गएका छन् । सुदूरपश्चिमको प्राचीन शासनको केन्द्रविन्दु अजयमेरू कोटलगायत थुप्रै कोट र देवलहरू लुप्त प्रायः भइसकेका छन् ।

विकासको परिवेश र इलेक्ट्रोनिक मिडियाले लोकजीवन प्रभावित भएको छ । यसले लोकगीत अत्यन्त प्रभावित भएको छ भने लोकगाथाहरूको प्रचलन घटेको छ ।

कुनै पनि जाति र समुदायको लोकसंस्कृति र भावात्मक परिवेश बुझ्नका लागि, जाति र समुदायको जीवन र विश्वास बुझ्नका लागि त्यस जाति वा समुदायमा प्रचलनमा रहेका लोकगाथाहरूको अध्ययन आवश्यक ठहर्दछ । लोकगाथाहरूभित्र लोकको कल्पना, लोकको विश्वास र लोकको मर्म रहेको हुन्छ । लोकबोली र लोकव्यवहारका साथै लोकजीवनका उल्लास र छटपटीहरूको विस्तृत बयान हुन्छ ।

विभिन्न जातजाति, भाषा, धर्म र संस्कृतिले सम्पन्न नेपालको सुदूरपश्चिमी भूखण्ड अर्थात् डोट्याली भेगको लोकजीवनमा चैत-भारत जस्ता परम्परादेखि चलिआएका लोकगाथाहरूको विशिष्ट स्थान रहेको छ । समाज र जीवनका अनुभवहरूको खजानास्वरूप यो भेगको माटोबाट उब्जेका लोकसाहित्यका अलिखित तर अजर-अमर रचनाहरूका अधिकांश विधाखण्ड धार्मिक परम्परा बोकेका, वेद र पुराणहरूका स्वरलहरीबाट निस्केका लोकलहरी हुन् । श्रुतिपरम्पराबाट आएका यी लोकगाथाहरू अलिखित भएर पनि लोककण्ठमा प्रतिनिधित्व र जीवित छन् । डोट्याली लोकसाहित्यका विभिन्न विधाहरूमध्ये लोकजीवन र लोकविश्वासको सजीव चित्रण प्रस्तुत गर्न सक्षम यी लोकगाथाहरू काव्यात्मक गुणले सम्पन्न डोट्याली लोकसाहित्यका लोककाव्य र लोकनाट्य हुन् ।

लोकगाथाहरू स्वच्छन्द र मौलिक रचना हुन् । लोकका सामूहिक सम्पत्ति हुन्, लोकका अनुपम सिर्जना हुन् र लोकजीवनका अलिखित इतिहास हुन् । भौगोलिक क्षेत्रभित्रको सांस्कृतिक परिवेशका परिचायक यी गाथाहरू मानव-सभ्यताको इतिहासका संवाहक पनि हुन् ।

भौगोलिक विकटता, आर्थिक कठिनाइ र सामाजिक पछौटेपनका बाबजुद सुदूरपश्चिमको लोकजीवनमा विभिन्न चाडपर्व र उत्सवहरूमा गाइने वा खेलिने यी गाथाहरूले लोकजीवनमा लोकरञ्जन र मनोरञ्जन प्रदान गर्दछन् । जीवनका दुःख र पीडाहरूलाई क्षणिक भए पनि भुलाउँछन् । मर्यादित र

सम्मानित जीवन बाँच्न प्रेरणा दिन्छन् ।

सुदूरपश्चिम नेपालको लोकजीवनका विभिन्न अवसरहरूमा घर मन्दिर र सामाजिक स्थलहरूमा गाइने विविध प्रकारका गाथाहरू जस्तै : देवगाथा, चरित्रगाथा, करूणगाथा, प्रेमगाथा र चारणगाथा आदि मानव-जीवनको अतीतलाई वर्णन गर्ने, मानव-गरिमा र परम्पराको बयान गर्ने अलिखित रूपमा श्रुतिपरम्परामा हस्तान्तरित लोकनाट्य र लोककाव्य हुन् ।

लोकगाथाहरूमा देवीदेवताहरूलाई प्रसन्न गर्न तथा सामाजिक मानमर्यादा बनाइराख्न घरमा अथवा मन्दिरमा गाइने जागर गाथा र फागहरू हुन् । चरित्रगाथामा समाजलाई सुमार्ग देखाउने कुलीन र मर्यादित जीवन भएका लोककल्याणकारी महापुरूष तथा अलौकिक चरित्रको गाथा वर्णन गरिन्छ । जस्तै श्रीरामको चैत, श्रीकृष्णको चैत आदि । करूणगाथाहरूमा कारूणिकता र वेदनापूर्ण जीवनका छटपटीहरूको झलकस्वरूप झोडोगाथा गाइन्छ भने प्रेमगाथाहरूमा युवायुवतीहरूबीचको प्रेमप्रसङ्ग भएका गाथाहरू गाइन्छन् । प्रेमगाथाहरू विशेषगरी रात्रिको समयमा रतेडा गीतका रूपमा गाइन्छन् जस्तै : सरू-समेरू प्रेमगाथा । दमाई, ढोली, आँजीद्वारा गाइने भडा, बर्मौ, रितुरानो (रितुगीत) तथा भाट, रैभाटद्वारा गाइने सवाई आदि चारणगाथा हुन् ।

डोट्याली भेगका लोकगाथाहरूलाई विभिन्न आधारमा वर्गीकृत गर्न सकिन्छ । तर पनि लोकगाथाहरूभित्र अन्तरनिहित विषयवस्तुको प्रकृतिका आधारमा वर्गीकरण गर्नु अथवा कथावस्तुका आधारमा गरिने विषयगत वर्गीकरण नै बढी उपयुक्त हुने देखिन्छ । किनकि प्रत्येक गाथाभित्र अन्तर्निहित विषयवस्तुमा नै गाथाको मर्म र भाव रहने गर्दछ । अतः विषयगत वर्गीकरणलाई आधार मानी डोट्याली भेगका लोकगाथाहरूलाई निम्न प्रकार वर्गीकृत गर्न सकिन्छ ।

१. देवगाथा (जागर-फाग) :

कुनै खास पुण्यकार्यका अवसरमा देवीदेवताका मन्दिरमा अथवा यज्ञ-हवनस्थलमा देवीदेवतालाई जागृत गराउन देउताहरूको प्रशंसाले भरिएका शान्तरसप्रधान जागरगाथा अथवा देवताहरूको महिमागान भएका फाग वा मन्दिरमा गाइने करूणरसप्रधान प्रबन्ध झोडागाथा यसमा पर्दछन् । यस प्रकारका देवगाथाहरूमा जागर (जागृत गान) र बैसुन्नरको फाग प्रसिद्ध छन् । यी देवगाथाहरू पौराणिक कालदेखि चलिआएका परम्परागत गाथा हुन् ।

२. चारणगाथा (भडा/सवाई) :

बिहे, ब्रतबन्ध, पासनीजस्ता शुभ अवसरमा हुड्के, दमई, औजी आदिद्वारा गाइने भट्ट/योद्धा र पाइकहरूका वीरता वर्णन भएका वीररसप्रधान भडा तथा भाट अथवा रैभाटहरूद्वारा गाइने सवाई आदि चारणगाथा हुन् । सामन्ती युगलाई चारणगाथाहरूको रचनाकाल मान्न सकिन्छ ।

३. चरित्रगाथा (चैत) :

लोकजीवनमा सदाचार, शिष्टाचार र मर्यादालाई कायम राख्न असल आचरण निर्माण गर्ने हेतुले रामायण, महाभारतजस्ता धर्मशास्त्रको आधार लिएर समाजलाई पथप्रदर्शन गर्ने, मानमर्यादा बनाई कुलीन युगपुरूषहरूको गाथालाई लोकभाषा, लोकलय र लोकशैलीमा ढालेर आफ्नोपन झल्कने गरी निर्माण गरिएका चरित्रगाथा यसमा पर्दछन् । चरित्रगाथाहरू कुनै खास जात्रा वा उत्सवका अवसरमा ढुस्को, घुमारी, चाली र ठाडो गरी विभिन्न तालहरूमा गायन गरिन्छन् । श्रीरामको चैत र श्रीकृष्णको चैत प्रमुख चरित्रगाथा हुन् । प्राचीन कालदेखि गाइँदै आएका यी चरित्रगाथाहरूको विकास क्रममा नयाँ र लघु चरित्रगाथाहरू पनि कथिएका भेटिन्छन् ।

४. प्रेमगाथा :

युवा-युवतीबीच प्रेमप्रसङ्ग भएका परम्परादेखि गायन हुँदै आएका प्रेमगाथाहरू प्रायः रतेडा (रात्रीगीत) का रूपमा गायन हुन्छन् । प्रेमगाथाहरूमा सरू-समेरूको प्रेमगाथा लोकप्रसिद्ध गाथा मानिन्छ । ❑

# राजाको सम्धी

खोला किनारामा एउटा बोटे गाउँ थियो । उनीहरूको जग्गा जमिन थिएन । छाप्रो मात्रै थियो । खोलामा माछा मार्थे र बजारमा लगेर बेच्थे ।

बोटे गाउँभन्दा अलि माथि खेतको फाँटै फाँटको माझमा एउटा गाउँ थियो । गाउँका सबै जनाको प्रशस्त खेतबारी थियो । मानिसहरू त्यो गाउँलाई जमिन्दार गाउँ भन्थे । बोटे पुरुषहरू त्यो गाउँमा खेत जोत्न जान्थे । गोठका गाईडिँगालाई चाहिने घाँस दाउरा काट्थे । महिलाहरू घरधन्दामा सघाउँथे ।

बोटे गाउँमा कसैको बिहेवारी गर्दा, मृत्यु संस्कार र चाडपर्वमा पैसाको खाँचो पर्‍यो भने उनीहरू गाउँका मुखियाकहाँ जान्थे । मुखियाले उनीहरूलाई ऋण दिन्थे । व्याजको रूपमा मुखियाको खेत जोत्न वा घरधन्दा गर्नुपर्थ्यो ।

गाउँका मुखिया रमापति साह्रै मिजासिला तर कडा स्वभावका थिए । सोझा बोटेहरू उनको अगाडि बोल्न डराउँथे । बोटेहरूमध्ये बलबहादुर मुखियाका अलि नजिकका थिए । उनकी पत्नी दिनभरि मुखियाको घरधन्दा गर्थिन् । भाँडा माझ्थिन् । लुगा धुन्थिन् । घरभित्र बाहिरको सबै काम गर्थिन् । साँझ फर्किने बेलामा मुखिनीले दिएको कनिका, पिठो, धुटो लिएर आउँथिन् । त्यसैबाट साँझ बिहान परिवारको छाक टर्थ्यो ।

जेठी छोरी बाटुली एघार वर्षकी थिइन् । दिउँसो आमाबा काममा जाँदा उनले भाइलाई हेर्थिन् । दिनभरि खेलाउँथिन् । आमाले पकाएर छाडेको खानेकुरा भाइहरूलाई ख्वाउँथिन् । आफू पनि खान्थिन् ।



■ विनय कसजू
जन्म : वि.सं. २००४ साउन ३
तानसेन, पाल्पा
अवसान : वि.सं. २०७६ मंसीर १०

एक दिन मुखिया रमापति घरको आँगनमा उभिएर बलबहादुरलाई काम अह्राउँदै थिए । उनकी पत्नी आँगनको छेउमा लुगा धुँदै थिइन् । अचानक बाटुलीको स्वर सुनेर उनी झसँग भइन् ।

"आमा, आमा ! छिट्टै घर जाम । भाइ आँगनबाट तल खस्यो । मैले नजाऊ भन्दा मानेन," बाटुलीले एकै सासमा भनिन् ।

बाटुलीकी आमा आत्तिइन् । उनले हात धोएर छोरीतिर जाँदै सोधिन्, "अहिले कहाँ छ भाइ ? किन छाडेर आएको ?"

"मैले कत्ति बोलाएँ । भाइ बोल्दै बोल्दैन ।"

बाटुलीको कुरा बलबहादुर र रमापतिले पनि सुनिरहेका थिए ।

बलबहादुर र उनीकी पत्नीको ध्यान छोरा कुन अवस्थामा होला ? मर्‍यो कि बाँचेको होला भन्ने कुरामा थियो । तर रमापति भने बाटुलीलाई ट्वाल्ल परेर हेरिरहेका थिए ।

"मुखिया बा, अहिले हामी जान्छौँ । भोलि आएर काम सकौँला," बलबहादुरले भन्दै थिए । तर मुखियाको ध्यान बाटुलीको अनुहारमा केन्द्रित

थियो ।

आँगनमा मानिसहरूको स्वर सुनेर मुखिनी बाहिर निस्किन् । स्थिति बुझ्न उनले मुखियाको अनुहारतिर हेरिन् । मुखिया भने आँखा झिमिक्क नगरी बाटुलीलाई हेरिरहेका थिए ।

"हैन, यो को केटी हो ? कहाँबाट आएकी हो ?" मुखिनीले ठूलो स्वरले सोधिन् ।

"मालिक्नी यो मेरी छोरी हो," बाटुलीकी आमाले भनिन् । भाइ आँगनबाट लोट्यो भनेर बोलाउन आएकी । म त हिँडेँ । बाँकी लुगा भोलि आएर धुम्ला ।"

"हैन, के देख्नु पर्‍यो ! यो वनदेवी जस्ती नानी तिम्री छोरी !" मुखिनीले छक्क पर्दै भनिन् । "हे दैव यस्ती राम्री नानीको कर्म कस्तो ! कस्तोको घरमा जन्म लिएकी ! दैवको लीला !"

मुखियाको आँखा अझै पनि बाटुलीमाथि नै जमेको थियो ।

बलबहादुरले मुखियाको जवाफ नपर्खी छोरी र पत्नीलाई अघि लाएर हतारिँदै घरतिर लागे । त्यसपछि मात्रै मुखिया सजग भए ।

"के चाल हो तपाईंको । यो उमेरमा पनि राम्री केटी देख्नै नहुने ?" मुखिनीले च्याँठ्ठिदै भनिन् ।

मुखिनीको कुरा सुनेपछि मुखियाले गम्भीर हुँदै भने, "तिमीलाई सौता हाल्ला भन्ने पिर होला । मलाई त मेरो मुख्याइँ नै जाला कि भन्ने पीर लागिसक्यो ।"

उता बलबहादुर घरमा पुग्दा छोरा आँगनको डिलमा बसेर 'दिदी हो, आमा हो, बा हो,' भनेर चिच्याएर रोइरहेको थियो ।

बाटुलीलाई देखेको दिन रमापतिले पेटभरि खाना खाएनन् । त्यसपछि उनी गम्भीर देखिन थाले । उनी दिनदिनै दुब्लाउन थाले ।

"हैन तपाईंलाई किचकन्येले छल्यो कि क्या हो । खान पनि मिठो गरी खानुहुन्न । दिनदिनै दुब्लाउँदै जानु भएको छ । एकपल्ट धामीलाई बोलाएर देखाउँ कि ?" मुखिनीले एकदिन भनिन् ।

"पर्दैन कसैलाई देखाउन । तिमीले मेरो कुरा बुझ्दैनौ ।"

"भन्नु भए पो बुझ्छु त । नभनी कसरी बुझ्ने ?"

तर मुखियाले आफ्नो कुरा आफ्नै मनमा राखे । मुखिनीलाई भनेनन् ।

यो कथा सय वर्ष भन्दा अघिको हो । त्यस बेला नेपालमा राणाहरूले राज्य गर्थे । देशभित्र भएका राम्रा कुरा राजा वा उसका छोराछोरीलाई मनपर्‍यो भने उनीहरूले लैजान्थे । कसैले विरोध गर्न सक्तैनथ्यो । यतिसम्म कि कसैकी राम्री छोरी छन् भने पनि दरबारमा लैजान्थे । अचम्मको कुरा के थियो भने छोरीलाई दरबारमा लैजाँदा आमाबाबुहरू दुःखी हुनुको सट्टा खुशी हुन्थे ।

झन्डै एक महिनापछि अचानक बलबहादुर र उनकी पत्नी रमापतिको घरमा काममा आएनन् । मुखियाले केही दिन पर्खे । तर उनीहरू आएनन् । खेतीपाती र घरको काम बित्न थालेपछि एकदिन मुखिया आफै बोटे गाउँमा गए ।

सोध्दै खोज्दै मुखिया बलबहादुरको घरमा पुगे । घरमा कोही थिएन । आँगनमा कुखुराहरू चरिरहेका थिए । ढोकाको सँघार छेउ एउटा कुकुर सुतिरहेको थियो । मुखियालाई देखेर आङ तन्काउँदै उठ्यो र घरको पछाडितिर गयो । घरको ढोकामा ताला लागेको देखेर उनी छक्क परे ।

अर्को घर केही पर थियो । मुखिया त्यतै लागे । घरमा पुग्दा एउटी बृद्ध महिलाले आँगनमा कोदो सुकाउन लागेको उनले देखे ।

"बलबहादुर कहाँ गयो तिमीलाई थाहा छ ?" मुखियाले भूमिका नबाँधी सोधे ।

महिलाले जवाफ दिन अन्कनाइन् । उनले घरको ढोकातिर फर्केर नातिनीलाई बोलाइन्, "सुमित्रा ! ए.. सुमित्रा, बाहिर आऊ नानी ।"

"किन बोलाको आमा ?" भन्दै बाटुलीकै उमेरकी नानी बाहिर आइन् ।

बाहिर नचिनेको मानिसलाई देखेर उनले संकोच मानिन् ।

मुखियाले बलबहादुरको घरतिर देखाउँदै सुमित्रासँग सोधे, "त्यो घरका मानिसहरू कहाँ गए नानी ?"

"त्यो घर मेरो साथी बाटुलीको हो । उसको घरको कुरा सोध्नु भएको ? उनीहरूलाई त राजाका सिपाहीहरू आएर लिएर गए," सुमित्राले उत्साहित हुँदै नाचुँला झैं गरी फनक्क एक चक्कर लाएर भनिन् ।

रमापतिले यस्तो उत्तरको कल्पना नै गरेका थिएनन् । उनले तुरुन्तै सोधे, "किन ? सिपाही आएर किन लगेको नि ?"

"तपाईंलाई थाहा छैन ? उसको बिहे त दरबारमा हुने भयो नि ! उसलाई दरबारको चलन सिकाउन लगेको रे !"

त्यही बेला सुमित्राकी आमा डोकोमा पानीको घैँटो बोकेर आइपुगिन् । उनले पेटीमा डोको बिसाउन नपाउँदै मुखियाले सोधे, "तिम्री छोरीले त के के कुरा गर्छे । साँच्चै हो ?"

"के भनी र यसले ? के भन्यौ नानी ?" सुमित्राकी आमाले सुमित्रासँग सोधिन् ।

"उही मेरो साथी बाटुलीको बिहेको कुरा गरेकी नि आमा । अब उसको बिहे कहिले हुन्छ आमा ? ऊ गाउँमा फर्कन्छे कि फर्किंदैन ?" सुमित्राले उत्साहित हुँदै सोधिन् ।

आमा छोरीको कुरा सुनेर मुखियाले लामो सास फेरे । उनको घाँटी सुक्यो । उनले सुमित्राकी आमासँग पानी खान मागे ।

"हामीले छोएको पानी खानु हुन्छ र बाजे ?"

"किन नहुने ? दरबारमा साइनो जोडिएपछि अब के पानीको कुरा !" मुखियाले अलि झर्कंदै भने ।

मुखियालाई पानी खान दिन सुमित्राकी आमालाई अप्ठ्यारो लाग्यो । उनले छोरीलाई भनिन्, "सुमित्री भित्रबाट आम्खोरामा पानी लिएर बाजेलाई दे त ।"

सुमित्रा खुशी हुँदै दगुर्दै घरभित्र गइन् र एकै छिनमा तामाका आम्खोरामा पानी ल्याएर मुखियालाई दिइन् ।

मुखियाले आम्खोरा भित्र हेरे । खाउँ कि नखाउँ भन्ने दुविधामा परे । तर घाँटी सुकेको हुँदा उनले घाँटी ठाडो पारेर पानी घटघट पिए । त्यसपछि हातले निधार र मुख पुछ्दै उनले सोधे, "हैन बाटुलीको कुरा कसले दरबारमा पु¥यायो ?"

सुमित्राकी आमाले मुखियाको प्रश्नको जवाफ दिँदै गइन् ।

केही दिन अघि सहरबाट मृगको सिकार खेल्न भनेर एकजना मानिस सिपाहीहरू लिएर आएको रहेछ । खोला पारिको रानी वनमा मृग मारेछन् । गाउँका केटाकेटी हेर्न गएका रहेछन् । बाटुली र सुमित्रा पनि गएकी थिइन् ।

"म र बाटुली सँगै उभिएर मरेको मृग हेरिरहेका थियौँ । एकजना मानिस बाटुलीको नजिकै आयो र 'नानी यता आऊ,' भनेर बोलायो," सुमित्राले त्यो दिनको घटना सम्झँदै भनिन् । "बाटुली डराई । जान मानिन । अनि त्यो मानिसले गोजीबाट रूमालमा पोका पारेको मिस्री, छोडा र केके कुरा खान दियो । मलाई पनि एक मुठ्ठी दियो । अनि बाटुलीको हात समातेर आफू नजिकै राख्यो र बाटुलीलाई के के कुरा सोध्यो । बाटुलीको घर त्यो हो भनेर मैले हातले देखाइ दिएँ । त्यो मानिस हाँस्यो ।"

त्यसपछि सुमित्राकी आमाले भनिन्, "बाटुलीको बाआमाको भाग्यै फर्क्यो नि । अब दरबारसँगै साइनो जोडिएपछि यो गाउँमा उसकै हाँकडाँक हुने भयो । जग्गा जमिन पाउने भएको छ रे । नयाँ घर बनाइदिने रे । अनि गाउँको मुख्यानी पनि दिने भन्ने सुनेको छु । कत्तिको साँचो हो अब । जे होस् छोरीले गर्दा उसको भाग्य फर्क्यो ।"

"आमा, म बाटुलीलाई भेट्न जान्छु है ?" सुमित्राले खुशी हुँदै भनिन् ।

"ऊ त दरबारकी मैयाँ भइसकी । अब तँलाई चिन्ली र उसले ?"

सुमित्रा र उनकी आमा रमाउँदै कुरा गर्दै थिए । उता रमापति मुखियाको मनमा आँधीबेरी मच्चिएको थियो । उनका हातगोडा लुला भए । उनी बिस्तारै उठे । आफ्नो गाउँतिर हेरे र खुइय्य लामो सास फेर्दै घरतिर लागे । बाटोभरि उनको मनमा एउटै कुरा खेलिरह्यो :

'अस्तिसम्म ऊ मेरो हली अहिले राजाको सम्धी भयो ! धन्य दैवको लीला । मेरो एउटी राम्री, सुन्दरी, रूपवती छोरी भएको भए ! ....' ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
जनमत मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन गर्दछौं ।

**रामप्रसाद पन्त**
प्रधान सम्पादक, दायित्व द्वैमासिक
अध्यक्ष, दायित्व वाङ्मय प्रतिष्ठान
चाबहिल, काठमाडौं

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
जनमत मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन गर्दछौं ।

**चेतनाथ धमला**
प्रधान सम्पादक
कौशिकी द्वैमासिक
काठमाडौं

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
जनमत मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन गर्दछौं ।

**पवन आलोक**
प्रधान सम्पादक
अभिव्यक्ति द्वैमासिक
काठमाडौं

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
जनमत मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन गर्दछौं ।

**गंगा सुवेदी**
अध्यक्ष
चेतना संरक्षण प्रतिष्ठान नेपाल
विराटनगर-१२, मोरङ

# जेल जर्नल



विश्वेश्वरप्रसाद कोइराला
जन्म : वि.सं. १९७१ भदौ २४
बनारस, भारत
अवसान : वि.सं. २०३९ साउन ६

सुन्दरीजल
३०. ६. २०१९ / १६. १०. १९६२

आज फेरि २॥ महिनापछि डायरी लेख्न थालेको छु । योभन्दा पहिले १३. ४ मा लेखिएको दिनचर्याको विवरण पनि असमाप्त नै छाडेको थिएँ । यो ढाई महिनामा ठूलठूला घटना घटे; मुख्यतः हिन्दुस्तान र अहिलेको नेपालको शासनवर्गसँग (राजासँग) को ठूलो तानातानी । नेपालले हिन्दुस्तानलाई दोषमाथि दोष लगाइरहेको छ । अन्तर्राष्ट्रिय क्षेत्रमा पनि ठाउँठाउँमा ठूल्ठूला घटनाहरू घटे, जस्तो अल्जिरियाको स्वतन्त्रता र यमनमा क्रान्ति । हाम्रो जेल जीवन छ यहाँ । त्यसो हुनाले पनि, दिनचर्यालाई लिपिवद्ध गर्ने प्रयास अनौठो जस्तो लाग्छ – अखिर जब हाम्रो एकनासका दिन बितिरहेका छन् भने नयाँ कुरा के दिन्हौं लेख्न पाइन्छ र ? मनमा भने नाना किसिमका कुरा आउँछन् । मनको जगत्मा घटनाको अटूट सिलसिला जारी रहन्छ । त्यसमा एकसरता छैन । त्यसैलाई पनि लिपिवद्ध गरे कालान्तरमा विभिन्न मानसिक स्थितिमा उत्पन्न हुने नाना किसिमका भावनालाई पढ्दा रमाइलो नै लाग्नेछ । आजको दुश्चिन्ता भोलिको रमाइलो स्मृति हुन्छ, र आजको उत्साह भोलिको एउटा मजाक । ल, यही गर्नुपर्‍यो । एक त दिनभरिको दैनिक घटनाहरूलाई जस्तोसुकै जाबो भए पनि लेख्ने र साथै मनमा आउने विचारहरूलाई नढाँटेर लेख्ने गर्नुपर्‍यो ।

आजकाल मेरो स्वास्थ्यमा केही उन्नति भएको छ ।

सुन्दरीजल
१७. १०. १९६२ / १. ७. २०१९

हिजोदेखि रूघा लाग्ला-लाग्लाजस्तो भएर आङ सिरिङ्ग-सिरिङ्ग हुन थालिरहेछ । बिहान ब्याडमिन्टन खेल्न; टाउको चिसो भएको जस्तो हुन्छ । तर त्यसै बिछौनामा लेटिरहन पनि मन लागेन । कोठालाई नयाँ किसिमबाट मिलाउनुपर्‍यो भनेर पलङ्ग, किताबको सेल्फ, भित्ताका तस्बिरहरूलाई यताउति सारेँ । दक्षिणपट्टिको एउटा झ्याल जो धेरै दिनदेखि बन्द थियो त्यसलाई खोलेँ । बाच्छिउँ हो कि अरिँगाल हो, त्यसको एउटा ठूलो गोला झ्यालमा लागेको छ । झ्याल उघार्दा बडो क्रूद्ध मुद्रामा ती सतर्क भए । त्यहीँनेर अर्को गोला छ बारूलोको । भोलि केही टुङ्गो लाउनुपर्ला यिनीहरूको । लुगा पनि धोएँ – खुब थाकियो ।

आज महिनाको पहिलो दिन भएकोले मेजरको बदली भयो । नयाँ मेजरले चार्ज लिए । जमदार र धेरैजसो सिपाहीहरूको बदली भएन । सिपाहीहरू

काठमाडौंमा कम्ती छन् रे, त्यसो हुनाले पहिले पहिलेको जस्तो १५/१५ दिनमा उनीहरूको बदली हुँदैन । पल्टन धेरैजसो बाहिर खटिएको छ ।

देवेन्द्रको उत्साह दिने चिठी आयो । राजाको लाइन अफ एक्सनलाई बाहिरकाले राम्ररी नबुझेको जस्तो लाग्छ । त्यसो हुनाले बाहिरकाले आफ्नो कार्यक्रम परिस्थिति अनुकूल बनाउन सकेनन् जस्तो हामीलाई यहाँ लाग्छ । हिन्दुस्तान त पूर्ण रूपले बेवकुफ बनेको छ । राजामाथि केवल शारीरिक बलको मात्र दवाब पर्न जान्छ, राजनीतिक दवाब उसमा पर्दैन । देशको भविष्यका लागि ख्याल गर्ने राजा भएको भए राजनीतिक दवाब उसमा पर्न सक्थ्यो । अर्को कुरा, राजा अत्यन्त कल्पनाहीन व्यक्ति छन् । शारीरिक बलप्रयोग मात्र उसमाथि काम लाग्छ । देवेन्द्रको खबरले यहाँको जीवन झन् खल्लो भयो । कति दिन यहाँ बस्नुपर्ने हो ! २ वर्ष हुन लागिसक्यो हामी थुनिएको, बाहिरका साथीहरूले आफ्नो सामर्थअनुसार भरमग्दूर गरिरहेका छन्, तर प्रभावकारी एक्सन हुन सकेको छैन । बाहिरकाले आफ्नो सारा अन्डाहरू एउटै टोकरी हिन्दुस्तानमा राखेकाले पनि हाम्रो आन्दोलनमा केही कमजोर आएको छ । हिन्दुस्तानमा मात्र पूरा भर पर्दा उसको खटनमा हाम्रो लडाइँको गति निर्भर भएको छ । हिन्दुस्तानको टेवाको आवश्यकता त हामीलाई थियो तर उसैमाथि हाम्रो चारै गोडा टेकिन जाँदा हाम्रो आन्दोलनमा भित्तामा पिठ्यूँ अड्याउने भावना आउन सकेन । गुरिल्लाको लडाईंमा यो भावना आउनु परमावश्यक छ । आखिर ६/७ हजार राजाको पल्टनलाई हाराबारा खेलाउन नसकिने कुरा होइन यदि सही अर्थमा गुरिल्लाको किसिमको लडाइँ यहाँ प्रारम्भ गरेदेखि । राजाको टेवा पनि त त्यही ६/७ हजारको पल्टन छ । यस पल्टनको राजभक्तिको पनि परीक्षा हुन पाएको छैन । कुनै ठाउँमा पनि साँच्चिको मुकाविला यसले गर्नुपरेको छैन । एक-दुई ठाउँमा पनि यसलाई केही कडा किसिमले हमला भए यसको राजभक्तिको राम्रो परीक्षा हुने थियो । मेरो विचारमा, धेरै जस्तो हाम्रो पक्षमा लाग्ने थिए ।

आज केही पढ्न मन लागेन । देवेन्द्रले एउटा किताब पठाइदिएको रहेछ, आज मैले पाएँ एउटा Toynbee को र अर्को K.P.S. Menon को ।

भोलि इन्टरभ्यूको दिन हो । नयाँ खबर सुन्न पाइएला भन्ने केही आशा छैन । त्यसो हुनाले पहिले - पहिलेको जस्तो आतुरतासँग भोलिको इन्टरभ्यूको प्रतीक्षा छैन । आमासँग भेट हुन्छ, त्यसको उत्साह भने छ । सायद रामनारायणकी पत्नी पनि आउलिन्, उनी आइन् भने केही नयाँ खबर आउँछ कि ? देवेन्द्रको चिठीपछि नयाँ खबर के हुन सक्छ, जसको महत्व होस् ।

सुशीलाको बनारसबाट चिठी आयो । केटाकेटीहरूले पनि लेखेको छ । बुनुको चिठी धेरै दिनमा आयो । सेन्ट्रल जेलका एउटा साथीले पनि लेखेका छन् - त्यहाँ करिब १०० जति राजबन्दी छन् रे । रोसाको चिठीमा नोना र सुषमा गिरफ्तार भएको खबर छ । विराटनगर जाँदा एरोड्रमबाटै गिरफ्तार भएर गएछन् । उनीहरू जनानी जेलमा छन् शैलजाहरूसँगै । शैलजा अझै छुटेकी रहिनछ । नोना र सुषमाको पक्राउको खबरले मलाई उत्तेजित पारेको छ । कुन दिन रोसा पनि समातिने हुन् । हाम्रा तमाम परिवार जेलमा हुनेछ ।

**२ कार्तिक २०१९**
**१८. १०. १९६२**

आमा भेट्न आउनुभयो । र बिदा पनि लिनुभयो मसँग । १।२ दिनमा तारिणीहरूसँग भेटेर उहाँ विराटनगर जाने । घरको सारा व्यवस्थाको जिम्मा उहाँमाथि पर्‍यो । उहाँले मलाई धन्धा नमान्नु म सबै कुरा सम्हाल्छु भन्नुभयो । तर स्वयम् आफैं गिरफ्तार हुन्छु कि भन्ने आशङ्का पनि उहाँलाई थियो । यदि गिरफ्तार हुनुभयो भने चिन्ता नलिनु, म जेलमा पनि आनन्दसँग बस्नेछु भन्नुभयो । रोसाले पनि खबर पठाएकी थिइन् कि आमा पक्रिए पनि उनी भार सम्हाल्न सक्लिन् नेपाल र विराटनगर दुवै ठाउँको । आमा भन्नुहुन्थ्यो कि सुशीलाले बनारसमा बसेर केटाकेटीहरूलाई एकै ठाउँमा राखेर बसून् । ३०० विराटनगरबाट पठाइदिन सक्छु, देवेन्द्रले २०० दिने गरेको छ । ५०० ले जेनतेन त्यसको लागि पुऱ्याउलिन् कि भन्नुहुन्थ्यो । मैले प्रकाशलाई दिल्लीमा पढाउन पाए हुन्थ्यो भनैं, तर त्यसका लागि आर्थिक सामर्थ्य छैन जस्तो कुरा आमा भन्नुहुन्थ्यो । फेरि एउटा ठूलो विशृङ्खलता हाम्रो परिवारमा आयो नोना र सुषमाको गिरफ्तारीले । सुषमाको आर्जनले २ केटाकेटी पढ्थे ।

बाहिर बडो ठूलो आतङ्कको राज्य छ रे । हामीहरूसँग भेटघाट गर्न मानिसहरू आत्तिन्छन् रे । आमाको भनाइअनुसार यत्रो आतङ्क राणाको पालामा पनि थिएन ।

सुशीला बनारस गएर बसेको पनि केटाकेटीहरूको सुरक्षाका लागि, किनभने भरौटे केही व्यक्तित्वहरूलाई लगाएर उनीहरूलाई मार्न लाउने आशङ्का सुशीलालाई थियो रे । एउटा सिपाही एकचोटि कोइराला निवासमा सबैलाई मार्छु भनी हिँड्थ्यो रे । राजालाई पागलपन सवार भएको छ । बाहिरभन्दा जेल धेरै अधिक सुरक्षित ठाउँ छ रे, आमा भन्नुहुन्थ्यो ।

ढोकाबाट रोसालाई देखेँ । श्यामा पनि आएकी रहिछन् र न्हुछेमान पनि । रमेश पनि दार्जीलिङ र सिक्किमको यात्रा सिध्याएर आएछन् । उनलाई पनि देखेँ । सिक्किमका दिवान र राजाले मलाई धेरै सम्झना पठाएको छ रे भनी रमेशले संवाद पठाएका छन् ।

आज हामी त्यस अति चरम अवस्थामा छौं जहाँ पुग्दा ठूलो साहसको अनुभव मानिसलाई हुन थाल्छ कि डरले मलाई चटक्क छोडेको जस्तो लाग्छ । आमा पनि बडो निर्धक्क जस्तै हुनुहुन्थ्यो ।

रूपचन्द्र गिरफ्तार भएको खबर आमाले सुनाउनुभयो । उसलाई पत्रेपछि खूबसँग पिटेको छ रे । फलको टोकरीमा बम राखेर पठाउँथ्यो भन्ने चार्ज छ उसमाथि । नोना र सुषमालाई पनि पत्रेको कारण बम ओसार्ने काम गरेको हो रे । तर अहिले उनीहरू थुनिएका छन् सुरक्षा कानुनअन्तर्गत । शैलजाहरू छुटेनन् । शैलजा र गौरीले दण्डका रूपमा पनि बुझाएका थिए २६००।- तर उनीहरूलाई रिहाइ गरेनन् । १॥ वर्षको सजायमा थुनिएका यिनीहरू र यिनीहरूले आफ्नो सजायको पूरा अवधि जेलमा काटेर पनि सरकारले रिहा गरेन । अन्धाधुन्ध छ यो राज्यमा । एकदम बहुलठ्ठी लागेको छ राजालाई । उनको अन्तिम दिन त होइन, आएको ?

आज अरू कसैका भेट्ने मानिस आएनन् । किसुनजीका गोपाल आएका थिए तर जर्नेल गइसकेका हुनाले भेट्न पाएनन् । रामनारायणजीले पत्नी आउँछिन् कि भनेर धेरै आशा लिएका थिए, उनी आइनन् । रामनारायण निराश भए । किन आइनन् भन्ने तर्कना उनको मनमा चलिरह्यो, आमा त बिरामी छैनन् ? या बाहिरको स्थितिको गम्भीरतालाई बुझेर नआउनमा नै श्रेय छ भन्ठानिन् । इत्यादि कुरा उनको मनमा खेलिरह्यो ।

आजको आमाको खबरले मलाई एक प्रकारको अनौठो चिन्तामिश्रित उत्तेजना भयो । अनिश्चित भविष्यका लागि कम्मर कस्नुपरेको छ । अहिलेसम्मन् ठूलो कठिनाइमा दुःखको सामना गरेको अनुभव हुनै नपाएर जिन्दगी बित्यो । तर अब सायद वास्तविक कष्टको सामना गर्नुपर्ने भएको जस्तो छ । सुशीलालाई सम्झिन्छु । उसको जीवन बडो संरक्षित रह्यो, अहिले त्यो संरक्षणको साया हठात् उसको शिरबाट हटेको जस्तो छ । उदाङ्ग भएको जस्तो छ ।

आज आठै बजे सुतेँ । शरीर थाकेको छ ।

**सुन्दरीजल**

**३ कार्तिक २०१९/१९ अक्टुबर १९६२**

दिनभरि उदासी रह्यो । कुनै दुःखको भावना होइन, हलुकोसँग मस्तिष्कमा फैलिएको उदासी । आमालाई सम्झिरहेको छु, उहाँले भनेको साहसका शब्द मनमा आइरहन्छन् । यति उमेरमा पनि उहाँले कम्मर कसेर जे परे पनि सामना गर्छु भन्नुभएको वाक्य र यो वाक्यभन्दा उहाँको दीप्त अनुहारलाई बारम्बार सम्झिरहन्छु । मानौं, उहाँले परिस्थितिलाई सम्हाल्न परिवारको नेता भएर आफ्नो युवावस्थाको साहस बटुलेर ल्याउनुभएको छ । उहाँलाई सम्झँदा मलाई ठूलो ममता र मोहको सञ्चार हुन्छ । हिजो मसँग विदा भएर जानुभयो । भोलि शनिबार तारिणीहरूसँग भेट्नुहुन्छ, अनि विराटनगर फर्किनुहुन्छ । कहिले भेट हुने हो फेरि उहाँसँग । सुशीलालाई पनि बडो आर्द्र प्रेमकासाथ सम्झिन थालेको छु । बाहिरकालाई कति कठिनाइ परेको होला । छोराछारीहरूका उपर अहिलेको हाम्रो परिस्थितिले कस्तो प्रभाव परेका होला ? प्रकाश ...

बिहान एक हात ब्याडमिन्टन खेलेँ । ४/५ दिनपछि खेल्दा थाकेको जस्तो भएँ । पठनपाठन केही गर्न मन लागेको छैन । पढ्ने काममा केवल आजका पत्रपत्रिकाहरू र मनुबेनको आफ्नो संस्मरण (गान्धीजीसँगको अन्तिम दिन) पढेँ । मनुवेनको संस्मरणमा ठाउँठाउँमा हृदयलाई स्पर्श गर्ने वर्णनहरू छन् गान्धीजीको मृत्यु भएको दिनको वर्णन र त्यसको दोस्रो दिनको वर्णनलाई बडो आर्द्र भाषामा दिइएको छ । तेल लगाएर तातो पानीले आङ पुछेँ । ननुहाएको ३ दिनजति भयो । रूघा र खोकी आज छैन ।

आज पनि ८॥ बजेतिर सुतेँ । आजकाल बिहान ४ बजेतिर उठ्ने गरेको छु । गणेशमानजी बिहानको चिया ४:१५ मा ल्याइदिनुहुन्छ ।

चिनियाको चिठी आज १ महिनापछि दिए । इन्दिराको चिठी पनि हिजो मात्रै दिए, उसले २५ दिन पहिले लेखेको चिठी । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछु ।

**त्रिरत्न रञ्जितकार**
बनेपा–१०, पुलबजार, काभ्रे

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछु ।

**दियेशरत्न शाक्य**
बनेपा, काभ्रे

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन गर्दछौं ।

**वियोगी बूढाथोकी**
प्रधान सम्पादक तथा प्रकाशक
शिवपुरी सन्देश त्रैमासिक
बूढानीलकण्ठ, काठमाडौं

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन गर्दछौं ।

**होमशंकर बाँस्तोला**
सम्पादक
अन्तर्बोध त्रैमासिक
बूढानीलकण्ठ, काठमाडौं

# अक्षर-खेतीभित्रका मोहन दुवाल



वी.के.पाल्पाली
जन्म : वि.सं. २०३२ असोज १५
पाल्पा
अवसान : वि.सं. २०७८ फागुन १७

*काव्यशास्त्र विनोदेन कालो गच्छति धीमताम्*
*व्यसनेन च मूर्खाणां निद्रया कलहेन वा ॥*

*(अर्थात्, बुद्धिमानहरूले काव्यशास्त्रीय मनोरञ्जनमा लागेर तथा मूर्खहरूले जुवा-तासलगायत दुर्व्यसन, निद्रा अथवा झगडामा लागेर समय बिताउँछन् ।)*

हितोपदेशको यो उद्‌गार नेपाली वाङ्मयफाँटका झल्झलाउँदा तारा 'बनेपाका एकलब्य' साहित्यकार मोहन दुवालमा लागू गर्दा यौटा मात्र बूँदा लागू हुने देखियो । 'काव्यशास्त्र विनोदेन' अर्थात् काव्यशास्त्रीय मनोरञ्जन मात्रमा मोहन दुवालले आफ्नो अवकाशकालीन समयलाई प्रयोग गरेर साहित्य साधनामा नै जोतिइरहेका छन् । सम्बत् २०२० सालमा 'मेरो सपना' शीर्षकको कविताबाट नेपाली साहित्यमा औपचारिक रूपमा प्रवेश गरेका दुवाल नेपाली साहित्यका कविता, मुक्तक, लेख-निबन्ध, नियात्रा, हाइकु, बालसाहित्य, समालोचना, समीक्षा तथा साहित्यिक पत्रकारिताका क्षेत्रमा चिर-परिचित छन् । यही सिलसिला राजनीतिक पत्रकारितामा पनि वैचारिक र जुझारू रूपमा कलम चलाएका दुवालले विभिन्न कालखण्डमा देशको अवस्थाका बारेमा पनि पत्र-पत्रिकामार्फत् आफ्नो गहन विचार प्रक्षेपण गर्न भुलेका छैनन् । २०५४ सालदेखि हालसम्म विभिन्न पत्र-पत्रिकामा प्रकाशित भएका लेखहरूको संग्रहालयका रूपमा यसकृति **अक्षरमा रचनाहरू** प्रकाशनको जमर्को गरेका साहित्यकार मोहन दुवालको कर्म अत्यन्त सराहनीय छ ।

बि.सं. २००६ साल जेठमा पिता गणेशबहादुर तथा माता खिलकुमारी दुवालको कोखबाट काभ्रेको सुन्दर नगरी बनेपाको 'जनमतचोक' भोलाखाटोलमा जन्मेका दुवाल सानैदेखि तीक्ष्ण बुद्धिका र बढी चकचक गर्न रूचाउने खालका थिए । तेज दिमागको बालकले अनेक नयाँ-नयाँ कुरामा चाख राख्नु स्वाभाविकै थियो जुन लक्षण मोहन दुवालमा पनि देखिएको थियो । त्यही क्रम पछिसम्म रह्यो । शुरूदेखि नै शैक्षिक क्षेत्रमा काम गर्न रूचाउने उनले करीब तीनदशक शिक्षण पेशामा नै आफ्नो समय खर्चेका छन् । यही कालमा कलमलाई पनि ज्ञानको धार लगाउँदै अगाडि बढेका उनले २०२३ सालमा नै नेवारी भाषामा कृति प्रकाशन गरेका थिए । यसपछि मातृभाषा (नेपालभाषा) र राष्ट्रभाषा (नेपाली भाषा) गरी दुबै भाषामा कलम तेज गतिमा दौडाउन शुरू गरे । हालसम्म साढे दुई दर्जनबढी कृति प्रकाशन गरिसकेका दुवाल **जनमत** साहित्यिक मासिकको प्रकाशनबाट आफूलाई पत्रकारिताको क्षेत्रमा रकेटवत् कुँदाइरहेका छन् । उनको यस साहित्य साधना र सञ्चार सेवाको कार्य देशैभरिमा ईर्ष्या गर्नेको घुइँचो नै

छ भन्दा अत्युक्ति नहोला ।

त्यसो त राजनीतिक चेतनाका लेख मात्र उनले लेख्दैनन् । वैचारिक रूपमा नेपाललाई सर्वहाराको सरकार अनि गरीब, विपन्न र निमुखा जनताको हालिमुहाली भएको समाजवादी राष्ट्र बनाउने अभियानमा उनी दशकौंदेखि सक्रिय छन् । जनवादी प्रकारका लेख लेख्नु, प्रवचन दिनु र त्यसमा पिछडिएका वर्गलाई हक अधिकारका लागि कटिवद्ध भएर जुध्न सक्नुपर्छ भन्ने सन्देश दिनु उनको दैनिकी जस्तै छ । आज पनि उनी यही यात्रामा कटिवद्ध छन् । पञ्चायतकालमा यही अभियानमा लागेवापत् सरकारी पक्षबाट पटक-पटक यातनासमेत भोगेका दुवाल भूमिगत लेखनमा पनि उत्तिकै सक्रिय देखिन्छन् । आफूलाई 'शरद बनेपा' 'किरण श्रेष्ठ', 'बहादुर', 'लाल किरण', 'शरद श्रेष्ठ', 'शौरभ शर्मा' आदि जस्ता साहित्यिक एवं भूमिगत नामबाट पनि लेखनक्षेत्रमा पहिचानसहित उपस्थित गराएका साहित्यकार मोहन दुवाल हालका दिनमा 'जनमत' साहित्यिक पत्रिकाकै प्रकाशन प्रसारणमार्फत् सामाजिक जागरणको महा-अभियानमा होमिएका छन् । यही सिलसिला कृति प्रकाशनको काम पनि उनीबाट रोकिएको छैन ।

उनको प्रस्तुत **अक्षरमा रचनाहरू** शीर्षकाङ्कित कृतिमा अधिकांश वैचारिक लेखहरू समाविष्ट भएका छन् । आफ्नो असाध्य रोगसँग संघर्ष गर्दै प्रस्तुत पाण्डुलिपि सर्सरी हेर्ने मौका पाएँ । अध्ययनका क्रममा मलाई यसले उद्वेलित बनायो । कूल ६१ थान रचना संकलित यस कृतिमा उनी कतै मेची-महाकालीको सीमादर्दसँग प्रस्फूरित भएका छन् त कतै आम नेपालीको गरिबी, अभाव, रोग, भोक र महामारीको चपेटासँग घुलमेल भई तिनको निराकरणका लागि चिन्तनशील देखिएका छन् । राष्ट्रभक्तिको उच्च वेगले उनलाई हरेक लेखमा झङ्कृत बनाइदिएको छ । उनी लेखमा मान्छे हुनुको नाताले मान्छेकै सन्दर्भ बुझ्न उत्सुक छन् त कतै आफूलाई शक्तिका पूजारी भन्न रूचाउने नेपाली बहादुरहरूको गाथा राजनीतिक संस्कारमा पस्न नसकेकोमा उदेकपूर्ण तवरबाट पोखिएका भेटिन्छन् । मुलुकमा विद्यमान राजनीतिक अन्यौलतालाई चिर्न के गर्न सकिन्छ ? भनी हरक्षण हरपल घोत्लिइरहने दुवाल नुमाफुङ चलचित्रकी चेलीसँगै क्याराभान सिनेमाको डोल्पालाई समग्र नेपाल भनी तुलना गर्न तम्सिन्छन् । देश अभावको भूमरीमा उडिरहेको छ तर राजनीतिक नेतृत्व अत्यन्त लापर्वाहपूर्ण यात्रामा खेलाँची गर्न कस्सिने गरेकोतर्फ उनले संकेत गर्दै राजनीतिक दलहरूमा नेपालीहरूको वितृष्णा जगाउने काम स्वयं राजनीतिक हस्तीहरूबाट भएको स्वीकार गर्दछन् ।

देशलाई परिवर्तन गर्ने हो भने दलीय भागवण्डा हैन सक्रिय कार्यकारी प्रणालीको विकास गर्नुपर्छ भन्ने भावना लेखहरूमार्फत् सार्वजनिक गरिरहने दुवालले नेपालको सामाजिक, सांस्कृतिक तथा जातीय मेलका लागि वर्तमान परिवर्तनले कुनै ठोस कदम चाल्न नसकेको भन्दै परिवर्तनका सञ्चालनकर्ता राजनीतिक दीर्घामा बढोत्तरी हुँदै गएको आर्थिक संकलन मात्रको होडप्रति कटाक्ष गर्दछन् । उनी भन्छन् - 'बहुदलीय पद्दतिले पञ्चायतले दिएको कुहेको शासनभन्दा पनि अझ कुहेको शासन पद्दतिको सम्प्रेषण गरिरहेको छ, यसबाट कहिले देश समृद्ध बन्ला ? र, नेपालीले कहिले सुख पाउलान् ?'

प्रस्तुत सन्दर्भले हालको राजनीतिक परिघटनालाई पनि उत्तिकै चोटिलो तवरले उजागर गरेको छ । यसरी २०४६ सालको बहुदलीय व्यवस्था स्थापनार्थ चालिएको आन्दोलन, २०५२ सालमा अधिकारका नाममा माओवादीबाट चालिएको विध्वंशकारी युद्ध र त्यसले निम्त्याएको नरसंहारकारी दशकलामो परिघटना, २०५८ सालमा घटित नारायणहिटी राजदरबारको वंशविनाश हुनेगरी चालिएको नरसंहारकारी हत्याकाण्ड, २०६१ साल असोज १९ को शाही कदम, २०६२/०६३ को गणतन्त्र स्थापनार्थ जुर्मुराएको जनलहर, नेपाली जनताको सात दशकलामो संविधानसभाको चाहनाको पदार्पण तथा त्यसको विरूद्धमा भए/गरेका सकारात्मक/नकारात्मक राजनीतिक दाउपेचहरू र संविधानसभाबाट प्राप्त अधिकार संविधानीकरणको अभियानसम्म सबै क्षेत्रमा आफ्नो विचार प्रस्तुत कृतिमार्फत् लेखकले सार्वजनिक गरेका छन् । लेखनक्षेत्रमा प्रगतिवादी लेखकका रूपमा आफूलाई परिचित गराउन सफल साहित्यकार मोहन दुवालले मोफसलमा रहेर साहित्यसेवामा नै आफूलाई समर्पित गरिरहेका छन् ।

निरन्तरको कार्यतालिका, अनवरत साधना र कर्मनिष्ठ योजनासहितको यात्रामा कहिल्यै सम्झौता नगर्ने कर्तव्यनिष्ठ लेखक दुवालले जनमतको माध्यमबाट आफूलाई देश-देशावर डुलाइरहेका छन् । कान्तिपुर, समाचारपत्र,

गोरखापत्र, काभ्रे टाइम्स, जनधारणा आदि पत्रिकामा प्रकाशित भइसकेका रचनाहरूलाई अभिलेखीकरण गर्दै कृतिको रूपमा प्रकाशन गर्न लागिएको यस कृतिमा पाठकले लेख लेखिएको मितिको आधारमा त्यतिबेलाको अवस्था आँकलन गरी अध्ययन गरेमा लेखको सान्दर्भिकता प्रष्ट हुने देखिन्छ । धेरैजसो राजनीतिक, वैचारिक, दार्शनिक लेखहरू सङ्ग्रीहित यस वैचारिक कृति **अक्षरमा रचनाहरू**मा साहित्यिक तथा भावनात्मक लेखहरूको पनि पाठकले स्वाद लिन पाउने छन् ।

राजनीतिक बाटो बिराएर अर्थोपार्जनमा मात्र लिप्त नेताहरूमा देशको भविष्य भन्दा पनि आफन्त, नातागोता, आसेपासे, कार्यकर्ता तथा आफ्नै पारिवारिक पुस्ता समृद्धिको भूत सवार हुँदै गएको र यसले देशलाई उन्नतितर्फभन्दा पनि अवनतितर्फ धकेलिरहेको अवस्थाप्रति लेखक अत्यन्त चिन्तित छन् । देशले विकृति होइन; समृद्धि खोजेको छ, भ्रष्टाचार होइन; सदाचार खोजेको छ र, यो बोलीमा होइन व्यवहारमा उत्रन सकेमात्र सम्भव छ भन्ने मोहन दुवालजस्ता साधक जहाँकहीँ पाउन मुस्किल पर्दछ । यसैले त भन्ने गरिएको छ :

***शैले शैले न माणिक्यं मौक्तिकं न गजे गजे***
***साधवो नहि सर्वत्र चन्दनं न वने वने ॥***

*(अर्थात् : यस संसारमा पहाडैपिच्छे मणि हुँदैन । सबै हात्तीमा मोती पाउन पनि सम्भव छैन । साधक अर्थात् साधनारत व्यक्ति सबैतिर पाउनु त झन् अकल्पनीय कुरा हो भने जति घना भए पनि सबै वनमा चन्दन श्रीखण्ड) पाउन पनि मुस्किल पर्दछ ।)*

ठीक यसैगरी, संसारमा दुर्लभ हुने साधकको कोटीमा दुवाल पर्न सकुन् । उनको लेखनी दिन दुगुना रात चौगुना कुदिरहोस् । स्वस्थ, स्पष्टवक्ता, निर्भीक, लगनशील, कर्तव्यनिष्ठ साहित्यसेवी दुवाल योजनावद्ध यात्रामा अनवरत रूपमा सक्रिय हुन सकुन् । ओजिलो, वैचारिक, दार्शनिक तथा समाजप्रिय उत्कृष्ट विचारहरूको सङ्गालो यस **अक्षरमा रचनाहरू** नामक निबन्ध/प्रबन्धात्मक कृतिमा सानो मन्तव्य प्रकट गर्ने अवसरका लागि लेखकप्रति अजस्र धन्यवाद प्रकट गर्दै लेखकको चौतर्फी सफलताको शुभेच्छा प्रकट गर्दछु । विषयेषु किमधिकम् । ❑

हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
जनमत मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछु ।





हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
जनमत मासिकले त्रिशताङ्क
(३०० पूर्णाङ्क) प्रकाशन
गर्न सफलता प्राप्त गरेकोमा
जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन गर्दछौं ।

# महाकवि लक्ष्मीप्रसाद देवकोटा



श्यामकृष्ण श्रेष्ठ
जन्म : वि.सं. १९८९ मंसीर २१
इलामबजार, इलाम
अवसान : वि.सं. २०७७ असार ८

२००८ साल । एक अद्‌भुत प्रतिभासम्पन्न व्यक्तिसँग साक्षात्कार भएको साल ! नेपालका महाकविसँग सर्वप्रथम भेट भएको साल । जीवनपर्यन्त मेरो स्मृतिपटलमा अंकित भइरहने साल !

सानैदेखि कविशिरोमणि लेखनाथ र महाकवि लक्ष्मीप्रसाद देवकोटाका छन्दोबद्ध कविताहरू लय हालेर पढ्न मलाई औधी रहर लाग्दथ्यो । प्रायः हरेक बेलुका बिछ्यौनामा लेटेर यी दुवै कविका कविताहरू सस्वर गाउने मेरो एक प्रकारको दिनचर्या नै बनिसकेको थियो । दसदिने **सुलोचना**का रचनाकार कस्ता होलान्, तीनमहिने **शाकुन्तल** महाकाव्यका महाकाव्यकार कस्ता होलान्, अनुष्टुप छन्दमा त म घण्टौं कुरा गर्न सक्छु भनी दृढोक्ति गर्ने आँशुकविको अनुहार कस्तो होला भन्ने मेरो मनमा उत्सुकता भइरहन्थ्यो र नजिकैबाट उहाँलाई हेर्ने मलाई ठूलो रहर थियो ।

संयोग नै भनौं, मेरो रहर पुग्ने भयो । हामी चारजना भगवतीदास श्रेष्ठ, ठाकुरप्रसाद वैद्य, देवीदास श्रेष्ठ र म एसएलसी परीक्षामा सम्मिलित हुन काठमाडौं पुग्यौं । त्यहाँ पुगेपछि त महाकविसँग भेट गर्ने मेरो इच्छा झन् प्रबल हुन थाल्यो । भाग्यवश, त्यहाँ कवि एवं साहित्यकार बदरीनाथ भट्टराईका सुपुत्र आदित्यनाथ र त्यहीँ नक्साल-निवासी रामेश्वरसँग परिचय भयो । उनीहरूकै प्रयासबाट डेराडन्डाको पनि बन्दोबस्त भयो चारढुङ्गे नक्साल बैदिनीको घरमा । भोलिपल्ट बिहान आदित्य आएर देवकोटाजीकहाँ ट्युसन पढ्नका लागि टाइम मिलाउन जानुपर्छ भनेपछि कानोले आँखा देखेजत्तिकै भयो मेरा लागि । साँच्चै भनूँ भने त्यसबखत मलाई न त ट्युसन पढ्ने रहर थियो न त अरू कुराकै । महाकविलाई नजिकैबाट हेर्ने मेरो एकमात्र आन्तरिक इच्छा भएकोले 'लौ जाऊँ' भनी महाकविलाई अर्पण गर्न दार्जीलिङ्मा किनेर राखेको एक पेटी कैंचीमार सिग्रेट सुटकेसबाट झिकेँ । यसरी हामी दुई-तीन जना मैतीदेवीफाँटमा अवस्थित कविकुञ्जमा पुग्यौं । दक्षिण मोहडा भएको पुरानो घर । एक भऱ्याङ उक्लेर हामी चोटामा निकैबेर उभियौं । क्षणभरमै मेरो मनमा अनेकौं कुरा खेल्न थाले । कस्तो हुनुहुन्छ होला देवकोटाज्यू, हामी पहाडे ठिटाहरूलाई देख्नेबित्तिकै जाओ ठेट्ना हो, अहिले फुर्सद छैन तिमीहरूसँग भेट्ने भन्नुहोला कि अथवा कुनै कारणवश भेट गर्न पो पाइन्न कि ? इत्यादि । परस्पर खासखुस गर्दै हामी एकैछिन छटपटाएका मात्र थियौं, भित्रबाट मीठो आवाज आयो -'को हो, कताबाट आउनुभयो ? भित्रै आउनुहोस् ।' हामी सबैजना कोठाभित्र गयौं र हामी कविज्यूको दर्शन गर्न इलामबाट आएका भनी मैले भनेपछि हामीलाई उहाँले बस्ने सङ्केत गर्नुभयो र बस्यौं । कोठा ज्यादै सामान्य । गोबरमाटोले लिपेको भुइँमा नीलो दरी बिछ्याइएको । आगन्तुकहरूलाई बस्नका लागि ३/४ वटा चकटी । खाटनेरको भित्ते दराजमा केही पुस्तक । सानो भस्मदान

कविज्यूको छेउमै राखिएको भए पनि सिग्रेटका ठुटाहरू त्यसमा नअटाएर भुइँतिर पनि लडीबडी गरिरहेका । उहाँ लेख्नमा तल्लीन हुनुहुन्थ्यो । मैले पहिलो भेटको कोसेली एक पेटी कैँचीमार सिग्रेट उहाँको अघिल्तिर राखिदिएँ । 'किन दुःख गर्नुभएको ?' भनी खाटको छेउमा राख्दै भन्नुभयो -'महाकवि भन्छन् । आफूले चाहिँ केही गर्न सक्या छैन । अनि एकछिन बस्नोस्' भनी उहाँ पुनः केही लेख्न थाल्नुभयो । हामी सबै जनाले विलक्षण प्रतिभाका धनी देवकोटाज्यूलाई धीत मरून्जेल हेर्‍यौं । उच्च ललाट, सुगठित शरीर । कवि देवकोटा । कथाकार देवकोटा । निबन्धकार देवकोटा । नाटककारका साथै महाकाव्यकार देवकोटा । एक व्यक्ति अनेक व्यक्तित्व । अथवा सिर्जनात्मक प्रतिभाले सम्पन्न एक विराट् व्यक्तित्व । २०/२५ मिनेटपछि हामीतिर फर्केर देवकोटाज्यूले भन्नुभयो -'यहाँहरूका लागि मैले केही गर्नु छ कि ?'

इलामबाट आउनुभएका उहाँहरू ४ जना र हामी २ जना ट्युसन पढ्न पाइन्छ कि भनी गुरूसित अनुरोध गर्न आएका भनी आदित्यले भनेपछि गुरूज्यूले भन्नुभयो - 'बडो टाइट छ, तैपनि इलामबाट आशा गरेर आउनुभयो (एकैछिन घोरिएर) भोलिदेखि आउनुहोस् न त दिउँसो २ देखि ३ बजेसम्म ।' त्यसपछि नेपालको महाकविसँग ट्युसन पढ्न पाइने भयो भनी परस्पर कुरा गरी हामी डेरातिर हिँड्यौं ।

भोलिपल्टदेखि नियमित —रूपले दिउँसो २ देखि कविकुञ्ज जान थाल्यौं । त्यस दिनदेखि हामी सबैले उहाँलाई 'गुरूजी'को आत्मीय सम्बोधन गर्न थाल्यौं । केही महिना भए पनि एउटा महान् प्रतिभाको सान्निध्यमा बस्न पाउने सुअवसर प्राप्त भएकोमा मैले आफूलाई धन्य सम्झिरहेको थिएँ ।

एक दिन बिहान नक्साल नागपोखरीछेउ आदित्यको घर पुगेँ । उनले आफ्नो पिता कवि एवं साहित्यकार बदरीनाथ भट्टराईसँग मेरो परिचय गराउँदै भने -'यो कहिलेकाहीँ कविता लेख्छ ।' उहाँले मलाई आशीर्वाद दिनुभयो । देवकोटाज्यू र उहाँ नेपाली भाषानुवाद परिषद्मा सँगै काम गर्नुहुन्थ्यो भन्ने सुनेको थिएँ । त्यसैकारण मैले देवकोटाज्यूका कृतिहरूका विषयमा जिज्ञासा राख्दा जम्मा ९६ थान पुस्तक उहाँले भाषानुवाद परिषद्मा बुझाउनुभएको, तीमध्ये ज्यादै कम मात्र प्रकाशित भएको जानकारी पाउँदा मलाई ज्यादै दुःख लागेको थियो ।

यसरी लगातार तीन महिनासम्म गुरूशिष्यको मधुर सम्पर्क स्थापित भएपछि गुरूजीको मीठो सम्झनासहित हामी इलाम फर्क्यौं ।

संयोग नै भनौं । कवि एवम् भाषाशास्त्री स्वर्गीय महानन्द सापकोटा र समाजसेवी नरेन्द्रनाथ बाँस्तोलाको सक्रियतामा नेपाली भाषा-प्रचारक सङ्घ, करफोकको संयोजकत्वमा २००९ साल असोज १८ गतेदेखि २२ गतेसम्म राष्ट्रिय कविसम्मेलन हुने निश्चित भयो । सम्मेलन सफलतापूर्वक सञ्चालन गर्ने विषयमा इलामका सबै प्रतिष्ठित व्यक्तिहरूसँग सरसल्लाह भयो । उक्त सम्मेलनमा उपस्थित हुन स्वदेशका ख्यातिप्राप्तः कवि एवं साहित्यकारहरूका अतिरिक्त भारत दार्जीलिङ र सिक्किमका लब्धप्रतिष्ठ कवि-कथाकारहरूलाई पनि आमन्त्रण गरिएको थियो । आमन्त्रित सम्पूर्ण साहित्यकार, कवि तथा प्रतिष्ठित व्यक्तिहरूबाट सम्मेलनमा उपस्थित हुने स्वीकृति प्राप्त भइसकेको थियो । केही वर्षअघि मात्र स्याल कराइहिँड्ने करफोकको डाँडामा अतिथिहरूको स्वागतार्थ ठाउँठाउँमा ध्वजापताकाले सुसज्जित स्वागतद्वारहरू बनाइएका थिए । अतिथिहरूलाई करफोकसम्म लिएर आउन नरेन्द्रनाथ बाँस्तोला र तारा श्रेष्ठ दार्जीलिङ आइपुग्नुभयो । असोज १७ गते बेलुकासम्म सबैजसो आमन्त्रित अतिथिहरू आइपुग्नुभयो । सम्मेलनमा उपस्थिति हुनुहुने विशिष्ट व्यक्तिहरूमा काठमाडौंबाट कविशिरोमणि लेखनाथ पौड्याल, नाटककार बालकृष्ण सम, महाकवि लक्ष्मीप्रसाद देवकोटा, समालोचक डाक्टर ईश्वर बराल, साहित्यकारद्वय शङ्कर लामिछाने र नगेन्द्र शर्मा, बुद्धिजीवीहरूमा दीर्घराज कोइराला, रामप्रसाद मानन्धर, पुण्यप्रभादेवी, चन्द्रकान्तदेवी, दार्जीलिङबाट कविवर धरणीधर कोइराला, इतिहासकार सूर्यविक्रम ज्ञवाली, भाषासेवी तथा सम्पादक पारसमणि प्रधान, साहित्यकारहरू इन्द्रबहादुर राई, परशुराम रोका ( साहित्यकार दानियल खालिङ चाहिँ त्यसबखत सिलिगुडीस्थित नर्सिङ होममा उपचार गराउँदै हुनुहुन्थ्यो ।) आदि हुनुहुन्थ्यो भने सम्मेलनको सञ्चालनमा सहयोग गर्नुहुने स्थानीय व्यक्तित्वहरूमा मोहन मुखिया, केशवलाल जोशी, खगेन्द्रनाथ शर्मा, जीवनाथ अधिकारी, डाक्टर भीष्मराज प्रसाईं, डाक्टर तारानाथ शर्मा, वीरेन्द्र खुजेली, पासाङ गोपर्मा, सूर्यनाथ बाँस्तोला, जनकदेव शाक्य, भगवतीदास श्रेष्ठ, इन्द्र प्रधान, श्यामकृष्ण श्रेष्ठ आदि हुनुहुन्थ्यो । पारसमणि प्रधान चाहिँ भोलिपल्ट कविगोष्ठी भएको दिन आइपुग्नुभयो र त्यसै दिन दार्जीलिङ फर्कनुभयो ।

निर्धारित कार्यक्रमअनुसार वेदप्रसाद शिवाकोटी, सूर्य मैनाली, श्यामकृष्ण श्रेष्ठ, कामाक्षा, सावित्री र कमला श्रेष्ठहरूले गीत गाएर अतिथिहरूको स्वागत गरे ।

स्वागत कार्यक्रमपछि केही महिनाअघि मात्र जुन् महान् व्यक्तिसँग काठमाडौंमा भेट गर्ने अवसर पाएको थिएँ मेरा आराध्य उनै महापुरूष महाकवि लक्ष्मीप्रसाद देवकोटासँग भेट गर्न म छटपटाइरहेको थिएँ । सानै उमेरदेखि आफू अलि संकोची स्वभावको भए तापनि त्यसबेला मन थाम्नै नसकी आँट गरेरै गुरूजीसँग भेट गर्न पुगेँ । मेरो अभिवादनको प्रत्युत्तरमा स्वागतगानको टोलीमा उहाँले मलाई देखिसक्नुभएको जानकारी दिनुभयो ।

भोलिपल्ट विहानको खाना खाइसकेपछि कविगोष्ठीको शुभारम्भ भयो । सबै स्वनामधन्य कविहरूले आ-आफ्ना रचना पढेर सुनाउनुभयो । राष्ट्रिय स्तरको आयोजना भएकोले स्रोताहरू पर्याप्त सङ्ख्यामा उपस्थित हुनुहुन्थ्यो । एकातिर रचनाकार स्वयंको मुखारविन्दबाट कविताश्रवण गर्न पाउनु हामी सबैले अहोभाग्य सम्झेका थियौं भने अर्कोतिर सर्वप्रथम हाम्रो आफ्नै जिल्लामा यति ठूलो राष्ट्रिय स्तरको कविसम्मेलनको आयोजना भएकोले हामी सम्पूर्ण इलामवासी गौरवान्वित भएका थियौं ।

कविगोष्ठीको औपचारिक कार्यक्रमको समापनपछि र त्यहाँ उपस्थित कवि र साहित्यकारहरूको करफोकबाट प्रस्थान हुनुभन्दा एक दिनअघि खिचडीगोष्ठीको आयोजना भएको थियो । यो गोष्ठीमा कविता, कहानी, प्रहसन, संस्मरण जसलाई जे मन लाग्छ सुनाउने छुट थियो । यो खिचडीगोष्ठीको परिकल्पना भएको थियो स्वर्गीय महानन्द गुरूबाट । सबै कवि, साहित्यकार र विद्वान्हरूले आ-आफ्नो आसन ग्रहण गरिसक्नुभएको थियो । सहभागी सबै स्रोताहरू आइसक्नुभएपछि गोष्ठीको शुभारम्भ भयो । कविशिरोमणि लेखनाथ, कवि धरणीधर र अन्य कविहरूले आ-आफ्नो रचना सुनाइसक्नुभएपछि नाटककार बालकृष्ण समले नेपालीमा आफूले रचना गरेको हे अमृतजिह्वा भानु शीर्षक कविताको अङ्ग्रेजी अनुवाद Oh, nectar-tongued Bhanu ! अङ्ग्रेजी कवितावाचन गरेर सुनाउनुभयो । त्यसपछि उद्घोषकले अब महाकवि देवकोटाज्यूले पनि एउटा अङ्ग्रेजी कविता सुनाउनुहुनेछ भन्नेबित्तिकै स्रोतावर्गले ताली लगाए तर स्रोतावर्गको करतलध्वनि शान्त भएपछि महाकविले उठेर भन्नुभयो - खै, अङ्ग्रेजीमा लेखेको कविता त अहिले मसँग छैन, बरालजी, तपाईंले मेरो कुनै एउटा कविता सुनाउँदै गर्नुहोस् । अङ्ग्रेजीमा म २/४ stanza लेखेर ल्याउँछु भनी हलबाट बाहिर निस्कनुभयो । उता डा. ईश्वर बरालले देवकोटाको झञ्झावीर कविता सुनाउन थाल्नुभयो, यता गुरूजीले मलाई बोलाएर म भन्छु तपाईं लेख्नुहोस् भन्नुभयो । परेन के फसाद ! कहिलेकाहीँ अरूबाट पत्याइँदा पनि ठूलो फसादमा परिँदो रहेछ भन्ने मैले त्यसबेला अनुभव गरेँ । अङ्ग्रेजी भाषा लेख्नसम्म पनि प्रारम्भिक ज्ञान मात्र भएको ममाथि पहाडजत्रै बोझ आइपऱ्यो र पनि गुरूआज्ञा शिरोधार्य गरी कागज र कलम हातमा लिएर म तयार भएर बसेँ । गुरूजी भन्न थाल्नुभयो म जस्तो सक्थेँ लेख्दै गएँ । १५/१६ stanza लेखाउनुभएपछि लेखेको कागज हातमा लिई गुरूजी हलभित्र जानुभयो । म पनि स्रोताहरूको पङ्क्तिमा बस्न पुगेँ । मेरो मुटुको धड्कन झन्-झन् बढ्न लागेर गुरूजीको वचनको चड्कन पो चाखिने हो कि भनी गम्न थालेँ । किनभने लेख्न त परै जाओस् ! आफूले सुन्दै नसुनेका उहाँले लेखाउनुभएका अनेकौं अङ्ग्रेजी शब्दको हिज्जे अशुद्ध लेखेको छु भन्ने कुरामा मलाई शङ्कै थिएन । गुरूजीले कविता पढ्न सुरू गर्नुभयो । यो कविताावाचन निर्वाध रूपमा पूरा होस् भनी मचाहिँ मनमनै ईश्वरसँग प्रार्थना गर्दै थिएँ । नभन्दै मैले आशा गरेअनुरूप नै एक-दुई ठाउँ क्षणभर मात्र यस्सो अड्केजस्तो गर्नुभए पनि कविताावाचन कार्य पूरा भयो । जस्तो लेखिएको भए पनि लेखनको दायित्व सफल भएकोमा मलाई पनि खुसी लाग्नु स्वाभाविकै थियो । उक्त अङ्ग्रेजी कविता सुनाइसकेपछि स्टेजबाट ओर्लिएर नाटककार समतिर फर्केर देवकोटाले भन्नुभयो - 'सेक्सपियरका अगाडि मेरो के लाग्छ र !' क्षणभर पनि बिलम्ब नगरी प्रत्युत्तरमा समले भन्नुभयो - 'कहाँ मिल्टन ! कहाँ सेक्सपियर !' साहित्यका यी महारथीहरूका बीच कति मीठो छेडखानी !

कवि साहित्यकारहरूमा परस्पर व्यङ्ग्य गर्ने तरिका पनि निकै घतलाग्दो, श्रवणयोग्य र स्तरीय पनि हुँदो रहेछ । यसै सन्दर्भमा, अहिले मलाई बालज्याक र ड्युमसले एक-अर्कालाई व्यङ्ग्य गरेको प्रसङ्गको सम्झना आइरहेको छ । उनीहरू दुई जनाको भेट हुँदा उपन्यासकार बालज्याकले नाटककार अलेक्ज्यान्डर ड्युमसलाई व्यङ्ग्य गर्दै भनेछन् - मेरो प्रतिभाको अन्त भएपछि म नाटक पनि लेख्न सुरू गर्छु । नाटककार ड्युमसले तत्कालै फिर्ती व्यङ्ग्यवाण प्रहार गरिहालेछन् - त्यसो भए अब ढिलो गर्ने काम छैन, तुरून्तै नाटक लेख्न सुरू गरिहाल्नोस् !

मलाई सम्झना भएसम्म खिचडीगोष्ठी भएकै रात । टकटकाउँदो जून लागिरहेको थियो । जूनको स्निग्ध प्रकाशमा करफोक वरपरका पर्वशृङ्खलाहरूको मनोरम दृश्य हेरिरहूँ जस्तो थियो । राति १० बजिसकेको थियो ।

हामीहरू बिछ्यौनामा पल्टिएर कुन बेला निदाएछौं, पत्तै भएन । अकस्मात् गुरूजीले श्यामजी ! भनी बोलाउनुभएजस्तो लागेर जुरूक्कै उठैं । नभन्दै गुरूजी आउनुभएको रहेछ । ओहो ! यसबेला गुरूजी ... मैले वाक्य पूरा गर्न नपाउँदै उहाँले भन्नुभयो -'लौन, श्यामजी मादल खोज्नुहोस्, मलाई तामाङसेलो गाउन मन लाग्यो ।' मसँग सुतिरहेका साथी वेदप्रसाद शिवाकोटीले सूर्य मैनालीलाई चिमोटेर उठाए । एकैछिनपछि टुङटुङ पार्दै मैनालीले मादल ल्याइपुऱ्याउनुभयो । हामी सबैजना बाहिर चउरमा निस्क्यौं । मैनाली डम्फूको भाकामा मादल बजाउने, हामी ताल दिने र गुरूजीचाहिँ नाचूँनाचूँजस्तो मुद्रामा Willam Wordsworth को Solitary Reaper बाट निम्नोक्त श्लोक गाउन थाल्नुभयो:

*Behold her single in the field*
*You solitary highland lass*
*Reaping and singing by herself*
*stop here or gently pass.*

यसरी रातको नीरवतालाई मादल र गीतको आवाज सुनेर त्यहाँ वरपरका साथीहरू पनि चउरमा एकत्रित हुनुभयो र त्यसपछि गुरूजीले सबैका मन मुग्ध पार्ने किसिमले झयाउरे लयमा Don't you put on you silken fine blouse अङ्ग्रेजी गीत पनि गाउनुभयो । त्यसपछि हामी सबैजना सुत्यौं । भोलिपल्ट दिउँसो एघार बजेतिर हरियो प्राकृतिक गलैंचामा बसेर यही तामाङसेलो र झ्याउरे गीत गाएर गुरूजीले सबैलाई मुग्ध पार्नुभएको थियो ।

सम्मेलनमा उपस्थित विशिष्ट अतिथिहरूको रेखदेख गर्ने टोलीप्रमुख हुनुहुन्थ्यो श्री गङ्गानाथ बाँस्तोला । सो टोलीमा हामी दुई-तीन जना पनि सम्मिलित थियौं । आयोजकहरू सबैको एउटै ध्येय वा उद्देश्य थियो - सम्मेलन अवधिभर कहीँ कतैबाट कसैको पनि गुनासो सुन्नु नपरोस् । एकपटक अतिथिहरूमध्ये कसैलाई केही कुराको आवश्यकता होला कि भन्ने विचारले साँझपख हामी अतिथिकक्ष नजिकै यताउता घुमिरहेका थियौं । अकस्मात् कविशिरोमणिको चर्को स्वर हाम्रो कानमा पऱ्यो । त्यस्तो बेलामा कुरो सुन्ने र बुझ्ने उत्सुकता उत्पन्न हुनु स्वाभाविकै हो । हामी अघि सरेर ढोकैनेर उभिन पुग्यौं । कविशिरोमणि लेखनाथ र कविवर धरणीधरबीच परस्पर शब्दको तीर हानाहान भइरहेको रहेछ । उहाँहरूको वादविवाद के-कस्तो विषयमा आधारित थियो र कुन बेलादेखि सुरू भएको थियो, त्योचाहिँ हामीलाई जानकारी भएन तर हामी त्यहीँ उभिँदा-उभिँदै धरणीधरले भन्नुभएको हामीले प्रस्टै सुन्यौं - तँ _ (अश्लील दुई अक्षर)ले के नापिस् ? राणाहरूसँग डराएर तमाखु खाँदै बडो विलाप गरेर लेख्ने भइस् - बालक बबुरो द्विज शुकनामा हूँ म परेको छु पिँजडामा _ ।

कविशिरोमणिले झेंकिएर भन्नुभयो - तँ _ (काठमाडौंमा बाल-बृद्ध सबैमा बहुप्रचलित तीन अक्षर भएको अश्लील शब्द) ले पो के लछारिस् र ? विदेशमा बसेर स्वदेशी बन्धुलाई जगाउने नाटक गर्दै लेख्दो भइस् - जाग जाग अब जाग न जाग । अर्काको देशमा बसेर भुत्राको जाग न जाग ? तँ निर्भीक हुँदो होस् त काठमाडौंमा नै आएर कुर्लिन सक्नुपर्थ्यो नि । तर पछि उहाँहरू दुवैको स्वर मन्दगतिमा ओर्लिएपछि हामीलाई के कुराको विश्वास भयो भने यस्तो कुरो उहाँहरूको बीचमा विद्यमान आत्मीयता, सन्निकटता र प्रगाढ स्नेहको प्रतीक थियो ।

एकदिन दिउँसो त्यहीँ सम्मेलनस्थल नजिकै चउरमा गङ्गानाथजी, साथी वेदप्रकाश र म घुमिरहेका थियौं । त्यसै बेला पल्लो थुम्काबाट रामप्रसाद मानन्धर आफ्नो सानो छोरोलाई डोऱ्याउँदै हामी भएतिरै आउँदै गर्नुभएको देख्यौं । उहाँ हामीछेउ आइपुग्नुअघि नै उहाँसँगै सोध्ने प्रश्नको विषयमा सल्लाह भइसकेको थियो । अनि उहाँ आइपुग्नुभएपछि गङ्गाजीले शिष्टतापूर्वक सोध्नुभयो - सरले हाम्रो सानो जिज्ञासा पूरा गरिदिनुहुन्थ्यो कि ?

मन्द मुस्कानका साथ उहाँले भन्नुभयो - भन्नोस् न । गङ्गाजीले भन्नुभयो - सरले पटना विश्वविद्यालयबाट म्याट्रिकदेखि एमएसम्मै प्रथम श्रेणीमा सर्वप्रथम भई स्वर्णपदक प्राप्त गरेर नेपाल र नेपालीको इज्जत राख्नुभएको कुरा हामीले सुनिसकेका छौं । यस विषयमा जानकारी गराइदिनुभए हामीलाई र अरू विद्यार्थीहरूलाई पनि ठूलो प्रेरणा प्राप्त हुने थियो ।

मीठो र मन्द स्वरमा उहाँले भन्नुभयो -'हेर्नुहोस्, विश्वविद्यालयबाट स्वीकृत पाठ्यपुस्तक चाहिँ दिनमा दुई घन्टादेखि बढी मैले कहिल्यै पनि पढिनँ । हरेक दिन विश्वविद्यालयकै अध्ययनकक्षमा बसेर पत्रपत्रिका र आफूलाई मनपर्ने अरू पुस्तकहरू पढ्थैं । बिहान-बेलुकी एक घन्टाजति नियमित रूपले ब्याडमिन्टन खेल्थ्यौं । सामान्य दिनचर्या त यत्तिकै हो । तपाईं-हामीले हेक्का राख्नुपर्ने मुख्य कुराचाहिँ के हो भने पाठ्यपुस्तक या अरू जुनसुकै पुस्तक पढ्दा पनि हामीले ती पुस्तकहरूमा वर्णित विषयवस्तुमा हाम्रो ध्यान एकत्रित गर्न सक्नुपर्छ । त्यसपछि दोस्रो महत्वपूर्ण कुरा के हो भने हामीले के-कति पढेका छौं त्यसको लिखित रूपमा स्वपरीक्षण गर्ने अभ्यास गर्नुपर्छ किनभने हामीले पुस्तक पढ्न जतिसुकै मेहनत गरे पनि

परीक्षकले अन्तमा हाम्रो लिखित उत्तरकापी नै हेर्दछन् साथै हामीले निरन्तर यस्तो अभ्यास गर्‍यौं भने हाम्रो स्मरणशक्ति पनि बढ्दै जान्छ ।'

अनि प्रत्येक परीक्षामा सर्वप्रथम भई उत्तीर्ण हुनुभएपछि पटना विश्वविद्यालयका उपकुलपति लगायतले तपाईं यही प्राध्यापक भएर काम गर्नुहोस् भनी मौका दिएका थिए तर सरले स्वीकार गर्नुभएन रे ! भन्ने हामीले सुनेका थियौं । गङ्गाजीको जिज्ञासाको उत्तरमा उहाँले भन्नुभयो -'हो, मलाई त्यहीँ काम गर्न उनीहरूले आग्रह गरेका थिए तर आफ्नै समाज र देशको सेवा गर्ने आन्तरिक इच्छा भएकोले मैले उनीहरूको आग्रह अस्वीकार गरेको थिएँ ।'

यहाँ ज्ञातव्य के छ भने प्रश्नकर्ता गङ्गाजी स्वयं पनि एक मेधावी (Brilliant) छात्र हुनुहुन्थ्यो । एकदिन बिहान स्वल्पाहारको कार्यक्रम सकिएपछि सम्मेलन परिसरभित्रै यताउता घुमिरहेका थियौं । घुम्दाघुम्दै हामी कविज्यूहरूको शयनकक्षनेर पुग्यौं । कोठामा कविशिरोमणि लेखनाथ, नाटककार बालकृष्ण सम, महाकवि लक्ष्मीप्रसाद देवकोटा र अरू ६/७ जना अटाई नअटाई बसिरहेको देख्यौं । हामी पनि (वेदप्रसाद शिवाकोटी, सूर्य मैनाली र म) एक छेउमा घुस्रेर बस्यौं । कविज्यूहरूका बीच तर्क-वितर्क भइरहेको थियो । वादविवादको क्रममा हामीलाई थाहा भयो - ज्ञान र विज्ञानको विषयमा बहस भइरहेको रहेछ । ज्ञानको पक्षमा कविशिरोमणि र बालकृष्ण सम अनि विज्ञानको पक्षमा महाकविलाई साथ दिइरहनुभएको रहेछ गङ्गानाथ बाँस्तोलाजीले । त्यहाँ उपस्थित हामी सबै स्रोताहरू यी निष्णात विद्वान्हरूका बीच भइरहेको बहस बडो अभिरूचिका साथ सुनिरहेका थियौं । वादविवाद कतिसम्म जीवन्त र जोसपूर्ण थियो भने त्यहाँ दुई घन्टाजति बिताएको हामीलाई पत्तै भएन । बहस लामो समयसम्म चलिरहेको थियो । मेरो स्मरणशक्तिले भ्याएसम्म बहसको केही अंश यहाँ प्रस्तुत गर्ने चेष्टा गरेको छु ।

महाकविको तर्क थियो - विज्ञानको विकासले गर्दा आज यो बृहत् संसार नै साँघुरिँदै गएको छ । वैज्ञानिकहरू यो भूमण्डलमा बसेर तारामण्डलको अध्ययनमा व्यस्त छन् । नक्षत्रविज्ञानको अध्ययन र अनुसन्धानको परिणामस्वरूप कतिपय तथ्यहरू संसारको सामुन्ने आइसकेका छन् । अब त मानव स्वयं नै एउटा वैज्ञानिक यन्त्रमा परिणत भइसकेको छ ।

कविशिरोमणिद्वारा प्रस्तुत तर्कचाहिँ नाकमुनि मुख भनेझैं सोझै आध्यात्मिक ज्ञानको परिधिभित्र मात्र परिसीमित थियो भने समद्वारा अभिव्यक्त तर्कचाहिँ ज्ञानको विविध पक्षको रहस्योद्घाटन गर्ने किसिमको युक्तियुक्त र तर्कसङ्गत भएकोले हामी स्रोताहरूका लागि बडो विश्वसनीय, प्रामाणिक र सत्यको सन्निकट भएजस्तो प्रतीत हुन्थ्यो ।

वादविवादकै क्रममा गङ्गाजीले कविशिरोमणितिर फर्केर विज्ञानको पक्षमा आफ्नो विचार व्यक्त गर्नुभयो - यान्त्रिक प्रविधिको विकासको फलस्वरूप नै तपाईं-हामी गाडी चढेर यहाँ यो करफोकको डाँडामा एकत्रित भएका छौं । विज्ञानकै विकासले गर्दा आज संसारको दूरी धेरै कम भएको छ । एकैछिन त्यो कोठाभरि सन्नाटा छायो । गङ्गाजीद्वारा व्यक्त विचारको प्रभाव परेर हो कि कविशिरोमणिको मुखाकृति रक्तिम हुँदै गएको हामीले प्रस्टै देखिरहेका थियौं । एक्कासि आफ्नो विस्फारित नेत्रले बाँस्तोलाजीलाई हेर्दै कविशिरोमणि पड्किनुभयो -'बढ्ता भएर कुरा नगर । तिम्रा बाबु-आमा यज्ञकुण्डमा होमिएकाले नै तिमीले आज यो संसार देख्न पाएका छौ । हिजोअस्तिको चल्लो तिमीलाई ज्ञानका विषयमा केही पनि थाहा छैन ।' दाह्री सुम्सुम्याउँदै अझ कड्केर भन्नुभयो -'तिमीजस्ता ठिटाले ज्ञानका गहनतम विषयमा कुरा गर्नै सुहाउँदैन ।' उहाँका दुवै आँखाबाट आगाका फिलुङ्गाहरू उछिट्टिरहेजस्ता लाग्यो । उहाँको शरीरभित्र केही क्षणका लागि दुर्वासा नै प्रविष्ट भए कि जस्तो पनि लाग्यो मलाई ।

कविशिरोमणि झोँक्किनुभएपछि त्यहाँ उपस्थित हामी सबै दर्शक स्रोताहरू चुप लाग्यौं । सम र महाकवि पनि चुपचाप बसिरहनुभएको थियो । बाँस्तोलाजी जुरूक्क उठेर बाहिर निस्कनुभयो । बहस बीचैमा बन्द भयो ।

संस्मरणकै सन्दर्भमा एउटा घटना । घटना पनि कस्तो भने सम्झेर पनि सम्झिनसक्नु, बिर्सेर पनि बिर्सिनसक्नु । राति साढे दस बजिसकेको थियो । हामी ४/५ जना हाम्रो सुत्ने हलको बाहिर बरन्डामा बसेर भूतप्रेतका विषयमा कुरा गरिरहेका थियौं । भूतप्रेम या तर्साउनेका विषयमा कुरा भइरहेको बेला हामीमध्ये कसैलाई पनि निद्रा लागेको थिएन । यस्तैमा अलि परबाट दुईजना हामी भएतिरै लम्किँदै आइरहेका देख्यौं । उनीहरू नजिकै आइपुगेपछि हामीले ठम्यायौं - गङ्गानाथ बाँस्तोला र सम्मेलनको अवधिभर त्यहीँ काम गर्न राखेको एउटा केटो । पेटीमा टेक्नेबित्तिकै आत्तिएजस्तो गरेर बाँस्तोलाजीले भन्नुभयो - 'होइन ए श्यामजी, गुरूजी यतातिर आउनुभएन ?'

मैले भनैं -'खै यता त आउनुभएको छैन त ।'

उहाँले झन् हतास भएर भन्नुभयो -'उहाँ आफ्नो

कोठामा पनि हुनुहुन्न । कहिलेकाहीँ तपाईंलाई खोज्दै यतातिर आउनुहुन्थ्यो । मैले त यतै आउनुभयो होला भन्ठानेको थिएँ ।' त्यसपछि पो म पनि झस्कैँ अनि शिवाकोटीजीसमेत हामी सबैजना त्यहाँबाट सरासर गुरूजी सुत्नुहुने कोठातिर गएर हेर्‍यौं । खाटमा दरी मात्र छ । सिरक-डसना छैन । कविशिरोमणि र समज्यूचाहिँ आ-आफ्नो खाटमा सुतिसक्नुभएको रहेछ । समचाहिँ भित्तातिर फर्केर सुत्नुभएकोले उहाँ निदाउनु भए-नभएको हामीले छुट्याउन सकेनौं, कविशिरोमणिचाहिँ सुतिसक्नुभएको रहेछ । गङ्गाजी र हामी झन् छटपटाउन थाल्यौं । एकैछिनपछि कसो-कसो गङ्गाजीले गुरूजी सुत्नुहुने खाटमुन्तिर पुलुक्क हेर्नुभएछ र चकित भएर उहाँले भन्नुभयो -'हेर्नुहोस् त गुरूजीको चाला !' हामी सबैजना आश्चर्यचकित भयौं - खाटमुनिको नाङ्गो भुइँमा लमतन्न परेर सुतिरहनुभएका हाम्रा महाकविलाई देखेर । यसो केही सम्झेजस्तो गरेर बाँस्तोलाजीले त्यहीँ नजिकैको अर्को खाटमा बिछ्याइएको डसना हातले यसो छाम्नुभयो र हामीतिर फर्केर भन्नुभयो - डसना यतातिर खप्टिएको रहेछ । अघि साँझपख मलाई एक जना साथीले त भन्दै हुनुहुन्थ्यो ... ले हाम्रो खान्दानमा कसैले पनि एउटा डसनामा सुत्ने गरेको छैन भन्नुभयो । त्यसपछि उहाँले गुरूजीलाई घच्घच्याएर उठाउनुभयो र भन्नुभयो - त्यस्तो चिसो भुइँमा किन सुत्नुभएको ? गुरूजीले डसना र सिरकसमेत नभएको खाली खाटतिर औंल्याउँदै त्यहाँ सुत्नु र त्यसमन्दिरमा सुत्नु के फरक छ र ? भन्नुभएपछि शिवाकोटीजीले हाम्रो कोठाबाट डसना र सिरक ल्याएपछि हामी सबैले खाटमा बिछ्याइदिनेबित्तिकै ल बा, धन्यवाद भन्दै बिछ्यौनामा बस्नुभयो र एकैछिनपछि के सुर चढेर हो कुन्नि निकै कड्केर भन्नुभयो - हेर्नुहोस्, अरूको शोषण गर्न पल्केकाहरूले आफ्नो बेहोरा कहिल्यै पनि सुधार्न सक्दैनन् । फेरि त्यो कोठाभरि प्रतिध्वनित हुने गरी झन् कड्केर भन्नुभयो - बुझ्नुभयो, त्यो ... (किताब) मैले नै लेखेको हुँ ।

बाँस्तोलाजीले गुरूजीलाई थुम्थुम्याउँदै सुत्न अनुरोध गर्नुभयो । गुरूजी बिछ्यौनामा पल्टिनुभयो र हामी पनि आ-आफ्ना कोठातिर लाग्यौं । गुरूजीले जुन किताबको नाम लिनुभयो त्यस विषयमा यहाँ उल्लेख नगर्नु उपयुक्त ठान्दछु ।

अन्त्यमा, एउटा रोचक प्रसङ्ग । सम्मेलनका प्रमुख आयोजक श्री नरेन्द्रनाथ बाँस्तोला र श्री तारा श्रेष्ठहरूले महाकवि लक्ष्मीप्रसाद देवकोटा र नाटककार बालकृष्ण समलाई दार्जीलिङबाट पशुपतिनगर लिएर आइपुग्नुभएको थियो । त्यसबेला पशुपतिनगरमा हिजोआजको जस्तो बाक्लो बस्ती र ठूला-ठूला भवनहरू बनेका थिएनन् । स-साना तर दार्जीलिङ्गे पाराकै १०/१५ वटा चिटिक्क परेका दोकानहरू थिए । त्यहाँ आइपुग्नुभएपछि उहाँहरू पिसाब गर्न कुनाकाप्चातिर लाग्नुभएछ । समज्यूलाई चाहिँ निकै भोक लागेकोले त्यहीँ नजिकै एउटा दोकानमा गएर त्यहाँ बसिरहेकी स्वास्नीमानिसलाई सोध्नुभएछ - यहाँ खाजा पाइन्छ ?

पाइन्छ, बस्नोस् न ! भन्ने उत्तर सुनेर उहाँ बेन्चमा बस्नुभएछ । स्वास्नीमानिसले सिसाको गिलास ल्याएर अघिल्तिर टेबलमा राखिदिइछिन् । खाजा खानुअघि हात धुने पानी राखिदिएको होला भन्ठानेर समज्यूले गिलास समातेर हातमा खन्याउन खोज्दा पो ह्वास्स गन्ध आएछ र बडो सहज ढङ्गले यो अहिले त्यतैतिर राखिदिनोस्, मेरो साथी पनि आउँछ भन्नुभएछ । स्वास्नीमानिसले गिलास उठाएर अलमारीमा राखेकी मात्र के थिई, देवकोटाजी टुप्लुक्क आएर समजीसँग बस्नुभएछ । अनि समजीले भन्नुभएछ -'मेरो साथी पनि आइपुग्नुभयो, अघिको खाजा दुई ठाउँमा ल्याइदिनोस् ।' स्वास्नीमानिसले दुईवटा पारदर्शी सिसाको गिलासमा टन्नै भरी-भरी हालेर दुई जनाको अघिल्तिर राखेर नमस्ते गरिछन् (त्यस भेगतिर ग्राहक वा पाहुनालाई चियाखाजा दिएपछि नमस्ते गर्ने चलन छ) । समजीले त अघि यसको हरक पाइसकेकोले देवकोटाजीको प्रतिक्रिया बुझ्न पर्खिरहनुभएछ । त्यसपछि देवकोटाजीलाई पनि हात धुने पानी नै राखिदिए जस्तो गरेर गिलास समाउनुभएछ । अनि ङ्ङ्ग गन्हाएजस्तो लागेर गिलास त्यहीँ राखेर भन्नुभएछ -'ओहो ! यो त जाँडरक्सी जस्तो पो छ, म त बाहुनको छोरो ... ।' दाह्री सुम्सुम्याउँदै समजी मुसुमुसु हाँस्नुभएछ । ठीक त्यसै बेला नरेन्द्र दाइहरू पनि त्यहीँ आइपुग्नुभएछ । दुई महारथीहरूको अघिल्तिर धमिलो पानीसहितका एक-एक वटा गिलास, फेरि दुवै जना एक-अर्कालाई हेर्दै मुसुमुसु हाँसिरहनुभएको परिदृश्य देखेर उहाँहरू पनि चकित हुनुभएछ तर केही क्षणपछि नै असली कुरा बुझेर सबैजना खित्का छोडेर हाँस्नुभएछ । पछि नरेन्द्र दाइले यतातिर रक्सीलाई खाजा भन्ने चलन छ भनी कविज्यूहरूलाई अर्थ्याइदिनुभएछ ।

यसप्रकार नेपाल अधिराज्यमै सर्वप्रथम आयोजना भएको यो ऐतिहासिक राष्ट्रिय कविगोष्ठी सफलतापूर्वक सम्पन्न भएकोमा हामी इलामेहरू त यसै पनि प्रसन्न र गौरवान्वित छँदै थियौं, उक्त गोष्ठीमा भाग लिनुहुने हाम्रा सबै श्रद्धेय अतिथिहरू पनि हामीसँग माया साटासाट गर्दै इलामको मीठो सम्झना लिएर फर्कनुभएको थियो । ❑

# हास्यव्यङ्ग्यलाई जाँच्ने कसी के ?

हास्यव्यङ्ग्य प्रस्तुत गर्दा समसामयिक विषयलाई प्राथमिकता दिन खोज्ने प्रकृतिलाई प्रशंसनीय नै मान्नुपर्छ । पुरानै कुरा झिकेर हँसाउने वा छेडपेच हान्न खोजे पनि सकभर नयाँ अवस्थालाई समेत सुहाउने किसिमबाट त्यसो गर्न खोज्नु बढी बेस हुन्छ । तर व्यङ्ग्यको झटारोले हिर्काउँदा कुन कुनामा कसलाई कतिसम्म दुख्ने गरी किन हान्नुपरेको हो भन्नेबारेचाहिँ पूरापूर प्रस्ट रहनुपर्छ । हिर्काउन पाइयो भन्दैमा जसलाई पनि, जुनसुकै विषयमा पनि, जति सारोसँग लाग्ने भए पनि हिर्काएको हिर्कायै गर्ने हो भने त सफल व्यङ्ग्यकार भन्ने पगरी गुत्न कहाँ पाइएला र ?

साहित्यको अरू रसमा जस्तै हास्यरसका रचनाहरूमा पनि स्तरीयता खोज्नु सह्राहनीय नै कुरा हो । तर स्तरीयताको माग गर्दा केवल उच्चस्तरका सिर्जनाहरू खोज्ने हो भने हास्यरसको पोखरीमा पौडेर रमाउन चाहने धेरै ठूलो सङ्ख्यालाई चाहिँ भुसुक्कै बिर्सन पुगेको पत्तै पाइँदैन । हास्यव्यङ्ग्य मन पराउनेहरूमध्ये उच्च, मध्यम र निम्न गरी मोटामोटी रूपबाट तीनै तहका पाठक, श्रोता तथा दर्शकहरू पर्ने भएकाले नै हामीले ती सबैको स्तरलाई सुहाउने किसिमका थरीथरीका रचनाहरू रच्न खोज्नुपर्ला कि नपर्ला ?



श्यामप्रसाद शर्मा
जन्म : वि.सं. १९८६ असार ६
सोलिथुम, मकवानपुर
अवसान : वि.सं. २०७४ वैशाख २४

एकथरी भाषामा पाइने हास्यव्यङ्ग्यका कृतिलाई अर्कोथरी भाषामा समेत दिने कोसिस पनि हामीले किन नगर्ने ? यसो गरेको खण्डमा एउटै भाषाको माध्यमबाट समेत अनेकथरी भाषाको साहित्यमा भएका हास्यव्यङ्ग्यहरूको स्वाद चाख्न पाइने परिस्थिति पनि त तयार हुँदै जान पाउला नि !

हास्यव्यङ्ग्यका विविध रचनाहरूको हँसाउने मात्रा पनि फरक–फरक हुनैपर्छ । कुनै रचनाले हामीलाई मुसुमुसु वा मुसुक्क मात्र हँसाए पुग्छ भने कुनैले चाहिँ ओठ फट्याएर र खित्का छाडेरै हँसाउन सक्नुपर्छ । अझ कुनै–कुनैले चाहिँ पेट मिचिमिची लडीबुडी गर्दै हाँस्नुपर्ने र धेरै बेरसम्म हाँसो थाम्नै नसकिने अवस्थामा पुऱ्याइदिन सक्छन् भने त्यस्तो शिल्पका ठूला धनी शिल्पकारहरूलाई पनि हामी हार्दिकतासाथ स्थायी निम्तापत्र टक्र्याइराख्न चाहन्छौँ ।

हास्यव्यङ्ग्यको मूल लक्ष्य कुप्रथा वा बेथितिमाथि प्रहार गर्नु हो भन्ने भावनालाई पच्चीसै आना अथवा शतप्रतिशत मनासिब हो भनी हामी आँखा चिम्लेर भए पनि ल्याप्चे लाउन वा सहीछाप गरिदिन सक्छौँ । तर 'कु' र 'सु' को परिभाषा के त ? यो नै आजको हाम्रो प्रमुख प्रश्न हो । तपसिलका प्रश्नहरूमा गहिरिएर विचार गरिहेरौँ –

जनतालाई राजनीतिप्रति आकर्षित पार्दै लैजाने कि विरक्त बनाउँदै ? राजनीति भनेको मुख्यतः असल र राम्रो कामका निम्ति हो वा कमसल र खराब

कार्यका निम्ति ? राजनीतिक पार्टीहरू र दलीय व्यवस्थाप्रति जनतामा आस्था जगाइराख्न खोज्नुपर्छ अथवा अनास्था बढाइदिनुपर्छ ? जनतालाई राम्ररी डोऱ्याउन राजनीतिक सङ्गठनहरू पनि चाहिन्छन् भने नेताहरू पनि चाहिएलान् कि नचाहिएलान् ? पार्टी र नेताहरूबाट बेलाबखत हुन जाने गल्ती तथा कमजोरीहरूतर्फ मात्र ध्यान तानिदिने गर्ने कि नेताहरूलाई गाली गर्ने चलनै चलाउँदै जाने ? सबै जातजाति, सबै धर्म र भाषा, मुलुकका विभिन्न भाग, महिला र पुरूष, सबै उमेरकाहरू, शिक्षित र अशिक्षित, स्वदेशी र विदेशी – इत्यादि सबैप्रति समानता, स्नेह र आदरको भावना लिएर व्यवहार गर्न खोज्नुपर्छ कि तीमध्ये कुनैलाई ठूला र कुनैलाई साना ठानी असमानतापूर्ण व्यवहार नै गर्ने गर्नुपर्छ ? नास्तिकले आस्तिकलाई होच्याउन र आस्तिकले नास्तिकलाई सराप्न हुन्छ कि हुँदैन ?

ख्यालठट्टा र रमाइलो गर्दा केको शिष्टता र सभ्यताको कुरा ? भन्ने मत लिन होला कि नहोला ? आफ्नो राष्ट्र वा नेपाललाई नै होच्याउने, हेला गर्न पुगिने खालको हास्यव्यङ्ग्य प्रदर्शन गर्न हुन्छ हुँदैन ? आफ्नो मुलुकलाई आकाशमा पुऱ्याएर बयान गरेजस्तै अरूका देशलाई पातालमा खसालेर वर्णन गर्न हुन्छ कि हुँदैन ? जनतापट्टिकाहरूमा बेलाबखत देखापर्ने गरेका फाटोलाई झन्झन् चर्काइदिने गर्नुपर्ला वा घटाइदिन खोज्नु नै सही ठहरिएला ? जनतामा निराशाको भावना बढाउनुपर्छ कि तिनलाई सधैँ आशावादी र हरेस नखाने खालको राख्न बल गर्नुपर्छ ? अश्लीलतापूर्ण अभिव्यक्तिहरूलाई के-कस्तो प्रसङ्गमा कति सीमासम्म स्वतन्त्रता र छुट दिने गर्दा गल्ती हुन नपाउला ? जनतामा पाइने अन्धविश्वासको मात्रा थपिदिने रचना सही हुन्छन् कि त्यसलाई घटाउँदै लैजाने खालका ? यस्ता प्रश्नहरूको अरू धेरै लामो सूची सजिलैसँग बनाउन सकिन्छ ।

त्यसैले आज अरू सबैजसो विषयमा जस्तै हास्यव्यङ्ग्यपट्टि पनि प्रजातान्त्रिकता र वैज्ञानिकतालाई नै हामीले मुख्य कसी मानेर सामग्रीहरू वा प्रस्तुतिहरूको विश्लेषण र मूल्यांकन गर्ने गर्नुपर्छ । प्रजातन्त्र र विज्ञानको विपरीत जाने कुराजति जम्मै गलत हुन् र यिनको पक्षमा भएका बुँदा जति सबै सही हुन् । यी दुई जरो कुरालाई राम्ररी गाँसेर चल्ने प्रयत्न बढाऔँ । अनि मात्र हास्यरसबाट पनि आनन्द प्राप्त हुन्छ । ❑

# पहिलो नेपाली साहित्यिक पत्रिका 'सुधासागर'



शिव रेग्मी
जन्म : वि.सं. १९९८ असोज १
ठमेल, काठमाडौं
अवसान : वि.सं. २०७५ फागुन ८

नेपाली साहित्यिक पत्रपत्रिकाको इतिहासमा राजधानी काठमाडौंबाट प्रकाशित भएको पहिलो साहित्यिक पत्रिका **सुधासागर** हो । तर यो साहित्यिक पत्रिका आजसम्म देख्न वा फेला पार्न नसकिएकोले कसैकसैले यसको अस्तित्वमा शङ्का पनि व्यक्त गर्ने गरेका छन् (हेर्नुहोस्, भगवतीप्रसाद श्रेष्ठ प्रधानमन्त्री देवशमशेर र गोरखापत्र, गोरखापत्र, २४ वैशाख, २०३३) । **सुधासागर** मासिक पत्रिका देख्नेहरूमा पनि यस पत्रिकाको ४/५ प्रति पशुपति प्रेसका धनी पं. नरदेव पाण्डेसँग लिएको थिएँ, घरमा थियो - ९० सालको भूकम्पमा कता पर्‍यो भन्ने एकमात्र व्यक्ति इतिहासशिरोमणि बाबुराम आचार्य (१९४४-२०२९) को भनाइ ग्रीष्मबहादुर देवकोटाले आफ्नो पुस्तक **नेपालको छापाखाना र पत्रपत्रिकाको इतिहास** (२०२४), पृ. ३० मा उल्लेख गरेका छन् । तर यो **सुधासागर** पत्रिका कहिले प्रकाशनमा आयो र यो मासिक, साप्ताहिक के हो भन्नेबारे भने भ्रम उत्पन्न भएको देखिन्छ । यस प्रसङ्गमा भाषाभक्त भट्टज्यू (मोतीराम-शिरे) र उहाँका सहपाठीहरूको प्रशंसनीय प्रयासको फलस्वरूप रामकृष्ण बर्माको सम्पादकत्वमा संवत् १९५० मा **नेपालीपत्र गोरखा** (गोर्खा -शिरे) भारत जीवन काशीबाट तथा भट्टज्यूकै प्रयासले **सुधासागर** (१९५५) नामक साप्ताहिक पत्रिका पशुपति छापाखाना काठमाडौंबाट पण्डित नरदेव मोतीकृष्ण तथा कपिलदेवको परिश्रमले निस्कन लाग्यो (पत्रकारिता (२०२७) रामराज, पौडेल, पृ. २८) लेखेर एकातिर **सुधासागर**लाई साप्ताहिक भन्ने भ्रम सिर्जना गरिदिएको देखिन्छ भने अर्कोतिर बाबुराम आचार्यले पनि यसको प्रकाशन सालबारे भ्रम उत्पन्न गराएका छन् ।

इतिहासशिरोमणिका अनुसार भट्टजीले जो कविगोष्ठी तयार गरेका थिए, त्यसमा माथि भनिएका चारजनाबाहेक अरू सज्जनहरू पनि आएर काम गर्दथे । यिनीहरूमा भट्टजीको भन्दा पछिल्लो स्थान राजीवलोचन जोशीको देखिन्छ । यिनले बनाएको केदारकल्प पाशुपत छापाखानाबाटै प्रकाशित भएको थियो, यस समयमा पहिलो दर्जाको कविता देखिन्थ्यो । गोपीनाथ लोहनी र लक्ष्मीदत्त पन्तका कविता पनि अलिअलि गरी यसै छापाखानाबाट प्रकाशित हुन्थे । यी फुटकर कविता प्रकाशित गर्न एक सानो सामयिक पत्रिका पनि निक्लने गरेको थियो । समय नियमित थिएन, दुईचार महिना बिलाएर निस्कन्थ्यो । सायद दस-आठ अङ्क निस्केका थिए । पछिल्ला अङ्कमा राजीवलोचन जोशीले लेखेको पतञ्जलिका बालगोपालवाणीको रूपान्तरण प्रकाशित भएको थियो । त्यसै अङ्कमा सर्वश्री वीरशमशेर, देवशमशेर र भीमशमशेरका बयानका केही पद्य लेखिएका थिए । भीमशमेरलाई प्रसङ्ग मिलाएर मल्लाहसँग तुलना

गरिएको थियो । गीतामहात्म्यमा कृष्णजीलाई मल्लाहसँग तुलना गरिएको हुनाले कविले भीमशमशेरलाई मल्लाहसँग तुलना गर्न अनुचित ठानेका थिएनन् । परन्तु छोटा जातसँग तुलना गरेको देखेर मुद्दा चर्क्यो । त्यस पत्रिकाका केही अङ्क श्री ५ सरकारको राजभवनमा भेट्टिंदा यो कविगोष्ठी राणा-सरकारको आँखाको कसिङ्गर भएर टुट्यो ।

यो कविगोष्ठी टुटेपछि भट्टजीले भानुभक्तका काव्य र कविताउपर उजुर लगाउनका निमित्त १८९१ मा कवि भानुभक्तको जीवनचरित्र लेखेर काशीमा छपाए (कविवर मोतीराम भट्ट र उनको साहित्यसेवा, प्रगति, पूर्णाङ्क ७, वर्ष २, अङ्क १, २०११ वैशाख-जेठ पृ. ४३) ।

उता **पुराना कवि र कविता** पुस्तकमा इतिहासशिरोमणि बाबुराम आचार्यले बालगोपाल वाणी राजीवलोचन जोशीले रूपान्तरण गरेको **सुधासागर** नामक पत्रिकामा प्रकाशित मुखपृष्ठ हराएकोले यस सालको पत्रिका भन्ने थाहा भएन । तर यसमा मोतीराम भट्टको लेख पनि हुनाले वि.सं. १९५३ भन्दा अधिको हो (पृ. २६५, २०१७ साल) भन्ने कुरा लेखेर थप भ्रम सिर्जना गरेका छन् ।

इतिहासशिरोमणि बाबुराम आचार्यको माथिको पहिलो उद्धरणमा स्पष्ट रूपमा **सुधासागर** नभने पनि सामयिक पत्रिका भनिएको छ र त्यो नियमित नभए पनि ८/१० अङ्क निक्लेको हो भन्ने उल्लेख छ । तर त्यो पत्रिका कवि भानुभक्तको **जीवन-चरित्र** (१९४८ साल) अगाडि नै निक्लेको थियो भन्ने बुझिन्छ । दोस्रो उद्धरणअनुसार बालगोपालवाणीको रूपान्तरण छापिएको **सुधासागर**को मुखपृष्ठ नभएकोले यसै सालको भन्न नसकिने भए पनि त्यसमा मोतीराम भट्टको रचना पनि छापिएकोले त्यो पत्रिका १९५३ भन्दा माथिको हो भन्ने इतिहासशिरोमणिको लेखाइ देखिन्छ । तर **सुधासागर** वास्तवमा निक्लेको साल आजसम्मको खोजअनुसार १९५५ साल नै हो ।

नलोपाख्यान उपन्यासको भित्री आवरणपृष्ठमा छापिएको विज्ञापनअनुसार यो बडो खुशीको बात भयाको छ कि हाम्रो गोर्खा भाषामा पनि ५५ सालका श्रावण मैना देखीन सुधासागर भन्या मासीकपत्र निस्क्याको छ, जसमा अनेक तरहका बिघ्न आनन्द दिन्या श्लोक-कथाहरू समेत हाली प्रकाश हुन्छ । यसमा हाम्रो गोर्खाली सज्जन महाशयहरूले आफ्नो देश आफ्नो भाषाको उन्नतिका निमित्त अवस्य दयादृष्टि गर्नु हुन्येछ । मदिसेहरूका हज्जारौं पत्र निस्कन्छन् तापनि एक २ अखबार दस हजार बार हजार ग्राहक छन् भन्या हाम्रो गोर्खामा फगत एक मात्र छ भनै यसमा ता सबै हाम्रा स्वदेशीय महाशयहरू सबैले जाबो कमपनि १॥ रूपैया मात्र देशोन्नति भाषाको उन्नती गर्नाका निमित्त ग्राहक श्रेणीमा अवश्य नाम लेखाउनु पर्छ किन भन्यो यो मासिकपत्र तपाईहरूबाट मद्दत नगर्दिनाले कथं कदाचित बन्द भयो ग्राहक कम भया भन्या मेटे मात्र नोकसान पार्न्या होदैन की तपाईहरूलाई पनि केही सरम हुन जाला । विदेशी पनि यही भन्नन कि नेपालबाट एक मासिकपत्र निस्क्याको थियो सो पनि ग्राहक कम हुनाले बन्द भयो । गोर्खालीहरू वर्ष दिनेको जाबो १॥ रू. दिनलाई पनि गाहारो मान्या रह्या छन् तस्मात हे स्वदेशीय बुद्धिवन्त महाशयहरू यो कुरा सबै विचार गर्नुहवस् यस फगत एक्लो अनाथ सुधासागरका उपर दया राखी आफ्ना देशभाषाका उन्नति गर्नु हवस । तपाईंहरूको सदव हित चिताउन्या मैनेजर पाशुपत प्रेस, ठँहिटी आढत, नेपाल ।

१९५५ सालको साउन महिनादेखि प्रकाशित भएको **सुधासागर** उपर्युक्त विज्ञापनले त्योभन्दा अगाडि निक्लेको थियो भन्न मिल्ला र ? **सुधासागर** बाबुराम आचार्यले भनेअनुसार ८/१० अङ्क ननिक्ले पनि ४/५ अङ्क उहाँ स्वयंले आफ्नो घरमा लगेर राखेकोले पनि कम्तीमा त्यति त निक्लेको थियो भन्ने तथ्य प्रमाणित हुन्छ ।

१९५६ सालमा **श्लोकसङ्ग्रह** (गोर्खाभाषा) नरदेव मोतीकृष्ण शर्माका आज्ञानुसार निज यन्त्रालयमा मैनेजर बलदेव दासले रसिकजनहरूलाई खुश गर्नाका निमित्त अत्यन्त परिश्रमले छापी प्रकाश गरियो भनी निकालिएको पुस्तकमा १७ जना माध्यमिककालीन ज्ञात-अज्ञात कविहरूका भाषाश्लोकहरू छन् । प्रस्तुत **श्लोकसङ्ग्रह** (प्रथम भाग) हो जसमा तपाजीहरूको भाषाश्लोकमा अत्यन्त प्रीति देखी यो **श्लोकसङ्ग्रह** भन्या पुस्तक (प्रथम भाग) जसमा ठूला २ कवीहरूले बनायाका रसदर्शन, समस्यापूर्ती, नेपाल सरकारको वर्णन, नेपालको देवता र पशुपतिनाथको वर्णन इत्यादि गर्‍याको कविताहरू बहुतै परिश्रमले सङ्ग्रह गरी छापियो । यस ग्रन्थको चाह गर्‍या पछि तपाजीहरूका निमित्त अरू भाग पनी छापने छौं भनिए पनि अर्को श्लोकसङ्ग्रह भने छापिएको देखिंदैन ।

यसो हेर्दा प्रस्तुत **श्लोकसङ्ग्रह** सुधासागर मासिक पत्रमा छापिएका श्लोकहरूको सङ्कलन हो । यसको प्रमाणस्वरूप यस सङ्ग्रहको पहिलो पृष्ठमा छापिएको श्रीगणेशको चित्रमुन्तिर प्रकाशित **सुधासागर** शब्दलाई

औंल्याउन सकिन्छ । यहाँनिर यो **सुधासागर** शब्द अनावश्यक रूपमा राखिएको अनुभव हुन्छ । यसै गरी नलोपाख्यान उपन्यासमा छापिएको **सुधासागर**को विज्ञापनको भाषा र श्लोकसङ्ग्रहको समर्पणको भाषा एउटै भएकोले पनि **सुधासागर** मासिक पत्रिकामा छापिएका श्लोकहरू नै श्लोकसङ्ग्रह हो । बाबुराम आचार्यले माथि उल्लिखित प्रगतिमा उल्लेख गरेअनुसार भीमशमशेरलाई मल्लाहसँग तुलना गरेको कविता श्लोकसङ्ग्रह पृष्ठ ४ मा प्रकाशित छ । राजीवलोचन जोशीको प्रस्तुत कविता यस्तो छ :

*वादि गंभिर प्रत्यवादि जलमा गँहा कछुवा तहाँ ।*
*पर्माण पत्थर मच्छि छन् झगडिया झेल्को छ झ्याउ वहाँ ॥*
*डिट्ठा बल्छि विचारी जाल घुसको डोरी अइन्को जहाज ।*
*भीमसंसेर्मलहा निया नदी सहज तार्न्या उनै येक आज ॥*

राजीवलोचन जोशीले उक्त श्लोकमा श्री ५ पृथ्वीवीरविक्रम शाहका साथै तत्कालीन प्रधानमन्त्री वीरशमशेर, देवशमशेर, चन्द्रशमशेर, भीमशमशेर, फत्यशमशेर, जीतशमशेर र धर्माधिकारी कुवलयराज पाण्डे समेतको वर्णन गरेका छन् ।

निष्कर्षमा के भन्न सकिन्छ भने वास्तवमा **सुधासागर** मासिक पत्रिका धेरथोर अङ्क ननिक्लेको होइन, निक्लेकै थियो । समयको अन्तरालमा त्यतिबेला १००।२०० प्रति पनि ननिक्लेका ती पत्रिका हराउनु कुनै अस्वाभाविक कुरा होइन । पछि श्लोकसङ्ग्रहका रूपमा छापिएको हजारप्रति पुस्तक त आज कतै-कतै मात्र फेला पर्दछ भने पत्रिकाको अस्तित्व भेट्न मुस्किलको कुरा भएको छ । ❑

# हार्दिक बधाई

नेपाली साहित्यिक पत्रकारितामा
सुन्दर नाम बनाउन सफल
**जनमत** मासिकले
त्रिशताङ्क (३०० पूर्णाङ्क)
प्रकाशन गर्न सफलता प्राप्त
गरेकोमा जनमत परिवारलाई
हार्दिक बधाई ज्ञापन
गर्दछु ।

**शान्तिकिरण दुवाल जोशी**
कुमारीपाटी, ललितपुर

# स्वर्गको दरबार



**शुक्रराज शास्त्री**
**जन्म : वि.सं. १९५०**
**वनारस, भारत**
**अवसान : वि.सं. १९९७**

हामीहरूले त सनातनकालदेखि सुनिआएका छौं कि स्वर्गमा देवताहरू निवास गर्छन्, त्यहाँ देवताहरूका राजा इन्द्रको शासन हुन्छ । देवराज इन्द्रकी धर्मपत्नी इन्द्राणी हुन् । तपाईंले गृहस्थाश्रमलाई स्वर्ग भन्नुभयो । यी दुई प्रकारका स्वर्गमा कुनलाई स्वर्ग मान्ने हो ?

उत्तर : सनातनकालदेखि सुनिआएको यो कुरा त साँच्चै हो, तर अलि बुद्धि पुगेन । बुद्धिले काम लियो भने केही सन्देह हुँदैन । सुन्नुहोस् – स्वर्गको सर्वस्व, यो गृहस्थाश्रम नै स्वर्ग हो । यस संसारमा जति विद्वान्हरू हुन्छन् सबै श्रेष्ठ दिव्य गुणयुक्त हुनाले देवता हुन्, जस्तो ब्राह्मणदेवता । ब्राह्मणलाई देवता भनेको यही कारण हो कि ब्राह्णहरू अरू दुई जाति भन्दा विद्वान् हुन्छन् । यसैकारण हाम्रा सत्यशास्त्रहरूमा लेखिएका छन् :

*विद्वांसो हि देवाः ।*

अर्थात् विद्वान्हरू नै देवस्वरूप हुन् । यस गृहस्थाश्रमरूप स्वर्गमा देवराज इन्द्रको शासन हुन्छ । गृहस्थरूप राज्यलाई शासन गर्ने विद्वान्हरूमा श्रेष्ठ गृहपतिको नाम देवराज इन्द्र हो । इन्द्रको शब्दार्थ यही हो कि इदि परमेश्वर्ये । यस धातुले इन्द्र शब्द सिद्ध हुन्छ ।

*य इन्दति विद्याश्रीसम्पत्यादिभिः*
*परमैश्वर्यवान् भवति सोऽयमिन्द्रः ।*

परम ऐश्वर्यवान् अर्थात् श्रीसम्पत्तिले युक्त भएकाहरूलाई इन्द्र भन्दछन् । श्रेष्ठ विद्या तथा ऐश्वर्यधन आदि सम्पत्तिरूप लक्ष्मीका मालिक हुनाले त्यस गृहपतिको नाम इन्द्र हो, यसैकारण यही अर्थलाई लिईकन वेदमा विवाहित पतिलाई इन्द्र शब्दको प्रयोग अनेक ठाउँमा भएको छ । त्यस गृहस्थरूप स्वर्गराज्यका गृहपति इन्द्रकी धर्मपत्नी नै लक्ष्मीस्वरूप इन्द्राणी हो । धेरै शोभा, सौन्दर्य, ऐश्वर्य तथा सुशीलता आदि गुणले युक्त भएकीलाई इन्द्राणी भन्दछन् । शोभा, सौन्दर्य, गुण स्त्रीमा नै विशेष रूपले हुन्छ । माथि लेखिआएँ कि :

*स्त्रियः श्रियश्च गेहेषु न विशेषोऽस्ति कश्चन ।*

*(मनु. अ. ९/२६)*

अर्थात् घरकी देवी स्त्री र श्री लक्ष्मीमा केही भेद छैन । स्त्री लक्ष्मीरूप हो, लक्ष्मी नै स्त्रीरूप हो ।

विवाहित पतिपत्नीहरू हो ! हामीहरू अशिक्षित भई अज्ञानसागरमा खसिरहेका छौं, जस्तो कस्तुरी मृग आफ्नै शरीरबाट निस्केको कस्तुरीको सुगन्ध सुँघी त्यो सुगन्ध कताबाट निस्केको हो यो नजानीकन सुगन्ध खोज्नलाई यताउता दगुर्छन्, त्यस्तै हामीहरू पनि अशिक्षित भएका हुनाले आफ्नै घरमा

स्वर्ग भए तापनि अन्य ठाउँमा स्वर्ग खोज्दछौं ।

अन्य ठाउँमा गई स्वर्गलाई खोज्नुपर्दैन, यो गृहस्थाश्रम नै सुन्दर स्वर्ग हो ।

यो त निर्विवाद सिद्ध छ कि स्वर्गमा वास गर्ने इन्द्र-इन्द्राणीहरू पनि गृहस्थ नै थिए । यसले पनि यही सिद्ध हुन्छ कि देवराज इन्द्र-इन्द्राणी पनि गार्हस्थ स्वर्गीय जीवन व्यतित गर्दथे । गृहस्थाश्रमरूप स्वर्गराज्यको मालिक गृहपति इन्द्र हो । गृहस्थ स्वर्गराज्यका अधिपति इन्द्रकी धर्मपत्नी नै इन्द्राणी हो, यी धर्मपत्नी नै गृहस्थरूप सुन्दर स्वर्गको रमणीय दरबार हो । अघि लेखिआएँ कि :

*न गृहं गृहमित्याहुर्गृहिणी गृहमुच्यते ।*

*(महाभारत शान्ति. अ. १४४/६)*

अर्थात् माटो, ढुङ्गा, इँटा आदिले बनाएका घरलाई घर-दरबार भनिंदैन, किन्तु सुन्दरी गृहिणीलाई नै विद्वान्हरूले घर-दरबार भनेका छन् । यी विदुषी सुन्दरी रमणीले जङ्गललाई पनि मङ्गल गरिदिन्छिन, यसैको नाम यथार्थ स्वर्गको दरबार हो ।

प्रश्न : शोभा-सौन्दर्य आदि गुणले युक्त हुनाले विवाहित पतिपत्नीलाई इन्द्र-इन्द्राणी तुल्याउनुभयो, किन्तु जुन विवाहित पतिपत्नीहरू शिक्षित भए तापनि सौन्दर्य आदि गुणरहित कुरूप हुन्छन् तिनीहरूलाई कसरी इन्द्र-इन्द्राणी तुल्याउनुहुन्छ ?

उत्तर : यहाँ शोभा-सौन्दर्यको अभिप्राय केवल शरीरको बाह्य सुन्दरता मात्रै होइन, किन्तु यहाँ शोभा-सौन्दर्यको अर्को पनि अभिप्राय छ, जो विवाहिता पत्नी कुरूपा भए तापनि पतिपरायण पतिव्रता हुन्छिन् भन्ने त्यस रमणीका पतिव्रत रूप नै शरीरसम्बन्धी रूपभन्दा अति श्रेष्ठ छ, एवं जो विवाहित पुरूष कुरूप भए तापनि विद्या आदि गुणयुक्त रहेछ भने यस्ता पुरूषको रूप विद्या नै हो, यसैकारण महर्षि चाणक्यले भनेका छन् कि :

*कोकिलानां स्वरो रूपं नारीरूपं पतिव्रता ।*
*विद्यारूपं कुरूपाणां क्षमारूपं तपस्विनाम् ।।*

अर्थ स्पष्टै छ । यसकारण विद्याविनयसम्पन्न पुरूष तथा पतिव्रता आदि गुणयुक्त भएकी पत्नी पनि यस्ता अपूर्व गुणले शोभित भएको हुनाले यिनीहरू इन्द्र-इन्द्राणीजस्तै शोभायमान् हुन्छन् ।

प्रश्न : लौ, यो सौन्दर्य रूप त यसरी घट्यो, किन्तु इन्द्र-इन्द्राणीको अर्थमा तपाईंले परम ऐश्वर्यवान् श्रीसम्पत्तिले युक्त पतिपत्नी हुनुपर्छ भन्नुभयो । यदि विद्याविनयसम्पन्न तथा पतिव्रता आदि गुणयुक्त पति-पत्नी गरिब छन् भने फेरि पनि त यी गरिब पति-पत्नीहरूमा इन्द्र-इन्द्राणीको अर्थ घटेन, यी गरिबहरूले कसरी स्वर्गीय सुखको अनुभव गर्न सक्लान् ? जहाँ कङ्गाल उहाँ सदा प्रकारको जञ्जाल । यो उखान प्रसिद्धै छ ।

उत्तर : श्रीसम्पत्तिको अर्थ रूपियाँ, पैसा, सुन चाँदी मात्रै होइन, ऋषि-महर्षिहरूले विद्यालाई नै सबभन्दा ठूलो धन गिनाएका छन्, रूपियाँ पैसा आदि खर्च गऱ्यो भने समाप्त हुन थाल्छ, किन्तु विद्याधन जति खर्च गरे तापनि झन् बढेर आउँछ, यसैकारण भर्तृहरिजीले लेखेका छन् कि :

*व्यये कृते वर्द्धत एव नित्यं विद्याधनं सर्वधनप्रधानम् ।*

जुनसित यस्तो श्रेष्ठ विद्याधन छ, के ती विद्वान्हरू पनि गरिब कङ्गाल हुन्छन् ? यदि यी विद्वान् पतिपत्नीहरू रूपियाँ पैसाले सम्पूर्ण तथा शरीरमा पनि सुन्दर छन् भने त सुनमाथि सुगन्ध नै हुन्छ, यस्तालाई सबै ठाउँमा स्वर्गैस्वर्ग रहन्छ ।

*इतिस्वर्गनिरूपणन्नाम प्रथमाध्यायः ।*

० ०

## अथ स्वर्गद्वारबाधको द्वितीयाध्यायः ।

स्वर्गको व्युत्पत्ति र लक्षण विद्वान्हरूको सम्मत्यनुसार गरिसकैँ । यथार्थमा स्वर्ग गृहस्थाश्रम नै हो । यस विषयमा विस्तरशः व्याख्यान पनि अनेक शास्त्रको प्रमाणद्वारा भइसक्यो । यस संसारमा पत्नीरहित पुरूष अपूर्ण हुन्छन् । स्त्री लक्ष्मीरूप हो । लक्ष्मी नै स्त्रीरूप हो । एवं वंशलाई उन्नत गर्ने तथा स्वर्गलाई प्राप्त गराउने पुत्र नै हुन्छन्, यो दुवै स्त्रीरत्न र पुत्ररत्नको प्राप्ति गृहस्थाश्रममा नै हुन्छन् । यसैकारण गृहस्थलाई स्वर्ग भनेको हो । यस विषयक विचार पनि विस्तररूपले प्रथमाध्यायमा गरिसकैँ ।

अब यो द्वितीयाध्यायमा यस विषयक विचार हुनेछ कि स्वर्गरूप गृहस्थाश्रममा प्रवेश गरोस तापनि स्वर्गीय यथार्थ सुख किन प्राप्त नभएको ? अर्थात् गृहस्थाश्रममा प्रवेश भइसकेपछि किन स्वर्गको द्वार नखुलेको ?

केही काम गर्दा सफलता नहुनेमा न्यायदर्शनकार (Author of the logic) महर्षि गोतमाचार्यजीले न्यायदर्शन (Logic Philosophy) मा लेखेका छन् कि :

*न कर्मकर्तृसाधनवैगुण्यात् ।*

*(न्याय. अ.२/आ. २/५७)*

अर्थ : केही काम गर्दा सफल नहुने कारण यो हो कि त्यो काम उचित रीति अथवा विधिबाट भएन, अथवा कार्यकर्ता अनुभवी नभएको हुनाले अथवा साधन-सामग्रीहरू ठीक नहुनाले कार्य सिद्ध नभएको हो । यही उत्तर यहाँ पनि सम्झनुपर्दछ, अर्थात् स्वर्गप्राप्ति निमित्त गृहस्थाश्रममा प्रवेश गरे तापनि स्वर्गप्राप्ति नहुने कारण यही हुन् कि विवाह उचित विधिबाट भएको रहेनछ । अथवा विधि ठीक भए तापनि साधन ठीक भएन अथवा विवाहित पति-पत्नी नै अवस्थाको न्यूनाधिकले अथवा अस्वस्थता आदि कारणले अयोग्य थिए इत्यादि ।

अब स्वर्गको फाटक खुल्नमा जो बाधक छन् तिनीहरूको विचार यस द्वितीय अध्यायमा हुनेछ । स्वर्गको फाटक खुल्नामा निम्नलिखित बाधक छन् :

१. बालविवाह । २. वृद्धविवाह अथवा अनमेलविवाह ।
३. बहुविवाह । ४. अस्वयम्वरविवाह । ५. कुटुम्बविवाह ।

१. प्रथम बालविवाह के हो ? यसको विचार गर्छु । 'बालविवाह' यस पदमा बाल, विवाह दुई शब्द छन् । अब यी दुवै शब्दको विषयमा कोषहरूबाट अर्थ गरिने छ :

*अ) बालोऽज्ञेश्वेभपुच्छयोः । शिशौ. (हैमकोष)*

*आ) मूर्खेऽर्भकेऽपि बालः स्यात् ।*

*(अमर. नानार्थवर्ग ३/२०५)*

*इ) बालो ... वाच्यलिङ्गेऽर्भके मूर्खे । (इति मेदिनीकोषः)*

*ई) बालः कचे शिशौ मूर्खे । (इति विश्वकोषः)*

अनेक ठूला-ठूला विद्वान्कृत यी चार कोषहरू (Dictionary) को प्रमाणबाट बालशब्दको मूर्ख र बालक आदि अर्थ हुन्छ, प्रायः मूर्ख र बाल शब्द अज्ञानतावशले समानार्थक (एक अर्थलाई बोध गराउने) हुन् । अब विवाहको अर्थमा प्रमाण :

*विवाहो विशिष्टं बहनम् । धञ् (३/३/१८)*

(भानुजिदीक्षितकृत सुधा व्याख्या)

अर्थ : विशेष भार बोक्नलाई विवाह भन्दछन् । 'बह प्रापणे' यस धातुले वि उपसर्गपूर्वक भाव अर्थमा घञ् प्रत्यय गर्दा बृद्धि गरी वि+वाह्+अ=विवाह शब्द सिद्ध हुन्छ ।

अथवा विशेषण उह्यते गार्हास्थ्यधर्मरूपं भारमिति विवाहः कर्मण्येव घञ् ।

जुन आश्रममा गृहस्थधर्मको भार विशेष रूपले बहन हुन्छ अर्थात् बोकिन्छ, उसलाई विवाह भन्दछन् । दुवै पक्षमा समानै अर्थ छ ।

विद्वान्हरूले बनाएका कोष र टीकाको अनुसार बाल शब्दको दुवै अर्थमा विवाहको अर्थ सिद्ध हुँदैन । अभिप्राय यो हो कि बाल शब्दको 'अज्ञ-मूर्ख' हुने पक्षमा गार्हस्थ्य धर्माऽधर्मको विचार मूर्खमा असम्भवै छ, यदि बाल शब्दको अर्थ शिशु तथा बच्चा नाबालिक हो भने पनि नाबालिक अवस्थामा गृहस्थको धर्माधर्म विषयक विचार हुन सक्दैन । यसकारण कोष र कोषहरूको टीकानुसार बालविवाह सिद्ध हुँदैन । लोकमा पनि ८-१० वर्षका केटालाई एकमनको भार बोकाउँदैनन् भने त्यस्ता बालकमाथि गृहस्थको विशेष भार राख्नु अयोग्य नै हो ।

विशिष्टं बहनं विवाहः अथवा विशेषेण उह्यते गार्हस्थ्य-धर्मरूपं भारमिति विवाहः ।

यी माथि लेखिएका विद्वान्हरूको सम्मत्यनुसार विवाहको उचित अर्थको पुष्टिमा युरोपीय विद्वान्हरूका पनि निम्नलिखित सम्मति छन् ।

जर्मन देशका दार्शनिक विद्वान् नित्सेको सम्मतिः *For the future of marriage large burdens to be laid upon bachelors, priviledges of all kinds for fathers of large families.*

भावार्थ : भविष्यमा विवाह हुने बेलामा अविवाहित नरनारीहरूको माथि अधिक सामाजिक भार राख्नुपर्दछ, एवं तिनीहरूले ठूलो परिवारले युक्त भएका पिताहरूलाई सबै सामाजिक सुविधाहरू पनि प्रदान गर्नुपर्नेछ । ❑

# राजविद्रोहीहरुलाई भएको सजाय



सिद्धिचरण श्रेष्ठ
जन्म : वि.सं. १९६९ जेठ ९
ओखलढुंगा
अवसान : वि.सं. २०४९ जेठ २२

यो नेपाल राज्य आफ्नै हिन्दुधर्मी राजाले पालना गरिएको स्वतन्त्र मुलुक हुनाले यस मुलुकमा रहने दुनिञाहरूलाई कुनै कुरामा पनि दुःख पीर मर्का परेको थिएन । नेपालका प्रजामाथी जती सुकै ठूलो आपत्ति आइपरेता पनि सर्कारबाट हरेक कुरामा दृष्टि पुऱ्याई दिंदा यहाँका प्रजाले सर्कारमाथि द्वेष राखी असन्तोष लिनुपर्ने आवश्यक केही थिएन । परन्तु माथि लेखिएका सबै कुरालाई वास्ता नराखी विदेशी हावाले बहकिएका राजकाजको मर्म नजान्ने कुबुद्धि भएका मानिसहरूको सिकायटमा लागेर शुक्रराज जोशी र पण्डित मुरली ई २ जनाले केही वर्ष अघिदेखी राजद्रोहका साथ साथै दुनिञामा असन्तोष फैलाउने उद्योग गर्न लागेकोले यस कुरामा मुख्य ठहरिन आएको शुक्रराजलाई पहिले सर्कारी नोकरी मात्र झिकिने सजाय मात्र हुँदा हलुका सजाय पाएकोबाट झन् मन बढाई सर्कारको कति डर नमानी इन्द्रचोक जस्तो ठाउँमा मानिस जम्मा गरी दुनिञालाई भड्काउने स्पीच गर्ने र पं. मुरलीले उसैको अनुयायी भै सोही किसिमको काम गर्ने गरेकोले पक्राउ भइ आउँदा सर्कारबाट ६ वर्षका निमित्त जेलको सजाय दिएमा नीज शुक्रराजले जेलमा बसी विदेशी अखबारमा सरकारको बद्नामी हुने खबर छपाउन लगाउने र सीधा साधा दुनिञालाई भड्काई राजा रैतीमा असन्तोष फैलाउने आन्दोलन मचाउन लागेकोले यसै अवस्थामा नीज शुक्रराजको सम्मति ली नेपालका नवयुवकहरूले राजद्रोही लेखहरू छपाउने, बेनामी लेख टाँसने, प्रजापरिषद् एवं रक्तपात कमिटीको नामबाट गुप्त संस्था खडा गरी प्राइमिनिष्टर लगायत राणावंशीहरूको द्वेष गरी जथाभावी लेख चिट्ठीपत्रहरू पठाउने र पर्चाहरूसमेत छर्ने इत्यादि उपद्रव गर्न लागेकोले इनीहरूको सुराक पत्ता लगाई ९७ साल कार्तिक २ गते पक्राउ गरी खानतलासीसमेत गर्दा कागजका हस्ताक्षर समेतका प्रमाणबाट सावित हुन आएका जतिलाई अपराध अनुसार सजाय गर्नाका निम्ति श्री ५ सर्कार, श्री ३ सर्कारहरू र श्री.क. इन चीफ लगायत भै-भारदारहरू, गुरूज्यू प्रोहितहरू, साहेबज्यू, चौतरियाहरू, जंगीमा ले.क.सम्मका अफिसरहरू निजामतीतर्फ काजी सरदारसम्मका पगरीहरू, पंडितहरू, ९७ साल माघ ७ गतेका दिन सिंहदर्बारमा जम्मा भै मिटिङ हुँदा श्री ३ महाराजबाट तल लेखिएका धर्मशास्त्रका वचन र राजकाजसम्बन्धी अैन सुनाई स्पीच बक्सी राय सोधनी हुँदा जम्वा भएका सबैले अैन बमोजिम नै सजाय हुनुपर्छ भनी मिटिङ पास भएकोले अपराधीहरूलाई अपराध अनुसार अैन बमोजिम सजाय भयो । यो मुद्दामा पक्राउ भै आएका मध्ये जागिरे वा ढाक्रे निरपराधी ठहरिएका जतिलाई ९७ पौष २५ गतेका दिन छाडी दिने काम भयो । जागिरे जतीको जागिर पनि थामियो । थुनियेका दिनको तलब पनि पाये । यसै

दिन अपराधीहरूको केही संसर्ग देखिन आएका मानिसहरूलाई जरिवाना गरी छाडी दिने काम भयो ।

श्री ३ महाराजबाट शुक्रराज र पं. मुरलीले उपद्रव गरेको बारेमा बक्सेको स्पीच्

शुक्रराजले ९३ सालमा छापी ल्याएको ब्रह्मसूत्र शाङ्कर भाष्य किताब ९४ साल वैशाखको प्रदर्शनीमा चढाउँदा कं. रू. १५०० बक्स पायेपछि बाँकी उत्तरार्ध छापन भनी २/३ मैन्हाको बीदा ली महात्मा गान्धीसँग भेट गर्न जाँदा उन्ले जस तसलाई भेट नदिने हुनाले सो किताब चढाउने भान पारी नेपालको शास्त्री हुँ भनी भेट गर्न गएको ।

महात्मा गान्धीले मलाई अैले फुर्सद छैन किताब छपाएको बेस हो भनी सुनाई दिनु भनी आफ्नु सेक्रेटरी महादेव देसाइनलाई खबर पठाउँदा शुक्रराजले टाढा मुलुक देखि आयां नेपालको धेरै कुरा महात्माजीका चरणारविन्दमा निवेदन गर्दछु भनी बहुत जोर गर्दा भेट दिएछन् । यो किताब मैले धेरै परिश्रम गरी तयार गरेको हुँ । महात्माजीको अनुग्रह भए यो किताब असल छ भन्ने सर्टिफिकेट पाया किताब धेरै विक्री हुने हुदो हो, धेरैले पढ्दा हुन् भनी जोर गर्दा मैले संस्कृत जानेको छैन नजानेको कुरा यो यस्तो हो भनी सर्टिफिकेट दिन हुँदैन भनी जवाफ दियेपछि – नेपाल विषयको असल कुरा एक नगरी केवल बधखुवायी मात्र गरी प्रजालाई हरएक कुराबाट दुःख छ भन्ने अनेक कुरा देखाई बहुत जोर दिइ कुरा गर्दा महात्माजीले यो कुरा हिंदुराज हो तेस्मा हामीले हात हाल्नु हुँदैन त्यहाँका प्रजालाई दुःख र यहाँका प्रजालाई सुख हुनै नसक्ने कुरा हो भन्दा पनी प्रजालाई दुःखै छ भनी जीकिर गरेको । सो जीकिरमा केही जवाफ नदी महात्मा गान्धीले अैले जाउ भनी जवाफ दिएको ।

आफ्नो सेक्रेटरीद्वारा नेपालको विषयमा हामीले केही पनि गर्नु हुँदैन । पृथ्वीहरूमा एक स्वतन्त्र हिन्दु राज तेही हो तेस्मा हिन्दुको झंडा फर्फराउँछ, तेस्मा हामीले कुनै तरहको आक्षेपण गऱ्यौं भने आफ्नै कुरामा आफैले आफ्नै खुट्टामा बन्चराले हान्नु हो । तिमिले सबै राजकाज बुझेका रैनछौ । आफ्ना मुलुकको र आफ्ना रैयतको असल भलो हुने किसिमको काम गर्नु । केही कुराको पीर दुःख छ भने आफ्नै राजाका हजुरमा बिन्ती गरी कां लिनु असल हो भनी महात्माजीले भनेको छ भनी सेक्रेटरीले जवाफ दिएको ।

तेती भएपछि निरास भै पंडित जुवाहारीलालको भेट गर्न र ती किताबहरू देखाउन कोशिश गऱ्यो । पंडितजीले किताब पनी हेरेनन्, भेट पनी दियेनन् । आफ्ना सेक्रेटरी मार्फत् नेपाल स्वतन्त्र हिंदु राज हुनाले मुसलमान सह्र हामी पनी स्वतंत्र नै हुँ भन्ने हामीलाई घमण्ड छ । हिन्दूमा काहीँ स्वतंत्र नभए हामी हिन्दू पनी गुलामी जात सह्र हुने थियौं । हामीलाई नेपाल स्वतन्त्र भएको नै घमण्ड छ भनी सेक्रेटरीद्वारा जवाफ पाये पछी ।

पंडितजीसँग पनी निरासा भये पछी, अब नेपाल तेसै गयेमा नोकरी रहने छैन भन्ने स्मेत अभिप्राय मन्साय ली महात्मा गान्धीसँग शुक्रराज शास्त्रीले भेट गरे भनी आफैले खबर दी अखबार छपाउन लायेको ।

तेसपछी नेपाल आई समितिको नोकरी झिकिये पछी महात्मा गान्धीसँग भेट गऱ्यो भनी मेरो नोकरी झिकियो भनी खबर पठाइ छपायाको ।

सोहि नोकरी झिकियेका अपशोचमा जनता मार्फत खबर दि हामी आनदोल मचाउँछौ भनी गुरूकुलको तेजोराजको चिठी केदारमानले ल्याई शुक्रराजलाई दियाको ।

कांग्रेसका ठूला ठूला नेता अरूकहाँ जाँदा पनि केही सहायता नपायकाले र उन्हीहरूले सुन्वाही नै नगरेको हुनाले इण्डियाका तल्ला दर्जाका बदमास स्वसियालिष्टहरूका सिकावटमा लागी गोरखपुर कुलका मानिससँग सम्बन्ध राखी उनीहरूका मत सल्लाह बमोजिम नेपालमा आन्दोलन गर्न खोजेको ।

शुक्रराजले नसके म सक्नु छ भनी पण्डित मुरलीले बनारसका इस्टेसनमा गई पं. जुवाहरी लाललाई ढोग दि नेपालमा प्रजालाई दुःख छ भन्ने कुराको मानपत्र दिंदा पनि उसले वास्ता नराखी जवाफ पनी नदियको ।

यसतालाई खाली जागिर मात्र खोसेको थिञे । पछी मुखत्यारले गर्न नसकने काम नेपालमा इन्द्रचोकमा मानिस जम्वा गरी मानिसलाई भड्काउने स्पीच गऱ्यो र ६ वर्षको जेल दिञे । यो पनी नरमै सजाय दिएको हुँ । यो जेल गयेपछि छापामा पैल्हे गीता सुनाउनलाई कैद गरे भन्ने छापियो । तहाँ देखी अनेकन छापियेको तिमीहरूलाई थाहै छ । अब यस्तालाई नरम सजाय दि राखनको हाम्रो मनसाय भएन ।

सबै अपराधीहरूलाई सजाय गर्ने बारेमा श्री ३ महाराजबाट मिटिङमा सोधनी भएको स्पीच

केही वर्ष देखि हाम्रो मुलुकमा सर्कार र रैयतहरूका बीचमा असन्तोष र फाटो गराई मुलुकको सलतनत विगार्नाको नियतले हिस्दुस्थानका अखबारहरूमा बेनामी राजद्रोही लेखहरू छपाउने, जहाँ पनि बेनामी राजद्रोही लेखहरू छपाउने, जहाँ पनि बेनामी लेख टासने, प्रजापरिषत् एवम् रक्तपात कमिटीको नामबाट प्राइमिनिष्टर र राणा वंश घरहरूको द्वेष गरी जथाभावी लेख चिठीपत्रहरू पठाउने र पर्चाहरू स्मेत छर्ने गरी उपद्रव गर्न लागेको तिमीहरू सबैले सुने बुझेकै छौ । यस्ता राजद्रोही देशद्रोहीहरूको सुराक पत्ता लगाई उचित कारवाई गर्ना निमित्त सर्कार तर्फबाट कोशिश भै रहेकोमा सबुद प्रमाण साथ पक्राउ भै आएका मानिसहरूको खान तलासबाट फेला परेका कागजपत्रहरूमा गुप्त संस्था खडा गरी हामी प्राइम्मिनिष्टर लगायत् रोलवालाहरू सबैको द्रोह र बदनामका साथ साथ प्रजावर्गमा राजनैतिक असन्तोष फैलाई देशको सलतनत् भाड्ने उद्योग गरेको यस मुकदमाको तैकिकात गर्नालाई खटाई बक्सेका कमाण्डर इन चीफ, ४ कम्याण्डिङ्ग जनरल, जनरलहरू र हाकिम अफिसरहरूले ठहराई फैसला पनी भैसकेको छ । सो फैसला अैले यहाँ सुनाउनलाई धेरै टाइम लाग्ने हुँदा छोटकरीमा मुख्य कुराहरू तिमीहरूलाई सुनाई बक्सेको छ । ई द्रोहीहरूलाई सावित गराई निजहरूको कागज समेत भैसकेको हुँदा धेरै भनी रहनाको दरकार केही पनी भएन ।

पहिले ई अपराधी पक्राउ भै आउँदा बिलकुल इनकारी दिए । तेसपछी उनीहरूको खान तलाशीबाट निसकेको हस्ताक्षरको कागज पत्रहरू सामुन्ने राखी सोधनी र जीरह हुँदा सावित भएपछि अब बचने उपाय केही नदेखी यस मुकद्दमामा श्री ५ महाराजाधिराज, साहज्यादाहरूलाई पनी फसाउन पाया सजायबाट बची हालौंला की भनी उद्देश्य ली मौसुफको मनसाय बमोजिम काम भएको भन्न भान पारनाका निमित्त मौसुफ उपर अनेक दोषारोपण गरी लेखिदिएको कदापी विश्वास लाएक थिएन । तापनि मानिसहरूको संखा निवारण गर्ना निमित्त श्री ५ महाराजाधिराजको सवारी चलाई बिन्ती पार्दा सो कौने कुरा साचो नभै बिलकुल झुटा ठहरिन आयो । झण्डै किराले हिरा बिगार्न लागेका थिए ।

मुलुकको उन्नति हवस भन्ना निमित्त सर्कारबाट यतिका खर्च गरी इनीहरूलाई लेखापढी सिकाउन लगाई बक्सेकोमा यही नतिजा ई द्रोहीहरूबाट भएकोमा बहुत अपशोच मान्नुपर्ने विषय भएको छ । इनीहरूले वास्तवमा गर्न सक्ने कुरा केही होइन तापनी सर्कार विरूद्ध अनेक किसिमको गुप्त चाल र आन्दोलनद्वारा डर त्रास लालच देखाई अधिकारी वर्ग (Authorities) र साधासिधा मानिसहरूबाट रूपैञा पैसा ठगी आफ्नु मतलब हासिल गर्न षडयंत्र रचेको मात्र होइन की देश (जङ्गी, पट्टी ?) पनी भाड्ने उद्योग स्मेत गर्न लागेकोले यस्तो कुकर्ममा लाग्नेहरूलाई पूरा सजाय भएन भने अरूहरूले पनी यस्तो कुकर्ममा दिल बढाउने सम्भव स्मेत् हुँदा ई अपराधीहरूलाई उचित सजाय दिना निमित्त तिमीहरूलाई आज यहाँ सामेल गरी बक्सेको छ । अर्काका देखासिखीमा आफ्नो देश विरूद्ध राजनैतिक विचार एवं आन्दोलन फैलाई सर्कारको द्रोह गरी मुलुकमा उपद्रव मचाउन खोजने ई द्रोहीहरूलाई आफ्नु मुलुकको राजकाजी कुरा होस् वा अरू साना साना कुरा विराना मुलुकमा प्रचार गर्नेलाई हाम्रो धर्म शास्त्रबाट लेखिएको सजाय र राजकाजी जैन सुनी तिमीहरूले के सजाय दिने ठहराउँछौ भन । ❑

*विवरण*

# जनमत

■|||| राजेन्द्र श्रेष्ठ

**तीन शताङ्क**
**जनमत विशेष**
**ऐतिहासिक ।**

**आफ्नै सुरमा**
**अविचलित भई**
**हिँडिरहेछ ।**

**साहित्य स्रष्टा**
**जनमत चौतारी**
**सबैको प्यारो ।**

**निरन्तरता**
**थकाइ त लाग्दो हो**
**घटेन ऊर्जा ।**

**चेतना छर्न**
**जनमत निस्कन्छ**
**साहित्य सेवा ।**

**मोहन सर**
**जनमत सारथी**
**हाम्रो गौरव ।**

**सम्मान गर्छ**
**तेरो–मेरो नभनी**
**निस्पक्ष आँखा ।**

**भारती मिस**
**शालिनताको खानी**
**प्रेरणा मिल्छ ।**



# सन्दर्भ : रेडियो नेपाल



**हरि श्रेष्ठ**
**जन्म : वि.सं. १९७९ फागुन ८**
**भोसिकोटोल, काठमाडौं**
**अवसान : वि.सं. २०७० फागुन १५**

दोस्रो महायुद्धपश्चात् विश्वका अधिकांश भागमा प्रजातन्त्रको लहर चल्न थाल्यो । छिमेकी देश भारतबाट सन् १९४७ मा अङ्ग्रेजहरू पलायन भएपछि नेपालका राणाशासकहरूमा अस्थिरताको सूत्रपात हुनथाल्यो । नेपालमा भइरहेको आन्दोलनको सन्दर्भमा श्री ५ त्रिभुवन भारतीय राजदूतावासमा प्रवेशपछि दिल्ली पुगिबक्स्यो । २००७ साल फागुन ४ गते श्री ५ त्रिभुवन र तत्कालीन राणा प्रधानमन्त्री मोहनशमसेरका प्रतिनिधि तथा आन्दोलनका सुप्रिम कमाण्डर नेपाली कांग्रेसका अध्यक्ष मातृकाप्रसाद कोइरालाबीच भारतीय प्रधानमन्त्री नेहरूको मध्यस्थतामा सम्झौता हुनपुग्यो । त्यही सम्झौताअन्तर्गत नेपालका विभिन्न भागमा चर्किरहेको जनक्रान्ति स्थगित भयो । भारतबाट नेपालफिर्ती सवारीपश्चात् श्री ५ त्रिभुवनबाट २००७ फागुन ७ गते नेपाल अधिराज्यको लागि प्रजातन्त्रको घोषणा गरिबक्स्यो र नेपालका विभिन्न भागमा चर्किरहेको आन्दोलनको सन्दर्भमा विराटनगर कटन मिलको एउटा सानो कोठाबाट सञ्चालित क्रान्तिकारी प्रजातन्त्र नेपाल रेडियोको प्रसारण पनि बन्द भयो । त्यसबेला क्रान्तिको दौरानमा स्थापित त्यस रेडियोबाट नेपालीमा समाचार तारणीप्रसाद कोइरालाले प्रसारण गरेका थिए । त्यसपछि त्यसको केही दिनपछि नेवारीमा गजाधरभक्तले समाचार दिने गरेको सुन्न पायौं ।

जनक्रान्ति बन्द भएपछि विराटनगरबाट तारिणीप्रसाद कोइराला काठमाडौं फर्के । उनले काठमाडौंकै मुटु सिंहदरबारभित्र रेडियो स्थापना गर्ने विचार गरी सुब्बा ऋद्धिबहादुर मल्लको जोरगणेश प्रेस रहेको पाकोपोखलड्याङस्थित घरमा प्रथम बैठक राखे । त्यस बैठकमा बालकृष्ण सम, मुरारीकृष्ण शर्मा, समरबहादुर मल्ल, हिक्मतबहादुर मल्ल, सिद्धिचरण श्रेष्ठ आदि सम्मिलित थिए । मुरारीकृष्ण शर्मा स्रेस्ता पाठशालामा पढ्दाका मेरा सहपाठी थिए । त्यसैले तारिणीको गतिविधि थाहा पाइराख्न मलाई सजिलो पनि भएको हो । दोस्रो बैठक बालकृष्ण समको निवासस्थान ज्ञानेश्वरमा बस्यो । यसभन्दा अगाडि तारिणीप्रसादले सिंहदरबारभित्र राणा प्रधानमन्त्रीका नाति नातिनाहरूलाई पढाउने गरेको बंगला, जहाँ आकाशवाणी सेट पनि रहेको थियो, त्यहींबाट २००७ चैत्र २० गते विहान र बेलुका गरी एक एक घन्टाको कार्यक्रम प्रसारण गर्ने निर्णय गरियो । त्यही निर्णयअनुसार चैत्र २० गते तारिणीप्रसाद कोइरालाको अगुवाईमा विहान बालकृष्ण सम, रश्मि राज्यलक्ष्मी, मुरारीकृष्ण शर्मा, हरिप्रसाद रिमाल, कृष्णप्रसाद रिमाल, समरबहादुर मल्ल, हिक्मतबहादुर मल्ल, हरिबहादुर रञ्जितकार, जीवनाथ लोहनी र प्रतिमान परियार आदि त्यही बंगलामा भेला भए । प्रसारणको शुभारम्भ रश्मि राज्यलक्ष्मीको उद्घोषणपश्चात तारिणीले एक किसिमको लामो भाषणबाट गरे । यसपछि रश्मि राज्यलक्ष्मीबाट गीतको उद्घोषण भयो, जुन शंकर लामिछानेले रचेका थिए, हरिप्रसाद रिमालले हारमोनियममा गाउन थाले :

*मेरो दिल टुक्रा बनेर एकदिन*

*आँखाको बाटो भएर बहने छ ...*

यसपछि कवि सिद्धिचरणद्वारारचित गीत समरबहादुर मल्लले गाउन थाले । तबलामा पछिल्लोपटक हरिप्रसादले साथ दिए, पहिलोमा समरबहादुरले दिएका हुन् ।

*हिमगिरिमण्डित सुगन्ध शोभित*
*जय जय आमा नेपाल.....*
*आर्य, अनार्य, बौद्ध र हिन्दु*
*मिश्रित हाम्रो देश महान् ...*

यसपछि अरू कलाकार हरिबहादुर रञ्जितकार र कृष्णप्रसाद रिमालले गाउन थाले, रिमालको स्वर भने माइक अनुकूल थिएन । गीतको अन्तमा नेपालीमा तारिणी र अङ्ग्रेजीमा मधूसुदन देवकोटाले समाचार प्रसारण गरेका थिए । समाचारपश्चात् रश्मि राज्यलक्ष्मीको उद्घोषबाट १ घण्टाको त्यस दिनको प्रातकालीन कार्यक्रम प्रसारण बन्द भयो । केही दिनसम्म विराटनगरको भाषा – क्रान्तिकारी प्रजातन्त्र नेपाल रेडियो भनी त्यही बंगलाबाट प्रसारण भइरहेको थियो । प्रथम दिनको त्यो उद्घाटन सभामा जनार्दन सम अस्वस्थताको कारण आउन सकेनन् ।

अच्युतरमण अधिकारीको सम्पादनमा प्रकाशित ऋद्धिबहादुर मल्ल स्मृति विशेषाङ्क **उन्नयन** त्रैमासिक पत्रिकामा जीवनाथ लोहनीले अङ्ग्रेजीमा समाचार प्रसारण गरेको भनी उल्लेख गरे तापनि त्यसो नभई मधुसूदनले प्रसारण गरेका हुन् । यो कुरा मधुसूदनले मलाई भनेका थिए । जीवनाथ लोहनी त्यही आकाशवाणी सेक्सनका प्रमुख थिए । केही दिनपछि उनी गृह मन्त्रालयमा सरूवा भई गएका हुन् ।

तेस्रो दिन बिहान म रेडियो भवनको बंगलामा पुग्दा मैले त्यहाँ बालकृष्ण सम, तारिणीप्रसाद कोइराला, भवानीराज मास्के, रश्मि राज्यलक्ष्मी आदि परिचित व्यक्तिलाई देखें । अनि त्यही बंगलाको पश्चिमतिर एउटा ठूलो कोठा थियो । त्यही कोठामा आकाशवाणी सेट पनि थियो रेडियो प्रसारण गर्ने । त्यो आकाशवाणी सेट विराटनगर वा अन्त कतैबाट ल्याइएको थिएन, दिल्ली र काठमाडौंबीच त्यही आकाशवाणी सेटद्वारा वार्ता अथवा समाचार आदन-प्रदान हुन्थ्यो । त्यही कोठाभित्र एक छेउमा एउटा ठूलो काठको दराज थियो । त्यही दराजको माथिल्लो भागमा एकातिर मात्र अङ्ग्रेजीमा टाइप गरेर राखिएका थुप्रै कागजहरू थिए । हामीले धेरै दिनसम्म कागज नभएर त्यही कागजमा समाचार लेख्ने गरेका थियौं ।

२००७ साल चैत २५ गते हिन्दीमा समाचार राजेन्द्रकुमार गुप्ताले प्रसारण गरे । २००८ साल वैशाख १ गते बिहान नेवारीमा मैले समाचार शुभारम्भ गरें । त्यसबेला हिन्दीमा १० मिनेट, अङ्ग्रेजीमा ५ मिनेट र नेवारीमा पनि ५ मिनेट समाचार प्रसारण हुन्थ्यो ।

नेपाली, हिन्दी, अङ्ग्रेजी एवं नेवारीमा समाचार बिहान भएको केही दिनपछि अङ्ग्रेजीलाई बिहानबाट झिकेर बेलुकीको कार्यक्रममा मात्र राखे र क्रान्तिकारी भन्ने शब्द पनि झिकेर प्रजातन्त्र रेडियो नेपालमात्र भन्न थाल्यो । तीन-चार महिनापछि प्रजातन्त्र झिकियो र नेपाल रेडियो नाम राखियो । केही दिनपश्चात् त्यसलाई पनि संशोधन गरेर रेडियो नेपाल राखियो । बालकृष्ण समले यो नामाकरण नेपाली व्याकरणमा सामञ्जस्य नभएको तर्क दिए तापनि तारिणीले यही नाम उपयुक्त ठाने, जुन आजसम्म पनि यही नामबाट रेडियो सञ्चालन हुँदै आइरहेको छ । केही महिनापछि फेरि अङ्ग्रेजीलाई बिहान ल्याइयो ।

त्यसदिन जब म त्यहाँ पुगेको थिएँ, मलाई त्यसबेला अनौठो लागेको थियो – त्यस्तो राष्ट्रव्यापी प्रसारण एउटा सानो कोठाबाट कसरी सम्भव भएको थियो ? त्यहाँ मैले त्यसबेला देखेको थिएँ – एउटा पुरानो हारमोनियम, एकजोर तबला र एउटा पुरानो सोफा र अर्कोतिर फोल्डिङ्ग गर्न हुने काठको ठूलो टेबुल र टेबुल वरिपरि मेच, अनि मेचमा उद्घोषिका, समाचार सम्पादक प्रसारकहरू बसिरहेका थिए । त्यसको अतिरिक्त एउटा पुरानो ठूलो शतरंजा पनि बिछ्याइराखेको थियो । पछिबाट मैले थाहा पाएँ –हारमोनियम र तबला पनि ऋद्धिबहादुरकै घरबाट ल्याएका रहेछन् ।

त्यसबेला निर्देशक अरू दर्शकहरूको साथ त्यही एउटै कोठामा बसेको देख्दा मलाई साह्रै असजिलो लाग्यो ।

बालकृष्ण सम मेरो पुरानो परिचित व्यक्ति थिए, तारिणीले मलाई देखेर बाहिर आएर भने –'यहाँ नेवारीमा समाचार पनि राख्दैछु, तपाईंले सहयोग गर्नुपर्‍यो ।'

२००८ साल वैशाख १ गतेदेखि नेवारीमा समाचार प्रसारण मैले गरें, तर नियुक्तिपत्र भने वैशाख १९ गते मात्र पाएँ । नियुक्तिपत्रमा मेरो तलब कं रू. उल्लेख भए तापनि मोरू दिन्थे । मेरो नियुक्तिपत्रमा –

*श्री हरि श्रेष्ठ, भौंसिको*
*महाशय,*

*प्रजातन्त्र नेपाल रेडियो तपाईंलाई अस्थायी रूपमा आजका मितिदेखि वर्षको कं. रू. ६०० को दरले नियुक्त गर्दछ । आशा छ, तपाईं हाम्रो रेडियो स्टेशनको अनुशासनमा रहनुहुनेछ ।*

*०८-१-१९*
*भवदीय*
*तारिणी प्र. कोइराला*

त्यस समय सबैको तलब कम थियो तर पनि कसैको यसप्रति गुनासो थिएन । सबैमा जाँगर थियो, उत्साह थियो, मैले त्यसबेला यही देखें – नातिकाजी, शिवशंकर, हरिप्रसाद रिमालको मासिक तलब १०० रूपैया र रत्नदास प्रकाशको तलब १२५ थियो । असिष्टेन्ट डाइरेक्टर रश्मि राज्यलक्ष्मी र प्रोग्राम डाइरेक्टर जनार्दन समको वार्षिक खान्गी प्रत्येकलाई २४०० थियो । वाद्यवादकहरूको ५० मासिक थियो । चीफ मेकानिक्स बद्रीप्रसाद ठाकुर र सेक्रेटरी भवानीराज मास्केको वार्षिक खान्गी ३००० थियो । तलबको त्यसबेला कुनै निश्चित मापदण्ड थिएन । यतिमात्रै पनि होइन, त्यसबेलाको रेडियो प्रसारणको कथा एउटा अलग्गै थियो । कसैको सोचाइभन्दा भिन्न, बिल्कुल भिन्न । एउटा सानो प्रसारण कोठा, अनि गोजीमा अटाउन सक्ने एउटा माइक, त्यही रेडियो नेपाल हो । टेबुलमाथि रहेको त्यही सानो माइकलाई उद्घोषिकाले उद्घोषण गर्दै यताउति सार्नुपर्ने, जसले बोल्ने हो उद्घोषिकाले उसको सम्मुख लैजानुपर्ने । त्यो एउटा माइकलाई कार्यक्रम हुन्जेल उद्घोषिकाले यताउति-तलमाथि कतिपटक सार्थिन् यो कुरा माइकलाई नै थाहा होला ।

मलाई सम्झना छ, एकपटक मेरो आफ्नै तीन-चार वर्षको माहिलो छोरो दिनेशलाई उसकी आमाको साथमा लगेको थिएँ, भित्र पसेपछि छोरो त्यसै पनि रून लागेको देखेर तारिणीले बाहिर लैजाने संकेत गरे, तर बाहिर लैजान नपाउँदै रोइहाल्यो । घर-घरमा रेडियो सुनिरहेका स्रोताले बच्चा रोएको आवाज सुने । तारिणी यो घटनाबाट साह्रै दुःखी भए । बडो बेमज्जा माने, तर उनले मलाई केही भनेनन् ।

यतिमात्रै होइन, एक विहानको घटना हो – प्रकाशमानले नेपालीमा समाचार पढ्न सिध्याएपछि उद्घोषिका एलिस राणाले अब नेवारीमा समाचार सुन्नुस् भनेर माइक मेरो सामुन्ने राख्न ल्याइन् । म समाचार पढ्दै थिएँ, प्रकाशमानले काम नपाएर आफू बसेको मेच आफैले अगाडि पछाडि हल्लाइरहेका थिए । अकस्मात प्रकाशमान पछिल्तिर पल्टन पुगे, उठ्न सकेनन् । दायाँ बायाँ रहेका अरू मेच नसारी उनलाई उठाउने कसरी ? उद्घोषिकाहरू खित्खित् हाँस्न थाले र समाचार पढिरहेको मैले पनि हाँसो थाम्न सकिनँ । तारिणीले रश्मिसँग भएको रूमाल हतपत लिएर मेरो मुखमा कोच्न ल्याए, तर पनि हाँसो माइकले टिपिहाल्यो ।

त्यो प्रसारण कोठाको दक्षिणतिर ठूलठूला सल्लाका रूखहरू थिए । झ्याल खोले काग कराएको आवाज आउने, झ्याल बन्द गरे अँध्यारो हुने । घर-घरमा रहेका रेडियोमा कहिले काग कराएको आवाज, कहिले बच्चो रोएको आवाज, कहिले खित्खित् हाँसेको आवाज सुनियो, यही थियो त्यसबेलाको रेडियो नेपाल । बजेट कार्यक्रम र साधना कुनैको समुचित व्यवस्था नगरिकन यसरी रेडियो नेपालको स्थापना गर्न खोज्नु तारिणीमा रहेको आत्मविश्वाससिवाय केही होइन अथवा यो उनको कमजोरी पनि थियो ।

कमसेकम बजेटको व्यवस्था त हुनुपर्थ्यो, त्यो पनि छैन । एकपटक त्यहीँका पिउनले माइक उठाएर लगेछ, एउटा सानो माइक त्यो पनि नभएपछि त रेडियो प्रसारण नै बन्द हुने भयो । तारिणी चिन्तित भए, बल्लतल्ल माइक उठाएर लैजाने पिउनलाई समातेर ल्याइयो । तारिणीले सोधे –'किन माइक उठाएर लगेको ?' पिउनले सफासफी जवाफ दियो –'हो मैले माइक उठाएर लगेको हुँ, तलब नपाएको तीन महिना नाघिसक्यो, आज आउला छैन, भोलि आउला छैन । तलब नलिएर सधै कसले मरेर काम गर्न सक्छ ? मेरी जहान विरामी छिन्, औषधि गर्ने पैसा भएन, त्यसैले मैले माइक उठाएर लगेको हुँ । काम लगाएपछि मान्छेलाई पैसा दिनुपर्छ, होइन भने जाऊ भन्नुपर्छ ।'

तारिणी नाजवाफ भए । उनले पिउनलाई आफ्नो खल्तीबाट तीस-चालिस रूपैयाँ दिएर माइक फिर्ता लिए । तारिणीले त्यहाँ काम गर्ने कर्मचारीलाई दुई-तीन महिनामा जसोतसो गरी तलब बाँड्थे, फेरि दुई-तीन महिनासम्म पैसाको नामनिशान केही हुँदैन । तारिणीले त्यसबेला काम गर्नेलाई दिने पैसा मेरो विचारमा कहीँबाट चन्दा उठाएर ल्याएको हुनुपर्छ । यो कुरा जनकलाल शर्मालाई केही थाहा भएजस्तो मलाई लागेको थियो, तर मैले त्यसबेला उनीसँग कोट्याउनतिर लागिनँ । यो पंक्ति लेख्नलाग्दा मैले उनलाई सम्झैँ, तर उनी बितिसकेको केही महिनामात्रै भएको थियो । समाचार लेख्न कागज नभएर मैले पनि घरबाट कति पटक त लगेको थिएँ, यो रेडियो नेपालको विवशता थियो त्यसबेलाको ।

त्यस समयमा कर्मचारी अथवा कलाकारको अवस्था सम्झँदा अहिले मलाई आत्मग्लानी हुन थाल्छ । रश्मिका पति जगतजंग शाहले त्यही क्यान्टिन खोले, कलाकार तथा कर्मचारीहरूलाई भात ख्वाउन । कलाकारले पैसा तिर्न सकेनन्, उधारो डब्लिँदै गयो, आखिर क्यान्टिन नै बन्द भयो । यसको धेरै वर्षपछि कलाकार ज्ञानबहादुर श्रेष्ठले पनि क्यान्टिन खोले, तर उनी पनि त्यसै बिलाएर गए । तर पनि रेडियो नेपालका कर्मचारीहरूमा कहिल्यै नमर्ने उत्साह थियो, जुन उत्साह एउटा सानो बीजाङ्कुरको रूपमा रहेको मलाई प्रतीत हुन्छ । त्यही बीजाङ्कुरको परिणाम हो आजको यो रेडियो नेपाल । ❑

# पनौती : अँध्यारोबाट उज्यालोतिर

*There is only one good, that is knowledge; There is only one evil, thtat is ignorance, Education is difficult and expensive but whatever it costs, it is cheaper than ignorance. - Socrates*

*"शिक्षा गाह्रो र महंगो छ तर यो जतिसुकै गाह्रो र महंगो भएपनि अज्ञानता भन्दा सस्तो छ ।"*

२००७ सालको क्रान्तिपछि नेपालमा ठूलो परिवर्तन आयो, राणा शासन ढल्यो । शिक्षा प्रयास पनि राणा शासनको निर्मम नियन्त्रणबाट उन्मुक्त भयो । २००८/०९ सालमा पनौतीमा सबभन्दा जेठो अङ्ग्रेजी भाषाको स्कूल जन्म भयो ।

अन्य तीन जिल्लामा, गाउँ शहरमा विद्यालय सञ्चालन गर्न के कति कठिनाइहरू सामना गर्नुपऱ्यो, त्यस सम्बन्धमा म पूर्णतया अनभिज्ञ छु । तथापि पनौतीमा विद्यालय चलाउन अति गाह्रो छ भन्ने कुरामा पनौती निवासीहरूमध्ये अनुभवमा पाको म पनि हुँला जस्तो मलाई लागेको छ ।



हरिसुन्दर सैंजू
जन्म : वि.सं. १९८९ माघ १६
पनौती, काभ्रे
अवसान : वि.सं. २०६८ असोज १२

२०४० सालमा सूर्योदय बोर्डिङ्ग स्कूल स्थापना हुँदा हालको श्री इन्द्रेश्वर उच्च मा.वि. ३२ वर्षको र पनौती भाषा पाठशाला ३२×२=६४ वर्षको बूढो भइसकेको थियो । ३२ वर्षपछि श्री इन्द्रेश्वर हाइस्कूल नामको विद्यालय स्थापना र सञ्चालन मैले गर्नुपरेको थियो । अतः नयाँ शिक्षा पूर्वको साढे ५ वर्ष र त्यस पश्चातको साढे १० वर्ष गरी कुल १६ वर्षको विद्यालय सञ्चालनको भुक्तभोगीको अनुभवले खारिई पोख्त भइसकेको थिएँ ।

निजी विद्यालय सूर्योदय बोर्डिङ्ग स्कूलको स्थापनाकालमा यो स्कूलको संस्थापक प्रिन्सिपल श्री त्रिविक्रम कर्माचार्यज्यूले सञ्चालक बोर्डको अध्यक्ष मलाई राख्नुभएको थियो । मैले पनौतीमा विद्यालय सञ्चालन गर्न सजिलो नभएको, अनाहकमा झण्झट झेल्नुपर्ने, झुकाई र टोकाई सहनुपर्ने आदि पूर्व संकेत र सचेत गरिएको कुरा मलाई याद छ । कति दुःख र कष्ट सहेर विद्यालय चलाई आएको छु, विद्यालय सञ्चालनमा लागिपर्ने महानुभावहरूले अनुभव गरिसक्नुभएकै होला । आज २०५८ साल भयो । विद्यालय स्थापना भएको पनि १८ वर्ष बितिसक्यो । १८ वर्ष निर्विघ्न सूचारू रूपले नियमित विद्यालय सञ्चालन गर्न सफल भएकोमा बधाई छ, अन्तरआत्मादेखि नै धन्यवाद छ !

६/७ वर्षपछि आज सूर्योदय बोर्डिङ्ग स्कूलको दर्शन गर्न पुगेँ । १८ वर्ष पनौतीको जलवायु माटोमा निजी विद्यालय आत्मनिर्भर भएर बाँच्नुसक्नु पनि धन्य हो । सम्पन्नावस्थामा पुगेको छ भनी लेख्नु त अत्युक्ति होला । विद्यालयको प्रगति नैराश्यजनक त अवश्य होइन । मैले आशा गरेको भन्दा अधिक प्रगति भएको देखेँ । पूरा दुई घण्टी विद्यालयमा बिताएँ । शिक्षकहरूको विद्यालयप्रतिको

ममता, कार्यतत्परता, कर्तव्यनिष्ठता उत्साहवर्द्धक पाएँ । सुनियोजित ढङ्गले स्कूलको कक्षाहरू सञ्चालन भएकोमा प्रभावित भएँ । स्कूलको निजी भवन नभएको खट्कियो । दश वर्ष पहिले नै स्कुल भवनको लागि जग्गा किनेर भवन बनाउने प्रसङ्ग र प्रयास भएको कुरा सम्झेँ । स्कूलको डेराका कक्षा कोठाहरू साना, साँघुरा भएकोले निजी भवन निर्माणको निकै खाँचो भएको अनुभव गरेँ ।

२०२४ सालमा १६ वर्ष पुगेको जेठो स्कूल श्री इन्द्रेश्वर मिडिल स्कूलको हालत र २०५८ सालमा १८ वर्ष पुगेको सूर्योदय बोर्डिङ्ग स्कूलको प्रगतिको अन्तर घतलाग्दो प्रसङ्ग तथा रोचक कथा-व्यथाको रूपमा तुलनात्मक अध्ययनले सूर्योदय बोर्डिङ्ग स्कूललाई माध्यमिक चलाउने हौसला प्राप्त भएको छ । एउटा विपन्न बेवारिसे अर्को न्यूनतम आवश्यकता पूरा गरेर निर्वाह गरिरहेको श्री इन्द्रेश्वरको मठमा श्री इन्द्रेश्वर महादेवको रथको काठमुढा राख्ने Stone मा एकदेखि पाँचकक्षाका विद्यार्थीहरू काठमा टुत्रुक्क बसेर पढ्ने र पढाउने, न ब्ल्याकबोर्ड छ न राख्ने ठाउँ छ, चक नै नचाहिने । छैठौं कक्षा खुला बार्दलीमा, सातौं र आठौं मठ पस्ने खुल्ला ढोकाका दायाँ र बायाँतिर कठबारले नछुट्याएको आमने-सामने । नौ र दश अफिस पस्ने अँध्यारो कोठामा सानो अफिस कोठा पुग्दा सबै कक्षाहरूमा टेकेर जानुपर्ने । एकदेखि दश कक्षासम्म र अफिस कोठासमेत गरेर विद्यालयले चर्चेको क्षेत्रफल २५० वर्गफिटभन्दा कम थियो ।

हाइस्कूलका १ देखि १० का सम्पूर्ण कक्षाहरू ५ वटा कक्षा कोठामा सञ्चालन गरेका थियौं । कूल विद्यार्थी संख्या ६५ मात्र थियो । कक्षा सञ्चालनको लागि १० जोर डेस्क बेञ्च र ४ वटा मेच भक्तपुरमा अर्डर गरेको र बिल चुक्ता गर्न साह्रोगाह्रो परेको अनुभवको अविस्मरणीय छाप छातीमा चित्रित छ । प्रस्तुत लज्जास्पद विवशता तथा विभत्सताको चित्रले विद्यार्थी बाल-बालिकाको मनमा छाप पर्ने अपेक्षा गरेको छु । कौतहलता तथा उत्सुकतावश पुराना कुराको अनुसन्धान गर्ने प्रेरणा मिल्ने आशा गरेको छु । लज्जास्पद यथार्थताको प्रस्तुति कामयाव हुनेछ ।

Since we canot get what we like, let us like what we can get. - **Spanish proverb**

२००४ सालदेखि २०२४ सालसम्म २० वर्ष मेरो बसोबास काठमाडौं भएकाले स्थानीय जेठो विद्यालयको अग्रीम १६ वर्षको वस्तुस्थितिबाट म अनभिज्ञ भएँ । सोधपुछ गर्छु आलटाल गरी टारिदिन्छन् । सोधपुछको भरमा लेख्न पनि लेख्दिन । विश्वस्त नभई हुस्सु हुनु पनि हुँदैन, सत्यको खोजी गर्न इच्छुक व्यक्तिले यस्तै वाध्यता भोग्नुपर्छ ।

शिक्षा हासिल गर्ने अवसर प्रदान गर्ने विद्यालयको महत्वपूर्ण भूमिका हुन्छ । हाल विद्यालयमा अध्ययनरत विद्यार्थीहरूले चाख लगाएर पढोस्, बुझोस् भन्ने अभिप्रायले आफ्नै गाउँ-ठाउँको मर्मस्पर्शी व्यथालाई प्रसङ्गको प्रमुख केन्द्र बनाएको छु । स्थानीय शिक्षाको विकास तथा प्रगति कच्छूप गतिमाथि प्रकास ढाल्न आफ्नै पिताको जमानादेखि आफू र वर्तमान कालसम्मका शिक्षा हासिल गर्ने अवसरको विकासको एक झलक प्रस्तुत गर्ने जमर्को गरेको हुँ । असान्दर्भिक तथा पिता पूर्खाकै बेइज्जती गऱ्यो भनी गिल्ला नगरी दिनुहुन अनुरोध छ । अवसर नपाउनु एक, अवसर गुमाउनु अर्कै हो ।

सर्वविदितै कुरा हो, राणाकालीन शासनकालमा शिक्षा नियोजित थियो । शिक्षा प्रसारको गति मन्द मात्र होइन बन्द नै थियो । शिक्षा प्रसारको प्रवाह अवरूद्ध थियो । उदाहरणको लागि उत्साही युवक चिनियालालले विद्यालय सञ्चालन गरेवापत जेलको यातना भोगी अन्तमा शहीद हुनुपऱ्यो । पुस्तकालय स्थापना काण्ड घटेको थियो भने शिक्षाको दीयो बाल्न खोज्नु दण्डनीय अपराध थियो ।

राणाकालको शुरू-शुरूमा नै कोतपर्वका हिरो जंगबहादुरले बेलायतबाट एक अङ्ग्रेज ल्याई १९१० मा दरबार हाइस्कूलको स्थापना गरेका थिए । तर शुरूको ४८ वर्ष १९५८ सम्म दरबार स्कूल दरबार र दरबारसँग निकट सम्बन्ध भएका भाइ-भारदार, उच्च खानदानी परिवारका ज्यादै सीमित सन्तानका लागि मात्र सीमित रह्यो । दरबार स्कूल सार्वजनिक बनाउने क्रममा स्वयं श्री ३ देव शमशेर चार भञ्ज्याङ्ग बाहिर निकाला हुनुपऱ्यो । दरबार हाइस्कूल सर्वसाधारणको लागि खुला गरिए तापनि पाखा भित्ताका जनताका लागि ल्हासाको सुन थियो, आकाशको फल थियो । साँवा अक्षर चिन्ने अवसर नपाएकाको लागि काठमाडौंमा बसेर अङ्ग्रेजी भाषाको माध्यमका अङ्ग्रेजी पढ्ने क्षमता तथा आँट आश्चर्यको कुरो थियो । राजधानी काठमाडौंका निवासीहरूमध्ये पनि विरलैले मात्र अङ्ग्रेजी पढ्ने सुविधा उपभोग गर्न पाए ।

पनौतीमा कालो अक्षर भैंसी बराबरको जमानामा जन्मनुभएका पिताजी र उहाँका समकालीन तथा पूर्वजहरूका

लागि शिक्षा हासिल गर्ने अवसर चिन्तनीय अवस्थामा भएको अनुमान गर्न सकिन्छ । मेरो पिताजी निरक्षर हुनु हुन्नथ्यो, साक्षर हुनुहुन्थ्यो । त्यहि नै गणिमत थियो । उहाँको समकालमा साक्षरता नै पनौतीका सर्वसाधारण व्यक्तिले पाउन सक्ने उच्चतम शिक्षा थियो । घरमा भऱ्याङ्गको खुड्किलो नै नभएपछि घरको बुइँगलमा पुग्ने आधार नै भएन । तत्कालीन स्तरमा पिताजी र उहाँका दुई दाजुहरू साक्षर हुनु शिक्षित परिवारको नमूना मान्न सकिन्थ्यो । यति योग्यताले पनि औंठाछाप हुन नपरेको, टाठाबाठा जाली-फटाहाको पञ्जामा पर्न नपरेको, शोषणमुक्त भएको मेरा पूर्वजहरू हुनसक्छन् । आजसम्म आत्मनिर्भर भएर उभिन सक्नुको कारण पनि यही हुनसक्छ । स्थानीय शिक्षा प्रयासको अभिरूचिप्रति उन्मुख भएर आफ्नै घरमा विद्यालय स्थापना गरेको हुनसक्छ । स्मरण होस्, इन्द्रेश्वर र चक्रेश्वर विद्यालयको जन्म मेरै घरमा भएको थियो ।

मेरी आमा साक्षर हुनुहुन्थ्यो । आमाको सात पैसा बाह्र पैसा हुन्छ भन्न सक्नुहुन्नथ्यो । आमाको सरलता, अवोधता र अज्ञानतामा पिताजी उपहास गर्नुहुन्थ्यो । जिस्क्याउने, ख्याल ठट्टाको नियतले २५ बढी कि ३२ बढी ? जस्तो प्रश्न गर्नुहुन्थ्यो । अक्सर गरेर माताजीको जवाफ गलत हुन्थ्यो । वास्तवमा पिताजी स्वयं ३५ मा ७ जोड्नुपरेमा दायाँहातका औंलाहरू बाँयाहातमुनि खोकिला पुऱ्याएर हातका औंलामा जपमाला जप्नुहुन्थ्यो । आजको जस्तो क्यालकुलेटर थिएन । त्यसबेला बूढाबाबुलाई सानी छोरीले 'पाँचसय भन्नुभएको होइन यहाँ छ पाँच हजार पो लेखिएको छ नि' भनेर औंठाछाप रोक्न खोज्ने छोरीहरू पनि थिएनन् ।

पुस्ता बदलियो । मेरो पढ्ने सिक्ने वयमा पनौतीमा भाषा पाठशाला एकमात्र थियो । म १४ वर्ष नाघिसक्दा पनि अङ्ग्रेजी अक्षर अल्फावेट A B C चिन्ने अवसर पाइनँ । विद्यालय नभई पढ्ने अवसर नमिल्ने, सूर्योदय नभई अन्धकार नहट्ने, गन्तव्यस्थानको लागि प्रस्थान सूर्योदयको प्रतिक्षा गरेर साध्य नहुने अन्धकारमा अल्मलिरहने व्यक्तिाई समयले न कुनै अब आफ्नो जन्मभूमि पनौतीमा 'फलफूल खाई नित्य रमाई वनमा फिर्ने बबुरालाई' पहिलो २ वर्ष भक्तपुरमा त्यसपछि काठमाडौंको पिंजरामा पालिन जानुपऱ्यो । स्मरणरहोस् काठमाडौंमा जन्मेकी सानी केटी कमला १४ वर्षमा आई.ए. पास गरिसकेकी थिइन । म १४ वर्षको उमेरमा अङ्ग्रेजी अल्फावेट सिक्दै थिएँ । मैले एस.एल.सी. गरेको उमेरमा कमलाले एम.ए. पास गरिसकेकी थिइन् । हाम्रो उमेर १० वर्ष फरकको कारण पढाईमा सँगसँगै परेको मात्र हो बी.ए. मा त म अझै पछि परेँ । जन्मस्थानको अन्तरको कारण शिक्षा हासिल गर्ने अवसरमा हृदयविदारक विषमता मननीय छ । उपरोक्त उदाहरण स्थानीय विद्यालयको महत्ताको ज्वलन्त दृष्टान्त भयो ।

पनौतीमा श्री इन्द्रेश्वर हाइस्कूल स्थापना गरेको हुँ । कसैको इन्द्रासन बेदखल गरेको होइन । निभ्न लागेको बत्ति बालेको हुँ । विद्यालय सञ्चालनमा मेरो कुनै त्रुटी छैन । बेवारिसे विद्यालयलाई बिल्नबाट बचाएको हुँ ।

पनौतीमा दुईचारजना देशकै लागि अभिसाप छन् । मह चाट्ने मौका मिल्ने काममा मात्र चासो राख्ने मरिमेट्नुपर्ने काममा तमासा हेर्ने, न आफू अघि सर्छन् न अरू अघि सरेको सहन्छन् । आफू नगर्ने अरूले गरेको डाहा गर्ने, ईर्ष्याले जल्ने, शासन सत्ताको कुर्सी नै पाए निरंकुश बनी अनाधिकृत आर्थिक नाकाबन्दी गर्छन् । पनौतीमा बारीमा मकै नपाकेसम्म कालुको, पाकेपछि अतिक्रमण हुने भालुको हुन्छ । जिम्मेवारी बोकेर काम गर्दा काम गर्ने एक्लै हुन्छ । घरबसी काशी देख्ने अनेक हुन्छन् । अनि कामको टिकाटिप्पणी गर्ने हुन्छन् बजारभरि । यस्तै विडम्बनाले पनौती उकालो लाग्न नसकेको हो । एक दशकदेखि अलि सम्हालिएको छ कि !

सूर्यग्रहण, चन्द्रग्रहण लाग्छ – छोड्छ । एकछिनको लागि मात्र हुन्छ, सदाको लागि हुँदैन । सत्य सदा ओझेलोमा रहँदैन । बादल फाटेपछि उज्यालो हुन्छ । झुट लाञ्छनाको आयु यत्ति नै मात्र हो । मानिस विवेकशील प्राणी हो । सत्य र न्यायको अवलक्षण मानवीय नैसर्गिक प्रवृत्ति हो । मानव मात्रको हार्दिक, आन्तरिक, मानसिक, बौद्धिक, नैतिक, समर्थन सत्यकै पक्षमा हुन्छ । बोल्दैनन् लुच्चाको लुटमाथि, औंला ठड्याउने साहस गर्दैनन् । सोझासिधा लाखा पाखा हुन्छन् । लुच्चा-फटाहाको मनमोज हुन्छ । सर्वत्र भ्रष्टाचारको बिगबिगी छ । आचारसंहिता हात्तीको देखाउने दाँत जस्तो भैरहेको छ । राजनीतिको नाममा एक लुच्चाले सय सच्चाहरूको भाग हजम गर्न पाएका छन् ।

सच्चा सदाको लागि हुन्छ, लुच्चा कालान्तरमा लोप हुन्छ । महाभारतको परिणामलाई सम्झे पुग्छ । यथार्थ व्याख्या गरिरहनु पर्ने होइन । 'सत्य मेव जयते' त हुन्छ नै । सत्य र न्यायको पक्ष लिने स्वयं श्रीकृष्णको पनि धोती

फुस्केको थियो । सिखण्डीलाई अघि सार्नुपरेको थियो । युधिष्ठिरले पनि 'अश्वस्थामा हतोहत' भनी झुठ बोल्नु परेको थियो । कर्णको बग्गी हिलोमा गडेको मौका छोप्नु परेको थियो । यद्यपि सच्चा सच्चै हुन्छ । लुच्चा लुच्चै हुन्छ । सच्चा र लुच्चामा आकाश र पातालको फरक हुन्छ । अतः सच्चाप्रति श्रद्धा र लुच्चाप्रति घृणा विवादरहित वास्तविकता हो । घच्चा-घच्चीमा बृद्ध जटायुको पखेटा काटियो । उत्साह, उमंग, जोश, हौसला सेलायो । जेजति गर्न सकेँ त्यतिमा नै सन्तोषको साँस फेरेर अनिवार्य अवकास पाएँ ।

*He who spares the bad seeks to corrupt the good, when a done begins to assocuate with crows the feathers remain white but it's heart grows black. What food is to the body books are to the mind, - German proverb.*

बच्चा बच्चै हुन्छ बूढा बूढै । बच्चा प्रारम्भ बूढा अन्त्य । आदि र अन्त्य समान हुँदैन । बच्चा कच्चा हुन्छन्, बूढा पक्का । बच्चा कोरा कागज, बूढा थोत्रा । बच्चा बन्नु छ, बनाइनु छ, बूढाले बिलाइनु छ सेलाइनु छ । बच्चाले अवसर पाउनु छ, बूढाले अवकास र अन्त्यमा अवसान । उदय पछि उज्यालो हुन्छ, अस्त पछि अँध्यारो । बच्चालाई बच्चाको पेटले पचाउन सक्ने जति खाना खुवाइन्छ । उसलाई विद्यालयमा शिक्षकले उसले पचाउन सक्ने जति पाठ पढाइन्छ । विद्यालयमा विद्यार्थीले आफूमा भएको प्रतिभा प्रस्फुटित गर्ने मौका पाउँछ । विरूवा स्वयं फलदायक बृक्षको रूपमा बढ्छ आज कुल्चिएला भनेर सर्तक हुनुपर्ने सानो बोट विरूवा शीतल छहारी दिने रूपमा प्रवर्द्धन हुन्छ । अतः आजका सानातिना भुराभुरीलाई उपेक्षाको दृष्टिले देख्नु सरासर गलत हो । आजका कच्चा बालबच्चा नै भोलिका लक्का युवक-युवती र पक्का बूढाबूढी हुने हुन् । सनक, सनन्दन, सनातन र सनतकुमारजस्तै सधैं साना हुँदैनन् ।

*He who will not learn when he is young will regert it when he is old. A child kis the father of man. - W. wordsworth.*

जन्मदा सबका सब साना र समान भएर जन्मन्छन् । तीमध्ये कोही तीता, कोही मीठा, कोही गुलिया, कोही अमिला भएर हुर्कन्छन् । सन्तान थरीथरीका हुन्छन् । विभिन्नता तथा विषमता परिवेश तथा शिक्षा दीक्षाको भिन्नतामा निर्भर हुन्छ । हुनतः एकै कक्षामा पढ्ने विद्यार्थीहरूमा पनि कोही टुप्पोबाट फलेका कोही फेदैमा सडेको अनेकौं दृष्टान्तहरू पाइन्छन् । मजबुरीसाथ मनन गर्नुपर्ने कुरा हुन्छ पढाईमा विद्यार्थीको तपस्या र लगनशीलताको भूमिका प्रमुख हुन्छ । घर-परिवार, साथी-संगत, समाज, छिमेक-शहर, गाउँ, रेडियो, टिभी, सिनेमा, वातावरण आदि सबका सब प्रमुख अनौपचारिक पाठशाला हुन् । शिक्षामा विद्यार्थीको एकाग्रता नै सफलताको मूल कारण हुन्छ । शिक्षक त बगैंचे माली मात्र हो । बगैंचामा अनेक फलफूलहरू हुन्छन् । नौकाद्वारा नदी पार गरिदिने नाविक माझी मात्र हो । सुषुप्त प्रतिभालाई कृयाशील बनाउने कलाकार मात्र हो । बाजेको पालाको विद्वान हुन केही पढेर मात्र नातिलाई पुग्दैन । आर्थिक समस्याले विवश भएर विद्यालयको विकास गर्न नसक्नु कार्य गर्न नखोज्नु होइन । अनिकालमा बीउ जोगाउनु पनि गनिमत हो । हिजोको समस्या हिजोकाले सहेर भोगे, सामना गरे । समाधानका लागि भगीरथ प्रयत्न गरेर आजको स्थितिमा ल्याई छोडे । सो बिर्सने हो भने आजको प्रयत्नलाई पनि भोलिकाले बिर्सने नै छन् । इतिहास लुकाउँदा-लुकाउँदै लोप हुने डर हुन्छ । अतः इतिहासमा भएका-गरेका राम्रो कार्यहरूको स्मरण गर्न सिकौं; यसैमा सबैको भलो निहित छ । ❑

# मेरो जीवनी



■|||| हरिहर शास्त्री
जन्म : वि.सं. १९८० जेठ शुक्लतृतीया
टेबहाल, काठमाडौं
अवसान : वि.सं. २०३४ पुस २४

मेरो जन्म १९८० (वि.सं.) ज्येष्ठ शुक्ल तृतीयामा भएको हो । मेरो पिताको नाम टीकाराम र आमाको नाम यादवलक्ष्मी हो । मेरो पिता धनी परिवारको हुनुहुन्थ्यो र माता मध्यम परिवारको । उहाँहरू मखनटोलमा बस्नुहुन्थ्यो ।

म पिताको साहिँलो छोरो हुँ । मेरा पिताका सात छोरा र पाँच छोरी थिए । म पाँच वर्षको छँदा पिताको स्वर्गारोहण भयो । उहाँ बारा मालमा सुब्बा हुनुहुन्थ्यो । पिताको अन्त्यपछि मेरो पालनपोषण माताबाट भयो । त्यस समयमा अङ्ग्रेजी शिक्षाको महत्व थिएन । ब्राह्मण जाति संस्कृत पढ्थे । मेरा दुई दाइहरूले केवल त्यस बेलाको चार पास मात्र दिएका थिए । उनीहरूको जागिर ठूलो नहुँदा माताले पुर्ख्यौली सम्पत्तिबाट मलाई पालनपोषण गर्नुभयो तर झिक्न थालेपछि त्यो सम्पत्ति कतिबेर रहन्थ्यो ? दिनप्रतिदिन माता दीन अवस्थामा पुग्नुभयो ।

माताले मेरो व्रतबन्ध आठ वर्षको उमेरमा गरिदिनुभयो । त्यसपछि म रानीपोखरी संस्कृत-प्रधान पाठशालामा रूद्री पढ्न भर्ना भएँ । त्यो समय १९९० को थियो । त्यही सालको माघ २ गते ठूलो भूकम्प गयो । जुद्धसडकनिरको टेबहालमा जन्मेको म त्यसबेला डिल्लीबजार ढुङ्गेधारानिरको घरमा थिएँ, त्यो घर आमाले किन्नुभएको हो तर भूकम्पले त्यो भत्कियो । परिस्थिति झन्झन् बिग्रँदै गयो ।

रूद्री पढिसकेपछि म संस्कृतको अध्ययनतर्फ लागेँ । खराब परिस्थितिले गर्दा त्यो घर आमाले बेचेर कमलपोखरीमा अर्को घर किन्नुभयो ।

म पढ्दा तेजिलो थिएँ । संस्कृत मलाई निकै आउँथ्यो । जाँचमा पहिला वा दोस्रा हुन्थेँ । २००० सालमा मैले प्रथम परीक्षा पास गरेँ । मलाई संस्कृत आउने हुनाले माहिला गुरूज्यू हेमराजले छोरा केशरीराजको साथी बनाएका थिए । म बिदाको समयमा त्यहाँ जाने गर्थे ।

२००३ सालमा शास्त्री (साहित्यमा) परीक्षा दिएँ तर भारतमा आन्दोलनको समय हुँदा एक दिनको जाँच त्यसै छुट्यो । त्यो सालमा मैले शास्त्री पास गर्न सकिनँ ।

त्यही सालको कार्तिकमा म नेपाली भाषा-प्रकाशिनी समितिमा भर्ना पनि भएँ । मेरो मासिक रू. २५।- थियो ।

२००३ वैशाखमा डिठ्ठा रामजी पौड्यालकी छोरी सावित्रीसित बिहा पनि भयो । दुवै दम्पती २५।- रू. को भरमा बहाल तिरी जीविका चलाउँथ्यौँ । डेरा सरेको दिनमा कोठामा ताल्चा मारी हामी दुवै दम्पत्ति बाहिर गएका थियौँ, फर्केर आउँदा कसैले चोरी गरी ताल्चा मारेर गएछ । भित्र खोलेर हेर्दा नवदुलहीको

कुनै लुगाफाटो थिएन तैपनि धैर्य गरियो । यो डेरा पुतलीसडकमा थियो ।

२००४ मा फेरि काशी गएर साहित्यमा शास्त्री परीक्षा दिएँ । यसपल्टचाहिँ म द्वितीय श्रेणीमा पास भएँ ।

पुतलीसडकको डेरामा चोरी भएपछि म डिल्लीबजारमा नाति साहूको घरमा सरेँ । त्यहाँ २ वर्ष जति बसेँ । जीविका राम्ररी नचलेकोले ६ महिनाजति श्रीमतीलाई माइतमा लगेर पनि राख्नुपर्‍यो ।

२००३ मा जब ने.भा.प्र.स.मा गएँ, त्यहाँको अध्यक्ष बालकृष्ण सम हुनुहुन्थ्यो । हाकिम सागरमणि । मेरो दुःख देखेर सागरमणिले प्रेसको प्रुफ हेर्ने काममा लगाउनुहुन्थ्यो । त्यताबाट कहिलेकाहीँ १०-२० पाउँथेँ ।

ने.भा.प्र.स.मा अहिलेका कविहरू जम्मै आउँथे । त्यहाँ साहित्यको निकै चर्चा हुन्थ्यो । त्यही चर्चा सुनेर म पनि साहित्यमा प्रवृत्त भएँ । २००४ सालमै **नेपाल पुकार** भन्ने कविता पद्यसङ्ग्रह प्रथम भागमा छपाएँ पनि । मेरो प्रथम कविता त्यही हो ।

२००४ मा स्व. हृदयचन्द्रसिंहले साहित्य-परिषद् खोले । त्यसको तत्वावधानमा कवि-सम्मेलन हुँदा मैले पनि त्यसमा भाग लिएको थिएँ ।

२००६ सालदेखि ११ साल माघ १९ गतेसम्म म गभर्नर यावदप्रसाद पन्तको घरमा पनि डेरा गरेर बसेँ । घरको सम्पत्ति कुनै नपाएकोले मन यति विचलित थियो कि तैपनि सास अड्याइ नै रहेँ ।

साहित्यतर्फ म लम्की नै रहेको थिएँ तापनि २००८ सालमा मैले संस्कृत भाषाको प्रचारको लागि संस्कृत-प्रसारिणी-समिति र नारी जातिमा पनि संस्कृतको रस पसोस् भनी नारी विद्या-पीठ स्कुल पनि खोलेको थिएँ । त्यसको लागि अथक् परिश्रम गरी श्री ५ त्रिभुवनबाट कालिकास्थानमा घर (सरकारी) पनि प्राप्त गरेँ । म सचिव भएर काम गर्थें । यही उद्देश्यको विकासको लागि प्रत्येक हप्ता रेडियोमा कार्यक्रम राख्न पनि लगाएको थिएँ । धेरैजसो म आफू रेडियोस्टेसनमा गएर कार्यक्रम प्रसारित गर्थें ।

मैले बाँच्नको लागि धेरै परिश्रम गर्नुपर्‍यो । मोहन शमशेर जाने बेलामा रू. ४१।- गरिदिएका थिए तर त्यसबाट पनि जीवन के धानिन्थ्यो ? २००८ वैशाख ११ गते म साठी रू. खाएर दरबार हाईस्कूलमा भर्ना हुन पुगेँ । आजसम्म त्यहीँ काम गर्दैछु ।

२००७ सालमा **समाजको चित्र** भन्ने उपन्यास लेखी ने.भा.प्र.स.लाई चढाउँदा उसले ७१०।- रू पुरस्कार पनि दिएको थियो, त्यो आजसम्म छापिएको छैन । त्यो सायद साझा प्रकाशनसँग होला । यसपछि २०१३ सालमा **नवीन-निबन्ध-प्रकाश** प्रथम भाग निकालेँ । पहिलो पुस्तक मेरो त्यही हो । फाटफुट कविता छाप्तै आए तापनि अरू लेखेका पुस्तक छाप्ने मौका खोजिरहेको थिएँ ।

यस बीचमा म १४ वटा पाठ्य-पुस्तकतिर पनि अलमलिएको छु किनकि बासको लागि मैले त्यो काम गर्नुपरेको थियो । ०११ सालमा मैले अत्यन्त परिश्रम गरी डिल्लीबजार मैतीस्थानमा बास पनि जोडेँ ।

०१२ सालमा श्री ५ महेन्द्रबाट राजनीतिक तथा सामाजिक सम्मेलन गराइबक्सेको थियो, त्यसमा पनि मैले भाग लिएको हुँ ।

०२१ सालमा देशव्यापी साहित्य-परिषद् खोली दुई दिन सरस्वतीसदनमा साहित्यसम्मेलन पनि गराएँ । त्यही परिषद्को तत्वावधानमा ०२३ सालमा 'श्री ५ महेन्द्र र नेपाल' भन्ने विषयमा निबन्धप्रतियोगिता पनि गराउने मौका पाएँ ।

२/३ वर्षसम्म रेडियो स्टेसनको काव्य-कुञ्जमा भाग लिई आफ्ना कविताहरू पनि प्रसारित गरेको थिएँ ।

२०२१ मा **अवनति** (उपन्यास), २०२२ मा **दुर्दशा** ( उपन्यास) र **विश्वशान्तिको बाटो** नामक ठूलो निबन्ध पनि प्रकाशमा आए । २०२३ मा **मनको छाल** (कवितासङ्ग्रह), २०२४ मा **उषा-विनोद** (महाकाव्य) तथा २०२५ मा **फेरिजन्मूँ यही नेपालमा** (कवितासङ्ग्रह) र **रम्भा** ( महाकाव्य), **अनभिज्ञता** (खण्डकाव्य) प्रकाशमा आए । २०२६ मा **शोभाशशी** (खण्डकाव्य), २०२८ मा **देवी** ( खण्डकाव्य) **सपनाको फूल** (खण्डकाव्य), **सित्री** ( खण्डकाव्य) तथा २०२९ सालमा **समय** नामक (खण्डकाव्य) पनि प्रकाशित भए । २०३० मा **डाँडामा परेका पाइला** नामको कवितासङ्ग्रह पनि प्रकाशमा आयो ।

२०२४ मा साहित्य-सेवा गरेवापत शिक्षा मन्त्रालयबाट ३००।- रू. पुरस्कार प्राप्त भयो । २०२६ मा गो.द.बा. चौथो दर्जा पनि प्राप्त भयो । २०२८ मा राजकीय प्रज्ञा प्रतिष्ठानबाट आयोजित कविता गोष्ठीमा भाग लिँदा तृतीय भई ५००।- रू. पुरस्कार पाएँ । २०२८ कै युवक सङ्गठनबाट आयोजित कवि-सम्मेलनमा पनि सान्त्वना पुरस्कार ५०।- रू पाएँ ।

नेपाली शिक्षापरिषद्को तत्वावधानमा भएको जनकपुर, धरान तथा विराटनगरको कवि-सम्मेलनमा पनि भाग लिने मौका पाएको छु ।

विराटनगरमा मनाइएको भानुजयन्ती तथा अमृत साइन्स कलेजले आयोजना गरेको कवि-सम्मेलन एवम् पत्रकार समितिले आयोजना गरेको सभा र २०२९ सालमा शहीद-दिवसको उपलक्षमा नगर पञ्चायतद्वारा आयोजित कविता-गोष्ठीको सभापति पनि भएको छु ।

मेरा कविता तथा लेखहरू प्रशस्त मात्रामा पत्रपत्रिकामा प्रकाशित भएका छन्, पाठकहरूलाई विदित नै होला ।

अहिले मेरो साथमा पत्नी सावित्री तथा चार छोरा छन् । जेठो छोरा रूसमा खानी विषयको इञ्जिनियरिङ पढ्छ । अब आउन १ वर्ष बाँकी छ । माहिलो छोरा एम.कम. पढ्छ । साहिँलो छोराले यसपाली बी.कम. दिन्छ । कान्छाले पनि यसपाली म्याट्रिक दिँदैछ । छोरीको विवाह भइसकेको छ । उनीले पनि बी. एस्सी. पास गरेकी छन् । मभन्दा तल दुई भाइ पनि छन् तर ती बेग्लै छन् ।

यी उपर्युक्त काम कुनै स्वार्थवश गरिएका होइनन् । नेपाली भाषाको प्रेमले नै यति लेख्न सकिएको हो । मैले यतिका पुस्तक प्रकाशित गर्दा आफ्नो परिश्रमको धन पनि गुमाएको छु । साहित्यबाट मैले केही फाइदा लिएको छैन । उल्टो बुक-पोष्ट गरेर पनि धन गुमाएको छु । अरू पनि निम्नलिखित तीन पुस्तक प्रकाशित गर्न बाँकी छन् । कुनै सज्जनले छाप्ने मौका दिनुभयो भने आफूलाई सफल सम्झने थिएँ –

१. **धरणी** महाकाव्य (१९ सर्गको)
२. **सगरमाथा** (खण्डकाव्य)
३. **पोखिएका आँसुहरू** (कवितासङ्ग्रह)

०१० सालमा माताको निधनपछि माथि उल्लिखित कान्छा भाइलाई १२ वर्षसम्म साथैमा राखी पालेको हुँ । पछि बिहा गरिदिएर कर्तव्य पूरा गरेँ । मेरी श्रीमती असल भएकीले यतिका काम गर्न साहस मिल्यो ।

म यो सन्दर्भमा मदन पुरस्कार गुठी र बिहान पत्रिकाका सम्पादक कमलप्रसाद घिमिरेलाई पनि धन्यवाद नदिई रहन सक्तिन । किनकि यी दुवैले पुस्तक प्रकाशन र कविता प्रकाशनमा मद्दत गरेका छन् ।

एउटा ठूलो गल्तीले आज म पछाडि परिरहेको छु । गल्ती यही हो – जाँचको बेलामा दिनका दिन सरस्वतीलाई बिहान ढोग्थेँ । मध्यमा दिन जाँदा काशीमा जाँचको पहिलो दिन सरस्वतीलाई ढोग्न बिर्सेछु । त्यसैले राती आमालाई सपना देखाएछ । भोलिपल्ट उठेर आमाले मलाई भन्नुभयो -'बाबु ! हिजो तँ सरस्वतीलाई ढोग्न गइनस् ?' मैले भनेँ 'बिर्सेछु ।' आमाले भन्नुभयो- 'कत्रो न गराउँला भनेको मकहाँ आउँदै आएन ।'

यसबाट मन खिन्न भयो । साँच्चै २००४ सालदेखि सेवा गरेर पनि आफ्नो व्यक्तित्व छिटो देखाउन सकिनँ ।

यो मेरो ठूलो भूल हो । अन्त्यमा म सरस्वतीलाई हृदयले वन्दना गर्दै यो जीवन कहानी यहीँ टुङ्ग्याउँछु । सज्जनहरूले यो यस्तो रहेछ भनेर हेला नगर्नुहोला ।



# मुक्तिनाथमा दोस्रोपल्ट



■ हेमराज पहारी
जन्म : वि.सं. २००२ कार्तिक १९
पोखरा, कास्की
अवसान : वि.सं. २०६६ फागुन १७

धार्मिक तथा पर्यटकीय महत्वको मुक्तिनाथ जाने इच्छा धेरै पहिलेदेखि मनमा पलाइरहेको थियो । दिनहुँ दोहोरिरहने, कहिल्यै नसिद्धिने र नगरी नहुने घरधन्दाको पट्यारलाग्दो जीवनचक्रबाट यो शरीर र मनलाई केही दिनको विश्रान्ति दिन र नयाँ परिवेशमा प्रवेश गराउन भ्रमणको ठूलो महत्व हुन्छ । विभिन्न खालका बोटबिरूवा, कीटपतङ्ग, पशुपन्छी र व्यक्तिहरूले आफ्नो जीवनयापन कसरी गरेका हुन्छन् भन्ने कुराको जानकारी पनि हामीलाई भ्रमणले दिलाउँछ । हुन त यस्तो जानकारी पुस्तक, पत्रपत्रिका र विद्युतीय सञ्चार माध्यमले पनि दिन्छन् । तापनि तिनीहरूले दिने जानकारी भ्रमणले दिनेजस्तो जीवन्त हुँदैन । भ्रमणले नै पुराना साथीभाइहरू र इष्टमित्रसँग भेट गराउँछ । यसले हामीसँग के छ र के छैन भन्ने बोध पनि गराउँछ । शिक्षा, स्वास्थ्य, व्यापार, विवाह, अनुसन्धान, अवसर, अभियानजस्ता अनेकौं कारक तत्वहरूले मानिसलाई स्थानान्तरण गराउँछ । यसरी मानिसको स्थानान्तरण हुँदा बाटाघाटाका चियापसल, भट्टी, पाटीपौवा र पर्यटन व्यवसायको जन्म हुन्छ । धनी देशका पर्यटकहरूले भ्रमण नगर्दा हुन् त धनी देशको पैसा गरिब देशमा आउने थिएन । इटालीका मार्कोपोलो चीन नपुगेका भए युरोपेलीहरूलाई पूर्वीय सभ्यताको जानकारी उहिल्यै हुन सक्ने थिएन । त्यस्तै प्रसिद्ध चिनीयाँ यात्री हुएन साङ पैदल कष्ट गरेर नेपाल नझरेका भए र अरनिको चीनतर्फ नउक्लेका भए चिनीयाँहरूले नेपालको कला र जनजीवनसँग परिचित हुने मौका पाउने थिएनन् ।

चाहे लेकबाट वेँसीमा झर्दा होस् या वल्लो गाउँबाट पल्लो गाउँमा जाँदा होस्, चाहे भास्को डि गामा अफ्रिकातर्फ लाग्दा होस् या कोलम्बस अमेरिकातर्फ लाग्दा होस्, चाहे नील आर्मस्ट्रङ्ग चन्द्रलोकमा उत्रँदा होस् या भोएजर यान मङ्गलग्रहतर्फ लाग्दा होस्, सर्वत्र यात्रा भइरहेको छ । पृथ्वी, बुध, मङ्गलादि ग्रहहरूले अनादि कालदेखि सूर्यको परिक्रमा गरिरहेका छन् । हामी बसिरहँदा र सुतिरहँदा पनि हाम्रो मुटु उफ्रिरहेको हुन्छ, फोक्सोले स्वाँ-फ्वाँ गरिरहेको हुन्छ । नसाहरूमा रगत दौडिरहेको हुन्छ र भोजन आन्द्राहरूको अँध्यारो सुरूङमा यात्रा गरिरहेको हुन्छ । हिमशिखरहरू पग्लेर समुद्रतर्फ कुदिरहेका छन् । समुद्रहरू बाफिएर आकाशमा उडिरहेका छन् र बाफहरू फेरि घनिभूत भएर समुद्रमा हाम फालिरहेका छन् । इलेक्ट्रोन र प्रोटनहरूले न्यूक्लियसको यात्रा गरिरहेका छन् । यस्तो लाग्छ – यो जीवन र जगत् पनि यात्रामय छ र यात्रा हाम्रो अस्तित्वको परिचायक बन्न पुगेको छ ।

यी थरिथिरिका यात्राहरूमध्ये कुनै यात्रा सार्वजनिक महत्वका हुन्छन् त कुनै व्यक्तिगत महत्वका । जे होस्, यात्राले जीवनको पट्यारलाग्दो दिनचर्यामा नुनमसला हालेर स्वादिलो बनाइदिन्छ । गाउँमा गइदिनुपर्छ, मीठो-नमीठो खाइदिनुपर्छ र आङ बिझाउने गुन्द्रीका फ्याँङलाहरूमा सुतिदिनुपर्छ । अनि मात्रै सहरले प्रदान गरेका

सहुलियत र सुविधाप्रति आभारी भइन्छ । अन्यथा आफ्नो असन्तुष्टिमा मात्रै यो जीवन केन्द्रित बन्न पुग्छ । प्राकृतिक, धार्मिक, शैक्षिक, सांस्कृतिक र ऐतिहासिक महत्वका वस्तुहरू र अन्य अवसरहरू राजधानीमा या एउटै क्षेत्रमा मात्र थुप्रिएर बस्नु हुन्न । ती सर्वत्र छिरलिएर बस्नुपर्छ । अनि मात्र सबै क्षेत्रमा समानुपातिक स्थानान्तरण हुन्छ, आन्तरिक पर्यटनको विस्तार हुन्छ र उपेक्षित क्षेत्रले पनि विकसित हुने मौका पाउँछन् । मुक्तिनाथजस्तो विकट ठाउँमा धार्मिक महत्वको मन्दिर, पर्यटकीय महत्वका शिखरहरू भौगर्भिक महत्वका वस्तुहरू र सांस्कृतिक महत्वका जनजातिहरू नहुँदा हुन त् त्यहाँ कोही जाने थिएन ।

म एकपल्ट मुक्तिनाथ गइसकेको हुनाले, त्यहाँ जाँदा उचाइ लागेर बिरामी भएकाले र त्यहाँको उकालोले सताइएको हुनाले पुनः त्यहाँ जान त्यति इच्छुक थिइनँ । तर श्रीमतीज्यूलाई त्यहाँ एकपल्ट लगिदिनुपर्ने दायित्वबोधले गर्दा म त्यहाँ जान अग्रसर भएँ । आफू पर्यटन-व्यवसायी भएको हुँदा विभिन्न क्षेत्रको पर्यटकीय जानकारी पनि लिनुपर्ने र जिज्ञासु पर्यटकहरूलाई त्यसको जानकारी दिनुपर्ने हुँदा पनि मलाई त्यहाँ जानुपर्ने थियो । म यसरी दृश्यावलोकनीय र पर्यटकीय कारणले त्यहाँ जान उत्सुक थिएँ भने मेरी श्रीमती धार्मिक कारणले हो या आफ्नो श्रीमान्सँग कतै सँगसँगै घुम्न जाने इच्छाले हो, त्यहाँ जान इच्छुक थिइन् । शरीरमा तागत र हातखुट्टा सबल भइन्जेलसम्म न हो यताउता घुम्ने भनेको । बूढाबूढीलाई त आफ्नो आँगन पनि परदेशसमान हुन्छ । शरीर र उमेरले बूढाबूढीको बन्धनले, कतिलाई बालबच्चाको बन्धनले, कतिलाई वस्तुभाउको बन्धनले र कतिलाई अन्य कारणहरूले यताउति जान रोकिरहेको हुन्छ । अतः बन्धनमुक्त भएको बेलामा मौका नछोपे भ्रमण भन्ने कुरा त्यसै-त्यसै बिलाएर जान पनि सक्छ । यी सबै कुरा सोचेर हामी खासै काम नभएको २०५६ सालको चैत्र महिनाको याम पारी मुक्तिनाथ जान कस्सिन्छौं ।

पोखरादेखि जोमसोमसम्म हवाईयात्रा गर्ने विचारले हवाई-टिकट किन्न खोज्दा कहींकतै टिकट पाइँदैन । अघिल्लोपटक पञ्चायतकालमा जोमसोम जाँदा पनि यस्तै भयो । टिकट काउन्टरमा आफ्नै साथी हुँदा पनि टिकट पाइएन । त्यो बेला नेपालको आकाशमा शानेवानिको एकाधिकार थियो । बरू जहाज रित्तै उडाइन्थ्यो, तर निर्धारित भाडामा जहाजको टिकट पाइँदैनथ्यो । पछि निर्धारित रकमभन्दा बढी पैसा दिएपछि बाहिरको कुनै व्यक्तिले टिकट उपलब्ध गराइदिन्थ्यो । त्यो बेला आकाशमा प्रतिस्पर्द्धा हुन नपाएकाले यस्तो भएको हो भन्ने विश्वास गरिन्थ्यो । तर बहुदलको आगमनपछि पनि मलाई पहिलेको जस्तै स्थिति भोग्नुपऱ्यो । आकाशभरि निजी क्षेत्रका दर्जनौं जहाजहरू चील र गिद्धहरूझैं तँछाडमछाड गरी उड्दा पनि मजस्तो पर्यटन-व्यवसायीले जोमसोम सेक्टरको टिकट फेला पारिनँ । विदेशी पर्यटकहरू र नेपाली यात्रुको जहाजको भाडामा आकाश-पातालको फरक पर्नाले यस्तो हुन गएको हो । विदेशीलाई एउटा टिकट बेच्दा ४/५ हजार पाइने र नेपालीलाई बेच्दा मुस्किलले एक हजार मात्र पाइने हुँदा मुनाफामुखी निजी क्षेत्रका जहाजहरूले स्वदेशीलाई भन्दा विदेशीलाई हवाइसेवा उपलब्ध गराउनु स्वाभाविकै हो । यसै भएर होला ट्राभल एजेन्टहरूले **खैरे हो कि नेपाली** ? भनेर सोध्ने । **खैरे** भन्दा तुरून्त टिकट पाइन्छ र **नेपाली** भन्दा जहाज भरिभराउ छ भन्ने जवाफ आउँछ । एकताका होटेलवालाहरूले पनि आफ्ना अतिथिगृहरूमा गोरेहरू मात्रै सुताउँथे र नेपालीहरूलाई होटेल भरियो भनेर फर्काइदिन्थे ।

होटेलमा बास पाउन र आकाशमा उड्न कि त विदेशी खैरे हुनुपर्छ कि त उसको नेपाली भरिया हुनुपर्छ अथवा उच्चस्तरको सरकारी कर्मचारी हुनुपर्छ । खैरेका अगाडि नेपाली जैरेको केही जोड चल्दैन । आफ्नो होटेलमा थोरै पैसामा नेपाली नसुताउनेहरूले पनि ट्राभल एजेन्टका गोरूमुते साइनोसम्मका नेपालीहरूलाई मार्केटिङ अफिसरका रूपमा निःशुल्क सुताइरहेका छन् । ट्राभल एजेन्टहरू पनि गोरा र गोरीहरू राख्नुपर्दा मोटो कमिसन पाइने ठूला होटेल रोज्ने गरेको र छोरा र छोरीहरू निःशुल्क रूपमा राख्नुपर्दा स-साना होटेलहरू खोज्ने गरेको पाइन्छ ।

कहीं कतैबाट जोमसोम जाने टिकट नपाएपछि एकजना ट्राभल एजेन्सीको साथीको जुक्तिअनुसार हामी दुईजना दुइटा खैरेको भरियाका रूपमा प्रस्तुत भयौं र खैरेलाई यी दुईजना मेरा भरिया हुन् भन्न लगायौं । भरियालाई टिकट नदिँदा भरियाधारी खैरे फुत्कन्छ भन्ने डरले निजीक्षेत्रका विमान कम्पनीहरूले नेपाली टिकट दिन्छन् । अन्यथा खैरे फेला पारून्जेल नेपाली जैरेलाई कुनै पनि मुनाफामुखी हवाई कम्पनीले आकाशमा उड्न दिंदैनन् । न त बसमालिकहरूले पोखराबाट काठमाडौं जाने नेपाली यात्रुलाई पर्यटकीय वाहनमा गुड्न दिन्छन् ।

सहरबजारमा बस्ने एउटा व्यवसायीको यो हालत छ भने सर्वसाधारण नेपालीको के हालत होला ? बजारमुखी अर्थतन्त्र गरिबका लागि कागलाई बेल पाकेजस्तै हो । पञ्चतन्त्रको कथामा सारसले हाँसलाई मासुको सुरूवा खान डाकिएको निम्तोजस्तै हो । हाँस एकातिर ससम्मान आमन्त्रित

छ र अर्कोतिर लाभान्वित हुनबाट वञ्चित पनि छ ।

यसपालिको मुक्तिनाथको यात्रामा पहिलेझैं उचाइ-बिमारीबाट पीडित हुनुपर्ला कि भन्ने डरले मैले सावधानी अपनाएँ । पदयात्रु, भरिया र पर्यटकहरूको अनुभव सङ्कलन गरें । डा. राजु गौतम भाइले आवश्यक औषधि र परामर्श प्रदान गर्नुभयो । बाटामा पानी पर्न सक्ने, हिउँ झर्न सक्ने र चिसो सिरेटोले हिर्काउन सक्ने भएकोले वर्षाती, तुम्लेट, थर्मस आदिको जोहो गरें । वर्षाविरोधी, हिमविरोधी र उचाइविरोधी यतिका गोली-गट्टाहरू बोकेर हामी चैत्र १६ गते लुम्बिनी विमानको पेटभित्र पस्यौं । हामीसहितका १३ जना यात्रुहरूलाई काँचै निलेपछि विमानको पेट भरियो र त्यसले आफू अघाएको घोषणा गऱ्यो । वेगवान् गण्डकीको आवाजमा त्यसले भुइँ छाड्यो । हामी १३ जना त्यसले जुरुक्कै उचाल्यो र पाँचै मिनेटमा डाँडामाथि पुऱ्यायो । अनि त्यसले हामीहरूलाई पोखरा उपत्यकाको दृश्यावलोकन गराउन थाल्यो ।

पोखरा उपत्यका त गाँठे ! घरैघरहरूको जङ्गलले भरिन लागेको रहेछ । फेवाताललाई एकमुष्ट रूपमा पहिलेपल्ट हेर्न पाइयो र यसको आकारलाई समग्रतामा बुझन पाइयो । डाँडाकाँडा र हिमशिखरहरूलाई पनि नयाँ शीरा र कोणबाट हेर्न पाइयो । पृथ्वीलाई पनि यसरी माथिबाट एकमुष्ट रूपमा हेर्न पाए यो अवश्य गोलाकार देखिन्थ्यो । हिमशिखरहरू च्यात्तचुत्त परेका बादलका खास्टाहरू ओढेर बसेका थिए । माथिबाट हेर्दा नदीहरू धजाजस्ता, घरहरू सलाइका बट्टाजत्रा र बसट्रकहरू कमिलाजत्रा देखिन्थे । नदीहरू सर्प हिँडेझैं हिँडेका देखिन्थे । वायुयानले हिमशिखरहरूको थाप्लाबाट आफूलाई पार गराउँदा हिमशिखरलाई हातैले छुन सकिन्छ कि जस्तो लाग्थ्यो । स्वात्त हिमशिखर पार गर्दा चाँदीको दरबार नाघेजस्तै लाग्थ्यो र आफूलाई रामायणको कथामा वर्णित हनुमान भएजस्तो लाग्थ्यो । वायुयानले हिमशिखरको बाटो छाडेर कालीगण्डकी उपत्यकाको बाटोतिर आफूलाई हुत्याउँदा हिमशिखरसँग परिचित पर्यटकहरू यो अन्नपूर्ण हो, यो गङ्गापूर्ण हो भन्दै आफ्नो जानकारी जाहेर गर्थे भने गाउँबेँसीसँग परिचित नेपाली यात्रुहरू यो घोरेपानी हो, त्यो तातोपानी हो र यो कालोपानी हो भन्दै उत्साहित हुन्थे । हामीलाई भने दुवैथरीले पथप्रदर्शन गराएजस्तो लाग्थ्यो । हावाको झोँकाले विमानलाई बीचबीचमा हल्लाउँदा तालको बीचमा छालले ढुङ्गालाई ढल्पल्याएजस्तो लाग्थ्यो । यस्तो घडीमा आङ डरले जिरिङ्ग हुन्थ्यो । प्लेन ह्वात्त तल झर्दा लौ अब खसियो भन्दै बसिरहेको आसनलाई हातले समाउन पुगिन्थ्यो । फलामे छन्चरहरू र प्लास्टिकका पाताहरू जोडजाड गरेर बनाएको विमानको कुनै भरोसा थिएन । त्यो कुनै बेला भत्कन सक्छ, ठोक्किन सक्छ र सिलटिम्मुर ख्वाउन सक्छ भन्ने एक प्रकारको त्रास मनको एउटा कुनामा सुरक्षित थियो । यसरी अनेकौं कल्पनामा डुल्दाडुल्दै र गाउँवेसीको दृश्य हेरेर भ्याउँदा-नभ्याउँदै हाम्रो प्लेन त टुकुचेको आकाशमा आइपुगेछ । मिनेटभरमै मार्फा काहियो जोमसोमको प्राङ्गणमा गुड्न थालियो । ५ दिनको थकाइलाग्दो कठिन यात्रा २५ मिनेटमै बसीबसी पूरा गरियो । धन्य हो ! कलपूर्जाको करामत, शक्तिको रूपान्तरण, अमेरिकी राइट ब्रदर्सको कल्पना र नेपाली चालकहरूको बुद्धिमत्तापूर्ण उडान ! ज्यान सकुशल जोमसोममा ओर्ल्यो ।

जोमसोम उत्तरी हावा र दक्षिणी हावाको रणभूमिको रूपमा परिचित छ । त्यहाँ बिहानीको समयमा मात्र हवाई हमला बन्द हुने गर्छ । त्यही युद्धविरामको मौका छोपी हवाइजहाजहरू आवतजावत गर्ने गर्छन् । यही हवाई हमलाको कारण अन्य सेक्टरमा झैं जोमसोममा दिनभरि हवाइउडान गर्न पाइन्न । त्यसो हुँदा यहाँ हवाई टिकटमा निकै धाँधली हुँदोरहेछ । नाफाखोरहरूलाई बाढी-पहिरोले बाटो अवरूद्ध हुँदा पनि फाइदा, लडाइँ हुँदा पनि फाइदा र हावाहुरीले सताउँदा पनि फाइदा !

जोमसोम जति प्रसिद्ध छ, त्यति रमणीय छैन । जता हेऱ्यो त्यतै उजाड र उदास दृश्य मात्रै दृष्टिगोचर हुन्छ । कहीँ कतै हरियाली छैन । जाततते हिमपातले डढेका बस्त्रविहीन नाङ्गा डाँडाहरू र चिच्याटलाग्दा बगरहरू मात्रै छन् । घरहरूको बाहिरी बनावटमा पनि कुनै मनमोहकता छैन । सबै घरहरू माटोले ढलान गरेका चारपाटे टेवुलजस्ता छाना ओढेर बसेका छन् । हवाई हमलाको कारण बाहिर कुनै चहलपहल छैन । मानिसहरू सबै कर्फ्यू लागेको सहरमा झैं घरभित्रै नजरबन्द भएर बसेका छन् । कालीगण्डकी विलाप गर्दै बगिरहेको छ । यस्तो चहलपहलविहीन जीवनशैलीमा अभ्यस्त नभएका बाहिरियाहरूलाई जोमसोमको बसाइ पट्यारलाग्दो हुन्छ । सरकारी कार्यालय र हवाइ कार्यालयमा खासै काम नहुने हुँदा कर्मचारीहरू दिनभरि तास खेलेर, गफ गरेर, टीभी हेरेर तथा पत्रपत्रिका हेरेर समय काट्छन् । जोमसोम उदास भए पनि बिजुलीले गर्दा उज्यालो छ । होटेलहरूमा अत्याधुनिक सुविधा उपलब्ध छ । घरहरू चारैतिरबाट हावा छेक्ने गरी बनाएका हुन्छन् र बीचमा बुँइगल हुन्छ जहाँ कोठाबाट बाहिर निस्केर भेटघाट र गफगाफ गर्न सकिन्छ । घरभित्र पस्ने प्रवेशद्वार युरोप र अमेरिकामा झैं बहुधा बन्द हुने गर्छ र त्यसको भित्रपट्टि फेरि

अर्को ढोका रहने गर्छ । यतातिर भल-बाढी हुने गरी चर्को पानी नपर्ने हुँदा घरका छानाहरू माटोले ढलान गरिएका हुन्छन् । यसले सामान्य हिमपात र वर्षालाई सजिलैसँग थेग्न सक्तछ । बढी हिमपात र वर्षा हुँदा ढलान अलिअलि रसाउने गर्दछ र पानी घरभित्र छिर्ने गर्छ । ढुङ्गामाटोको गारोमा पानी नछिरोस् भनी गारोको वरिपरि काठका दाउराहरू टन्न मिलाएर राखिन्छ ।

चैत-वैशाखको उष्ण गर्मीमा पनि मानिसहरू बाक्लाबाक्ला लुगाहरू लगाएर बसेको देखिन्छ । औसत मानिसहरू शारीरिक सफाइमा त्यति अग्रसर भएको देखिन्न । जोमसोमको अलावा मार्फा, कागवेनी, झरकोट र मुक्तिनाथमा पनि घरहरूको ढाँचा र जीवनशैली यस्तै छ । चैत-वैशाखमा पनि आगो तापिन्छ र सिरक ओढेर सुतिन्छ । उदास-उजाड नाङ्गा डाँडा, चिच्याहटलाग्दो बगर, गृहबन्दीका रूपमा रहेको जनजीवन र हवाइहमलाग्रस्त जोमसोमलाई हेर्दा युद्धग्रस्त प्यालेस्टिनको एक भाग उछिट्टिएर कालीगण्डकीको बगरमा पछारिएजस्तो लाग्छ ।

हामीलाई यथासमयमा पोखरा फर्कनु थियो । अतः हामीले जोमसोम नबसी मुक्तिनाथतर्फ लाग्ने विचार गर्‍यौं । हामीसँग खुल्ला फिर्ते टिकट थियो र त्यसको फर्कने मिति किटान गर्नु थियो । यो काम एअरपोर्टमा ओर्लिनेबित्तिकै गर्न पछि नगर्नु भनिएकाले हामी खाना खाएपछि हवाइ-कार्यालयमा आयौं । त्यहाँ त कोही पनि फेला परेन । यहाँ त हवाइ-हमला हुँदा सबै कार्यालयहरू बन्द हुँदारहेछन् । तसर्थ कर्मचारीलाई सम्बन्धित कार्यालयमा होइन, बरू भोजनालय या मनोरञ्जनालयमा खोज्नुपर्दो रहेछ । अतः हामी हवाई-कर्मचारी खोज्दै विभिन्न भोजनालय र मनोरञ्जनालय चहार्‍यौं । एउटा मनोरञ्जनालयमा हवाई-कर्मचारीहरू तास खेलेर बसिरहेका रहेछन् र त्यहीँ नै हाम्रो फिर्ते मिति किटान गरियो ।

त्यो दिन जोमसोमको आकाश अँध्यारो थियो । मौसस चिसो थियो र पानी झर्ला-झर्ला जस्तो थियो । हाम्रा हातहरू कठाङ्ग्रिन थाले र चैतको गर्मीमा पनि हामीलाई पन्जा किन्नुपर्‍यो । प्रतिकूल मौसमका कारण मानिसहरू जोमसोममै बस्ने सल्लाह दिइरहेका थिए । तर बाँकी दिन जोमसोममै बसेर बिताउनुभन्दा बाटो छोट्याउनु उपयुक्त लाग्यो । साथमा वर्षाती, छाता, बुटा र न्याना लुगाहरू भएकाले पानीमा भिजिएला भन्ने डर पनि थिएन । जोमसोमबाट अलि टाढा पुग्दानपुग्दै पानी पर्न र हिउँ झर्न थाल्यो । ओहो ! ठूलै बिपत्तीमा परिन्छ कि जस्तो लाग्यो । तैपनि फर्केर जोमसोम आइएन, न त कतै ओत लागेर नै बसियो । त्यो एकलासे बगरमा कतै ओत लाग्ने ठाउँ पनि थिएन । कपासका मसिना भुवाहरूझैं आकाशबाट अविरल रूपमा हिउँ बर्सन थाल्यो । मैले हिमवर्षात्का रोमाञ्चक कथाहरू सुनेको थिएँ । तर आफ्नो युरोप, अमेरिका र जापानको भ्रमणमा कहीँकतै पनि त्यस्तो रोमाञ्चकारी घटनाको आनन्द लिने सौभाग्य मिलेन । भाग्यले गर्दा जीवनमा पहिलोपल्ट हिमवर्षाद्वारा सुशोभित हुने मौका पाइयो । त्यो पनि आफ्नै देशमा ! वास्तवमा हिमवर्षा प्रलयकारी होइन, आह्लादकारी हुँदो रहेछ । अगाडि, पछाडि, दायाँ, बायाँ हिमैहिम देख्दा र आफ्नो टाउको, कुम, पाखुरा, खुट्टा र आँखाभौहरूमा सेतो सफा हिउँ टाँसिएको देख्दा आफू क्रिसमसको सान्ताक्लजमा परिणत भएको अनुभूति हुन्थ्यो । असारको १५ मा हिलो खेलिन्थ्यो । चैतको १५ मा हिउँ खेलियो । आफ्नो सेताम्य शरीरलाई हेर्दा विवाहको मण्डपमा दुलाहा-दुलहीले दहीले छेपाछेप गरेको याद आयो । हाम्रो यात्रा मङ्गलमय होस् भनी कसैले सेता फूलहरूको पुष्पवृष्टि गरेजस्तो पनि लाग्यो ।

हिउँ परेकाले हावा लागेको थिएन र जाडो पटक्कै थिएन । जलनियन्त्रक वर्सातीका कारण हिउँको पानी रसाएर भित्र घुस्न पाएन । यता हिमवर्षाले हामीलाई अविस्मरणीय आनन्द दिइरहेको थियो भने उता विनाछाता, वर्षाती र विनाबुट फाटेका चप्पलका भरमा हिँडिरहेका बटुवाहरूलाई भने निकै कष्ट पनि दिइरहेको थियो । भारी बोकेर हिँडेका स्थानीय झेंपा (गोरू) र खच्चरहरू पनि हिमवर्षाका कारण सेतै फुलेका बूढाबूढीजस्तै देखिन्थे । कालीगण्डकीको बगरमा कतै बिसाउने ठाउँ पनि भेट्टिएन । उचाइ नलागोस् भनी लसुन, टिम्मुरको छोप र उवाको सातु बोकिएको थियो । अतः ठाउँ-ठाउँमा बस्दै, लसुन टोक्दै र उवाको सातुको फाँको मार्दै अगाडि बढियो । उवाको सातु खान नजान्नेलाई सर्को पर्दो रहेछ । थुकले भिजेको सातु माथिल्लो च्यापूमा गएर गम टाँसिएझैं टाँसिँदो रहेछ ।

थकाइ र भिजेको लुगाले गर्दा शरीर हिँडाउनै नसकिने गरी भारी हुन थाल्यो । कतिखेर कागबेनी पुगौंला र यो गरूङ्गो शरीरलाई विस्तरामा मिल्काइदिउँला जस्तो लागिरहेको थियो । हिउँले ठटाइरहेको थियो, भोकले अत्याइरहेको थियो र थकाइले सताइरहेको थियो । बल्लतल्ल चिरप्रतिक्षित कागबेनी आइपुग्यो । अघिल्लोपटक मुक्तिनाथ आउँदा कागबेनी छलेर आएको हुँदा कागबेनी मेरा लागि गन्तव्यस्थल नै थियो । कालीगण्डकी र कृष्णागण्डकीको तटमा अवस्थित कागबेनी मुक्तिनाथ जाने र त्यहाँबाट झर्ने पर्यटक तथा

तीर्थयात्रीहरूका लागि रात बिसाउने थलो हो । मुस्ताङ र डोल्पा जानेहरू तथा त्यहाँबाट फर्कनेहरू पनि यही नै विश्राम गर्ने गर्छन् । बनारसको गङ्गानदीको तटमा झैं कागबेनीको तटमा पनि श्राद्ध गराउने पण्डाहरू देखिन्छन् । पारिपट्टिको पहाडमा नेपाली र जापानी भूगर्भविद् घनले चट्टान फोर्दै अन्वेषण गरिरहेका देखिन्छन् । हिउँले गर्दा कागबेनी बजार हिलैहिलो छ । विश्रामगृहहरू पनि जोमसोममा जस्ता सफासुग्घर र सुविधा सम्पन्न छैनन् न त यहाँ बिजुली नै छ । वायुसञ्चालित बिजुली पनि वायुद्वारा नै तहसनहस भएकैँ बुझिन्छ ।

हामी स्टार लज नामक घरमा बास बस्छौं । हिउँले निथ्रुक्क परेका लुगाहरू निचोरेर आगोमा सुकाउँछौं । लसुनको तातो सुरूवा पिएर पेट तताउँछौं । चिल्लो नराखीकन बनाएको फापरको भक्के रोटीलाई थाकेको शरीरले खूब मन पराउँछ । हामी कम्बल ओढेर यो चैतको गर्मीमा आगो ताप्न बस्छौं । पोखरामा पुस-माघतिर पनि आगो ताप्न छाडियो । तर चैतमा पनि नतापी भएन । यहाँका विश्रामगृहका भोजनालयमा भोजन टेबुलको तल आगोको स्टोभ (चुलो) राखिन्छ र त्यसैद्वारा पाहुनाहरूलाई न्यानो ताप प्रदान गरिन्छ । चुलोमा खाना पकाउँदा त्यो आगोले खानाको साथसाथै नुहाउने पानी पनि तताउँछ । धूपी र सल्लाको दाउराबाट पीरो धूवाँ निस्कँदो रहेनछ र त्यसबाट आगो ताप्ने कोइला बन्दो रहेछ ।

कागबेनीमा बास सस्तो छ, तर गाँस महङ्गो छ । तसर्थ यतातिर विश्रामगृहमा बस्नेले विश्रामगृहमै खाना खाइदिनुपर्छ । अन्यथा त्यो पर्यटकलाई यहाँ स्वागत र सम्मान गरिँदैन । हामी बस्ने विश्रामगृह भोटिया जातिका नेपालीको हो जो आफूलाई गुरूङ् भनेर चिनाउँछन् । यहाँ १०/१२ वर्षकी एउटी पटक्कै नेपाली भाषा नबुझ्ने बालिका पनि छन् तर तिनको जिब्रोमा नेपाली गीत झुन्डिएर बसेको छ । भाँडा माझ्दा तिनी गाउँछिन् -'तार तार बिजुलीको तार, फुर्सद छैन ए हजुर आउँदो शनिबार ।' भाषा कर्णप्रिय र सङ्गीतात्मक भइदियो भने त्यो टिप्न सजिलो हुन्छ भनेर भाषातालिकामा सिकेको कुरा यहाँ छर्लङ्ग हुन्छ । यसमा सञ्चार माध्यमको पनि ठूलो हात रहन्छ । तिनीहरूले जुन कुरालाई दोहोऱ्याई-तेहऱ्याई सम्प्रेषण गरिदिन्छन्, त्यही कुरा कलिलो मनमस्तिष्कमा छोप्पिन पुग्छ ।

यो राति मलाई पहिलो यात्रामा झैं उचाइ-रोगले आक्रमण गरेन । लसुनको सुरूवा र मक्कलको आगोले गर्दा ठन्डीले पनि छुन पाएन । थकाइले ज्यान दुखेको कुरा निद्रामा पनि अनुभूत गर्न सकिन्थ्यो । तर बिहान उठ्दा शरीर चङ्गा भइसकेको थियो । हिमपात बन्द थियो र आकाशमा चहकिलो सूर्य उदाइरहेको थियो । चारैतिर हिउँ नै हिउँ देखिन्थ्यो । यस्तो नितान्त नौलो परिवेशमा पाउँदा शरीर खुसीले फुरूङ्ग थियो । यस्तो लाग्थ्यो जीवनको ब्याट्री रिचार्जिङ् भइरहेको छ ।

आज पनि पानी परिरहेको भए तथा हिउँ बर्सिरहेको भए हाम्रो यात्रा केही कष्टप्रद हुन्थ्यो । तर बिहानैदेखि घाम झुल्किदिनाले रातभरि परेको हिउँ पग्लिसकेको थियो । अतः हामी खाना खाएर कागबेनीको उकालो चढ्न थाल्यौं । टन्न भरिएको पेट, अक्सिजनको कमी र उकालो-ओरालो चढ्ने बानीको अभावले गर्दा यस्तो भएको होला । हिजो जोमसोमदेखि कागबेनीसम्म त समतल मैदानमा हिँडियो । वास्तविक ट्रेकिङ त बल्ल आजदेखि सुरू भयो । हामी नेपालीहरू विना पूर्वतयारी एक्कासि पदयात्रा गर्ने गर्छौं र हाम्रो पदयात्रा कठिन बन्न पुग्छ । पदयात्रा गर्नुपूर्व एक महिनाजति बिहान आधा घन्टा प्राप्त शैर गर्ने गरेमा यस्तो कठिनाइको अनुभूति गर्नुपर्दैन । पिठ्यूँको भारी, हिजो दिनभरिको थकाइ, हिउँको ठटाइ र आजको प्राणान्त उकालोले गर्दा अर्कोपटक मुक्तिनाथ नआउने प्रण गरिन्छ । अलिकति हिँड्दै, थकाइ मार्दै कछुवा तालले उकालो हिँडेका देख्दा र आङ्रिता शेर्पाले विनाअक्सिजन दर्जनौंपटक सगरमाथा चढेका सम्झँदा हामीलाई अघि बढ्ने प्रेरणा मिल्छ । हिँड्न सक्नेलाई जोमसोम-मुक्तिनाथ आधा दिनको बाटो हो र नसक्नेहरूका लागि यो २/३ दिनको बाटो पनि हो ।

बाटामा कतै पनि हरिया बोट-बिरूवाहरू देखिन्नन् । जता हेऱ्यो त्यतै होचाहोचा बुट्टान र बलौटे जमिन मात्रै देखिन्छ । यिनै काँडादार बुट्यानहरूमा घोडा, खच्चर र च्याङ्ग्राहरू चर्दा रहेछन् । टाढाबाट हेर्दा च्याङ्ग्राहरूले चट्टान चाटेजस्तो लाग्छ । ती होचा काँडादार बुट्यानहरूभित्र हरियोपरियो घाँस लुकेर बस्दो रहेछ । काँडादार बुट्यानभित्र थुतुनो घुसारेर यत्नपूर्वक तान्द्राहरू टिप्नुपर्दो रहेछ । यो काम नवजात शिशु च्याङ्ग्राहरूका लागि चुनौतीपूर्ण हुँदो रहेछ र काँडाले घोचेर तिनीहरूको कलिलो थुतुनो रगताम्य हुँदो रहेछ । हो, यहाँ मानिसको जीवन मात्र होइन, पशुपन्छीको जीवन पनि कष्टप्रद छ । यी नै कुराहरूको अध्ययन गर्दै हामी खिङ्गार भन्ने भोटेगाउँमा आइपुग्छौं । यहाँ हाम्रो एउटी प्राइमरी स्कुलकी शिक्षिकासँग भेट हुन्छ । उहाँ पर्वत जिल्लाकी हुनुहुँदो रहेछ र त्यहाँ पढाउनुहुँदो रहेछ । उहाँ

घाम तापेर बसिराख्नुभएको थियो । हामी पनि थकाइ मार्न उहाँको नजिकै बस्छौं र बातचित गर्न थाल्छौं । उहाँले भन्नुभयो –'यहाँ दिन बिताउन गाऱ्हो छ । केटाकेटीहरू स्कुलमा पढ्न आउन मान्दैनन् । घरघरमा गएर तानेर ल्याउनुपर्छ । यहाँका युवा-युवतीहरू पनि यहाँ बस्नुभन्दा तल सहरमा झर्न रूचाउँछन् । यहाँको समाज नै व्यापारप्रिय छ र पैसाको भोको छ । बाटामा नाङ्ले व्यापारीहरू पनि भेटिए ।' यतिकैमा झारकोट गाउँ आइपुग्यो । खिङ्गादेखि झारकोटसम्मको बाटो बहुधा हिलैहिलोले हिलाम्य थियो । झारकोटमा होटेलहरूका ठूलाठूला सङ्केतपाटी र स्याउका बोटहरू देखिन्छन् ।

झारकोटबाट केही उकालो चढेपछि हाम्रो गन्तव्यस्थल मुक्तिनाथको रानीपौवा आइपुग्छ । यहाँ होटेल, लज र कार्यालयहरू छन् । थोरङ भञ्ज्याङ पार गरेर आउने पर्यटकहरूका लागि र मुक्तिनाथबाट फर्कने तीर्थयात्रीहरूका लागि रानीपौवा एउटा सङ्गमस्थल हो । जहाँ दुवैथरिले भारी बिसाउँछन्, गन्तव्यस्थलमा आइपुग्न सफल भएकोमा प्रसन्नता व्यक्त गर्छन् र हर्षोल्लास मनाउँछन् । यहाँ आइपुग्दा आफ्नो एउटा विशिष्ट उचाइ प्राप्त गर्न सकेको गर्वानुभूति प्राप्त हुन्छ । यहाँ आफूलाई चारैतिरबाट चाँदीका पर्खालहरूले सुरक्षा प्रदान गरिरहेको सुखानुभूति पनि प्राप्त हुन्छ । यहाँ आएर भारी बिसाएपछि शरीरलाई बिर्सन पुगिन्छ । पदयात्राका समस्त झमेलाहरूबाट मुक्त भएझैं मुक्तानुभूति पनि यहाँ मिल्छ । त्यसै भएर यस क्षेत्रलाई मुक्तिनाथ भनेको त होइन ? यहाँबाट मुक्तिनाथ मन्दिर १०-१५ मिनेटको उकालोमा छ । मुक्तिनाथ क्षेत्रका सम्पूर्ण कार्यालयहरू र विश्रामगृह पनि यहीँ नै छन् । यहाँ बिजुली पनि उक्लेको छ र यहाँको अँध्यारो तल कागबेनीमा झरेको छ । विश्रामगृहहरू पनि कागबेनीका भन्दा स्तरीय छन् । रेस्टुराँहरूले थकित बटुवाहरूलाई पोसिलो भोजन र जोसिलो पेय पदार्थ उपलब्ध गराउँछन् । उवाको सातु र फापरको रोटीमा निर्भर मुक्तिनाथले आजकल अमेरिकाको यापल पाई र मेक्सिकोको बुरितो पनि खान थालको छ । आजकल मुक्तिनाथ जाडोको डरले महिनादिनसम्म ननुहाई बस्न सक्तैन, दिनहुँ तातोपानीमा स्नान गर्छ । यसले च्याङ्ग्रा र खच्चर मात्र होइन, हेलिप्याड पनि पाल्न थालेको छ । यसले स्थानीय भोटेनुन खान छाडेर मधिसे नुन खान थालेको छ ।

मलाई राम्रो सम्झना छ – ४० वर्ष पहिलेसम्म हाम्रा बुबाहरूले यही क्षेत्रबाट भोटेनुन लैजानुहुन्थ्यो । नुनका लागि चामलको भारी बोकेर १०/१५ दिनको कष्टपद यात्रा पार गर्नुपर्थ्यो । खल्तीमा पैसा बोकेर आएर हुँदैनथ्यो, चामलै बोकेर आउनुपर्थ्यो र चामलले नुन साट्नुपर्थ्यो । हाम्रा बाउबाजेले हामीलाई त्यसरी नुन ख्वाएका हुन् । १०/१५ दिनको उकालो-ओरालो, भीरपाखा, नदीनाला तरेर डोकोमा राखेर पोखरामा नुन उतार्नु भनेको चानचुने कुरा होइन । कति बाटामा लडेर घाइते र बिरामी हुन्थे र तिनीहरूलाई बडो मुस्किलले घर फर्काइन्थ्यो । कष्टकर बाटो काट्नका लागि बाटामा उट्पट्याङ्का काम र हाँसोलाग्दा क्रियाकलापहरू पनि गरिन्थे त्यो बेला । धर्मभीरू नवयात्रुहरूलाई पुराना अनुभवी यात्रुहरूले यसो गर्नुपर्छ, उसो गर्नुपर्छ भन्दै गर्नुनपर्ने कामहरू गराउने र तिनीहरूलाई उपहासका पात्र बनाउँथे । यसबाट हाँसोको मूल फुट्थ्यो र यथेष्ट मनोरञ्जन प्राप्त हुन्थ्यो ।

मुक्तिनाथमा कोटीहोमको आयोजना गरिएको रहेछ । यसले गर्दा त्यहाँका विश्रामगृहहरू पर्यटक, पदयात्रु र तीर्थालुद्वारा भरिभराउ थिए । तैपनि हामी एउटा कोठा प्रतिरात रू ६० मा पाउन सफल हुन्छौं । राति खाना खाँदा यहाँ हाम्रो एउटा अविस्मरणीय शेर्पा भाइसँग भेट हुन्छ । यी शेर्पा भाइले नेपालका अधिकांश विकट जिल्लाहरू र युरोप-अमेरिकाका धेरै भाग घुमिसकेका रहेछन् । यिनले आफ्नी १३ वर्षीया छोरीलाई पनि भविष्यमा आफूजस्तै शेर्पा गाइड बनाउने हेतुले साथमै लिएर हिँडेका छन् । यस्ता व्यक्तिहरूले भ्रमण-लेख लेखिदिए र भिडियो चित्र खिचिदिए ती कति सशक्त हुन्थे ! भ्रमण गर्न नसक्ने र नपाउने बाल, वृद्ध र अपाङ्गहरूले तिनै लेखहरू पढेर तथा भिडियो चित्र हेरेर भ्रमणको रसपान गर्न पाउँथे ।

यतातिरका सबै विश्रामगृहहरूमा अतिथिहरूको स्वागत-सत्कार गर्न प्रायशः महिलाहरू नै अग्रसर भएको देखिन्छ । भोजनालयहरूमा पकाउने र पस्कने काम पनि महिलाहरूले नै गर्छन् । मङ्गोल सम्प्रदायका जनजातिहरूमा गृह संचालनको प्रमुख भूमिका उनीहरूले नै खेलेको बुझिन्छ ।

हिँडाइको पीरले रातभरि ज्यान दुख्छ र गहिरो निद्रा पर्न दिँदैन । भोलिपल्ट बिहान उठेर मुक्तिनाथको दर्शन गरिन्छ । यसरी हाम्रो मुक्तिनाथयात्रा टुङ्गिन्छ । समुद्री सतहदेखि ९१४ मिटरको उचाइमा अवस्थित पोखराबाट २७१० मिटरको उचाइमा अवस्थित जोमसोम, २८०० मिटरको उचाइमा अवस्थित कागबेनी र ३५५० मिटरको उचाइमा अवस्थित झारकोट हुँदै ३८०० मिटरको उचाइमा अवस्थित मुक्तिनाथ पुगेर पोखरा फर्कँदा एउटा अग्लो भरेङका विभिन्न खुड्किलाहरू उक्लेर पुनः तल झरेजस्तो लाग्यो । ❑

# हाम्रो के थिएन ?

तर आश्चर्यको कुरा के छ भने परमाणु र प्रक्षेपणास्त्र आदिलाई देखेर आजको वैज्ञानिक तथा भौतिक प्रगतिको निन्दा गर्ने बुजर्गहरू त्यस समयका अस्त्र-शस्त्रोन्नतिको प्रशंसा गरेरै थाक्दैनन् । उनीहरू पश्चिमा जगत् त भर्खरभर्खर सफल भइरहेको छ, हाम्रा पूर्वजहरूले त उहिल्यै यस्ता वस्तुहरूमा सफलता पाइसकेका थिए भन्छन् । शत्रुको संहार गरेर फेरि आफ्नै हातमा फर्कने वाण के आजको रकेट होइन ? सुदर्शनचक्र के एटम बम र हाइड्रोजन बमभन्दा कम थियो ? रामायणमा वर्णित पुष्पक विमान के आजको वायुयान होइन ? के रेडियो, वायरलेस हामीकहाँ पहिलेदेखि नै थिएनन् ? नत्र भने कुरूक्षेत्रको लडाइँका हरेक कुरा घरमा बसेरै धृतराष्ट्रलाई कसरी थाहा हुन सक्थे ? आजका प्रसिद्ध ज्योतिषी श्री घनश्यामजी महोदयले त अझ मज्जाको कुरा गरेका छन्, अर्थात् उनको भनाइ छ – चन्द्रमामा पुग्ने तथा कृत्रिम उपग्रह छोड्ने कुरासमेत हाम्रोमा पहिलेदेखि नै विद्यमान् छन्, यस कुराको उल्लेख पनि हाम्रो शास्त्रमा छ । उनको भनाइमा रूसले दुईदुईपटक आकाशमा कृत्रिम चन्द्रमा छाड्यो[१०] त हाम्रा लागि यो कुनै नौलो कुरो होइन; हाम्रो सूर्यसिद्धान्तमा यसबारे प्रशस्त चर्चा छ । रामचन्द्रका पिता दशरथ महाराज घोडामा आकाशको यात्रा गर्दथे तथा महाभारतको समयमा भीमसेनले हाथीहरूलाई अन्तरिक्षमा फालेका थिए । अर्थात् उनको भनाइमा चन्द्रमामा पुग्नु कठिन छैन किनभने अर्थशास्त्रमा पनि यस्तो कुरा लेखिएको छ ।[११]



■ हृदयचन्द्र सिंह प्रधान
जन्म : वि.सं. १९७२ फागुन ४
मरुहिटी, काठमाडौं
अवसान : वि.सं. २०१६ माघ १०

हाम्रो अध्यात्मवाद र धर्ममनीषीहरू एकातिर आजको भौतिक तथा वैज्ञानिक प्रगति र आश्चर्यजनक आविष्कारहरूलाई "विध्वंसकारी" भनेर निन्दा गर्छन् तथा उनीहरूमाथि व्यङ्ग्य कस्छन्, अर्कातिर आजका वैज्ञानिक र भौतिकवादीहरूद्वारा गरिएका ठूलाठूला आविष्कारहरू तथा चीजहरूको समानता आफ्नो वेद, पुराण र प्राचीन ग्रन्थहरूमा खोजीखोजीकन बताउँछन् कि यस्तो त हाम्रोमा पनि थियो, हाम्रा वेद, पुराण र यन्त्रसर्वस्व, सूर्यसिद्धान्त, आकाशशास्त्र आदि शास्त्रहरूमा यी कुराको चर्चा छ, उल्लेख छ । यी त हाम्रै आविष्कारका विकसित तथा संशोधित रूप र संस्करण हुन् एवं हाम्रै कुरा र कल्पनाका प्रतीक हुन्, इत्यादि । आश्चर्यको कुरा के छ भने 'यन्त्रसर्वस्व' जस्तो महत्त्वपूर्ण ग्रन्थ हुँदाहुँदै पनि हिन्दूहरू आजसम्म हात बाँधेर किन बसिरहेका छन् ? अथवा त्यस ग्रन्थका अनुसार केही बनाउँदा पनि बन्दै बन्दैन कि ? त्यसैले केही बनाउनुको ठाउँमा अब कुरा काट्न र कुरा गर्नका लागि त्यस कुराको उपयोग गरिँदै छ ?

विश्वका अरू प्रगतिशील राष्ट्रका अन्वेषकहरू सम्पूर्ण शक्ति लगाएर ठूलाठूला वस्तु र कुराहरूको खोज गर्छन् र तत्त्व पत्ता लगाएर आश्चर्यजनक वस्तुहरूको आविष्कार गर्छन् तर हामीहरू अरूका आविष्कारहरूलाई देखेर

बाँधीबाँधीकन सन्दुकभित्र राखिएका पुरानापुराना शास्त्रका पोकापन्तुरा निकाल्छौँ र च्युडो र आँखीभौँबाट पसिना झार्दै त्यहाँबाट केही खोजिनिकाल्छौँ र हाँस्दै भन्छौँ—"अरे यार ! यो कुरा त हामीकहाँ पहिलेदेखि नै विद्यमान् थियो, हेर, हाम्रो केमा, यस ग्रन्थमा-उस ग्रन्थमा यसको वर्णन छ ।" यसप्रकार जहाज, वायुयान, वायरलेस, रेडियो, रेलगाडी इत्यादि, कहाँसम्म भने परमाणु (एटम) बाट शस्त्रास्त्रको निर्माणप्रक्रियाको क्रिया पनि भारतीयहरूलाई थाहा थियो भनेर बताउने गरिन्छ ।[१२]

कुनै अद्‌भुत कुरा देखेर हाम्राठे वेद र शास्त्रमा त्यसको उपस्थितिको खोजी गर्ने बुजुर्ग अन्वेषकहरूले त कार (मोटरगाडी) Car मात्रै होइन, 'कार' शब्दसम्मलाई नितान्त वैदिक शब्द बताएका छन् ।[१३]

म पनि चाहन्छु, यी सबै कुरा झुट्टा र काल्पनिक नभई प्रत्येक सच्चा होऊन् किनभने आफ्नो र आफ्नोपनप्रति सबैलाई गौरव हुन्छ । तर किताबी गौरव र पूर्वजहरूको सभ्यता र प्रगतिमा नै मस्त रहनुबाट कुनै फाइदा छैन, त्यसका केही नमुनाहरू पनि हुनुपर्दछ र त्यसको मूर्तिमान् तत्त्वबाट संसारलाई प्रभावित गर्न पनि सक्नुपर्दछ, अनिमात्र दुनियाँले हामी र हाम्रा कुरामा आस्था प्रकट गर्नेछ ।

आश्चर्यको कुरा के छ भने आफ्ना पितापूर्खाका जमानाको कुनै गौरवको वस्तु छ जुन आफ्नो जाति र पूर्खाहरूले गरे, बनाए, त्यसैले त्योचाहिँ पुनीत छ तर उही वस्तु उस्तै नै वस्तु अरूको छ र अरूले गरे-बनाएका छन् भने 'भौतिक', विध्वंसक इत्यादि भएर निन्दित भइरहेछ ! के हामी अध्यात्मवादी थियौँ र छौँ, त्यसैले हाम्रा बाण, तरबार, बम र रकेट सबै आध्यात्मिक भएर निर्माणकारी थिए र छन् तथा भौतिकवादी हुनुका कारण अरूका कुराहरू र आविष्कारहरू सबै भौतिक भएकाले विध्वंसात्मक छन् ? योभन्दा बढी हास्यास्पद कुरा अरू के हुन सक्छ ? आज प्रत्येक वर्ष विजयादशमीको दिन रावणको पुत्ला जलाइन्छ किनभने रावणले धेरै दुष्टतापूर्ण र आततायी काम गरेको थियो । रावणलाई एक अत्यन्त दुर्जन र समाजको शत्रु मानिन्छ । रावण एक अत्यन्त शक्तिशाली र साधनसम्पन्न व्यक्ति पनि हो । उसको साथमा रथ (यन्त्रयान) र विमान पनि थिए तर रावण एक दुष्ट हुनुको नाताले उसको रथ र विमान आदि सत्कार्यमा प्रयोग हुने कुनै आशा गर्न सकिन्छ ? कदापि सकिन्न । उसले तिनलाई कुकार्यमा बाहेक सत्कार्यमा लगाएन पनि । तर रावण एक हिन्दु हो र वेदशास्त्रको पूर्ण ज्ञाता अध्यात्मवादी पनि हो । त्यसैले आफ्नो एक हिन्दूजातिको चीज हुनुको नाताले हामीलाई गौरव भएको छ । तिनका वस्तुहरू अँगालेर हामी आज के गर्व गरिरहेका छौँ भने रथ, वायुयान त हामीकहाँ पहिलेदेखि नै थिए, इत्यादि । आफ्ना वस्तुहरूमा मात्रै गर्व गर्ने आत्मश्लाघी कट्टर तथा सङ्कीर्ण हिन्दू भाइहरूसँग म सोध्न चाहन्छु — जब रावणका शस्त्रास्त्र तथा विमान आदि केही पनि खतरनाक र विध्वंशकारी छैनन् भने अचेलका ख्रुस्चेव, आइजनहावर आदिका साथमा रहेका वस्तु जस्तो कि एटम, रकेट, विमान आदि कुराहरू मात्र किन घातक र विध्वंसकारी छन् ?

हाम्रो प्राचीन ग्रन्थ पनि बडो विचित्रको चीज छ, कुनै पनि त्यस्तो कुरा छैन जे त्यसमा नहोस् । तिनका अगाडि त कुनै कुरा हुनै सक्दैन ! तिनको अस्तित्वका कारण हामी कहिल्यै पनि कसैको तल पर्दैनौँ । स्त्रीजातिले सदैव पुरूषको इसारामा चल्नुपर्छ - यदि ऊ विवाहिता छ भने पतिको इसारामा, विधवा छ भने पुत्रको इसारामा पनि तर स्वतन्त्रताका कुरा आउँछन् र संसारमा अरू स्त्रीहरूको प्रगतिको प्रशंसा हुन थाल्छ भने स्त्रीहरूको स्वाधीनता र प्रगतिका कुराहरूको पनि हाम्रा ग्रन्थहरूमा उदाहरण मिल्दछ । व्यवहारमा अछुतलाई कुवासमेत छुने छूट छैन । कहीँ जातपात, छुवाछुत आदिको भेदभावबाट मुक्त कुनै राष्ट्र वा सङ्गठनको प्रशंसा हुन थाल्यो भने प्रत्येक भनाइमा आफ्नो बढाइ गर्नेहरूका लागि हाम्रो शास्त्रमा अनेक मिसालहरू पाइन्छन् । सत्य, अहिंसा आदि पञ्चशीलका आधारमा आन्दोलन गर्ने र जातपात आदि भेदभाव हटाउने क्रान्तिकारी बुद्ध नयाँ हुन सकेन ! त्यस्तै आजका शान्तिपूर्ण सहअस्तित्व, साम्यवाद, समाजवाद र गणतन्त्रको सिद्धान्त इत्यादि कुनै पनि चीज हाम्रो प्राचीन ग्रन्थ र जातिका लागि नयाँ होइनन् ! जे चाहिन्छ त्यो पाइन्छ । जुनसुकै र जस्तासुकै उदाहरण भेटिन्छन् ! चिन्तामणिझोली र कल्पवृक्ष हाम्रै शास्त्रलाई भन्न सकिन्छ ! क्या राम्रो चीज छ —'मार अच्छा' त त्यो पनि छ, 'नमार अच्छा' त त्यो पनि छ । जस्तो खोज त्यस्तै मिलिहाल्छ ! के विधि रमाइलो चीज हो हाम्रो शास्त्र !

जसरी हाम्रा ग्रन्थ र शास्त्रहरूमा हरेक कुरा, हरेक विचार, विविध दृष्टिकोण र विभिन्न सिद्धान्त छन् त्यसरी नै हामी पनि हरेकमा छौँ । सामूहिक रूपमा हामी सबैलाई अँगाल्छौँ । कुनै एउटा विशेष स्रोतमा बग्दाबग्दै पनि आम मौकामा हामी सबै तत्त्वहरू ग्रहण गर्दछौँ । त्यसैले हामी कुरा-वार्तामा, वाद-विवादमा र तर्क-वितर्कमा सदैव विजयी बन्दछौँ । सम्पूर्ण शरीर तल परिसक्दा पनि

हाम्रा खुट्टाचैं माथि नै रहने गर्छन् । दुनियाँका बासिन्दाहरूमा छानबिन गरेर हेर्ने हो भने हाम्रो नम्बर सबैभन्दा अगाडि निस्कनेछ । हामी आपसमा सदैव लडिरहन्छौँ, निर्बलमाथि आक्रमण गरिरहन्छौँ र विभिन्न विचार तथा सिद्धान्त राख्दछौँ तापनि हामी अछुतजातिका दलित वर्गलाई सदा दलितै रहन दिएर अछुतलाई नछुनमा, दलितलाई उठ्न नदिनमा र स्त्रीहरूलाई केही गहना दिएर कामिनीमात्र बनाइराख्नमा एवं तिनको हृदयमा सदैव पुरूषप्रति सेवाभाव जगाइराख्नमा सदासर्वदा एक छौँ । यसरी नै हाम्रा अछुत, दलित र स्त्रीहरू पनि हामीलाई सदैव खुसी पार्न र पारिरहनमा सदा एक छन् । हामीबीचको यो एकता कम सराहनीय विषय होइन ! हेर्नुहोस् त हाम्रो संस्कृति कति सुन्दर र हाम्रो एकता कति बलवान् छ ! जातपात, छुवाछुत, स्त्रीपुरूषमा भेद नमान्ने बौद्ध, जैन, शीख आदि सम्प्रदायका मानिस पनि बिस्तारैबिस्तारै कथित अछुतहरूदेखि टाढा बस्न थालेका छन् र नारीभन्दा नर महान् भएर 'हामी' हुँदै छन् । नेपालका तमाम बौद्ध त यस्तो व्यवहारमा 'हामी' नै बनेर 'एक' भएका छन् । आवश्यकता पऱ्यो भने, कुनै कुरामा विजयी हुनुपर्ने परिस्थिति आयो र आफ्नो स्वार्थ पूरा गर्नमा कठिनाइ पऱ्यो भने त त्यसको निवारणका लागि दराजमा पोथी-पुस्तक छँदै छन् : "यत्र नार्यस्तु पूज्यन्ते रमन्ते तत्र देवता" वाला मनुस्मृति निकाल्नेछन् र देवीभागवत्का पानाहरू देखाउनेछन् । तब नारीसम्मानका कुरामा हामीलाई कसैले पनि जित्न सक्दैन । भगवान् रामचन्द्रले निषादको जुठो बयर खाएको प्रसङ्ग भएको रामायणको पृष्ठ पल्टाउनेछौँ, तब अछुत र उनीहरूप्रति घृणा-तिरस्कारको लाञ्छना हामीमाथि कसले लगाउन सक्नेछ ? त्यस्तै दलित तथा शोषित वर्गको मौर्यलाई उठाएर उत्पीडक दल नन्दूवंशलाई समाप्त गरेको प्रसङ्ग अगाडि सार्नेछौँ तब संसारको कुन आन्दोलन तथा क्रान्तिकारी हामीभन्दा अगाडि निस्कन सक्ला ? आजको बढ्दो साम्यवाद एवं प्रगतिशील दृष्टिकोणलाई निचा देखाउनका लागि हाम्रो "सर्वे भवन्तु सुखिनः सर्वे सन्तु निरामयाः । सर्वे भद्राणि पश्यन्तु मा कश्चिद् दुःख भाग्जनः ॥" उक्ति नै प्रशस्त छ । त्यस्तै "समान प्रसवात्मिका जाति, सर्वं खल्विदं ब्रह्म" जस्ता अनेक यस्ता उक्तिहरूले भरिएका उपनिषद्हरू छन् जसले आजका ठूलाभन्दा ठूला राम्रा कामहरूलाई पनि लज्जित पार्न सक्छन् । मात्र पानाहरू पल्टाउनुको आवश्यकता छ ।

हाम्रा पूर्वजहरूले वायुयान, रेडियो, वायरलेस, रकेट, परमाणु बम इत्यादि आविष्कार गरेर पनि तिनीहरूका तन्त्रतरिका, विधिविधान अर्थात् फर्मुला बनाउने तरिका सायद यसकारण किताबहरूमा पूर्णरूपले राखिदिएनन् होला, ती सबै वास्तवमा संसारका लागि कल्याणप्रद छैनन्, तिनबाट मानवमनमा दुष्प्रवृत्ति र कुचिन्तन उत्पन्न हुन सक्छन् । यस्ता वस्तुहरूले मानिसलाई स्वाभाविक रूपमा हिंसा तथा आक्रमणको प्रवृत्ति र भावतिर धकेलिदिन्छन् । यो तिनीहरूको दूरदर्शिता नै हो । आज संयुक्त राष्ट्रसङ्घमा निशस्त्रीकरण सम्झौता, परीक्षण बन्द र यस्ता घातक पदार्थहरूको उत्पादनमाथि प्रतिबन्ध लगाउनका लागि १३ वर्षदेखि[१४] प्रयास जारी रहँदा पनि केही सफलता प्राप्त भएको छैन तर हाम्रा पूर्वजहरूले कुनै दवावविना नै, कुनै पनि आपत्तिविना नै आफ्नो आम उत्पादनमाथि ताल्चा लगाइदिएका छन् । यतिमात्र होइन, ती वस्तुहरू बनाउने तरिका अर्थात् फर्मुला समेतलाई बाँकी राखेनन् र फेरि जुन सानातिना विधिहरू बताउने एकाध ग्रन्थ बाँकी रहन गएका छन्, पछिल्ला पिँढीहरूले तिनलाई पनि लुकाएर लोप गरिदिएका छन् । किनभने भारतीय मानिसहरू त प्रत्युत्पन्नमतिका छन् नि, आफ्नो प्रतिभाको बलले कतै तिनै छरपस्ट भएका साधनबाटै तिनको निर्माण नगरिदिऊन् ! किनभने बुद्धिमान्हरूका लागि इसारा नै काफी छ ! ठीकै हो, "न रहन्छ बाँस, न बज्छ बाँसुरी" भन्ने भनाइलाई कति राम्ररी चरितार्थ गरी देखाएका ? तब न निशस्त्रीकरण ! त्यसमाथि हाम्रा पूर्वजहरू आध्यात्मिक पनि त छन् । यस्ता विध्वंसात्मक वस्तुहरूलाई आफ्नो वंशपरम्परा र वंशाणुक्रममा हुन नदिनु नै उनीहरूले राम्रो ठाने होलान् । आविष्कर्ताका रूपमा आफ्नो नाम संसारमा दर्ता गराउने लोभ पनि उनीहरूमा छैन । जबकि आजका भौतिकवादी वैज्ञानिकहरू आफ्नो नाम दर्ता गराउनका लागि टाउको फुटाउँछन् ।

अन्य कुराहरूबाट पनि वायुयान बनाउने प्रविधिलाई ग्रन्थमा स्पष्टतः लिपिबद्ध नगरी एकै भएका छोटामोटा पुस्तकहरूलाई पनि लोप गरेर जानकारीलाई नै समाप्त पारिदिनुले हिन्दू विचारधाराका मानिसहरूको हित नै भएको सम्झियो होला, नत्र (उनीहरूको दृष्टिमा) यवन तथा म्लेच्छसितको संसर्गका कारण जिउँदै नर्कको हिलो उछाल्दैँदै गरेको देखेर जुन प्रत्येक पछिल्ला दिनहरूमा 'दुःख, दुःखी' भनिरहनुपरेको छ त्यो दुःख सयौँहजारौं वर्ष पहिलेदेखि नै हिन्दू जगत्मा हुन्थ्यो किनभने वायुयान हुनुले अवश्य नै म्लेच्छ-यवनहरूका देशहरूमा घुम्न जाने इच्छा र आकाङ्क्षा

हुने थियो । धन्य छ, यसबाट आक्रमणकारी हुने प्रवृत्ति त हामीमा घुस्न पाएन वायरलेसको काम पनि महाभारतको लडाईंमा धृतराष्ट्रको कानसम्म पुऱ्याउनमै मात्र पूर्ण ठानेर त्यसलाई बनाउने तरिकालाई प्रकट हुन नदिनु पनि बुद्धिमानी नै भयो, नत्र त उहिल्यैदेखि यता-त्यताका खबरहरू लिइकन र प्रचार गर्ने/गराउने प्रवृत्तिकै सर्वनाश गरिसकिएको हुन्थ्यो !

उपर्युक्त कतिपय भौतिक साधन अर्थात् वैज्ञानिक तत्त्व तथा अस्त्रशस्त्र कुत्सित मनोवृत्तिका उत्पादक हुन जालान् भन्ने डरले मानवमन दूषित लक्ष्यतिर धकेलिन जाने सम्भावना देखेर नै हाम्रा आविष्कारकहरूले आफ्ना आविष्कारहरू जारी नराखेका हुनन् अथवा उनीहरूका तन्त्र वा प्रविधि हामीलाई नदिएका होलान् अथवा लोप गरिएका होलान् । यदि यो कुरा सत्य हो भने के यस कुरामा हामीलाई सन्तुष्टि छ ? के हामीले गरेको दावीका सबै आविष्कारहरू साँच्चै नै यथार्थ हुन्, सूर्यजत्तिकै सत्य हुन् ? यिनीहरूबाट भविष्यको प्रवृत्ति दूषित हुने भयले उनीहरूको प्रविधिलाई पेस गरिएको छैन भने यो उनीहरूको गल्तीबाहेक अरू के सिद्ध हुन सक्छ ? अथवा यी सबै कविकल्पना मात्र हुन्; वास्तविकता केही छैन !

उपर्युक्त तीन विकल्पहरूमध्ये पहिलो विकल्प सही हो भने दुःखको कुरो छ — पूर्खाको मूर्खताको फल हामीले भोग्नुपऱ्यो किनभने यस्ता साधन अर्थात् भौतिक तत्त्व हामीसित नहुनुले नै हामी साधु बन्न सकेनौं; देवता हुन सकेनौं । काखीमा आध्यात्मिक पोथी दबाएर राख्दा पनि हातमा भौतिक छुरी छमछम नाचिरहेकै छ । टाढाटाढासम्म नभएर के भो, नजिकनजिकमा हामी लडिरहेकै छौं । आक्रमणको व्यवहार भई नै रहेको छ । राजाहरू राज्य-स्राम्राज्य बढाउनका लागि लड्छन् त बेरोजगारहरू रोटीका निम्ति लड्छन् एवं विलासीहरू भोगका निम्ति डट्दछन् । ओह ! हामी कति धेरै घाटामा परेका छौं : उता ब्रह्मचारी बनेर ब्रह्मप्राप्तिका भागी पनि बन्न सकेनौं, यता असल गृहिणीका साथ रहेर गृहस्थी पनि बन्न पाएनौं; हाम्रो यौवन त मानौं खालि रण्डीको साथमा नै बितिरहेको छ ।

यदि दोस्रो विकल्प, आविष्कार पक्का साँचो हो भने प्रविधिलाई मात्रै जारी नराख्नु गल्ती हो । तब उनीहरूको गल्ती हाम्रा लागि दुर्भाग्यमात्र नभई हतभाग्य नै भयो ! अहो ! हामी अमृतपुत्र भएर पनि विषवाण खाईखाईकन अकालमै मरिरहेका छौं एवं पारसमणि भएर पनि स्वर्णजलको अभावमा तड्पिरहेका छौं । यदि तेस्रो विकल्प कविकल्पना सत्य हो भने त यो हाम्रा लागि गौरवको कुरा हो । यसबाट हामीलाई खुट्टा राख्ने ठाउँ प्रशस्त हुन्छ । यो कुरा मान्नमा हामीलाई हानि छैन, बरू नाफा नै हात लाग्नेछ । यदि यो सत्य हो भने हाम्रा पूर्खाको प्राचीन कल्पना आजका वैज्ञानिकहरू निम्ति प्रेरणा बनिरहेको छ जुन साकार भएर आज दुनियाँको आँखा वरिपरि घुमिरहेको छ । कविको कल्पना यथार्थमा कल्पना नै रहेर साँचो छैन भने के भयो त, त्यो सरासर झुटो पनि होइन । त्यसमा सत्यको आत्मा लुकेर बस्छ, वास्तविकताको आभास विद्यमान् हुन्छ र प्रत्यक्षताको अस्तित्व रहन्छ । कविको हृदय अत्यन्त शुद्ध छ र उसको चिन्तन पवित्र, मानवीय एवं कल्याणकारी छ भने उसको निर्मल कल्पनामा साकारताको सम्भावना रहन्छ नै । त्यतिखेर ऊ वैज्ञानिकहरूका लागि प्रेरणा र आधार बन्दछ ।

यथार्थमा हामी अधिकांशतः कल्पनालाई नै सत्य दावी गरी आफ्नो गौरवबारे बढाइचढाइ बखान गर्छौं; मलाई यस्तै लाग्छ । तर वास्तविकता नहोस् तापनि कल्पना पनि कम महत्वको ममता होइन । हाम्रो गौरव त्यसबाट बढेकै छ, बढ्दछ नै । हाम्रा पोथी-पुस्तकका कुरा विशेषतः वास्तविक नभएर काल्पनिक छन् र यस्तो हुँदाहुँदै पनि भौतिक तथा वैज्ञानिक विषयमा हाम्रो ऐतिहासिक महत्त्व कम हुँदैन, यद्यपि हाम्रो केही विकास भएको छैन । अब पनि जुन चीजहरू हामीसँग छन्, जसको निर्माण प्रवाह हुँदै आइरहेको छ, इतिहासको आँखाबाट हेरियो भने हाम्रो गौरवगरिमा चम्किरहेको नै मिल्नेछ । यदि हाम्रो दृष्टिपात इतिहासको आधारमा छ भने त हामी के पनि पाउनेछौं भने हाम्रो गौरव र प्रगतिको कारण अध्यात्मलाई नै मान्दै र विश्वास गर्दै यसैलाई हाम्रो पतनको जिम्मेवार पनि मान्नुपर्नेछ । हाम्रो विकासमाथि आगलागि चाहिँ अध्यात्मकै फिलिङ्गाबाट भयो । ❑

*१०. यो पङ्क्ति लेख्दाको समयमा रुसले मात्र कृत्रिम चन्द्रमा छाड्न सकेको थियो ।*

*११. हेर्नुहोस् **'नवभारत टाइम्स'-'रोहिणी शंकरको भेद' नोभेम्बर ११, सन् १९५७ ।***

*१२. हेर्नुहोस् प्रा. श्री रामदासजी गौडकृत"हिन्दुत्व" र "कल्याण" को हिन्दू संस्कृति अंकको पृष्ठ ७२६ देखि ७३८ सम्म ।*

*१३. हेर्नुहोस् **'हिन्दू संस्कृति अंक'मा अनुसन्धानकर्ता श्री शिवपूजन सिंहजी कुशवाहा'पथिक', सिद्धान्तशास्त्री, साहित्यालंकारको लेख 'यातायाताका प्राचीन वैज्ञानिक साधन' ।***

*१४. यी पङ्क्ति लेख्दासम्मको समय सन् १९५७ थियो ।*